## पञ्चषष्टितमोऽध्यायः　　{ ६५ अध्याय }

क उवाच

श्रुत्वा बुद्धिवचो देवो हर्षं प्राप्य जगाद ताम् ।

देव उवाच

गच्छ युद्ध्यस्व दैत्येन जहि तं यश आप्नुहि ।।१।।

एवमुक्त्वा सुवासांसि ददौ तस्यै विनायकः ।
सा च नत्वा तदा देवं ययौ दैत्यं रणं प्रति ।।२।।

तस्याः क्ष्वेडितशव्देन कम्पितं भुवनत्रयम् ।
वदनान्निर्ययौ तस्या एका शक्तिर्गरीयसी।।३।।

जटिला विकृतास्या च जगद्भक्षणलालसा ।
विशालाभ्यां तु नेत्राभ्यां त्यजन्ती ज्वालसञ्चयान् ।।४।।

दहन्ती दैत्यसेनां सा ययौ सा च पपाल ह ।
दर्शने पतिता दैत्यास्तस्याः केचिद् हृतासवः ।।५।।

अन्ये त्वतर्कयन् क्वाद्य गन्तव्यं क्व सुखं भवेत् ।
केचिदाहुर्धाव धाव देवान्तक ! मृता वयम्।।६।।

एवं कोलाहलं श्रुत्वा ययौ देवान्तकः पुरः।
सज्यं कृत्वा धनुः शीघ्रं शरानाशीविषोपमान् ।।७।।

ससर्ज तस्या गात्रेषु दर्शयन् पाणिलाघवम् ।
आच्छाद्य भानुं तन्मूर्ध्ना बाणजालैस्तथाविधैः।।८।।

सा प्रसार्य महद्वक्त्रं बिसवद् गिलते शरान् ।
तूणीरास्तस्य दैत्यस्य सर्वे रिक्तास्तदाऽभवन् ।।९।।

न तस्यास्तृप्तिरभवद् राक्षसस्येव मानुषैः ।
देवान्तकं क्षीणशक्तिं दृष्ट्वा सा सैन्यमाययौ ।।१०।।

भक्षयामास तान् दैत्यान् कांश्चिद्धस्तादपातयत् ।
कांश्चिद्रले विनिक्षिप्य चूर्णयामास चापरान् ।।११।।

**ब्रह्माजीले भन्नुभयो** - बुद्धिका कुरा सुनेर भगवान् श्रीगणेश प्रसन्न हुनुभयो र बुद्धिलाई लक्षित गर्दै भन्नुभयो ।

**श्रीगणेशले भन्नुभयो** - 'हे बुद्धि ! तिमी जाऊ, दैत्यका साथ युद्ध गर, त्यसलाई मार अनि कीर्ति प्राप्त गर ।।१।।' यसरी आज्ञा दिंदै उहाँले बुद्धिका निमित्त आवश्यक उत्तम वस्त्र प्रदान गर्नुभयो । बुद्धि पनि श्रीगणेशलाई नमस्कार गरेर दैत्यका साथ युद्ध गर्न रणभूमितर्फ प्रस्थान गरिन् । बुद्धिले गरेको हुङ्कारबाट तीनै लोक थर्कमान भए । सोही हुङ्कार गर्न बाएको मुखबाट जटा फिँजारेकी, आँखाबाट राता-राता आगाका ज्वाला प्रकट गर्दै रहेकी, जगत्लाई नै निल्ने इच्छा गरेकी एउटी डरलाग्दी कृत्या शक्ति पैदा भइन् । दैत्यको सेनालाई डढाउँदै ती अगाडि बढिन् र दैत्यसेना भाग्न थाल्यो । कृत्यालाई देख्नासाथ डराएका दैत्यहरू भुइँमा लडे । केहीले प्राण परित्याग नै गरे । बाँकी रहेका दैत्यहरू कहाँ जाने र कसरी प्राण जोगाउने भन्ने सोचिरहेका थिए । केही दौड दौड भनेर साथीहरूलाई दौडाइरहेका थिए । कसैले हे देवान्तक राजा ! हामी मर्‍यौं, हाम्रो रक्षा गर्नुहोस् भन्दै आर्तनाद गरिरहेका थिए। सैनिकहरूको यस्तो कोलाहल सुनेर देवान्तक त्यहाँ आइपुग्यो र त्यसले आफ्नो धनु सजाएर सर्पको विषसमान विष भएका तीखा बाण प्रहार गर्‍यो।।२-७।। त्यसले कृत्याका शरीरमा बाणको वर्षा गरेर ढाकी नै दियो । त्यसको बाणवर्षाबाट सूर्यनारायण पनि ढाकिएका थिए ।।८।। तर ती कृत्याले आफ्नो मुख फैलाएर त्यसले बर्साएका बाणराशिलाई निलिरहेकी थिइन्। कृत्याद्वारा सम्पूर्ण बाणहरू निलिएपछि देवान्तकका ठोक्राहरू रित्तिए ।।९।। जसरी राक्षसहरू मानिसको जति रक्तपान गरे पनि अघाउँदैनन् त्यसैगरी ती कृत्या पनि सम्पूर्ण बाणराशिलाई निल्दा अघाइनन्। देवान्तकको शक्ति क्षीण भएको जानेर ती कृत्याले देवान्तकको सेनामाथि आक्रमण गरी दैत्यवीरहरूलाई खान थालिन् । कति सैनिकहरूलाई समातेर भुइँमा पछारिन्, कसैको घाँटी निमोठेर मारिन्, केही वीरहरूलाई खुट्टाले हानी-

असङ्ख्यकोटीर्दैत्यानां भक्षिताश्चूर्णिता हताः।
चूर्णयन्ती पदाघातैः कांश्चिद्देवान्तकं ययौ ।।१२।।

तमुवाच तदा सा तु विश मे भगगह्वरम् ।
यत्र ते शेरते दैत्या मातुर्गर्भं गता इव।।१३।।

ये भक्षिता मृतास्ते मे जठरे जीर्णतां गताः।
तद्भीत्या स पपालाशु मूत्रविड्गन्धविह्वलः।।१४।।

यत्र यत्र प्रलीनोऽभूत् तत्र तत्रापि सा ययौ ।
बभ्राम स्वर्गलोकान् स पातालानि दिशो दश।।१५।।

ततः शिखां समाक्रम्य धृत्वा तं प्राक्षिपद् भगे।
तया सह ततो बुद्धिर्विनायकमुपाययौ ।।१६।।

ननाम तां पुरस्कृत्य मदघूर्णितलोचनाम् ।
पातयन्तीमुभयतः स्तनाघाताद् वनस्पतीन् ।।१७।।

शरधाराश्च घनवत्स्रवन्ती मन्दगामिनी।
निराकरोत् करालां तां दृष्ट्वा देवो विनायकः।।१८।।

निराकृतायां तस्यां तद्भगाद् दैत्योऽपतद् भुवि ।
सोऽपि दुर्गन्धिरित्येव दूतैः सन्त्याजितो बहिः।।१९।।

स तु संज्ञां समासाद्य स्नात्वा तूष्णीं गृहं ययौ ।
व्रीडितोऽधोमुखश्चिन्तां यातो म्लानोऽतिदुःखितः।।२०।।

बुद्ध्या निवेदिता सा तु ननाम तं विनायकम् ।
तां दृष्ट्वा जहसुर्बिभ्युर्मम्लुः पेतुश्च केचन।।२१।।

हानी धूलो बनाइन् र असङ्ख्य दैत्यवीरहरूलाई आफ्नो पराक्रमबाट धूलो-पीठो बनाउँदै देवान्तकको समीपमा गइन् ।।१०-१२।। तिनले देवान्तकसँग भनिन् - 'हे देवान्तक ! अब तेरो बाँच्ने कुनै उपाय छैन । तँ बाँच्न चाहन्छस् भने मेरो गुफाजस्तो योनिभित्र प्रवेश गर । जहाँ तँजस्ता कैयौं दैत्यहरू सुतिरहेका छन् । जसलाई मैले खाएँ, जसलाई मैले मारें र जसलाई मैले पेटमा पुऱ्याएँ ती सबै आफ्नी आमाको गर्भमा रहेझैं मेरो योनिरूप गुफामा आएर रहेका छन् ।।१३।। तिनका कुरा सुनेर डराएको देवान्तक कृत्याको योनिभित्र जाँदा मल-मूत्रको गन्धले म ज्यूँदै मर्नेछु, त्यस कारण मैले ययनले भनेको मान्दिनँ भाग्छु' भनी लुक्यो ।।१४।। जहाँ जहाँ गएर त्यो लुक्दथ्यो ती कृत्या पनि त्यहीं नै पुगिन् । डराएको देवान्तक दशै दिशा, सातै पाताल र सातै स्वर्गमा पुग्यो ।।१५।। धर्तीका दश दिशा चाहान्यो तर कृत्याबाट जोगिन सकेन । अन्तमा कृत्याले त्यसको टाउको समातेर त्यसलाई आफ्नो योनिभित्र च्यापेर राखिन् । यस किसिमबाट देवान्तकलाई योनिभित्र राख्न सक्ने कृत्यालाई साथमा लिएर भगवान् श्रीगणेशकी प्रियतमा बुद्धि श्रीगणेशको नजिकमा गइन् ।।१६।। त्यस समयमा युद्धविजय गरेर फर्केकी, उन्मत्त आँखाले हेर्दै गरेकी, आफ्ना ठूला-ठूला स्तनहरूको प्रहारबाट रूख-बिरुवा ढलाइरहेकी, बादलबाट वर्षा भएझैं धनुषबाट बाणको वर्षा गरिरहेकी र मन्द गतिमा हिंडिरहेकी कृत्यालाई अगाडि सारेर बुद्धिले श्रीगणेशलाई प्रणाम गरिन् । डरलाग्दी ती कृत्यालाई देखेर श्रीगणेशले तत्कालै तिनलाई अन्तर्धान गराउनुभयो । कृत्या अन्तर्धान हुने समयमा तिनको योनिबाट देवान्तक दैत्य भुइँमा खस्यो । त्यसको शरीरमा दुर्गन्धै दुर्गन्ध फैलिएको थियो । त्यसलाई दूतहरूले दुर्गन्धित र त्याज्य ठानेर त्यागिदिए ।।१७-१९।। केही बेरपछि त्यो होशमा आयो र स्नान गरी चुपचाप घरतर्फ गयो । लाजले मुख निहुऱ्याएको त्यो दैत्य चिन्तित र दुःखित पनि भयो । बुद्धिद्वारा पुनः प्रकट गराई श्रीगणेशका सामु पुऱ्याइएकी कृत्याले भगवान्लाई प्रणाम गरिन् । कृत्याको डरलाग्दो शरीर देखेर केही सैनिकहरू हाँसे, केही भयभीत भए, केही ओइलाए र केही भुइँमा लडे ।।२०-२१।। त्यसपछि बुद्धिले भनिन् -

ततः सैन्यं जगादाशु भक्षिता दैत्यवाहिनी ।
सोऽपि देवान्तकः पायौ निक्षिप्य स्थापितो मया।।२२।।
इदानीं वसतिस्थानं देहि देव दयानिधे ।

देव उवाच

वञ्चयित्वा गतो दैत्यो गृहं स्वं दैत्यनाशिनि ।।२३।।
तवापि पौरुषं ज्ञातं शक्रादिभ्योऽधिकं मया।
विश वक्त्रं ममैव त्वं विश्रान्तिं तत्र गच्छ च।।२४।।
अहं तत् साधयिष्यामि मा चिन्तां कर्तुमर्हसि ।

क उवाच

एवमाकर्ण्य तद्वाक्यं दृष्ट्वा वक्त्रं विवेश सा ।।२५।।
सुष्वाप परमप्रीता मातुरङ्के यथाऽर्भकः।
उदरे देवदेवस्य सर्वलोकनिवासिनि।।२६।।

'हे नाथ! यी कृत्याले दैत्यको सेना सखाप पारिन् । देवान्तकलाई आफ्नो योनिभित्र लगेर राखिन् । अब यिनलाई कुन ठाउँमा राख्ने हो त्यो ठाउँ बताउनुहोस् ।'

**श्रीगणेशले भन्नुभयो** – 'देवान्तकले मुख देखाउन नसकेर हामीलाई ठगी आफ्नो घरतर्फ प्रस्थान गरेको कुरा मैले थाहा पाएँ। इन्द्र आदि देवताहरूको भन्दा पनि प्रभावशाली तिम्रो र कृत्याको पुरुषार्थ पनि थाहा पाएँ । हे कृत्या ! तिमी मेरो मुखभित्र बस। त्यहीं नै तिमीले शान्ति र आराम पाउनेछ्यौ।'

**ब्रह्माजीले भन्नुभयो** – भगवान् श्रीगणेशका वचनअनुसार उहाँको विशाल खुला मुख देखेर कृत्या त्यहाँ प्रवेश गरिन् र सम्पूर्ण लोकलाई आफूमा समाहित गर्ने भगवान्को उदरभित्र कुनै बालक आफ्नी आमाको उदरमा रहेझैं विश्राम गरिन् ।।२२-२६।।

ॐ

**इति श्रीगणेशपुराणे क्रीडाखण्डे बुद्धिविजयो नाम पञ्चषष्टितमोऽध्यायः**

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'देवान्तकसेना र गणेशसेनाको युद्धमा बुद्धिको विजय' शीर्षकान्वित पैंसट्ठीऔं अध्याय पूर्ण भयो ।।६५।।

ॐ

## षट्षष्टितमोऽध्यायः   { ६६ अध्याय }

### क उवाच

शारदा रौद्रकेतुश्च रात्रौ देवान्तकं सुतम् ।
एकाकिनं निरीक्ष्यैनं समालिङ्ग्य समूचतुः ।।१।।

आच्छादयन्तं वदनं व्रीडितं भृशविह्वलम् ।
अभाषमाणं कम्पन्तं वातयुक्तमिव द्रुमम् ।।२।।

### पितोवाच

किमर्थं वदसे नैव स्वामवस्थां तु मूकवत् ।
ईप्सितं साधयिष्यामि यत्नात् त्रैलोक्यदुर्लभम् ।।३।।

### क उवाच

श्रुत्वा वागमृतं तस्य सावधानमनाः सुतः ।
उवाच पितरं मातुर्निकटे निर्विशङ्कया ।।४।।

### पुत्र उवाच

त्वदाज्ञां गृहीत्वैव योद्धुं यातो विनायकम् ।
सर्पाशीविषाकारैरसङ्ख्यैर्नाशिताः सुराः ।।५।।

प्रवर्तिता असृङ्नद्यो भग्ना सेना तु काश्यपी।
तत्र एका महाकृत्या दरीवक्त्रा नभःस्पृशी ।।६।।

करालकेशी पातालचरणा पर्वतस्तना ।
आगता देवसेनाया रक्षणार्थं ममान्तिकम् ।।७।।

खड्गेन निहता सा तु विव्यथे नैव किञ्चन।
निक्षिप्ता सर्वसेना मे तया तात ! दरीभगे ।।८।।

भक्षयन्त्येव सर्वाणि शस्त्राणि शरसञ्चयान् ।
तया मां भगे विनिक्षिप्य याता देवं विनायकम् ।।९।।

स्निग्धत्वात् तद्भगस्याहञ्चलितः पतितो भुवि ।
महान्धकारे न ज्ञातः पलाय्य गृहमागतः ।।१०।।

**ब्रह्माजीले भन्नुभयो** - शारदा र रौद्रकेतुले रातको समयमा लाजले शिर झुकाइरहेको, अत्यन्त व्याकुल, कसैसँग केही कुरा गर्न नचाहने र हावाले हल्लिएको रूखझैं काँपिरहेको आफ्नो छोरा देवान्तकलाई एक्लै बसिरहेको देखेर आलिङ्गन गर्दै कुराकानी गरे ।।१-२।।

**रौद्रकेतुले भने** - छोरा ! आज तिमी किन कुरा गरिहेका छैनौ ? धेरैबेर भइसक्यो, एउटा लाटो मानिसझैं बसिरहेका छौ। चेष्टाहीन छौ, तिमी पीर नगर । स्वर्ग, मर्त्य र पातालमा दुर्लभ मानिने तिमीले चाहेको जस्तो विषयलाई पनि म सिद्ध गर्नेछु ।।३।।

**ब्रह्माजीले भन्नुभयो** - आफ्ना पिताको वचनामृत पान गरेर सावधान मन गराई आफ्नी आमाका नजिकै बसिरहेको देवान्तक दैत्यले आफ्ना बाबुलाई उत्तर दियो ।।४।।

**देवान्तकले भन्यो** - हे पिता ! र हे माता ! तपाइँहरूको आज्ञा पाएर नै म श्रीगणेशसँग युद्ध गर्न गएको थिएँ । सर्पको आकारका विषालु बाणहरूद्वारा मैले धेरै देवताहरूको नाश गरें र रगतको खोला बगाएँ । कश्यपका छोरा श्रीगणेशको विशेष सेनालाई पनि पराजित गरें । त्यसै बेला गुफाझैं ठूलो मुख भएकी, आफ्नो उँचाइले आकाशलाई स्पर्श गर्ने, ठाडा रौं भएकी, आफ्नो पाउले पातालसम्म टेक्न पुगेकी, पर्वतकै आकारका ठूला स्तन भएकी एउटी राक्षसी कृत्याकै रूपमा देवताको सेनालाई रक्षा गर्ने नियतले मेरा सामु आइपुगी । मैले त्यसमाथि तरबारको प्रहार गरें तर त्यसबाट त्यसलाई रौंमात्र पनि पीडा भएन । त्यसले मेरा सबै सैनिकहरूलाई गुफाको आकार भएको आफ्नो योनिभित्र राखेर च्याँपी। त्यसपछि हाम्रा सैनिकहरूले लिएका सबै शस्त्र-अस्त्रलाई टुक्रा-टुक्रा पार्दै, खाँदै र कुनै विशेष अस्त्रलाई योनिभित्र च्याँप्दै त्यो श्रीगणेशका सामु पुगी । त्यसको योनिमा चिल्लो पदार्थको बाहुल्य भएकाले श्रीगणेशको समीपमा पुग्दा म चिप्लिएर योनिबाट भुइँमा खसे। त्यस बेला रातको घना अन्धकार थियो । त्यस कारण त्यसले मलाई देख्न सकिनँ। म भागेर घर आइपुगें।।५-१०।। आएपछि

स्नात्वा नदीजले तात ! व्रीडितोऽधोमुखस्ततः।

क उवाच

एवं पुत्रवचः श्रुत्वा रौद्रकेतुर्जगाद तम् ।।११।।

उपायं ते वदाम्येकं न चिन्तां कर्तुमर्हसि।
ततो मुहूर्तमालोक्य ददौ तस्मै महामनुम् ।।१२।।

अघोरस्य सवीजं तमुवाच जनकः पुनः ।
शिवं ध्यात्वा च सम्पूज्य कुर्वनुष्ठानमुत्तमम् ।।१३।।

होमञ्च तर्पणं विप्रभोजनञ्च दशांशतः।
शिवे प्रसन्ने कुण्डाद्धि तुरङ्गो निःसरिष्यति ।।१४।।

तमारुह्य व्रज रणं जयं प्राप्स्यसि निश्चितम् ।

क उवाच

एवं पितुर्वचः श्रुत्वा प्राह पुत्रो मुदा च तम् ।।१५।।

उपदेशः कृतः सम्यग्विधिमस्य ब्रवीतु मे ।
ततो लोकं निवार्यैव जग्मतुर्गृहमध्यतः ।।१६।।

उभावारक्तवसनौ रक्तचन्दनचर्चितौ ।
रक्तपुष्पाणि सन्नीय शिवं पुपूजतुस्तदा ।।१७।।

अनुष्ठानं बहुदिनञ्चक्रतुः परमादरात् ।
अनुष्ठाने समाप्ते तु कुण्डञ्चक्रतुरादरात् ।।१८।।

षट्कोणं लक्षणैर्युक्तं मेखलायोनिसंयुतम् ।
तत्राग्निं विधिवत् स्थाप्य पात्राणि च यथाविधि ।।१९।।

पञ्चप्रेतासनगतौ जुहुवुस्तौ हविस्तदा ।
स्वजानुभागमांसानि छित्त्वा छित्त्वा च भक्तितः ।।२०।।

असृग्घृतेन मांसेन तृप्तोऽभूत् पावकस्तदा ।
दशांशहोमे जाते तु पुपूजे वह्निदेवताम् ।।२१।।

बलिदानञ्चकाराशु छित्त्वा पुत्रशिरस्तदा ।
तेन पूर्णाहूतिञ्चक्रे विससर्जाथ पावकम् ।।२२।।

नदीमा गएर स्नान गरें । मेरो दुर्गति भएकाले लाजले घोप्टे मुख लाएर बसिरहेको छु।

**ब्रह्माजीले भन्नुभयो-** आफ्ना छोरा देवान्तकका यी कुरा सुनेर रौद्रकेतुले भने- छोरा ! तिमीले केही चिन्ता नगर, म राम्रो उपाय बताउँछु। त्यसपछि उत्तम मुहूर्त हेरेर रौद्रकेतुले देवान्तकलाई शङ्कर भगवान्‌को महामन्त्र उपदेश गरे।।११-१२।। उपदेशपछि तिनले भने - बाबु ! भगवान् शिवको ध्यान गरेर उहाँको पूजा गरी उत्तम मन्त्रको साधना गर । मन्त्र जपेको हिसाबले दशांश हवन गर । हवनको दशांश तर्पण गर । तर्पणको दशांश ब्राह्मण भोजन गराऊ । भगवान् शिव प्रसन्न हुनुभएपछि अग्निकुण्डबाट एउटा घोडा बाहिर आउनेछ ।।१३-१४।। तिमी त्यसमा सवार भई युद्ध गर्न गयौ भने तिम्रो विजय निश्चित छ।

**ब्रह्माजीले भन्नुभयो -** आफ्ना पिताको मन्त्रोपदेश र अरू उपदेश प्राप्त गरेर देवान्तकले हर्षित हुँदै भन्यो- हे पिता! हजुरले राम्रो उपदेश गर्नुभयो । अब मन्त्रको अनुष्ठान गर्ने विधि पनि मलाई बताउनुहोस् । देवान्तकले यस्तो प्रश्न गरेपछि बाबु र छोरा दुवै अरू मानिसहरूलाई हटाएर घरको माझमा गई एकान्तमा बसे । दुवैले राता लुगा लगाएका थिए र रक्तचन्दनले शरीरमा लेपन गरेका थिए । ती दुवैले राता फूल खोजेर शङ्करको पूजा गरे । धेरै दिनसम्म आदरपूर्वक मन्त्रको अनुष्ठान पनि गरे । अनुष्ठान समाप्त भएपछि ती दुवैले मिलेर श्रद्धापूर्वक यज्ञकुण्डको निर्माण गरे।।१५-१८।। त्यो यज्ञकुण्ड षट्कोणसम्पन्न थियो र शास्त्रले बताएको लक्षणले युक्त पनि थियो । योनि र मेखलाले सम्पन्न यज्ञकुण्डको वरिपरि पात्र र सामग्रीहरूको विधिपूर्वक स्थापना गरेर कुण्डमा अग्निको पनि प्रतिष्ठा गरे ।।१९।। ती दुवै बाबु-छोराले मसानघाटबाट खोजेर ल्याइएका पाँचवटा लाशमाथि बसेर यज्ञकुण्डमा चरुहवन गरे। ती दुवैले आफ्नो घुँडाका वरिपरि रहेका मासु लुछी-लुछी भक्तिपूर्वक हवन गरे ।।२०।। रगत, घिउ र मासु मिलाएर तयार गरिएको हव्यद्वारा हवन गरिँदा अग्नि पनि प्रसन्न भए । दशांशहोम सम्पन्न भएपछि देवान्तकले अग्निदेवताको पूजा गर्‍यो।।२१।। आफ्नै छोराको शिर काटेर बलिदान गर्‍यो। त्यो बलिदान पूर्णाहुतिका रूपमा सम्पन्न भयो। त्यसपछि अग्निदेवतालाई बिदा गरियो।।२२।। ईश्वरको कृपाले गर्दा शिर काटिएको छोरा

ईश्वरस्य प्रसादेन पुत्रोऽस्य पूर्ववद् बभौ ।
ब्राह्मणान् भोजयामास तर्पणान्ते यथाविधि ।।२३।।

ततो रात्र्यां व्यतीतायामुदिते च दिवाकरे ।
ददर्श तुरगं कृष्णं स्निग्धाङ्गं बलवत्तरम् ।।२४।।

मनोजवं हेषितेन कम्पयन्तं जगत्त्रयम् ।
पुपूज परया भक्त्या नीराज्यैनं यथाविधि ।।२५।।

अलङ्कृत्यालङ्करणैर्मणिमुक्तामयैः शुभैः।
नमस्कृत्य द्विजान् सम्यक् पितरं परिगृह्य च ।।२६।।

आशिषोऽथ समारुह्य तमश्वं स सुरान्तकः।
शेषसेनां समादाय ययौ शेषं प्रकम्पयन् ।।२७।।

शस्त्रास्त्रैः कवचैः शूलैर्भाति सेना धनुःशरैः।
आससाद रणस्तम्भं तया सह सुरान्तकः।।२८।।

क्रन्दत्सु सर्वसैन्येषु संत्रस्ता देववाहिनी।
व्याप्ते तु रजसा व्योम्नि न प्राज्ञायत किञ्चन ।।२९।।

पुनरप्यागतो दैत्यः सद्यः सेनाविघातकः।
सिद्धिसेनाचराश्चैव प्राद्रवन् दुःखिता भृशम् ।।३०।।

दृष्ट्वा रणागतं तं तु सिद्धिसेना समुत्थिता ।
हेषाभिः सिंहनादैश्च नादयन्ती दिगन्तरम् ।।३१।।

ततः शस्त्रप्रहारैश्च निजघ्नुरितरेतरम् ।
सहस्व प्रहरामीति प्रबोध्य जघ्नुरोजसा ।।३२।।

भुवि जानु विनिक्षिप्य शरानाशीविषोमपान् ।
आकर्ण धनुराकृष्य युयुधुस्ते परस्परम् ।।३३।।

खेटानि चान्तरे कृत्वा युयुधुश्चापरे तदा।
स्मृत्वा पूर्वप्रहारञ्च परिजघ्नुश्च केचन।।३४।।

पूर्ववैरमनुस्मृत्य रिपूँश्चक्रे विरूपिणः।
कोऽपि वीरश्रिया युक्तो रिपुं केशेषु चाग्रहीत् ।।३५।।

जस्ताको तस्तै भयो। तर्पण गरेपछि त्यसले विधिपूर्वक ब्राह्मणभोजन गरायो ।।२३।। त्यो रात बितेपछि देवान्तकले अर्को दिन प्रातःकालमा सूर्योदयको समयमा यज्ञकुण्डबाट बाहिर आएको चिल्लो, कालो र बलवान् घोडाको दर्शन गऱ्यो ।।२४।। त्यो घोडा आफूले चाहेअनुसार हिंड्न सक्दथ्यो। त्यसले आफ्नो हिङ्कारद्वारा जगत्लाई थर्काइरहेको थियो । त्यस घोडालाई देखेर देवान्तकले भक्तिपूर्वक र विधिपूर्वक त्यसको आरती उताऱ्यो ।।२५।। त्यसलाई मणि र मोतीले बनेका गहनाहरूले पनि सिँगाऱ्यो । ब्राह्मणहरूलाई नमस्कार गरी आफ्ना पिताको पाउमा प्रणाम गरेर आशीर्वाद ग्रहण गरेपछि त्यो देवान्तक घोडामा सवार भयो । बचेका सैनिकहरूलाई साथ लिएर देवान्तक रणभूमितर्फ गयो । त्यसको सेना भूगोललाई धारण गर्ने पातालवासी शेषनागलाई पनि कँपाउँदै शस्त्र-अस्त्र, कवच, त्रिशूल, धनु र बाणले शोभायमान थियो । देवान्तकका सैनिकहरू हर्ष र उन्मादले युद्धघोष गरिरहेका थिए। यस्तो दृश्य देखेर देवसेना भयभीत भयो ! दुबै तर्फका सेनाले उडाएको धूलोबाट आकाश ढाकियो र त्यसपछि कसैले केही देख्ने परिस्थिति रहेन। हाम्रो विनाश गर्ने दैत्य आइपुग्यो भनी चिन्तित भएका सिद्धिका सैनिकहरू पनि दुःखित भएर ज्यान जोगाउँदै भाग्ने काम गरे । देवान्तकलाई रणभूमिमा आएर जोरजुलुम गरिहेको र आफ्ना सैनिकहरू भागिरहेको देखेर सिद्धिको नेतृत्वमा विशाल सेना आइपुग्यो। त्यस सेनामा रहेका घोडाहरूले हिङ्कार गरे, वीरहरूले सिंहनाद गरे र चारै दिशामा युद्धघोष व्याप्त भयो । त्यसपछि दुबैतर्फका सैनिकहरूले एकआपसमा प्रहार गर्न थाले । सहन गर, प्रहार गर्छु इत्यादि स्वरका साथ वीरहरूले गर्वपूर्ण वचन उच्चारण गर्दै अस्त्रप्रहार गर्न थाले। वीरहरूले घोडाले भुइँमा टेकेर धनुमा सर्पजस्ता विषालु बाणहरू सन्धान गरी कानसम्म धनु खिँचेर बाणप्रहार गरिरहेका थिए । धेरै वीरहरू आफ्नोसामु ढाल तेर्स्याएर लड्दै थिए । सिद्धिका सैनिकहरूले गरेको प्रहारलाई संझेर केही दैत्यवीरहरू त्यस्तै प्रहार गर्न उत्सुक थिए ।।२६-३४।। कसैले पुरानो रीसलाई जगाएर सकेसम्म आफ्ना शत्रुलाई कुरुप बनाउने चाल चले । कुनै वीरले आफ्ना

पार्ष्णिघातैर्मुष्टिघातैः पातयामास भूतले ।
कौचिन्मत्तौ शिरोघातं जघ्नतुरितरेतरम् ।।३६।।

ततो भग्नां दैत्यसेनां दृष्ट्वा स तु सुरान्तकः
अश्वं सम्प्रेषयामास सेनां सिद्धिविनिर्मिताम् ।।३७।।

अश्वहेषां समाकर्ण्य केचिन्मूर्च्छांगता भुवि ।
पतिता अश्वचरणैश्चूर्णिताश्चापरे सुराः ।।३८।।

त्रिशूलेन हताश्चान्ये खड्गेन च तथा परे ।
बाणजालैरनेकैश्च पातयामास वै सुरान् ।।३९।।

सर्वस्मिन् हन्यमाने तु स्वसैन्ये सिद्धयस्तदा ।
पलायनं समालम्ब्य ययुः सर्वा विनायकम् ।।४०।।

शत्रुका जगल्टा समात्यो र कुहिना एवं मुड्कीद्वारा प्रहार गरेर आफ्नो शत्रुलाई भुईंमा पछार्‍यो । केही वीरहरू उन्मत्त भएर शत्रुका टाउकामा प्रहार गरिरहेका थिए। देवसेनाको पराक्रम उग्र देखियो। दैत्यको सेना पराजित हुन थाल्यो। त्यो देखेर देवान्तकलाई सही नसक्नुभयो। देवान्तकले फेरि सिद्धिको सेनालाई परास्त गर्ने उद्देश्यले आफ्नो घोडा पठायो । घोडाको शब्द सुनेर देवसेनाका वीरहरू मूर्च्छित हुन थाले, भुईंमा लडे र घोडाका खुरको आघातले अङ्ग-प्रत्यङ्गमा घाइते भए । केही देवतालाई त्रिशूलद्वारा प्रहार गरियो। कसैमाथि तरबारको प्रहार भयो । देवान्तकले अनेक थरि बाणहरूको प्रयोग गरेर देवताहरूलाई भुईंमा लडायो।।३५-३९।। अष्टसिद्धिहरू पनि आफ्ना सैनिकहरूको नाश देखेर भाग्न थाले । त्यसपछि ती भगवान् श्रीगणेशका समीपमा गए ।।४०।।

ॐ

**इति श्रीगणेशपुराणे क्रीडाखण्डे सिद्धिपराजयो नाम षट्षष्टितमोऽध्यायः**

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'सुरान्तकसेनाद्वारा सिद्धिसेनाको पराजय' शीर्षकान्वित छैसट्ठीऔं अध्याय पूर्ण भयो ।।६६।।

ॐ

# सप्तषष्टितमोऽध्यायः { ६७ अध्याय }

### क उवाच

स तज्ज्ञात्वा महाश्चर्यं चकार निजचेतसि।
ततो विनायकः क्रोधात् सिंहारूढो रणोत्सुकः।।१।।

स्वगर्जितेन च तदा गर्जयन् गगनं दिशः।
कम्पयन् सर्वलोकानां मनांसि पर्वतानपि।।२।।

ययौ वेगेन महता देवान्तकसमीपतः।
प्रहस्य तमुवाचाथ दैत्यो देवान्तकस्तदा ।

### दैत्य उवाच

कथं यातः शुष्कतालुर्नवनीतादनक्षमः।
युद्धाय बाल ! न स्थेयं गच्छ मातुः स्तनं पिब।।३।।

अदित्यां कश्यपाज्जातः कथं मूढ ! त्वमागतः।
यतो देवान्तकेनाद्य योद्धुमिच्छसि बालक ।।४।।

कालो बिभेति मां दृष्ट्वा वृथा त्वं मर्तुमिच्छसि।
अतिकोमलगात्रत्वाद् ग्रासमात्रं भविष्यसि।।५।।

### क उवाच

इति दैत्यवचः श्रुत्वा क्रोधसंरक्तलोचनः
विनायकः प्रहस्याह वमन् वक्त्राद् हुताशनम् ।।६।।

### देव उवाच

क्षीवोऽसि मद्यपानेन प्रायो वा सन्निपातवान् ।
असम्बद्धं युक्तिहीनं वल्गसे मूढभावतः ।।७।।

वह्निर्दहति सर्वं हि लघुर्वायुसमीरितः।
त्वद्वाक्यनुन्नस्त्वां हन्यां दैत्याधम ! न बुध्यसे।।८।।

इदानीं त्यज बुद्धिं तां नान्तको विद्यते मम।
त्वदर्थमवतीर्णोऽहं ब्रह्मभूतः सनातनः।।९।।

**ब्रह्माजीले भन्नुभयो** - श्रीगणेशले सिद्धिका सैनिकहरू पराजित भएको थाहा पाएर चित्तमा आश्चर्यको अनुभव गर्नुभयो। त्यसपछि क्रुद्ध भएर युद्ध गर्ने इच्छाले श्रीगणेश सिंहमा सवार हुनुभयो ।।१।। उहाँले गर्जन गर्दा आकाश पनि शब्दायमान भएको थियो र मानिसहरूका मन एवं पर्वतहरू पनि काँपेका थिए। ठूलो वेगले श्रीगणेश देवान्तकको नजिकमा पुग्नुभयो। श्रीगणेशलाई देखेर देवान्तकले उपहास गर्दै भन्यो।।२।।

**देवान्तकले भन्यो** - तिमी भर्खरका बच्चा यहाँ किन आएका छौ ? तिम्रो तालु अझै चिसै छ। नौनीमात्र खान सक्ने तिमी युद्धको इच्छा गरेर आयौ ? फर्क, जाऊ, आफ्नी आमाको स्तनपान गर ।।३।। कश्यप ऋषिबाट अदितिमा पैदा भएका तिमी किन मूर्ख भएर जानी-जानी मर्न आएका छौ ? हे बालक! संसारमा अपराजेय पराक्रम भएको देवान्तकसँग लडाइँ गर्न चाहनु तिम्रो मूर्खता हो ।।४।। मसँग यमराज आफैं डराउँछन्। तिमी किन व्यर्थमा मर्न चाहन्छौ ? तिम्रा शरीरका अङ्ग-प्रत्यङ्गहरू अति कोमल छन् । तिमी मेरा निमित्त एक गासमात्र हुनेछौ ।।५।।

**ब्रह्माजीले भन्नुभयो** - देवान्तक दैत्यले उपहास गरी आफ्नो अपमान गरेको जानेर रीसले आँखा राता गराउनु भएका श्रीगणेशले हाँसेर मुखबाट आगाको ज्वाला छुटाउँदै भन्नुभयो ।।६।।

**श्रीगणेशले भन्नुभयो** - हे देवान्तक ! तँ मदिरापान गरेर उन्मत्त भएको छस् । त्यस कारण असम्बद्ध र युक्तिहीन कुरा गरेर आफ्नो मूर्खता देखाइरहेको छस् ।।७।। सानो आगोले पनि हावाद्वारा प्रेरित भएर सर्वस्व दाह गर्न सक्दछ । हे अधम दैत्य ! तेरै वाक्यद्वारा अभिप्रेरित भएर क्रोधको आवेशमा परी म तँलाई भर्खरै मार्न सक्छु । यो कुरा तँ किन बुझ्दैनस् ?।।८।। यति बेला तैंले आफ्नो दुर्बुद्धिको त्याग गर् । मलाई मार्नसक्ने संसारमा कुनै तत्त्व नै छैन । तेरो अत्याचारबाट पृथिवीलाई ठूलो भार परेपछि भार हरण गर्ने उद्देश्यले सनातन ब्रह्मरूप म

स्थाणोर्वरस्य गर्वेण कृतं ते सर्वपीडनम् ।
अवधिं तस्य सम्प्राप्तं बुद्धिहीन ! न बुध्यसे ।।१०।।

त्रैलोक्यपीडया पापं यज्जातं तव दुर्मते।
अलं ते कत्थनेनाद्य दर्शयस्व स्वपौरुषम् ।।११।।

शक्तिपायोर्विनिर्गत्य कस्त्वां वक्त्रं प्रदर्शयेत् ।
सहस्व प्रहरस्वाद्य यदि युद्धं त्वमिच्छसि।।१२।।

श्वोभाविनं मृत्युमद्य मूढभावात् त्वमिच्छसि ।

क उवाच

एवमाभाष्य तं दैत्यं सज्यञ्चक्रे धनुः प्रभुः ।।१३।।

नरान्तकगतिं तस्य दातुमिच्छन् विनायकः।
टणत्कारेण धनुषश्चकम्पे भुवनत्रयम् ।।१४।।

आकर्णं ज्यामथाकृष्य बाणं दैत्ये ससर्ज ह ।
दैत्येन शतधा भिन्नः स बाणः पतितो भुवि।।१५।।

ततो दैत्यो धनुः सज्यं कृत्वा चिक्षेप सायकान् ।
धनुषस्तस्य शब्देन विनेदुः पर्वता दिशः ।।१६।।

हुङ्कारेण च तान् बाणान् पातयामास विघ्नराट् ।
पुनर्विनायको बाणान् बहूँश्चिक्षेप दैत्यपे।।१७।।

एकेन मुकुटं तस्य शरेण कर्णकुण्डले ।
भूमौ न्यपातयद् देवो बाहू द्वाभ्यां बिभेद च ।।१८।।

अवतरित भएको हुँ ।।९।। श्रीशङ्कर भगवान्‌बाट वरदान पाएका कारण तँलाई अहङ्कार आयो र तैंले सबैलाई दुःख दिइस् । त्यसबाट तँ पनि दुःखी हुनेछस् । शङ्करको वरदानको प्रभाव सकिने र तेरो मर्ने समय नजिकै आइपुगेको छ। तैंले किन ख्याल गर्दैनस् ?।।१०।। स्वर्ग, मर्त्य र पातालमा निवास गर्ने नर-नारीहरूलाई सताउँदा तैंले जति पाप गरेको छस्, त्यसको फल भोग्ने बेला आइपुगेको छ । अब आफ्नो गर्वपूर्ण भनाइ छाडेर आफ्नो पुरुषार्थ देखा, म तँसँग युद्ध गर्न आएको छु।।११।। कृत्याशक्तिको योनिबाट दुर्गन्धित अवस्थामा भुइँमा खसेर पनि निर्लज्ज बनेको तँ आज यहाँ आफ्नो मुख देखाइरहेको छस् । स्वाभिमान भएका मानिसहरू यसरी मुख देखाउँदैनन्। यदि तेरो युद्ध नै गर्ने इच्छा छ भने तैंले मेरो प्रहारको सामना गर र यदि सक्छस् भने तैंले पनि प्रहार गर् ।।१२।। तैंले पछि हुने मृत्युलाई आफ्नो मूर्खताका कारण आजै बोलाइरहेको छस्, यो भने ख्याल गर्नुपर्ने विषय हो ।

**ब्रह्माजीले भन्नुभयो**– यसरी दैत्यराज देवान्तकलाई ओजपूर्ण भाषामा उपदेश दिनुभएपछि भगवान् श्रीगणेशले आफ्नो धनु सजाउनुभयो ।।१३।। देवान्तकलाई नरान्तकको गतिमा पुऱ्याउन चाहने श्रीगणेशले धनुषको ताँदो तानेर टङ्कार गर्दा त्रिलोकी नै कम्पायमान भयो।।१४।। त्यसपछि उहाँले ताँदो तानेर वेगपूर्वक देवान्तकको शरीरमा बाणप्रहार गर्नुभयो। तर देवान्तकले पनि त्यो बाणलाई सय टुक्रा पारेर भुइँमा खसाइदियो र आफ्नो धनु सजाएर श्रीगणेशमाथि बाणप्रहार गर्न थाल्यो । देवान्तकले बाणप्रहार गर्दा उत्पन्न भएको नादबाट सम्पूर्ण दिशा र पर्वतहरू प्रतिध्वनित भए ।।१५-१६।। श्रीगणेशले हुङ्कार गर्दै देवान्तकले प्रहार गरेका सम्पूर्ण बाणहरूलाई निष्फल तुल्याउनुभयो र फेरि दैत्यराजमाथि अनेक बाणप्रहार गर्नुभयो ।।१७।। श्रीगणेशको एउटा बाणले दैत्यराजको मुकुटलाई चुँडाल्यो । अर्को बाणले प्रहार गर्दा त्यसका कानका कुण्डलहरू टुक्रा-टुक्रा भई भुइँमा खसे । फेरि उहाँले दुइटा बाणप्रहार गरेर त्यसका भुजाहरूलाई छिन्नभिन्न तुल्याउनुभयो ।।१८।। श्रीगणेशले फेरि अर्को बाणप्रहार गरेर

ललाटं सायकेनैव ततो दैत्यो रुषान्वित: ।
चचर्व दन्तान्नेत्रे च विस्फार्यान्यान् शरान् बहून् ।।१९।।

छादयन् गगनं काष्ठा विससर्ज विनायकम् ।
निरास्यैकेन बाणेन खमध्ये तान् विनायक: ।।२०।।

स्वयञ्चक्रे मण्डपं स क्षणाद् बाणमयं विभु:।
अन्धकारे घोरतरे युयुधाते परस्परम् ।।२१।।

शरवृष्ट्या बाणवृष्टिं निजघ्नतू रुषान्वितौ ।
शतशस्तौ निराकृत्य बाणवृष्टी उभावपि ।।२२।।

ततो दैत्यो महामन्त्रं जप्त्वाऽष्टशतसङ्ख्यया।
मन्त्रयामास तेनाशु वारणास्त्रेण सायकम् ।।२३।।

तत्याजाथ प्रादुरासन् वारणा: कोटिशस्तत:।
चतुर्दन्ता गिरिनिभा मेरुमन्दरचूर्णिन:।।२४।।

येषां मदवहा नद्य: प्रादुरासन् समन्तत:।
येषां बृंहितमात्रेण नादितं भुवनत्रयम् ।।२५।।

यथा घनानां वर्षासु गर्जितेन महामुने ।
नाशयामासुरनिशं देवसैन्यानि ते गजा:।।२६।।

धावतां पृष्ठलग्नास्ते गजा यान्ति दिशो दश:।
पादाघातैश्च हस्तैश्च दन्ताग्रैर्वीरघातिन:।।२७।।

सेनाया: कदनं दृष्ट्वा सिंहास्त्रं प्राक्षिपद् विभु:।
तत: सिंहा: प्रादुरासन्शतशोऽथ सहस्त्रश: ।।२८।।

तेषां गर्जितशब्देन गजा निपतिता भुवि ।
सिंहा विदारयामासुर्गजगण्डस्थलानि ते ।।२९।।

सिंहनादैर्बृंहितैश्च दैत्यशब्दैरनेकश:।
त्रैलोक्यं कम्पितमभूद् देवा: सर्वे विसिस्मिरे ।।३०।।

उड्डीयोड्डीय सिंहास्ते गजकुम्भेषु पेतिरे।
एवं ते निहता: सर्वे करिण: सिंहसञ्चयै:।।३१।।

त्यसको निधार फुटाइदिनुभयो। यस परिस्थितिमा दैत्य साह्रै रिसायो । त्यसले दाँत चपाउँदै र आँखा खोलेर चारैतिर हेर्दै अनेक बाणप्रहार गऱ्यो ।।१९।। ती बाणहरूले आकाश र दिशाहरू ढाकिए । तिनलाई एउटै मात्र बाणप्रहार गरेर श्रीगणेशले समाप्त पारिदिनुभयो ।।२०।। त्यसपछि परमात्माका रूपमा रहनुभएका कश्यपनन्दन श्रीगणेशले अनन्त बाणप्रहार गर्नुभयो। उहाँले प्रहार गरेका बाणहरूबाट एउटा मण्डप नै तयार भयो । घोर अन्धकारमा दुई वीरहरू यसरी लडिरहेका थिए ।।२१।। एउटाले गरेको बाणवर्षालाई अर्कोले बाणवर्षा गरेर समाप्त पार्ने क्रम जारी थियो । दुबैले पटक-पटक शत्रुले गरेको बाणप्रहारलाई निष्फल तुल्याइरहेका थिए ।।२२।। त्यसपछि देवान्तक दैत्यले शिवका अघोर मन्त्र १०८ संख्यामा जप गऱ्यो र गजास्त्रद्वारा बाणलाई अभिमन्त्रित गऱ्यो ।।२३।। बाण अभिमन्त्रित गरी प्रहार गर्दा करोडौं हात्ती पैदा भए । चार दाँत भएका, पर्वत आकारका र सुमेरु पर्वत एवं मन्दराचललाई पनि टुक्रा-टुक्रा बनाउन सक्ने ती हात्तीहरूले आफ्नो गण्डस्थलबाट मदका नदी बगाइरहेका थिए । ती हात्तीहरूले चिच्याउँदा तीनै भुवन काँपेका थिए ।।२४-२५।। ती हात्तीहरूले वर्षाकालमा बादलले जसरी डरलाग्दो गर्जन गर्दछ, त्यस्तै गर्जन गरेर देवसेनामा क्षति पुऱ्याइरहेका थिए ।।२६।। भागिरहेका देवताहरूका पछि लागेका ती हात्तीहरूले दसै दिशामा पुगेर खुट्टाले प्रहार गर्दै, सूँढले समात्दै र दाँतका टुप्पाले छाती आदि अङ्गलाई च्यात्दै आफ्नो पराक्रम देखाइरहेका थिए ।।२७।। देवान्तकले गजास्त्रको प्रयोग गरेर अनेक हात्ती जन्माएपछि त्यसको संहार गर्न भगवान् श्रीगणेशले सिंहास्त्रको प्रयोग गर्नुभयो । त्यसपछि युद्धको मैदानमा हजारौं सिंह प्रकट भए ।।२८।। सिंहहरूको गर्जन सुनेर हात्तीहरू भुइँमा लड्न थाले। ती सिंहहरूले हात्तीका गाला च्यात्न थाले। सिंह, हात्ती र घोडाको शब्द र दैत्यहरूको कोलाहल यी सबै मिलेर जन्मेको प्रबल ध्वनिबाट तीनै लोक काँप्न थाले र त्यहाँका बासिन्दाहरू चकित भए ।।२९-३०।। श्रीगणेशले पैदा गरेका सिंहहरू उफ्री-उफ्रीकन हात्तीहरूका गण्डस्थलमा ठोक्किन पुग्दथे। यसरी ती सिंहहरूले देवान्तकको सेनामा थपिन आएका ती सबै हात्तीलाई समाप्त पारे।।३१।।

विरेजुरिन्द्रनिहता वज्रेणेव महीधराः।
ततः सिंहा ययुर्दैत्यान् भक्षयन्तो दिशो दश ।।३२।।

निहते सर्वसैन्ये तु चिन्तामाप सुरान्तकः।
अयं बालोऽपि बलवान् दृश्यते कश्यपात्मजः।।३३।।

इदानीं दर्शयिष्येऽस्य यमस्य सदनं ध्रुवम् ।
एवमुक्त्वा पुनर्बाणं मन्त्रयामास दैत्यराट् ।।३४।।

योजयामास धनुषि शार्दूलप्रसवं तदा।
आकर्ण धनुराकृष्य मुमोच देववाहिनीम् ।।३५।।

बाणः स च ययौ शीघ्रं नादयन् गगनं दिशः।
यत्पुङ्खवायुना भग्ना निपेतुर्वृक्षसञ्चयाः।।३६।।

प्रादुरासन्ननेकाश्च ततः शार्दूलसञ्चयाः।
सिंहाँस्ते भक्षयामासु सिंहास्तेऽन्तर्हितास्ततः।।३७।।

इन्द्रले वज्रद्वारा प्वाँख काट्दा पर्वतहरूको जुन दयनीय अवस्था भएको थियो, त्यही अवस्था दैत्यसेनाको पनि भयो। त्यसपछि श्रीगणेशको सेनामा रहेका सिंहहरू दैत्यहरूलाई चपाउँदै र खाँदै दसै दिशामा फैलिए ।।३२।। आफ्ना सबै सैनिकहरू समाप्त भएपछि देवान्तकले मनमनै विचार गऱ्यो- कश्यप ऋषिका छोरा यी श्रीगणेश बच्चा भए तापनि बलवान् रहेछन्।।३३।। अब म पर्खने मनस्थितिमा छैन। तुरुन्तै मैले यस बच्चालाई यमलोकमा पुऱ्याउनुपर्छ । यसरी विचार गरेर दैत्यराजले फेरि आफ्नो बाणलाई अभिमन्त्रित गरेर धनुमा सन्धान गरी कानसम्म ताँदो तानेर देवताको सेनामा बाणप्रहार गऱ्यो ।।३४-३५।। त्यो बाण आकाशलाई कँपाउँदै लक्ष्यतर्फ अगाडि बढ्यो । बाणको वेगमा मिसिन आएको हावाबाट धेरै रूखहरू ढले। त्यसै बेला अनेक बाघहरू पैदा भए र तिनले सिंहहरूलाई मार्न थाले। त्यसपछि ती सबै सिंहहरू पनि अन्तर्धान भए ।।३६-३७।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डेऽस्त्रयुद्धं नाम सप्तषष्टितमोध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'देवसेना र दैत्यसेनाको अस्त्रयुद्ध' शीर्षकान्वित सतसट्ठीऔं अध्याय पूर्ण भयो ।।६७।।

ॐ

## अष्टषष्टितमोऽध्याय: { ६८ अध्याय }

क उवाच

ततो दैत्यो बाणयुगं मन्त्रयामास सादरम् ।
निद्रास्त्रेण तदा चैकं गन्धर्वास्त्रेण चापरम् ।।१।।

वामजानु पुर: स्थाप्य ज्यामाकृष्य ससर्ज तौ ।
तयो: शब्देन सहसा चकम्पे भुवनत्रयम् ।।२।।

एक: सैन्ये निपतितोऽपरो देवसमीपत: ।
ततस्तालान् मृदगाँश्च गन्धर्वाप्सरसस्तथा ।।३।।

गाननृत्यानि चित्राणि पुरोऽपश्यद् विनायक: ।
पतितानि च शस्त्राणि न बुबोध करात् तदा ।।४।।

मोहितो मञ्जुलरवै: कर्तव्यं नाभ्यपद्यत ।
सैनिका: सुषुपु: सर्वे निद्रास्त्रेण विमोहिता: ।।५।।

निशामुखे यथा बाला अव्यवस्थं हि शेरते ।
स्त्रियोऽपि चाथ ता: सर्वा: सुषुपुर्विगतत्रपा: ।।६।।

देवान्तकोऽपश्यदेवं जहर्ष च जगर्ज च ।
तत: संस्थापयामास गुल्मानि परितो बहु ।।७।।

देवसैन्यस्य महतो बली वीरयुतानि च ।
चक्रे कुण्डं त्रिकोणञ्च भूमिसाधनपूर्वकम् ।।८।।

असृक्कुम्भान् समानीय शतसङ्ख्यान् प्रयत्नत: ।
स्नात्वा पद्मासनञ्चक्रे नानाप्रेतेषु सादरम् ।।९।।

दैत्यान् निहत्य शतशो मांसराशिं महत्तरम् ।
चकाराभिचरं दैत्यो वह्निं स्थाप्य यथाविधि ।।१०।।

दिगम्बरो जुहावाथ मांसानि मन्त्रपूर्वकम् ।
सहस्रे तु हुते पश्चाद् बलिं पूर्णाहुतिञ्च य: ।।११।।

चकार कुण्डमध्ये सोऽपश्यच्छक्तिं क्षुधातुराम् ।
नरमांसानि तस्यै स ददौ पातुञ्च तान् घटान् ।।१२।।

**ब्रह्माजीले भन्नुभयो** - त्यसपछि देवान्तकले दुइटा बाण समाती तीमध्ये एउटालाई निद्रास्त्रले अभिमन्त्रित गऱ्यो र अर्कोलाई गन्धर्वास्त्रले अभिमन्त्रित गऱ्यो ।।१।। बायाँ घुँडा अगाडि सारेर ताँदो तानी ती दुवै बाणलाई प्रहार गर्दा तिनका शब्दबाट संसार कम्पायमान भयो ।।२।। एउटा बाण सेनाको बीचमा खस्यो भने अर्को बाण श्रीगणेशका सामु खस्यो । गन्धर्वास्त्रको प्रयोगबाट बाजागाजासहित गन्धर्व र अप्सराहरू पैदा भए । विचित्र गाना र नृत्य हुन थाल्यो । श्रीगणेशले यो देखेर आश्चर्य मान्नुभयो । श्रीगणेशका हातमा रहेका सबै शस्त्रहरू खसे । अप्सराको मीठो बोली सुनेर मोहित हुनुभएका श्रीगणेशले के गर्ने र के नगर्ने भन्ने विचार गर्न सक्नुभएन । उता सैनिकहरूको बीचमा खसेको बाणका प्रभावले गणेशका सबै सेनाहरू निदाउन थाले ।।३-५।। निद्रास्त्रको प्रभाव पऱ्यो। साँझको समयमा गृहस्थहरूका घरमा जसरी केटाकेटीहरू जतासुकै पल्टिरहेका हुन्छन् र आइमाईहरू पनि अव्यवस्थित रूपमा थाकेर सुतेका हुन्छन्। त्यसरी नै सेनाका सम्पूर्ण जवानहरू निर्लज्ज भएर युद्धको मैदानमा निदाउन थाले ।।६।। देवान्तकले आफ्ना मन्त्रको प्रभाव प्रकट भएको देखेर हर्षित हुँदै गर्जन गऱ्यो । त्यसपछि त्यसले देवताको सेनालाई वरिपरिबाट घेर्न भनी आफ्नो सेनालाई लगायो । देवसेनाको बीचमा पृथिवीलाई शुद्ध गरी एउटा त्रिकोणात्मक कुण्ड तयार गऱ्यो । कुण्डका वरिपरि सयौं रगतले भरिएका गाग्राहरू ल्याएर राख्यो । आफूले स्नान गरी अनेक थरि लाशहरूमाथि बसेर पद्मासन कस्यो ।।७-९।। घाइते भएका दैत्यहरूलाई मारेर आफ्ना सामु ठूलो मासुको राशि तयार पाऱ्यो । कुण्डमा विधिपूर्वक अग्निको स्थापना गरी त्यसले तान्त्रिक अभिचार गर्न थाल्यो ।।१०।। त्यसले नाङ्गै बसेर मन्त्रको उच्चारण गर्दै मासुका टुक्रा चढाएर स्वाहाकार गर्न थाल्यो । एक हजार मासुका टुक्राले हवन गरेपछि पूर्णाहुति सम्पन्न गऱ्यो ।।११।। पूर्णाहुति सम्पन्न भएपछि भोकले व्याकुल भएकी शक्ति त्यहाँ आइपुगिन् । देवान्तकले ती शक्तिलाई बाँकी रहेको मासुको थुप्रो टक्र्याएर कुण्डका वरिपरि रहेका रगतले भरिएका गाग्राहरू

अतृप्तां तां परिज्ञाय प्रेतानन्यानथार्पयत् ।
ततः सा बहिरायाता व्योमकेशी भयङ्करा ।।१३।।

विशालगर्तनेत्राऽतिकरालवदनाऽरुणा ।
उवाच परमप्रीता नादयन्ती दिशो दश ।।१४।।

तृप्ताऽस्मि रक्तमांसैस्ते न भयं विद्यते क्वचित् ।
तामुवाचाथ दैत्योऽपि पुपूजे भक्तिभावतः ।।१५।।

उपचारैः षोडशभिः प्रणिपातपुरःसरम् ।
ततो दिव्याम्बरधरो नानालङ्कारभूषितः ।।१६।।

देव्या अङ्कं समासाद्य जगर्ज बलवत्तरम् ।
सोड्डीय तेन सहिता नभस्येव स्थिताऽभवत् ।।१७।।

नानाशस्त्रधरा सोऽपि धनुर्बाणधरो बभौ ।
तामुवाच रौद्रकेतुपुत्रः परमहर्षितः ।।१८।।

कश्यपस्यात्मजो बालश्चञ्चलो बहुलं पुरा ।
इदानीमत्र किं तेन कर्तव्यं कुचरेण मे ।।१९।।

इदानीं सर्वसैन्यानि नाशयिष्ये तवाग्रतः ।
एवं ब्रुवति दैत्येन्द्रे काशिराजोऽशृणोद् वचः ।।२०।।

ततो विनायकं राजा बोधयामास सादरम् ।

काशिराजोवाच

भूतभव्यभविष्यज्ञ ! कथं मायां न बुध्यसे ।।२१।।

गान्धर्वीं दैत्यरचितां कथं सक्तोऽसि तत्र वै ।
देवान्तकेनाभिचरान्निर्मितां राक्षसीमिव ।।२२।

सा हनिष्यति ते सैन्यं सावधानमना भव ।

पनि तिनलाई दियो ।।१२।। रगत र मासु खाँदा पनि शक्तिलाई अतृप्त जानेर त्यसले अरू मरेका प्राणीहरूको लाश पनि टक्र्यायो । यसरी रगत र मासु खाएपछि अघाएकी ती शक्ति आकाशमा जगल्टा फिंजाउँदै डरलाग्दो रूप लिएर बाहिर आइन् । तिनका आँखाहरूका खाडल विशाल थिए, अनुहारमा रातोपन र रीस भरिएको थियो । आफ्ना गर्जनले दसै दिशा थर्काउँदै तिनले भनिन् - 'हे देवान्तक ! तपाईंले टक्र्याएको रगत र मासुबाट म अघाएकी छु र आनन्दित भएकी छु । अब तपाईंलाई कसैबाट डर हुने छैन ।' देवान्तकले पनि ती शक्तिलाई नमस्कार गर्दै भक्तिपूर्वक षोडशोपचारले पूजा गर्‍यो । त्यसपछि दिव्य वस्त्र धारण गरी अनेकौं थरि गहनाले सिँगारिएर देवान्तक शक्तिको काखमा आई बसेर ठूलो गर्जन गर्न थाल्यो । ती शक्तिले देवान्तकलाई समातेर आकाशमा पुर्‍याइन् र धेरैबेरसम्म त्यहीं नै उभिएर रहिन् ।।१३-१७।। शक्तिका हातमा हजारौं शस्त्र-अस्त्र थिए। देवान्तकले पनि धनु र बाण धारण गरेको थियो । आकाशमा पुगेको देवान्तकले शक्तिलाई भन्यो- 'हे शक्ति! देवसेनाको नायक एउटा बच्चा छ, त्यो कश्यप ऋषिको छोरा हो । त्यो साह्रै चञ्चल छ । त्यसले धेरै सताएको छ । अहिले तपाईंले मेरो सहयोग गर्नुभयो । अब त्यसले मलाई केही गर्न सक्दैन । अब म तपाईंको कृपाबाट त्यसको सम्पूर्ण सेनालाई सखाप पार्नेछु ।' यसरी आकाशमा देवान्तकले शक्तिसँग कुरा गरिरहेको समयमा तलबाट हेरिरहेका काशिराजले ती सबै कुरा सुनिरहेका थिए ।।१८-२०।। कुरा सुनेपछि श्रीगणेशका सामु गएर उहाँलाई उद्‌बोधन गर्दै काशिराजले भने ।

काशिराजले भने- हे श्रीगणेश ! हजुर भूत, वर्तमान र भविष्यत्का ज्ञाता हुनुहुन्छ, तर किन हो देवान्तक दैत्यले तपाईंमाथि मायाको प्रयोग गरिरहेको छ, तपाईं थाहा पाउनुहुन्न ।।२१।। दैत्यले गन्धर्वसेना प्रयोग गरी तपाईंलाई समेत नाचगानमा लठ्यायो। निद्रास्त्रको प्रयोग गरी युद्धको मैदानमा लडिरहेका तपाईंको सेनाका जवानहरूलाई निद्रामा पुर्‍यायो । अभिचार गरेर तान्त्रिक प्रक्रियाद्वारा एउटी राक्षसकै आकारकी शक्ति पैदा गर्‍यो। अहिले त्यो शक्ति आकाशमा पुगेकी छ । त्यसले तपाईंको सम्पूर्ण सेनाको विनाश गर्नेछ, तपाईं सावधान हुनुहोस् ।

क उवाच

एवं नृपवचः श्रुत्वा सावधानमना विभुः ।।२३।।

बुद्ध्वा तज्ज्ञानदृष्ट्यैव सर्वं मायामयं तदा ।
शरद्वयं विनिष्कृष्य मन्त्राभ्यां परिमन्त्र्य च ।।२४।।

घण्टास्त्रेण खगास्त्रेण श्रोत्राकर्षणसम्भ्रमात् ।
विनायको मुमोचाऽथ तौ बाणौ वेगवत्तरौ ।।२५।।

गर्जन्तौ घनवद्रुक्मपुङ्खौ मारुतवेगिनौ ।
सहसाच्छादयन्तौ च सहस्रकरमण्डलम् ।।२६।।

घण्टानादः समभवन् महान् सर्वविमोहनः ।
ततो घण्टास्वनान् श्रुत्वा प्रोत्तस्थुः सर्वसैनिकाः ।।२७।।

सिद्धयः सर्ववीराश्च युयुधुः शस्त्रपाणयः ।
अपरस्तस्य सैन्येषु मुक्तो बाणः खगास्त्रतः ।।२८।।

ततः खगाः प्रादुरासन्नानारूपा महौजसः ।
पक्षवातेन तेषां तद्गान्धर्वं लयमागतम् ।।२९।।

अन्धकारं यथा सूर्यसारथेरुदयान्मुने ।
ततस्ते पक्षिणः सर्वे बभक्षुर्दैत्यसैनिकान् ।।३०।।

पक्षाघातहताः केचित् केचिच्चञ्च्वग्रविक्षताः ।
केचिद् भीत्यैव पतिता दैत्याः प्राणान् विहाय च ।।३१।।

हाहाकारो महानासीद् दैत्यसैन्येषु सर्वशः ।
ततो देवान्तको रोषात् खड्गास्त्रं प्राहिणोत्तदा ।।३२।।

तस्य ध्वनिं समाकर्ण्य चुक्षुभे सैन्यसागरः ।
दिग्गजाश्च ततः खड्गा असङ्ख्याता विनिःसृताः ।।३३।।

वह्निमन्तश्च सङ्घट्टात् सेनयोरुभयोरपि ।
अग्निदग्धास्तदा देवा निपेतुर्धरणीतले ।।३४।।

**ब्रह्माजीले भन्नुभयो** – काशिराजका कुरा सुनेर सावधान हुनुभएका श्रीगणेशले आफ्नो ज्ञानदृष्टिबाट सबै कुरा यथार्थमा बुझी जे कुरा भइरहेको छ, त्यो देवान्तकले प्रकट गरेको मायाको खेल हो भन्ने बुझ्नुभयो । त्यसपछि उहाँले दुइटा बाण तानेर मन्त्रबाट अभिमन्त्रित गरी प्रयोग गर्न आरम्भ गर्नुभयो।।२२-२४।। एउटा बाणलाई घण्टास्त्रले र अर्को बाणलाई खगास्त्रले अभिमन्त्रित गर्नुभयो । त्यसपछि उहाँले दुइटा प्रभावशाली बाणहरूको प्रहार गर्नुभयो । ती दुवै बाण शब्द गर्दै हावाको वेगमा लक्ष्यवेधन गर्न अगाडि गएका थिए । तिनले आफ्नो प्रभावबाट अग्नि र धुँवा पैदा गरी सूर्यमण्डललाई पनि ढाकिदिए। संसारलाई नै नादमय तुल्याउने घण्टाको महानाद घन्कियो र संसार मुग्ध भयो । घण्टाको स्वरबाहेक केही सुनिएन । त्यसबाट निदाइरहेका श्रीगणेशका सैनिकहरू पनि जागे ।।२५-२७।। अष्टसिद्धिहरू पनि सावधान भए र वीरहरू पनि उत्साहसम्पन्न हुँदै हातमा शस्त्रधारण गरी दैत्यका सैनिकहरूसँग युद्ध गर्न थाले । दैत्यसेनामाथि खगास्त्रद्वारा अभिमन्त्रित बाणको प्रहार गरिँदा युद्धको मैदानमा विचित्र रूपरङ्गका, अत्यन्त बलवान् र पराक्रमी चराहरू पैदा भए । तिनीहरू प्वाँख चलाएर तीव्र गतिमा उड्दा गन्धर्वास्त्रद्वारा पैदा भएका सम्पूर्ण नाच-गानहरू समाप्त भए ।।२८-२९।। जसरी सूर्यनारायणको उदयपछि अन्धकार समाप्त हुन्छ त्यसैगरी देवान्तकको मायाबाट पैदा भएका निद्रा र नाचगान समाप्त भएका थिए । त्यसपछि ती चराहरूले आफ्नो पुरुषार्थबाट दैत्यका सैनिकहरूलाई लुछी-लुछी खान थाले। तिनले केही वीरहरूलाई प्वाँखको प्रहार गरेर मारे र कसैलाई मुखको चुच्चोले ठुँगेर क्षतविक्षत तुल्याए। कुनै दैत्य त चराहरू देख्नासाथ आफै डराएर लडेका थिए । केही दैत्य चराहरूको दर्शन गर्नासाथ आत्तिएर मरेका थिए । त्यस बेला दैत्यसेनामा ठूलो हाहाकार भयो । हाहाकार सुनेपछि रिसाएको देवान्तकले श्रीगणेशको सेनामा खड्गास्त्रको प्रहार गऱ्यो ।।३०-३२।। खड्गास्त्रको ध्वनि सुनेर सेनाको सागर उर्लियो । असंख्य हात्ती र तरबारहरू त्यहाँ देखिए । दुबैतर्फका सैनिकहरूको परस्पर संघर्ष हुँदा तरबारहरूले घोटिएर आगो पैदा गरिरहेका थिए । त्यसै आगामा डढेका हजारौं देवताहरू

खगाश्च निहता: केचित् केचिद् दग्धास्तथाग्निना ।
अपरे ययुरन्तर्द्धि दिशश्चाथ चकाशिरे ।।३५।।

असङ्ख्यखड्गप्रभया सेनाचक्षुर्महोमुषा ।
खड्गवृष्ट्या विनिहता देवा: पेतुर्धरातले ।।३६।।

केषाञ्चिद् बाहवश्छिन्ना: केषाञ्छिन्मस्तका: करा: ।
जठरे जानुभागे च पृष्ठभागेऽपरा हता: ।।३७।।

निपेतुर्देवपुञ्जेषु मृतेषु च गतासव: ।
अष्टसिद्धिकृता: सर्वा: सेना एवं विनाशिता: ।।३८।।

असृङ्नद्यो दश दिशो याता: प्रेतवहास्तदा ।
विनायकस्ततो दृष्ट्वा दैत्यस्याद्भुतविक्रमम् ।।३९।।

बाणं निष्कास्य सुदृढं वज्रास्त्रेणाभिमन्त्र्य च ।
आक्रन्दनेन महता दैत्यसैन्ये मुमोच तम् ।।४०।।

पर्वताश्च द्रुमास्तस्य शब्देन पतिता भुवि ।
तदस्त्रानलसंयोगाद् दिग्दाह: समजायत ।।४१।।

देदीप्यमानं सहसाच्छादयन् रविमण्डलम् ।
पक्षिणो निहता दग्धास्तेजसा तस्य केचन ।।४२।।

खण्डितं तेन सहसा खड्गास्त्रं तत्सहस्रश: ।
निर्ददाह तदा दैत्यसेनां वज्रैरनेकश: ।।४३।।

सहस्रशो निहन्यन्ते एकया वज्रधारया ।
यते यतोऽगमद् दैत्यस्तत्र तत्रापतच्च तत् ।।४४।।

चुचूर्ण मस्तकान् पादान् हस्तान् स्कन्धानुरूनपि ।
धरां भित्त्वा गता दैत्यास्तानप्यथ जघान तत् ।।४५।।

एवं सर्वे हता दैत्या वज्रैस्तीक्ष्णै: सहस्रश: ।
ततो देवान्तकं जग्मुस्तानि वज्राणि सर्वश: ।।४६।।

सोऽपि बाणं समादाय मन्त्रयामास यत्नत: ।
रौद्रास्त्रेणाथ संयोज्य धनुष: कर्षणेन तम् ।।४७।।

ससर्ज परसैन्येषु शिवनामाङ्कितं शुभम् ।
नादयन् गगनं सोऽथ दिशश्च विदिशोऽपि च ।।४८।।

पृथिवीमा लडे ।।३३-३४।। केही चराहरू मरे, केही आगोमा डढे, केही अन्तरिक्षमा पुगे र केही दिशा-विदिशातर्फ लागे । देवान्तकले पैदा गरेका करोडौं तरबारहरूको कान्तिले देवसेनाका जवानहरूका आँखा भ्रान्त बनेका थिए । तरवारको वर्षा हुँदा घाइते भएका देवताहरू भुईंमा लडेका थिए । कति देवताहरूका हातै काटिए र कतिका टाउका गिंडिए । देवसेनाका हजारौं सैनिकहरू पेटमा, घुँडामा र पिठ्यूँमा पनि घाउ लागेर मरे ।।३५-३७।। केही देवसैनिक लाशमाथि ढलिरहेका थिए, केही बाँचेका देवताहरूका बीचमा गई बेहोश भएर पल्टिरहेका थिए । यसरी अष्टसिद्धिले पैदा गरेका सबै सैनिकहरूलाई देवान्तकले मार्‍यो ।।३८।। त्यसबाट रगतका खोलाहरू दसै दिशामा बग्न थाले । तिनमा मरेका वीरका लाशहरू बगिरहेका थिए । त्यसपछि श्रीगणेशले देवान्तक दैत्यको अद्‌भुत पराक्रम देखेर एउटा बाण निकाल्नुभयो । त्यसलाई वज्रास्त्रले अभिमन्त्रित गर्नुभयो । त्यसपछि दैत्यसेनामा प्रहार गरिएको त्यस बाणले पर्वत ढले, रूखहरू लडे र अस्त्रहरूको संघर्षबाट फेरि अग्निज्वाला पैदा भयो।।३९-४१।। चारै दिशामा आगो लाग्यो। त्यस अग्निज्वालाले सूर्यमण्डललाई पनि ढाक्यो । आकाशमा उडिरहेका चरा डढेर भुईंमा खस्न थाले । वज्रास्त्रबाट देवान्तकले प्रहार गरेका खड्गास्त्रहरू समाप्त भए । श्रीगणेशको वज्रास्त्रले दैत्यसेनालाई डढाएर मार्‍यो।।४२-४३।। एक पटक एउटा वज्रको प्रहार गर्दा एक हजार दैत्यहरू मर्ने गर्थे । जहाँ-जहाँ दैत्यहरू भागेर पुग्थे, वज्रहरू पनि त्यहाँ-त्यहाँ गई तिनका शरीरलाई क्षतविक्षत तुल्याउँथे । वज्रास्त्रले दैत्यसेनाका वीरहरूको निधार टुक्रा पारी खुट्टा, हात, काँध, छातीजस्ता अङ्गप्रत्यङ्गलाई क्षतविक्षत तुल्यायो। पृथिवीलाई भेदन गरेर रसातलतर्फ गएका दैत्यलाई पनि वज्रास्त्रले छानी-छानी मार्‍यो ।।४४-४५।। यसरी भगवान् श्रीगणेशद्वारा पैदा गरिएका र तीखो धार भएका वज्रहरूले सबै दैत्यहरूलाई मारे । त्यसपछि ती सबै वज्रहरू देवान्तकका नजिकमा पुगे । आफ्नासामु वज्रको राशि देखेर त्यसले पनि एउटा बाण हातमा लियो र रौद्रास्त्रले अभिमन्त्रित गर्‍यो। त्यसले धनुमा बाण जोडी ताँदो तान्यो र शिवनामबाट अङ्कित बाणप्रहार गर्‍यो । त्यो बाण आकाशलाई शब्दायमान

वमन्नग्निकणान् दिक्षु प्रलयानलसन्निभः ।
भूलोका देवलोकाश्च भयाद् याता दिशो दश ।।४९।।

विनायकस्य सैन्येषु महाकोलाहलो ह्यभूत् ।
तस्मिन्निपतिते बाणे पुरुषो घोरदर्शनः ।।५०।।

निःसृतो भीषणमुखस्त्रैलोक्यं ग्रासयन्निव ।
जटिलो दीर्घहस्तश्च दीर्घपादो महोदरः ।।५१।।

धराधरो व्योमगोष्ठो गिरिजिह्वो भयानकः ।
वज्रास्त्रं भक्षयामास क्षणात् स पुरुषो महान् ।।५२।।

विनायकं हन्तुकामो ययौ तस्यान्तिकं क्षणात् ।
ततो विनायकः शीघ्रं ब्रह्मास्त्रं समयोजयत् ।।५३।।

मन्त्रेण शतसङ्ख्येन सायके वेगवत्तरे ।
आकर्णकर्षणाद् देवो मुमोच सहसा च तम् ।।५४।।

चकम्पे तस्य शब्देन तारेण भुवनत्रयम् ।
विस्फुलिङ्गैर्दिशो दग्धा न प्राज्ञायत किञ्चन ।।५५।।

ततोऽपि पुरुषो जज्ञे तादृशोऽतिभयानकः ।
तावुभौ युद्धतो व्योम्नि परस्परजयैषिणौ ।।५६।।

नानाविधं मल्लयुद्धञ्चक्रतुस्तौ महाबलौ ।
क्षणेनान्तर्हितौ चोभौ न दृश्येतेऽथ कुत्रचित् ।।५७।।

बनाउँदै र चारै दिशामा अग्निका ज्वाला बर्साउँदै प्रलयकालको अग्निजस्तै भएर लक्ष्यवेधन गर्न थाल्यो । पृथिवीलोक र देवलोकका मानिसहरू डरले भाग्न थाले ।।४६-४९।। श्रीगणेशको सेनामा ठूलो कोलाहल भयो । रौद्रास्त्रको प्रयोगपछि एउटा डरलाग्दो पुरुष पैदा भयो । त्यसको अनुहार भयङ्कर थियो । स्वर्ग, मर्त्य र पाताललाई एकैचोटि निल्न आँट गर्ने, जटाधारी, लामा हात भएको, ठूलो पेट भएको, पृथिवीलाई धारण गर्न सक्ने, आकाशलाई एउटा गोठबराबरको मात्रै, पर्वतसमान जिब्रो भएको त्यस राक्षसले श्रीगणेशद्वारा प्रयोग गरिएको वज्रास्त्रलाई समाप्त पारिदियो।।५०-५२।। त्यसपछि श्रीगणेशमाथि आक्रमण गर्न चाहने त्यो दैत्य उहाँको समीपमा पुग्यो। रौद्रास्त्रको प्रयोगबाट उत्पन्न भई सम्पूर्ण देवसेनालाई सखाप पार्ने त्यो घोरपुरुषलाई देखेर विनायकले तुरुन्तै ब्रह्मास्त्रप्रहार गर्ने तयारी गर्नुभयो । उहाँले सय पटकसम्म मन्त्र जपी एउटा अत्यन्त तेजिलो बाण हातमा लिएर कानसम्म तँदो तानी प्रहार गर्दा त्यसको उच्च स्वरले त्रिलोकी नै कम्पायमान भयो । त्यस बाणबाट निस्केका आगाका फिलुङ्गाहरूले दिशाहरू डढ्न थाले र कहीं केही देखिएन ।।५३-५५।। त्यसपछि त्यस भयानक पुरुषका साथमा श्रीगणेशले मल्लयुद्ध आरम्भ गर्नुभयो । ती दुबै वीर जमिन र आकाशमा मल्लयुद्ध गरिरहेका थिए । एकले अर्कालाई जित्न चाहन्थे। दुबै पराक्रमी थिए । तिनले युद्धमा अनेक थरि मल्लयुद्धका कला देखाए। त्यसपछि लड्दालड्दै त्यो भयङ्कर पुरुष र गणेश दुबै अन्तर्धान भए।।५६-५७।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे भयानकास्त्रयुद्धं नामाष्टषष्टितमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'श्रीगणेश र देवान्तकको भयङ्कर अस्त्रयुद्ध' शीर्षकान्वित अठसट्ठीऔँ अध्याय पूर्ण भयो ।।६८।।

ॐ

## ऊनसप्ततितमोऽध्यायः { ६९ अध्याय }

क उवाच

ततो देवान्तकोऽतीव विस्मितोऽतर्कयत् तदा ।
यथा यथा मया माया क्रियतेऽस्य निवृत्तये ।।१।।

तथा तथाऽप्ययं बालो दर्शयत्येव पौरुषम् ।
कदायं निधनं यायात् कदा स्वप्स्ये गतश्रमः ।।२।।

इत्येवं चिन्तयाविष्टो धनुः सज्यमथाकरोत् ।
अभिमन्त्र्य शरं घोरं विससर्ज विनायके ।।३।।

स सायको बाणवर्षमनन्तं कृतवान् विभौ ।
शक्तिञ्च निर्ममे घोरां त्रैलोक्यग्राससाहसाम् ।।४।।

ददर्श विघ्नराजस्तं तदङ्के दैत्यपुङ्गवम् ।
वर्षन्तं शरजालानि तीक्ष्णानि सुबहून्यपि ।।५।।

ततोऽष्टसिद्धयः शीघ्रमुड्डीय बलवत्तरम् ।
दध्रुस्तां सहसा शक्तिमानिन्युस्तं विनायकम् ।।६।।

आनीयमाना सा हस्तान्निःसृत्याऽथ पलायिता ।
रोषात् ताभिर्दैत्यपतिरानायि स कचग्रहात् ।।७।।

अणिमानं ततो दैत्यो जघान मुष्टिना दृढम् ।
मुष्टिघातं समासाद्य मूर्च्छिता निपपात ह ।।८।।

लघिमा गरिमा चाथ वशिमा तं महासुरम् ।
यावल्लत्ताप्रहारैस्तु निजघ्नुस्तावदेव हि ।।९।।

दैत्येन विधृता वेगाच्चरणेषु पृथक् पृथक् ।
यावदास्फालयत् पृथ्व्यां निःसृतास्तावदेव ताः ।।१०।।

प्राकाम्यञ्चैव भूतिश्च जघ्नतुस्तं ततो बलात् ।
पपात भूतले दैत्यो वमन्नग्निं मुखात् ततः ।।११।।

क्षणाल्लब्ध्य ततः संज्ञामारुरोह हयं दृढम् ।
शस्त्रपाणिर्वायुवेगो निजघान विनायकम् ।।१२।।

दृढासिघाताद् देवोऽथ किञ्चिन् मूर्च्छामवाप्तवान् ।
निमेषात् सावधानोऽभूदधावद् दैत्यनायकम् ।।१३।।

ब्रह्माजीले भन्नुभयो – त्यसपछि महादैत्य देवान्तक अत्यन्त चकित भएर तर्क गर्न थाल्यो – 'जसरी मैले नयाँ नयाँ मायिक सृष्टि गर्दै जान्छु, त्यसलाई हटाउन यी बालक श्रीगणेशले उत्तिकै प्रयास गरिरहेका छन् र उत्तिकै पुरुषार्थ देखाइरहेका छन् । कहिले यी मर्लान् र म आनन्दपूर्वक सपना देख्न पाउँला'।।१-२।। यसरी चिन्तन गरेर हातमा धनु लिई बाणलाई मन्त्रद्वारा अभिमन्त्रित गरेर त्यसले श्रीगणेशको शरीरमा प्रहार गर्‍यो ।।३।। त्यो बाणले आकाशमा गई अनन्त बाणहरूको वर्षा गरायो र एउटा घोर आकारकी शक्तिलाई पनि पैदा गर्‍यो ।।४।। ती शक्ति तीनै लोकलाई एकै गासमा खानसक्ने सामर्थ्य सम्पन्न थिइन् । श्रीगणेशले शक्तिलाई र तिनका काखमा बसिरहेको देवान्तकलाई पनि देख्नुभयो। ती दुबै मिलेर श्रीगणेशको सेनामा तीखा बाणहरूको समूह बर्साइरहेका थिए।।५।। त्यत्तिकैमा श्रीगणेशको सेनामा रहेका अणिमा, महिमा, गरिमा आदि आठवटा सिद्धिहरू तुरुन्तै उडेर दैत्यले निर्माण गरेको शक्तिका सामु पुगे। आफ्नो सामर्थ्यबाट त्यस शक्तिलाई समातेर श्रीगणेशका समीपमा आए ।।६।। ल्याउँदा-ल्याउँदै ती शक्ति बाटैबाट अलप भइन्। रिसाएका अष्टसिद्धिहरूले शक्तिका स्वामी देवान्तकलाई केशमा समातेर ल्याए । त्यस बेला देवान्तकले आफ्नो मुड्कीले अष्टसिद्धिमध्येकी एउटी सिद्धि अणिमामाथि प्रहार गर्‍यो । अणिमा त्यस प्रहारबाट मूर्च्छित भएर भुइँमा लडिन् ।।७-८।। लघिमा, गरिमा र वशिमा नामक शक्तिहरूले देवान्तक दैत्यलाई समातेर आफ्ना खुट्टाले प्रहार गरे । त्यसै बेलामा अचानक उठेको दैत्यले तीनवटै शक्तिलाई समातेर पछार्‍यो । त्यो दृश्य देखेर प्राकाम्य सिद्धि र विभूतिहरू आएर दैत्यमाथि प्रहार गर्न थाले। त्यो दैत्य पनि मुखबाट अग्निको ज्वाला वमन गर्दै भुइँमा लड्यो ।।९-११।। एक मुहूर्तपछि होशमा आएर त्यो घोडामा सवार भयो । हातमा शस्त्र नचाउँदै वायुवेगले श्रीगणेशका सामु गएर प्रहार गर्न थाल्यो ।।१२।। देवान्तकको कठोर प्रहारबाट श्रीगणेश पनि केही बेर मूर्च्छित हुनुभयो । एकछिनपछि नै होशमा आएर श्रीगणेश दैत्यराज देवान्तकलाई मार्न भनी दौडनुभयो।।१३।।

हिरण्यकशिपुं विष्णुर्यथा वृत्रं शचीपति: ।
शरञ्च कमलं पाशमङ्कुशञ्च चतु:करै: ।।१४।।

विभ्राण: शुशुभे वीरश्रिया परमया ज्वलन् ।
गर्जित्वा घनवद् देवो जघान दैत्यपुङ्गवम् ।।१५।।

चतुर्भिरायुधैर्वेगान्न चचाल तथापि स: ।
आश्चर्यं परमं प्राप दृष्ट्वा शस्त्रं वृथागतम् ।।१६।।

वज्रात् सारतरं मेने दैत्यदेहं विनायक: ।
ततो देवो राक्षसस्य धूम्राक्षस्य महायुधम् ।।१७।।

वज्रं सञ्चूर्णयन् सूर्यमण्डलादागतं तु यत् ।
तदादायाऽहनत् तेन दैत्यं तच्छतधाऽभवत् ।।१८।।

न रोमापि चचालाऽस्य तदप्याश्चर्यमुत्तमम् ।
ततो नानाशस्त्रघातैर्जघ्नतुस्तौ परस्परम् ।।१९।।

मस्तके पृष्ठभागे च हृदये बाहुमण्डले ।
तत: शस्त्रविघातेन जातो वह्निर्वसुन्धराम् ।।२०।।

ददाह न च तौ भीतौ युद्धमेवान्वपद्यत ।
निशीथे तमसा व्याप्ते विरामं न समीयतु: ।।२१।।

तत: कृत्रिमदीप्त्या तौ परस्परमयुध्यताम् ।
ततो मायां रौद्रकेतुश्चक्रे सुरविमोहिनीम् ।।२२।।

अदितिं सुन्दरां कृत्वा दैत्यहस्ते न्यवेशयत् ।
पद्मनेत्रां पीनकुचां कुङ्कुमारक्तभालिकाम् ।।२३।।

मुक्ताहारां सुवलयां दिव्यांशुकविराजिताम् ।
लावण्यलहरीं रुक्मविलसद्दिव्यकञ्चुकाम् ।।२४।।

जसरी भगवान् नृसिंह हिरण्यकश्यपुलाई मार्न दौड्नुभएको थियो जसरी इन्द्र महाराज वृत्रासुरलाई मार्न दौडेका थिए त्यसैगरी श्रीगणेश पनि देवान्तकलाई मार्न दौड्नुभएको थियो। त्यस बेला भगवान् श्रीगणेशले चार हात भएको आफ्नो स्वरूप प्रकट गर्नुभयो। ती हातहरूमा बाण, कमल, पाश र अङ्कुश धारण गर्नुभयो। अत्यन्त आनन्ददायक शोभाले चहकिलो बन्नुभएका श्रीगणेशले बादलझैं गर्जेर दैत्यमाथि प्रहार गर्न थाल्नुभयो ।।१४-१५।। चारै हातबाट शस्त्रहरूको प्रहार गर्दा पनि त्यो दैत्य विचलित भएन । श्रीगणेश आफ्ना शस्त्रहरूलाई खेर गइरहेको देखेर आश्चर्यमा पर्नुभयो ।।१६।। उहाँले दैत्यको शरीरलाई वज्रभन्दा पनि कठोर भएको स्वीकार गर्नुभयो । त्यसपछि धूम्राक्ष नामक दानवबाट खोसेर लिएको महाशस्त्र वज्रलाई हातमा रिंगाउँदै प्रहार गर्नुभयो । त्यो वज्र बरु सय टुक्रा भएर खस्यो तर त्यस दैत्यलाई केही पनि भएन। यस्तो दृश्य देखेर श्रीगणेश अत्यन्तै चकित हुनुभयो । त्यसपछि दुबै वीरहरू उन्मत्त भएर युद्धको मैदानमा परस्पर प्रहार गर्दै लामो युद्धका लागि तयार भए ।।१७-१९।। दुबैले दुबैका निधार, पिठ्यूँ, छाती र भुजाहरूमा प्रहार गर्दै युद्ध गरे। परस्पर युद्ध गर्दा शस्त्रहरूको सङ्घर्षबाट अग्निको ज्वाला पैदा भयो । त्यसले पृथिवीलाई डढायो तर ती दुबै वीर कत्ति पनि विचलित नभएर युद्ध गरिरहे । दिन ढल्यो, रात पर्‍यो, चारैतिर अन्धकार छायो तर ती दुई वीरले विश्राम लिएनन् ।।२०-२१।। ती दुबै आफ्नो शक्तिबाट कृत्रिम प्रकाश पैदा गरी लड्न थाले । त्यसपछि देवान्तकका पिता रौद्रकेतुले आफ्नो छोरा देवान्तकको निरन्तर युद्धयात्रा देखेर त्यसलाई विजयी बनाउन उपाय रचे। तिनले श्रीगणेशकी आमा अदितिको नयाँ स्वरूप तयार गरी आफ्नो छोरा देवान्तकका हातमा सुम्पिदिए। नयाँ बनेकी अदिति गणेशकी आमाभन्दा कत्ति पनि फरक थिइनन् । तिनका आँखा कमलजस्ता र स्तनहरू गोल एवं सुडौल थिए। तिनको निधारमा कुङ्कुमको टीका सुहाएको थियो र तिनले मोतीको हार लगाएकी थिइन् । तिनका हातमा सुनका बाला चम्किरहेका थिए र तिनले रेशमी वस्त्रधारण गरेकी थिइन् । तिनको शरीरबाट सौन्दर्यका किरणहरू छुटिरहेका थिए । तिनले लगाएको चोलीमा सुनका तारहरू जडिएका थिए । तिनले श्रीगणेशलाई हेरिन् र रुँदै भनिन् - 'बाबु गणेश ! तिमी

विनायकं निरीक्ष्यैव रुरोद दैत्यहस्तगा ।
धाव धावेति तं प्राह त्रासिताऽहं किमीक्ष्यसे ।।२५।।

एवं ब्रुवत्या दैत्योऽस्याश्चिच्छेद कञ्चुकीं बलात् ।
अंशुकञ्च चकर्षाऽस्या मदेनाविष्टचेतसा ।।२६।।

उच्चैरुवाच देवं सा क्व गता पुरुषार्थता ।
लोकलज्जाभयान्मां त्वं निःस्नेहाशु विमोचय ।।२७।।

विनायको निरीक्ष्यैतां वाष्पकण्ठो रुषान्वितः ।
न सस्मार विचारं स शस्त्राणि ज़गलुः करात् ।।२८।।

शुशोच मम मातेयं कथमस्य करे गता ।
धिग्जन्म यस्य जननी गताऽवस्थां दुरत्ययाम् ।।२९।।

देवानां जननी चैव सम्प्राप्ता दुष्टसङ्गतिम् ।
काशिराजोऽपि तं दृष्ट्वा शोचन्तं गणनायकम् ।।३०।।

स्वयं शुशोच बहुधा लोकोऽपि नगरे स्थितः ।
ततो देवान्तको देवं जगर्हे बहुधा तदा ।।३१।।

धिग्जन्म पौरुषं तेऽद्य न प्राणं त्यजसे कथम् ।
निर्लज्जोऽसि मुखं लोके दर्शयस्येव योऽधुना ।।३२।।

त्वत्समीपं हनिष्येऽस्याः शिरः कायात् खलाधुना ।

क उवाच

इति तन्निष्ठुरं वाक्यं श्रुत्वा देवो विनायकः ।।३३।।

तर्कयामास मनसि सत्यमेव वदत्ययम् ।
प्राणत्यागाय किं कार्यं विषं वा पाशबन्धनम् ।।३४।।

भाग, युद्ध नगर, म राक्षसको हातमा परेकी छु र भयभीत छु । मलाई यस्तो अवस्थामा देखेर तिमी युद्ध गर्दछौ भने यी दैत्यहरूले मलाई मारिदिनेछन् ।' यसरी दैत्यको हातमा परेकी श्रीगणेशकी माता अदिति रोइरहेकी थिइन् ।।२२-२५।। त्यस बेला देवान्तक दैत्यले तिनले लगाएको चोली फुकाइदियो र तिनको शरीरलाई वस्त्रहीन तुल्यायो। कामावेशमा आएर तिनसँग कुकर्म गर्ने चेष्टा गर्‍यो । त्यसै बेला अदितिले रुँदै भनिन् - 'हे छोरा ! तिमी आफ्नी आमालाई परपुरुषले यो हालतमा पुर्‍याउँदा पनि हेरिरहेका छौ। तिम्रो पुरुषार्थ कहाँ गयो ? के तिमीलाई लोकको लाज लाग्दैन ? यदि लोकको लाज लाग्छ भने मलाई यस राक्षसको हातबाट मुक्त गर ।'।।२६-२७।। आमाको यस्ता प्रार्थना सुन्नुभएपछि श्रीगणेश उहाँका दयनीय अवस्था देखेर मुक्तकण्ठले रुन थाल्नुभयो। एकातिर आँखाबाट आँसुका धारा बर्सिरहेका थिए भने अर्कोतिर आमालाई त्यस हालतमा पुर्‍याएको कारणबाट क्रोधको आगो पनि दन्किरहेको थियो । श्रीगणेशले केही विचार गर्न सक्नुभएन । शस्त्रहरू उहाँका हातबाट आफै नै खसे । उहाँका मनमा कुराहरू खेल्न थाले- 'कश्यप ऋषिकी पत्नी र मेरी माता अदिति आज कसरी दैत्यको हातमा पर्नुभयो ? मेरो जन्म धिक्कार छ, जसकी आमाले आज यो अवस्था बेहोर्नुपरेको छ । देवताहरूकी आमा अदितिलाई पनि आज दुष्टको सङ्गतमा पर्नुपर्‍यो।' श्रीगणेशको दयनीय र चिन्तनीय अवस्था देखेर काशिराजसहित त्यहाँ रहेका नर-नारीहरू चिन्तित भए । त्यसै बेला देवान्तक त्यहाँ आइपुग्यो र त्यसले गणेशको मुखमा हेर्दै भन्यो- 'हे गणेश! तिमीलाई धिक्कार छ । तिम्रो जन्म धिक्कार छ । तिम्रो पराक्रम धिक्कार छ । किन प्राण छोड्दैनौ ? आमाको यो अवस्था हुँदा पनि तिमी कसरी बाँचिरहेका छौ ? लाज लाग्दैन ? अब संसारका सामु कसरी मुख देखाउँछौ ?।।२८-३२।। हे गणेश! अहिले म तिम्रै सामु तिम्री आमालाई मारिदिनेछु । तिम्री आमाको टाउकोलाई शरीरबाट छुट्याएर भुइँमा खसाइदिनेछु ।'

**ब्रह्माजीले भन्नुभयो** - देवान्तक दैत्यका यी निष्ठुर वचन सुनेर गणेशले विचार गर्नुभयो - 'यो राक्षसले सही कुरा बोलेको छ । म बाँच्नु धिक्कार छ । प्राणत्याग गर्नका निमित्त के गरूँ ? विषपान गरूँ अथवा पासो लगाऊँ ?

उदरे शस्त्रसङ्घात: कार्यो वा मृत्युहेतवे ।
इत्थं यावच्चिन्तयते दु:खशोकसमन्वित: ।।३५।।

तावदाकाशवाणीं स शुश्राव च विनायक: ।

आकाशवाणी उवाच

मायेयं रचिता देव ! दैत्येन दुष्टबुद्धिना ।।३६।।

अवधेहि रणायत्तो भूत्वा जहि निजं रिपुम् ।
तत: स सावधानोऽभूज्ज्ञात्वा मायामयीं तु ताम् ।।३७।।

जहर्ष च महाबुद्धिर्दैत्यं हन्तुं प्रचक्रमे ।
स्मृत्वा च तद्वरं शम्भुदत्तं तस्मै दुरात्मने ।।३८।।

उष:कालं विना सर्वशस्त्राणि च वृथा त्वयि ।
एवं तस्य वरं ज्ञात्वा प्रातर्युद्धाय निर्ययौ ।।३९।।

दैत्योऽपि पुरतोऽपश्यद् युद्धान्ते तं विनायकम् ।
आरक्तनयनं भ्राजन्मुकुटं कुण्डलोज्ज्वलम् ।।४०।।

दन्तप्रकाशरुचिरं मुक्तादामविभूषितम् ।
दिव्याम्बरं सुधामानं व्योमस्पृक्पुष्करं विभुम् ।।४१।।

दृष्ट्वा देवान्तको रूपं बिभाय च विसस्मरे ।
अर्द्धं नरशरीरं किमर्द्धं गजसमं परम् ।।४२।।

अथवा सम्पूर्ण शस्त्रास्त्रले आफ्नो पेटमा प्रहार गरेर मरूँ ?' यसरी चिन्ता गर्दागर्दै श्रीगणेश दु:ख र शोकले व्याकुल हुनुभयो ।।३३-३५।। त्यसै बेला उहाँले आकाशवाणी सुन्नुभयो।

आकाशवाणीले भनिन्- 'हे गणेश ! दुष्टबुद्धि भएको देवान्तकले तपाईंलाई फँसाउन माया देखाएको छ। ती तपाईंकी आमा अदिति होइनन्। त्यस कारण यस दैत्यलाई तपाईंले छिटो मारिदिनुहोस् ।' आकाशवाणी सुनेर श्रीगणेश सावधान हुनुभयो । दैत्यले देखाएकी अदिति वास्तविक अदिति नभई मायाद्वारा निर्माण गरिएकी रहेछन् भन्ने बुझेर खुसी हुनुभयो र त्यस मायावी दैत्यलाई मार्नका लागि उपायको चिन्तन गर्नुभयो। श्रीगणेशले संझनुभयो- 'यसले शिवको आराधना गरी वरदान प्राप्त गरेको छ। त्यसैले गर्दा यो अहिले अजेय बनेर रहेको छ। प्रात:कालमा मात्र यसलाई मार्न सकिन्छ । दिन र रातमा यो कहिल्यै पनि परास्त हुँदैन । अरू बेला प्रहार गरिएका शस्त्रास्त्र व्यर्थ हुन्छन्। यसले यस किसिमको वरदान पाएको छ ।' यसरी संझना गरेपछि श्रीगणेश प्रात:कालमा युद्धका लागि निस्कनुभयो ।।३६-३९।। दैत्यले पनि एकाबिहानै आफूसँग लड्न आएका श्रीगणेशलाई देखेर युद्ध गर्ने विचार गऱ्यो । त्यस बेला भगवान् श्रीगणेशका आँखा राता थिए र शरीरमा सुन्दर मुकुट सुहाएको थियो, कानमा कुण्डल हल्लिरहेका थिए र दाँतबाट सेतो प्रकाशका किरणहरू प्रकट भइरहेका थिए । उहाँले मोतीको माला धारण गर्नुभएको थियो । उहाँ दिव्य वस्त्र पहिरी सुन्दर सूँढले सुहाउनुभएको थियो । देवान्तक दैत्यले श्रीगणेशको यो रूप देखेर भयको अनुभव गऱ्यो । श्रीगणेशको आधा मानिस र आधा हात्तीको विचित्र स्वरूपबाट मेरो मृत्यु हुने हो कि भन्ने तर्क देवान्तकले गऱ्यो ।।४०-४२।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे मायाप्रदर्शनं नामैकोनसप्ततितमोऽध्याय:

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'देवान्तकद्वारा मायाप्रदर्शन' शीर्षकान्वित उनान्सत्तरीयाँ अध्याय पूर्ण भयो ।।६९।।

ॐ

## सप्ततितमोऽध्यायः　　{ ७० अध्याय }

क उवाच

एवं वदति यावत् स भयभ्रान्तः सुरान्तकः ।
तावद् देवो दधारैनमुत्सङ्गे लघुबालवत् ।।१।।

कृत्वा पद्मासनञ्चारु गणेशः स्वप्रभावतः ।
उवाच चैनं दैत्येन्द्रं वरं स्मर निजं शुभम् ।।२।।

स दैत्यो रदनञ्चास्य धृत्वा हस्तद्वयेन ह ।
दोलयामास देहं स्वमन्तरिक्षे मुहुर्मुहुः ।।३।।

यावत् पपात भूपृष्ठे भङ्क्त्वा दन्तं सुरान्तकः ।
तावद् दधार तं देवः स्वदन्तं लाघवाद् विभुः ।।४।।

अहनत् तेन दन्तेन मस्तके तं सुरान्तकम् ।
जगर्ज च महारावैर्गर्जयन् विदिशो दिशः ।।५।।

चालयन् पृथिवीं सर्वां पातालान्यखिलानि च ।
द्विजाघातेन शतधाऽकारि देहोऽस्य तत्क्षणात् ।।६।।

असृग्वृष्टिः पपाताशु गगनान्मेघवृष्टिवत् ।
उत्पातं मेनिरे लोकाः सर्वे भूतलवासिनः ।।७।।

दैत्यदेहगतं ज्योतिस्तं विवेश विनायकम् ।
पश्यतां सर्वदेवानां प्रधनालोकितं पुनः ।।८।।

देहस्तु निपपाताऽस्य धरापृष्ठे त्रियोजनम् ।
चूर्णयन् वृक्षसङ्घातान् पर्वतान् पादपैर्युतान् ।।९।।

एवं दृष्ट्वा गतिं तस्य सैनिकाश्च दिशो दश ।
याताश्च कतिचिन्नाशं प्राप्तास्तद्देहपाततः ।।१०।।

मुमुचुः पुष्पवर्षं ते देवाः स्वस्थानमागताः ।
देवदुन्दुभयो नेदुर्नृपदुन्दुभिनिस्वनैः ।।११।।

दिशश्च विमला आसन् ववुर्वाताः सुखावहाः ।
तेजांसि वह्नेर्लोकानां प्रसन्नानि तदाऽभवन् ।।१२।।

प्रतिकूलवहा नद्य आसन् सन्मार्गगास्तथा ।
ततः शक्रादयो देवा मुनयस्तं पुपूजिरे ।।१३।।

**ब्रह्माजीले भन्नुभयो** – यसरी देवान्तकले भयभीत भएर विचार गरिरहेको बेलामा श्रीगणेशले देवान्तकलाई समातेर सानो बालकलाई झैं काखमा राख्नुभयो र पद्मासन कसेर बस्नुभयो । त्यसपछि उहाँले दैत्यराजलाई भन्नुभयो – 'तिमीले आफूले शिवबाट पाएको वरदानको संझना गर।' श्रीगणेशले यसो भनिरहनुभएको समयमा त्यो दैत्य श्रीगणेशका दुइटा दाँत खेलाउँदै उहाँको शरीरलाई हल्लाइरहेको थियो । त्यसै बेला त्यसले उहाँका दुवै दाँत फुकाल्यो । रीसमा आउनुभएका श्रीगणेशले त्यसले फुकालेका दाँत समातेर त्यसको निधारमा प्रहार गर्दै ठूलो गर्जन गर्नुभयो । श्रीगणेशको गर्जनबाट पृथिवी, पाताल र स्वर्गलोकसमेत कम्पायमान भए ।।१-५।। श्रीगणेशले दाँतबाट प्रहार गर्दा देवान्तकको शरीरका सयभन्दा बढी टुक्रा बनेका थिए । रगतको धारा बगिरहेको थियो। घोर आँधीबेहरी चलेको थियो । यो देखेर सम्पूर्ण पृथिवीका नर-नारीहरूले उत्पात आएझैं माने ।।६-७।। त्यस बेला दैत्यको शरीरमा रहेको ज्योतिले सहसा श्रीगणेशको शरीरमा प्रवेश गऱ्यो। दैत्यको शरीर ६ कोशसम्म फैलिएको थियो । त्यो शरीर भुईंमा खस्दा हजारौं वृक्षहरू लडेका थिए। देवान्तकको मृत्यु भएपछि त्योसँग आएका दैत्य सैनिकहरू दसै दिशातर्फ भागे । कति घाइते भए र केही मरे ।।८-१०।। त्यसै बेला आकाशबाट देवताहरूले फूल बर्साएर दमाहा बजाए । संसारको एउटा काँडो झिकिएको थियो । मानिसका मन प्रसन्न भए र दिशाहरू निर्मल भए । संसारमा सुखदायक हावा चल्न थाल्यो र अग्निका ज्वाला प्रसन्न भएर बल्न थाले । बाटो छोडेर बग्ने नदीहरू आफ्नो प्रवाहमार्गमा आइपुगे । यस शुभमुहूर्तमा इन्द्रआदि देवताहरू श्रीगणेशका सामु आई प्रणाम गर्दै पूजा गर्न थाले । त्यसपछि ती सबैले श्रद्धापूर्वक देवताका पनि देवता श्रीगणेशको बन्दना गरे। देवान्तक दानवले कारागारमा थुनेर राखेका देवताहरू पनि त्यहाँबाट मुक्त भएर श्रीगणेशका सामु आई प्रार्थना गरिरहेका थिए । ती सबैले

तुष्टुवुः परया भक्त्या देवदेवं विनायकम् ।
विमोचिता वयं बन्धाद् देवान्तककृताद् विभो ।।१४।।

उपेन्द्र इव देवेन्द्रकार्यं यस्मात् कृतं त्वया ।
उपेन्द्र इति नाम्ना त्वं ख्यातिं लोके गमिष्यसि ।।१५।।

वयं स्वस्वाधिकारेषु निरातङ्का वसामहे ।
स्वाहास्वधावषट्कारा भविष्यन्ति गृहे गृहे ।।१६।।

एवमुक्त्वा नमस्कृत्य देवं ते च प्रदक्षिणम् ।
अनुज्ञाता ययुः सर्वे स्वं स्वं स्थानं मुदान्विताः ।।१७।।

मुनयश्च तदा देवैर्हृषीकेशेति नाम च ।
कृत्वा नत्वा ययुः स्वं स्वमाश्रमं हर्षनिर्भराः ।।१८।।

ततः सर्वे धराधीशाः सम्पूज्य च प्रणम्य च ।
ऊचुर्विनायकं देवमुद्धृता धरणी त्वया ।।१९।।

दैत्यभारभराक्रान्ता तस्मात् त्वं धरणीधरः ।
इत्युक्त्वा ते गताः स्वस्वपत्तनानि तदाज्ञया ।।२०।।

ततः पश्चात् पश्यति स्म काशिराजो विनायकम् ।
सिंहारूढं बालरूपं क्रीडन्तं बालकैः सह ।।२१।।

बालोऽपि तं नृपं दृष्ट्वा लिलिङ्ग परमादरात् ।
उभावानन्दभरितौ मुञ्चतोऽश्रूणि नेत्रतः ।।२२।।

तत ऊचे नृपो देवं महद् भाग्यं ममोदितम् ।
ब्रह्मादीनामगम्यं यत् परं ब्रह्म सनातनम् ।।२३।।

तत्ते दृग्गोचरं नित्यं पूर्वपुण्यफलोदयात् ।
विश्वस्य कारणानाञ्च कारणं तद्विवर्जितम् ।।२४।।

वेदान्तवेद्यं सज्जोतिर्ज्योतिषामपि भास्वरम् ।
नानारूपमरूपं यद् बालरूपेण मे गृहे ।।२५।।

क्रीडते स्वेच्छया पृथ्वीभारहारि मनोहरम् ।

भने- 'हे श्रीगणेश! भगवान् वामनले दैत्यहरूको संहार गरेर जसरी देवताहरूको उपकार गर्नुभएको थियो । त्यसैगरी हजुरले पनि हाम्रो उपकार गर्नुभएको छ । अबदेखि हजुर पनि उपेन्द्रका नामबाट संसारमा प्रख्यात हुनुहुनेछ ।।११-१५।। हामी देवताहरू आ-आफ्नो धाममा गएर कर्तव्य पालन गर्नेछौं । पृथिवीमा पनि घर-घरमा देवपूजा, पितृश्राद्ध आदि सत्कर्म हुनेछन् ।' यसरी निवेदन गरेर प्रदक्षिणा गर्दै भगवान् श्रीगणेशलाई नमस्कार गरी उहाँको आज्ञा पाएर ती सबै देवताहरू आ-आफ्नो धामतर्फ फर्किए ।।१६-१७।। देवताहरू गएपछि ऋषिहरू पनि भगवान् श्रीगणेशलाई नमस्कार गरेर भगवान्को हृषीकेश भन्ने नामकरण गरी जयजयकार गर्दै हर्षपूर्वक आफ्नो आश्रमतर्फ लागे ।।१८।। त्यसपछि पृथिवीका शासक राजाहरू पनि श्रीगणेशका सामु आई प्रणाम र पूजा गर्दै प्रार्थना गर्नथाले- 'हे गणेश ! हजुरले पृथिवीको उद्धार गर्नुभएको छ । दैत्यको भारबाट आत्तिएकी पृथिवी अब निर्मल र शान्त भएकी छन्। अब उपरान्त हजुर धरणीधरका नामबाट विख्यात हुनुहुनेछ।' यसरी प्रर्थना गरेर ती सबै राजाहरू श्रीगणेशको आज्ञा पाई आ-आफ्नो राजधानीतर्फ लागे । त्यसपछि काशिराजले भगवान् श्रीगणेशको दर्शन गरे। काशिराजले दर्शन गर्दा भगवान् श्रीगणेश सिंहमा सवार हुनुहुन्थ्यो र बालकरूपमा बालकहरूसँग क्रीडा गरिरहनुभएको थियो।।१९-२१।। बालक श्रीगणेशले काशिराजलाई देखेर आदरपूर्वक आलिङ्गन गर्नुभयो। गणेश र काशिराज दुबैले आनन्दमग्न भएर आँखाबाट हर्षका आँसु बगाउन थाल्नुभयो । त्यसपछि काशिराजले भने - 'हे भगवन् श्रीगणेश! आज मेरो ठूलो भाग्य उदाएको छ । ब्रह्माजीद्वारा पनि सजिलैसँग दर्शन गर्न नपाइने परब्रह्मस्वरूप हजुरको दर्शन पाएको छु । यो रूपको दिनदिनै दर्शन पाऊँ । हजुर विश्वका कारण हुनुहुन्छ। कारणदेखि पनि पर हुनुहुन्छ ।।२२-२४।। वेदान्तशास्त्रद्वारा हजुरको ज्ञान गर्न सकिन्छ । हजुर प्रकाशरूप हुनुहुन्छ । हजुरले सूर्यचन्द्र आदि प्रकाशका देवताहरूलाई पनि आफ्नो चम्किलो प्रकाश प्रदान गर्नुहुन्छ । हजुरले लाख प्रकारका रूप धारण गर्नुहुन्छ । हजुर निराकार र रूपरहित पनि हुनुहुन्छ। ममाथि कृपा गरेर बालकरूप धारण गरी मेरै घरको आँगनमा हजारौं बालकहरूका साथमा क्रीडा गर्नुहुन्छ ।।२५।। हजुरको स्वरूप अत्यन्त आनन्ददायक, सुन्दर, निर्मल र पृथिवीको भार हरण गर्न समर्थ छ ।

क उवाच

एवं श्रुत्वा स्तुतिं तस्य प्रमृज्याश्रूणि विघ्नराट् ।।२६।।

उवाच न क्षणं त्वत्तो यामि दूरं कदाचन ।
ततो राजा पुपूजैनमुपचारैरनेकशः ।।२७।।

ततो वादित्रनिर्घोषैर्बन्दिशब्दैर्विमिश्रितैः ।
सुरान्तकवधाद्धर्षयुक्तैः सेनाचरैः सह ।।२८।।

विनायकं बालरूपं स्तुवद्भिः स्वपुरं ययौ ।
विसृज्य सर्वलोकाँश्च दत्त्वा वासांसि चैकशः ।।२९।।

ताम्बूलानि च केषाञ्चित् पुरस्कृत्य विनायकम् ।
विवेश स्वगृहं रम्यं हर्षनिर्भरमानसः ।।३०।।

**ब्रह्माजीले भन्नुभयो** – काशिराजले स्तुति गरेको सुनेर गणेशले हर्षका आँसु पुछ्दै भन्नुभयो – 'हे काशिराज ! तपाईंजस्ता भक्तबाट एकछिन पनि म टाढा रहने छैन । म जहाँ रहे पनि तपाईंकै नजिकमा रहनेछु ।' श्रीगणेशका यी कुरा सुनेर काशिराजले अनेकौं प्रकारका सामग्री चढाएर श्रीगणेशको पूजा सम्पन्न गरे।।२६–२७।। त्यसपछि मङ्गलमय बाजाहरू बजे । देवान्तकको वधका कारण हर्षित भएका सैनिकहरूका साथमा विजयोत्सव मनाइयो । यसरी उत्सव सकिएपछि काशिराज बालकरूप श्रीगणेशको स्तुति गर्दै आफ्नो राजधानीतर्फ लागे। राजमहलमा पुगेर आफ्ना मानिसहरूलाई बिदा गर्दै तिनले अनेक थरि उपहार पनि टक्र्याए । कसैलाई पान–सुपारी दिए, कसैलाई वस्त्र र दक्षिणा प्रदान गरे । त्यसै बेला बालक श्रीगणेश पनि राजमहलको प्राङ्गणमा आइपुग्नुभयो र काशिराज पनि उहाँलाई अगाडि लगाएर दरबारभित्र गए ।।२८–३०।।

ॐ

**इति श्रीगणेशपुराणे क्रीडाखण्डे बालचरिते पुरप्रवेशो नाम सप्ततितमोऽध्यायः**

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'काशिराजका साथ श्रीगणेशको काशी प्रवेश' शीर्षकान्वित सत्तरीऔं अध्याय पूर्ण भयो ।।७०।।

ॐ

# एकसप्ततितमोऽध्याय: { ७१ अध्याय }

क उवाच

अपरस्मिन् दिने ब्रह्मन् ! राजा भद्रासनं गत: ।
अमात्यान् वीरमुख्याँश्च वृद्धाँश्च सुहृदो द्विजान् ।।१।।

आकार्य च नमस्कृत्य जगाद हृदि संस्थितम् ।

राजोवाच

विवाहाय तु पुत्रस्य समाहूतो विनायक: ।।२।।

उत्पाता बहवो जातास्ते च तेन निराकृता: ।
अदित्यै च मया प्रोक्तं शीघ्रं ते तनयं शुभम् ।।३।।

आनयिष्ये तत्र बहुदिवसा जग्मुरञ्जसा ।
स्वस्थेषु त्रिषु लोकेषु विवाहोऽस्य विचिन्त्यताम् ।।४।।

अमात्या ऊचु:

सम्यगुक्तं महाराज ! विलम्बो विघ्नकारित: ।
जातो विवाहकार्येऽस्मिन् गतेऽस्मिन् स विधीयताम् ।।५।।

विनायकप्रसादेन सर्वमव्याकुलं जगत् ।
दूरस्थानाञ्च सुहृदां प्रेष्यन्तां लग्नपत्रिका: ।।६।।

दूताँश्च सर्वसम्भारान् कर्तुं ग्रामेषु युज्यताम् ।

क उवाच

इति प्रकृतिवाक्यानि श्रुत्वा लोका: सभासद: ।।७।।

साधूक्तमिति तत्रोचुस्ततो राजा जहर्ष च ।
ज्योतिर्विद्भिर्लग्नदिनं निश्चिकाय तदैव स: ।।८।।

प्रेषयामास सुहृदो दूतानाकारितुं शुभान् ।
सामग्रीं कारयामास दूतैराप्तैर्यथाविधि ।।९।।

ततो मगधराजोऽपि सुतामादाय तत्पुरीम् ।
आययु: सर्वसुहृदो नानादिग्भ्य: समागता: ।।१०।।

**ब्रह्माजीले भन्नुभयो** - देवान्तकमाथि विजय गरेपछि दोस्रो दिन काशिराज सिंहासनमा बिराजमान थिए । तिनका वरिपरि मन्त्री, सेनापति, कुलवृद्ध, मित्र र ब्राह्मणहरू बसेका थिए । काशिराजले सबैलाई बोलाएर भलाकुसारी गरी आफ्ना मनमा लागेका कुराहरू भने ।

**काशिराजले भने** - 'मैले मेरा छोराको विवाहोत्सवमा भाग लिन कश्यपऋषिको आश्रममा गएर उहाँका पुत्र बालक श्रीगणेशलाई लिएर आएको हुँ ।।१-२।। काशीमा धेरै उत्पात भए, विवाह गर्न बिलम्ब भयो, तर ती उत्पातलाई श्रीगणेशले आफ्ना लीला देखाएर शान्त गर्नुभयो । मैले उतिबेला कश्यपकी पत्नी अदिति मातासँग तपाईंको बालक छोरालाई छिट्टै फर्काउनेछु भन्ने बाचा गरेको थिएँ ।।३।। धेरै दिन बिते, मैले आफ्नो प्रतिज्ञा पूरा गर्न सकिनँ । अहिले तीनै लोक शान्त भएका छन्, दानवहरू मारिएका छन् र विघ्न रोकिएको छ । अब मेरा छोराको विवाह कसरी सम्पन्न गर्ने भन्ने विषयमा तपाईँहरूले विचार-विमर्श गर्नुहोस्।।४।।

**मन्त्रीहरूले भने** - हे महाराज ! हजुरले साँचो कुरा भन्नुभयो । विघ्नका कारण विवाहमा विलम्ब भयो । अब विवाहको व्यवस्था गर्नुपर्छ ।।५।। श्रीगणेशको कृपाबाट जगत् आनन्दित भएको छ । टाढा-टाढा रहनुभएका मित्र र कुलकुटुम्बका मानिसहरूलाई बोलाउन विवाहको निमन्त्रणापत्र पठाउनु पर्दछ ।।६।। सम्पूर्ण सामग्री तयार गर्न मानिसहरूलाई खटाउनु पर्दछ ।

**ब्रह्माजीले भन्नुभयो** - मन्त्रीहरूका यी कुरा सुनेर राजसभामा बसेका सबैले सभासद्हरूले राम्रो-राम्रो भने । राजा पनि खुसी भए । त्यसै बेला तिनले ज्योतिषीहरूलाई त्यहाँ बोलाएर विवाहको लग्न निश्चित गर्ने काम पनि गरे ।।७-८।। आफ्ना मित्रहरू बोलाउन दूतहरू पठाए । आफ्ना विश्वस्त मानिसहरूबाट विवाहमा आवश्यक हुने सामग्रीको सङ्ग्रह गराए।) (त्यसै बेला मगधदेशका राजा पनि आफ्नी छोरी लिएर काशीमा आइपुगे। उनका मित्र र बन्धुबान्धव पनि त्यहाँ आए।।९-१०।।

उपायनानि भूरीणि ददुस्तेऽन्योन्यमादरात् ।
देवतास्थापनं तौ च चक्रतुः सुमहोत्सवान् ।।११।।

साङ्गोपाङ्गविवाहं तौ सम्यक् सम्पाद्य यत्नतः ।
तोषयामासतुर्विप्रान् सर्वलोकान् धनादिभिः ।।१२।।

विसृज्य सुहृदः सर्वांस्ततो राजा विनायकम् ।
भूषयामास विविधैर्भूषणैरंशुकैर्वरैः ।।१३।।

अभ्यज्य भोजयामास स्वाद्वन्नं सह बन्धुभिः ।
ततो रथं समारुह्य सह तेन नृसत्तमः ।।१४।।

ययौ वादित्रनिर्घोषैः कश्यपाश्रममुत्तमम् ।
ततो नागरिकाः सर्वे हित्वा कृत्यानि निर्ययुः ।।१५।।

भोजनं पठनं निद्रां व्यासङ्गं तत्यजुस्तदा ।
अकृत्वा स्वस्ववेषं ते त्वरया निर्ययुः पुरात् ।।१६।।

ततो बालसहस्राणि रुरुधुस्तं विनायकम् ।
अस्मांस्त्यक्त्वा कथं यासि कथं निष्ठुरतां गतः ।।१७।।

गमिष्य इति पूर्वं नः कथं नोक्तं प्रसङ्गतः ।
अभुक्त्वाऽस्मद्गृहे यासि कथं तं निजमाश्रमम् ।।१८।।

कश्चिद् बालो दधाराऽस्य पादपद्मं रुदन् मुहुः ।
कश्चित् स्नेहात् समालिङ्ग्य दधार करपङ्कजम् ।।१९।।

पौराङ्गनास्तथैवैनं बाला मुग्धाः सयौवनाः ।
विपर्यस्य निजा भूषा आययुस्तं विलोकितुम् ।।२०।।

आपसमा भेट भएपछि सबै बन्धुहरूले आपसमा उपहार टक्र्याउने काम पनि सम्पन्न गरे । काशिराजको घरमा विवाहयज्ञ आरम्भ भयो । यज्ञमण्डप तयार गरी देवताहरूको स्थापना गरियो र विवाहोत्सव मनाइयो ।।११।। यसरी काशिराजका छोरा र मगधराजकी छोरीको विवाह सम्पन्न गरेर ब्राह्मण एवं निमन्त्रित बन्धुबान्धवहरूलाई उपहारहरू दिएर बिदा गरियो। काशिराजले पनि श्रद्धापूर्वक बहुमूल्य गहना र वस्त्र टक्र्याएर भगवान् श्रीगणेशको सम्मान गरे ।।१२-१३।। विविध सुगन्धित पदार्थ लेपन गराई आफ्ना बन्धुहरूका साथ बसेर श्रीगणेशलाई मीठा पकवानहरूको भोजन गराए । त्यसपछि उत्तम राजा काशिराजले श्रीगणेशका साथ रथमा सवार भई बाजा-गाजाका साथ कश्यपाश्रम जान भनी प्रस्थान गरे । श्रीगणेशका साथ काशिराजको कश्यपाश्रमका लागि प्रस्थान भएको देखेर काशीका नर-नारी एवं बाल-बालिकाहरू आ-आफ्ना काम छाडेर पछि-पछि लागे । तिनीहरूले श्रीगणेशसँग भावी वियोगको मर्मान्तक वेदनाका कारण भोजन, अध्ययन, निद्रा र व्यवसाय पनि छाडे । तिनीहरू आफ्नो वेशभूषामा कुनै ध्यान नदिई हतार हतार गरेर नगरबाट बाहिर निस्किए । काशिराजका साथ रथमा सवार भई काशी नगरीबाट बाहिर निस्कनुभएका श्रीगणेशलाई हजारौंको संख्यामा आएका ती बालकहरूले चारैतिरबाट घेरी बाटो छेके । त्यसपछि विनयपूर्ण मुद्रामा तिनीहरूले श्रीगणेशलाई निवेदन गर्दै भने ।।१४-१६।। 'हे श्रीगणेश ! हजुर हामीसँग खेल्नुभयो र हामीलाई माया पनि गर्नुभयो, आज हामीलाई बिर्सेर हजुर किन जाँदै हुनुहुन्छ? किन निष्ठुर हुनुभयो ? म कश्यप आश्रमतर्फ जानेछु भन्ने कुरा पनि हजुरले कहिल्यै भन्नुभएन । हजुर बसुञ्जेलसम्म राजाकै दरबारमा बस्नुभयो । हाम्रो घरमा भोजन नगरीकन हजुर कश्यप आश्रम जान पाउनु हुन्न ।।१७-१८।।' त्यस बेला कुनै बालकले भगवान्लाई समातेर रुँदै उहाँको पाउमा समाएको थियो । कुनै बालकले प्रेमपूर्वक उहाँलाई आलिङ्गन गरेर हात समातेको थियो । काशी नगरीका सुन्दर युवतीहरू पनि श्रीगणेशप्रति गहिरो प्रेम व्यक्त गर्दै बाटो छेक्न आइपुगे । ती नारीहरू वेशभूषाको बेवास्था गरी दौड्दै र आत्तिँदै आएका थिए । तिनीहरूका आँखाबाट प्रेमको आँसु बगिरहेको थियो । जसरी वर्षासमयमा समुद्रका वरिपरि हजारौं नदीहरू आएर मिसिन्छन्, जसरी

यथा पाथोनिधिं सर्वा वर्षाकाले समुद्रगाः ।
यान्ति हंसा यथा मुक्तासमूहं मरुतो हरिम् ।।२१।।

अतिप्रीतियुताः प्रोचुः कथं यासि विनायक! ।
अकस्मात् स्नेहमुत्सृज्य कथं निष्ठुरतां गतः ।।२२।।

क उवाच

रथादवततारासौ दृष्ट्वा तान् नृपसंयुतः ।
परिश्रान्तान् धावमानान् स्खलतः पततोऽपि च ।।२३।।

तानुवाच ततः सर्वान् मुहूर्तं त्वरया जनाः ।
नृपेण सहितः शीघ्रमागतो नगराद् बहिः ।।२४।।

इदानीं प्रार्थये सर्वान् न त्याज्या करुणा मयि ।
अपराधास्तु क्षन्तव्या मया वः सदने कृताः ।।२५।।

न च त्याज्यः परिचयो यदि वो दर्शनं भवेत् ।
एवं तद्वाक्यमाकर्ण्य पौराः सर्वे शुचान्विताः ।।२६।।

रोमाञ्चाञ्चितगात्रास्ते प्रोचुर्गद्गदया गिरा ।

जना ऊचुः

न माया मायिनस्तेऽस्ति सर्वस्य जगतः पितुः ।।२७।।

न पिता त्यजते बालान् सापराधानपि ध्रुवम् ।
न चन्द्र उष्णतां याति सुवर्णं नीलतामपि ।।२८।।

कथं निष्ठुरतां यातः कथं गन्तुं समुत्सुकः ।
पूर्वमेव न चागाश्चेत् तदा शोको न सम्भवेत् ।।२९।।

चोरयित्वा कथं यासि सर्वेषां नो मनांसि च ।
कथं कार्यं करिष्यामो नीतेषु नो मनस्सु च ।।३०।।

जले नष्टे जलचराः कथं जीवन्ति तद् वद ।
प्राणे गते शरीरेण किं प्रयोजनमस्ति नः ।।३१।।

हाँसहरू मोतीको समूहमा रमाउँछन्, जसरी पवनहरूले इन्द्रलाई पच्छ्याउँछन् त्यसैगरी श्रीगणेशलाई पछ्याएका ती सुन्दरीहरूले पनि प्रेमपूर्वक भने – 'हे श्रीगणेश ! हामीलाई छोडेर कसरी जानुहुन्छ ? हाम्रो मुटुमा पलाएको मायालाई तिरस्कार गरेर आज किन कठोर बन्नुभएको छ ?' ।।१९-२२।।

**ब्रह्माजीले भन्नुभयो-** बालक र युवतीहरूका प्रेमपूर्ण वचन सुनेर श्रीगणेश रथबाट भुइँमा ओर्लनुभयो । दौडिदै आउँदा थाकेका, अस्तव्यस्त हालतमा रहेका, आत्तिएका र प्रेमले व्याकुल ती सबैलाई श्रीगणेशले भन्नुभयो- 'हे बालक मित्र र युवतीहरू! आज म मेरो आश्रमतर्फ जाँदैछु । मेरा साथमा काशिराजलाई पनि लिएर जाँदैछु । अहिले म तपाईँहरूसँग प्रार्थना गर्छु कि तपाईँहरूले ममाथि स्नेह र दया गरिराख्नुहुनेछ । काशीनिवासका बेलामा मबाट धेरै गल्ती भए होलान्, तिनलाई क्षमा दिनुहुनेछ। हाम्रो परिचय कहिल्यै पनि पुरानो नहोस् । म यत्ति भन्न चाहन्छु।' श्रीगणेशका यी कुरा सुनेर ती सम्पूर्ण मित्र र युवतीहरूका साथै नगरनिवासी नर-नारीहरू पनि विरहको वेदनाले रुन थाले, रोमाञ्चित भए र गद्गद वाणी उच्चारण गर्दै भन्न थाले ।

**सबैले भने** – 'हे प्रभु ! हजुर सम्पूर्ण संसारका स्वामी हुनु भए तापनि हजुरको माया विचित्र छ । हजुर मायाका स्वामी भएर पनि मायादेखि पर हुनुहुन्छ ।।२३-२७।। हजुर हाम्रा संरक्षक पिता र माता पनि हुनुहुन्छ । छोरा-छोरीहरूले अपराध गरे तापनि माता-पिताले हेला गर्दैनन् । चन्द्रमा कसैसँग रिसाएर ताता बन्दैनन् र सुन कसैसँग रिसाएर नीलो हुँदैन, तर हजुर हामी सबैको मायालाई बेवास्ता गरी किन निष्ठुर हुनुभयो? किन जान चाहनुभयो ? हजुर नआउनुभएको भए हामीलाई यस्तो विरहको पीर हुने थिएन । हजुर बस्नुभयो, हामीसँग खेल्नुभयो, सबैको मन जित्नुभयो र सबैको मन चोर्नुभयो । अब हामीलाई छाडेर कसरी जानुहुन्छ ? हजुर गएपछि हाम्रा मन व्याकुल हुनेछन् । हामीले कसरी काम गर्ने किनभने हाम्रो मन त हजुरकै पछि जानेछ ।।२८-३०।। नदीको जल सुकेपछि नदीका माछाहरू कसरी बाँच्न सक्छन्? यसको उत्तर छैन। प्राण निस्किएर गएपछि एक्लो शरीर के गर्न सक्छ? त्यसको कुनै प्रयोजन हुँदैन ।।३१।। उँखुले गुलियो

कस्तत्र प्रतिकारः स्यादिक्षुश्चेत् स्रवते विषम् ।
तस्मान्नो नय यत्र त्वं यासि तत्र स्वकिङ्करान् ।।३२।।

तद्वचः परिकर्ण्याऽसौ प्रोचे गद्गदया गिरा ।
मुञ्चन् नेत्राश्रु बहुलं सर्वान् स्त्रीवृद्धबालकान् ।।३३।।

देव उवाच

न खेदः सर्वदा कार्यो न वियोगो मम क्वचित् ।
सर्वान्तर्यामिणोऽपायहीनस्यानन्दरूपिणः ।।३४।।

न चित्तस्य समाधानं भवेद् वै चिन्तनेन मे ।
मम मूर्तिं मृदा कृत्वा पूजयन्तु गृहे गृहे ।।३५।।

सङ्कटं वो यदा तु स्यात् स्मर्तव्योऽहं तदा जनाः ।
साक्षात्कारं प्रदास्यामि नाशयिष्यामि सङ्कटम् ।।३६।।

क उवाच

वचनं तत् समाकर्ण्य ननन्दुः सर्वनागराः ।
नेमुः प्रदक्षिणीकृत्य जयशब्दैः प्रतुष्टुवुः ।।३७।।

गृहीत्वाज्ञां ययुः सर्वे पौराः स्वं स्वं निवेशनम् ।
विनायकोऽपि शीघ्रं स रथारूढो ययौ पुरः ।।३८।।

काशिराजेन सहितो मातृदर्शनलालसः ।
स ददर्श परावृत्य मुखं पौरकुमारकान् ।।३९।।

आक्रन्दतस्तानुवाच पुनर्यास्ये व्रजन्तु हि ।
चिन्ता न कार्या सत्यं वो ब्रवीमि नानृतं क्वचित् ।।४०।।

एवं तान् स परावृत्य क्षणात् स्वाश्रममाप्तवान् ।।४१।।

रसको सट्टा विषको धारा बगाउन थाल्यो भने के उपाय गर्न सकिन्छ? आज हामी त्यस्तै भएका छौं। हाम्रो भलो चाहनुहुन्छ र हामीलाई माया गर्नुहुन्छ भने हजुर जहाँ जानुहुन्छ, हामीलाई पनि त्यहीं पुऱ्याउनुहोस् ।।३२।।' सबै मानिसहरूका कुरा सुनेर श्रीगणेशले आँखाबाट आँसुका बलिन्द्र धारा बगाउँदै गद्गद स्वरबाट भन्नुभयो ।।३३।।

**श्रीगणेशले भन्नुभयो** - 'हे नर-नारीहरू ! आँखाका आँसु पुछ्नुहोस् । चिन्ता गर्नु हुँदैन । मसँग तपाईँहरूको कहिल्यै पनि विरह हुने छैन । म सबैको अन्तर्यामी भएर घट-घटमा बस्दछु । म आनन्दरूपमा रहन्छु र संसारका सबै पदार्थहरूमा टल्किन्छु । म टाढा छैन । तपाईँहरूलाई चित्तमा अशान्तिको अनुभव हुँदा मेरो चिन्तनका साथ माटाको मूर्ति बनाएर घर-घरमा मेरो पूजा गर्नुहोस् । जब जब आपत्ति र कष्ट आइलाग्छन् त्यस बेला मलाई याद गर्नुहोस् । म तपाईँहरूका घर घरमा आउनेछु र संकटको नाश गर्नेछु ।।३४-३६।।'

**ब्रह्माजीले भन्नुभयो** - श्रीगणेशका यी कुरा सुनेर सबै प्रसन्न भए । तिनले श्रीगणेशको परिक्रमा गरी उहाँलाई प्रणाम गरे र स्तुतिद्वारा प्रशंसा पनि गरे । त्यसपछि श्रीगणेशसँग आज्ञा लिएर सबै नगरवासीहरू आ-आफ्ना घरतर्फ फर्किए। श्रीगणेश पनि रथमा सवार भएर काशिराजका साथमा आमाका पाउहरूको दर्शन गर्ने इच्छाले अत्यन्त आकुल हुँदै आश्रमतर्फ प्रस्थान गर्नुभयो । जाँदाजाँदै उहाँले फर्केर आफ्ना साथीहरूलाई हेर्नुभयो । ती बिचरा साथीहरू रोइरहेका थिए र चिच्याइरहेका थिए । उहाँले उच्चस्वरमा भन्नुभयो - 'हे मित्र हो ! तपाईँहरू हर्षपूर्वक घर जानुहोस् । कुनै पनि चिन्ता नगर्नुहोस्। मैले साँचो प्रतिज्ञा गरेको छु । मैले बोलेको कुरा झुट्टा हुँदैन । म तपाईँहरूलाई भेट्न आउनेछु ।' यसरी आश्वस्त गराएर एकै छिनमा उहाँ कश्यपको आश्रममा पुग्नुभयो ।।३७-४१।।

ॐ

**इति श्रीगणेशपुराणे क्रीडाखण्डे विनायकाश्रमप्रतिगमनं नामैकसप्ततितमोऽध्यायः**

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'श्रीगणेशको कश्यपाश्रमका लागि प्रस्थान' शीर्षकान्वित एकहत्तरौँ अध्याय पूर्ण भयो ।।७१।।

ॐ

# द्विसप्ततितमोऽध्यायः { ७२ अध्याय }

क उवाच

पूर्वमेव च दूतेन कथितोऽसौ विनायकः ।
अदित्यै काशिराजेन रथस्थेन सहागतः ।।१।।

ततः सा तद्वियोगेन धावमाना ययौ पुरः ।
औत्सुक्यत्वरिता वेद नाञ्चलं पतितं स्वकम् ।।२।।

दृष्ट्वा तां मुनिपुत्रोऽपि रथात् प्रस्कन्द्य सत्वरः ।
आययौ मातुरभ्याशमालिलिङ्ग च तां मुदा ।।३।।

आनन्दाश्रु मुमोचासौ सोऽपि वाष्पं चिरागतः ।
मुहूर्तमेकभावं तौ प्रापतुः पयसी इव ।।४।।

ददौ स्नेहात् स्वस्थचित्ता स्तनपानं मुदाऽदितिः ।
प्रमृज्य नेत्रे प्रोवाच श्रान्तोऽसि बहुवासरम् ।।५।।

ततो ननाम तां राजा जगौ गद्गदभाषया ।

राजोवाच

नीत्वा विनायकं देवं यातास्तु बहुवासराः ।।६।।

अतो न मातः ! कोपं त्वं मयि कर्तुमिहार्हसि ।
वियोगमपि सोढुञ्च न शक्तोऽहं मुनिप्रिये ।।७।।

न तृप्तिरस्ति पीयूषे चौदासीन्यं निधावपि ।
दिने दिने नवप्रेम वर्धयत्येष नो गृहे ।।८।।

उत्पाता बहवोऽनेन पुरे नो विनिवारिताः ।
असङ्ख्याता हता दैत्या देवाश्च मुदमापिताः ।।९।।

**ब्रह्माजीले भन्नुभयो-** काशिराजसहित श्रीगणेश कश्यपाश्रममा आउँदै हुनुहुन्छ भन्ने कुरा दूतहरूले अदिति मातालाई पहिले नै सुनाइसकेका थिए ।।१।। अदिति श्रीगणेशको स्वागतका लागि उत्सुक हुनुहुन्थ्यो । छोरासँग लामो वियोगका कारण उहाँको मन स्थिर थिएन । अदिति माता घरबाट निस्केर बाटामा छोरालाई आएको देखी हर्षित हुनुभयो । उहाँले खुसियालीमा आफ्नो शरीरबाट वस्त्र खसेको पनि थाहा पाउनु भएन । श्रीगणेश पनि रथबाट ओर्लेर आमाका सामु आउनुभयो । आमाले छोरालाई आँखाबाट आँसु बगाउँदै आलिङ्गन गर्नुभयो । एक मुहूर्तसम्म आमाछोरा दुबै आलिङ्गनपाशमा बाँधिनुभयो । त्यसपछि अदितिमाताले बसेर प्रेमपूर्वक आफ्ना छोरा श्रीगणेशलाई काखमा लिई स्तन चुसाउनुभयो । आँखाका आँसु पुछेर अदिति माताले भन्नुभयो- 'बाबु ! तिमी धेरै थाकेका छौ ।।२-५।। तिमी मेरो काखमा विश्राम गर ।' त्यसपछि मुसुक्क हाँसेर श्रीगणेशले आमाका पाउमा प्रणाम गरी आमाको अनुहार हेरिराख्नुभयो । काशिराजले पनि गद्गद वाणीबाट अदिति मातासँग संवाद गरे।

**राजाले भने -** 'हे अदिति माता ! तपाईंसँग विनायकलाई मागें । तपाईंले खुसीले दिनुभयो । छिट्टै फर्काउँछु भनेको थिएँ तर अनेक विघ्न परे। धेरै वर्ष बितेपछि बल्ल आज ल्याइपुऱ्याएको छु। आमा ! ममाथि रीस गर्नु हुनेछैन । म श्रीगणेशसँग यति घुलमिल भइसकेको छु कि उहाँविना रहन सक्तिनँ ।।६-७।। अहिले पनि म उहाँको मायाले सँगै आएँ । मैले अमृतमा पूर्ण तृप्ति र धन एवं खजानामा पनि मेरो उदासीनता छ अर्थात् आसक्ति छैन, तर बालगणेशको दर्शन पाउँदा पूर्ण तृप्ति र वैराग्यको अनुभूति गर्दछु । उहाँले काशीमा बस्नुहुँदासम्म दिनदिनै नयाँ-नयाँ प्रेमका किरणहरू फैलाएर हामीलाई सदाका निमित्त आफ्नो तुल्याउनु-भएको छ ।।८।। काशी नगरीमा अनेक थरि उत्पात भए । दैत्यहरूले आतङ्क मच्चाए ती सबै उत्पातलाई बालक श्रीगणेशले निवारण गर्नुभयो । उहाँले बालस्वरूपबाट नै असङ्ख्य दैत्यहरूको संहार गरेर सज्जनहरूलाई हर्षित तुल्याउनुभयो ।।९।। बालक

बहुला च कृता कीर्तिः स्थापिता धर्मसेतवः ।
पौरुषञ्च तथाऽनेन कृतं नेन्द्रादिभिः कृतम् ।।१०।।

क उवाच

एवं स सर्ववृत्तान्तं कथयामास सादरम् ।
ततोऽदितिस्तु दध्यन्नं भ्रामयित्वाऽत्यजद् बहिः ।।११।।

दुष्टदृष्टिनिपातस्य शान्तये बालकोपरि ।
ततो बालं सनृपतिं निनायाश्रममण्डलम् ।।१२।।

कश्यपो हि बहिर्यातो दृष्ट्वा पुत्रं सभूपतिम् ।
तौ तञ्च नेमतुर्भक्त्या बद्धाञ्जलिपुटावुभौ ।।१३।।

आलिलिङ्ग मुनिस्तौ च मूर्ध्न्याघ्राय मुदा तदा ।
उवाच रुद्धकण्ठोऽसावङ्के कृत्वा विनायकम् ।।१४।।

काशिराज ! नोचितं ते बालं नीत्वा विलम्बनम् ।
शीघ्रमेवानयिष्येऽहमित्युक्त्वा नीतवान् कथम् ।।१५।।

वियोगेनास्य तप्तानामङ्गानां मेऽधुना नृप ।
जाता शीतलता पुण्याद् दर्शनादस्य साम्प्रतम् ।।१६।।

क उवाच

तत ऊचे काशिराजो निपीय मुनिभाषितम् ।
उपविश्यासने रम्ये प्राप्यानुज्ञां मुनेर्नृपः ।।१७।।

नृप उवाच

अस्यैव मायया जाता सत्यता मे मुनीश्वर !।
मद्गृहं देवदेवेन स्वकीयमिति निश्चितम् ।।१८।।

अवाप्तकामो देवोऽयं स्वकामवशगो मुने ।
सम्पाद्य मम पुत्रस्य विवाहं समुपागतः ।।१९।।

क उवाच

तस्य दैत्यवधादीनि कर्माण्यस्मै न्यवेदयत् ।
ततो जहर्षतुरुभौ मुनिपत्नी मुनिश्च सः ।
ज्ञात्वा पराक्रमं तस्य स्वपुत्रस्य गुणान् बहून् ।।२०।।

श्रीगणेशले उज्ज्वल कीर्तिको स्थापना गरी धर्मका पुल बाँध्नुभयो । इन्द्रआदि देवताहरूले पनि गर्न नसक्ने पुरुषार्थ देखाउनुभयो ।।१०।।'

**ब्रह्माजीले भन्नुभयो** - काशिराजले अदिति माताका सामु श्रीगणेशले गरेका सम्पूर्ण लीलाहरूको विवरण बताउनुभयो । त्यसपछि अदिति माताले मानिसहरूको आँखा नलागोस् भनेर दहीमा मुछिएको अन्न श्रीगणेशको शिरमा रिंगाएर बाहिर फ्याँकिदिनुभयो । त्यसपछि अदिति माताले काशिराजसमेत आफ्ना बालकपुत्रलाई आश्रमभित्र प्रवेश गराउनुभयो ।।११-१२।। कश्यपऋषि पनि छोरालाई आएको देखेर आफ्नो कक्षबाट बाहिर आउनुभयो । काशिराज र श्रीगणेशले हात जोडेर उहाँलाई प्रणाम गर्नुभयो ।।१३।। कश्यप ऋषिले दुबैलाई आलिङ्गन गरी शिरमा सुँघ्नुभयो । त्यसपछि अत्यन्त प्रसन्न हुँदै गद्गद स्वरमा भन्नुभयो - 'हे काशिराज ! तपाईंले मेरो प्यारो छोरालाई मेरो काख छुटाएर काशी पुऱ्याउनुभयो तर फर्काउन भने धेरै विलम्ब गर्नुभयो । यो राम्रो भएन । छिट्टै लिएर आउँछु भनी प्रतिज्ञा गरेर तपाईंले किन ढिला गर्नुभयो ? बालक श्रीगणेशको विरहमा हामी पति-पत्नीका अङ्गहरू सुकेका छन् । आज बल्ल छोराको पुण्यमय दर्शन पाएर हाम्रो मन शीतल भएको छ' ।।१४-१६।।

**ब्रह्माजीले भन्नुभयो** - काशिराजले कश्यप ऋषिको वचनामृत पान गरेर उनकै सामु रमणीय आसनमा विराजमान भई उहाँको आज्ञा लिएर फेरि निवेदन गरे ।

**काशिराजले भने-** 'श्रीगणेशकै मायामय लीलाका कारण विलम्ब हुन आयो । मेरो घरमा बस्नुहुँदा श्रीगणेशले त्यसलाई आफ्नै घर ठान्नुभयो । हजुरको आश्रममा उहाँले जस्तो सुख र शान्ति पाउनुहुन्थ्यो त्यस्तै सुख र शान्ति मेरो घरमा पनि पाउनुभयो। उहाँले मेरो घरमा रहेर आफ्नो इच्छानुसार लीला गर्नुभयो । बीचका अनेकौं घटनाका कारण विवाहमा विलम्ब भएको हुँदा श्रीगणेशलाई फर्काउने काममा पनि विलम्ब भयो । विवाह सकिएको लगत्तै म उहाँलाई लिएर आएको छु' ।।१७-१९।।'

**ब्रह्माजीले भन्नुभयो** - त्यसपछि काशिराजले कश्यप ऋषिका सामु श्रीगणेशले गर्नुभएका दैत्यहरूका वधसम्बन्धी

ततस्ते भोजनञ्चक्रुः षड्रसान्नेन सादरम् ।
दत्त्वाशीर्वचनं तस्मै विससर्ज नृपं मुनिः ।।२१।।

सोऽपि तान् प्रणनामाथ प्रादक्षिण्येन निर्ययौ ।
प्राप्यानुज्ञां नेत्रयुग्मान् मुञ्चन्नश्रु सुदुःखितः ।।२२।।

स्मरन् गुणगणं तस्य स्नेहनिर्भरमानसः ।
शीघ्रं प्रयातो नगरं वाद्यघोषसमन्वितः ।।२३।।

सर्वे नागरिका बाला विनायकदिदृक्षवः ।
आगता ददृशुस्तत्र ततो दुःखितमानसाः ।।२४।।

निरीक्ष्य तं काशिराजं ययुः स्वं स्वं निकेतनम् ।
अपरेद्युः सर्वपौराः पप्रच्छुस्तं नृपं मुदा ।।२५।।

यास्य इत्युक्तवान् देवो नागतः स कथं नृप !
त्वं तु निष्ठुरभावेन त्यक्त्वा तं कथमागतः ।।२६।।

राजोवाच

अत्यन्तं प्रार्थितो देव उक्तवान्मां मुनिप्रियः ।
मन्मूर्तिस्थापनं कृत्वा सेवध्वं सर्व एव माम् ।।२७।।

वियोगो न च सर्वान्तर्यामिणा वः कथञ्चन ।
ततस्ते कारयामासुर्मूर्तिं धातुमयीं शुभाम् ।।२८।।

चतुर्भुजां त्रिनयनां सर्वभूषणभूषिताम् ।
शूर्पकर्णां गजमुखीं सर्वावयवसुन्दराम् ।।२९।।

सम्पूर्ण वृतान्त बताए । आफ्ना बालक छोराका विचित्र पुरुषार्थका घटना सुनेर मुनि र मुनिपत्नी दुबै खुसी भए ।।२०।। त्यसपछि काशिराजसमेत आश्रमवासी नर-नारीहरूले अदिति माताले तयार गर्नुभएको मीठो भोजन ग्रहण गरे । भोजनपछि कश्यपऋषिले आशीर्वाद दिएर काशिराजलाई बिदा गरे ।।२१।। काशिराज पनि आश्रमवासी ऋषि-महर्षिहरूका साथै अदिति र कश्यपलाई प्रणाम गरेर परिक्रमा गरी त्यहाँबाट प्रस्थान गरे। बिदा पाएका काशिराजले आश्रम र आश्रमवासीहरूका साथै भगवान् श्रीगणेशको अपार स्नेहलाई संझेर विरहको आँसु बगाउँदै प्रस्थान गरेका थिए ।।२२।। श्रीगणेशका गुणहरूको संझना गर्दा उनको मुटु प्रेमले भरिएको थियो। त्यसपछि उनी तीव्र गतिमा बाजागाजाका साथ काशीनगरमा आइपुगे ।।२३।। सबै नागरिकहरू र श्रीगणेशका दौंतरी बालकहरू पनि काशिराजलाई फर्केको देखेर श्रीगणेश पनि फर्कनु भयो कि भनी जम्मा भएका थिए, तर काशिराजलाई रित्तै आएको देखेर दुःखी भए ।।२४।। ती सबै नर-नारीहरू काशिराजसँग भलाकुसारी गरेर घर फर्किए । अर्को दिन जम्मा भएका सबै नगरवासीहरूले काशिराजसँग सोधे- 'हे राजन् ! म तुरुन्तै आउँछु भन्नुहुने श्रीगणेश तपाईँसँग किन आउनुभएन ? अथवा तपाईँले नै निष्ठुर बनेर उहाँलाई आश्रममा छाडी आउनुभएको हो कि?'।।२५-२६।।

**राजाले भने-** ''हे नर-नारीहरू ! मैले कश्यप ऋषिसँग धेरै पटक प्रार्थना गरें तर उहाँले मान्नुभएन । त्यसपछि श्रीगणेशसँग पनि प्रार्थना गरें। श्रीगणेशले भन्नुभयो- 'म अहिले जान मिल्दैन। मप्रति माया राख्नेहरूले मेरो मूर्तिको स्थापना गरी घर-घरमा मेरो आराधना गर्नुपर्दछ । मैले तिनलाई दर्शन दिनेछु र तिनका सङ्कटहरूको निवारण गर्नेछु । म सबैको घटघटमा बस्ने गरेको छु । कसैसँग पनि मेरो कहिल्यै विरह हुँदैन ।'' राजाका कुरा सुनेर काशीनिवासी नर-नारीहरूले आ-आफ्ना घरमा धातुका अनेक गणेशमूर्तिहरू तयार गरे । चार हात, तीन आँखा, नाङ्लोसमान कान भएको, अङ्ग-अङ्गमा भरिएको सौन्दर्यले देदीप्यमान, गजाकार मुखमण्डल

दुण्ढिराजेति नाम्ना तां स्थापयामासुरादरात् ।
ऋत्विग्भिर्ब्राह्मणैरन्यैर्वेदशास्त्रविशारदैः ।।३०।।

प्रासादं परमं कृत्वा पुपूजुस्ते दिने दिने ।
येन येनैव कामेन पूजयेद् यो विनायकम् ।।३१।।

तं तं ददाति तस्मै स भक्त्या सम्पूजितो विभुः ।
एवं नानामूर्तिधरो भ्राजते स्म विनायकः ।।३२।।

विश्वेश्वरे स्वनगरं याते सर्वसुरैः सह ।
दिवोदासे चाविमुक्ते काशिराजे सुखं स्थिते ।।३३।।

विनायको मुनिं प्राह कश्यपं मातरञ्च ताम् ।
अहं ते पुत्रतां यातस्तपसाराधितः पुरा ।।३४।।

भूभारश्च हृतः सम्यग्हतौ दैत्यौ महाबलौ ।
त्रैलोक्यपीडकौ दुष्टौ देवान्तकनरान्तकौ ।।३५।।

देवाश्च साधवश्चैव रक्षिताः स्थापिताः परे ।
इदानीन्तु गमिष्यामि निजलोकं चिरन्तनम् ।।३६।।

क उवाच

श्रुत्वा वाक्यमुभौ खिन्नौ वाष्पकण्ठौ तमूचतुः ।
कदा ते दर्शनं देव ! पुनरत्र भविष्यति ।।३७।।

ततः स मातरं प्राह दर्शनं मे भविष्यति ।
भवान्या मन्दिरे मातः सत्यं मे प्रियभाषितम् ।।३८।।

एवं श्रुत्वा देववाक्यं पुनर्यावद् वदत्यसौ ।
तावदन्तर्हितो देवस्ततस्तौ खिन्नमानसौ ।।३९।।

कारयामासतुर्मूर्तिं प्रासादञ्चातिशोभनम् ।
विनायकेति नामाऽस्य चक्रतुर्भक्तितत्परौ ।।४०।।

धारण गर्ने र अलङ्कारहरूले सुसज्जित भगवान् ढुण्ढिराज गणेशको मूर्तिलाई वेदका ज्ञाता ब्राह्मणहरूद्वारा स्थापना गराई आदरपूर्वक आराधना गरे ।।२७-३०।। ती भक्तहरूद्वारा भक्तिपूर्वक आराधना गरिँदा ढुण्ढिराज गणेशले भक्तहरूले चिताएका कुरा परिपूर्ण तुल्याउनुभयो । भगवान् श्रीगणेश संसारमा अनेक नाम भएका मूर्तिहरूमा विराजमान हुनुहुन्छ। भगवान् विश्वनाथ केदारबाट काशी आउनुभएको, दिवोदास पदमुक्त भई काशीमा नै ईश्वराराधनामा संलग्न भएको र काशिराज पनि निर्विघ्न काशीमा विराजमान भएको अनुकूल परिस्थितिमा श्रीगणेशले कश्यप ऋषिलाई भन्नुभयो- 'हे ऋषिवर ! हजुरले कुनै समयमा मेरो आराधना गर्नुभएको थियो । त्यस कारण आज म हजुरको पुत्र भएर जन्मेको छु । हजुरको घरमा अवतार लिएर मैले पृथिवीको भारहरण गरें । देवान्तक र नरान्तक नामक त्रिलोकीलाई नै सताउने, महाबली दैत्यहरूलाई पनि मारिदिएँ। देवता र सज्जनहरूको रक्षा गरें । दुःखीहरूको प्रतिष्ठा बढाएँ । अब म हजुरको आश्रम छाडेर आफ्नै गणेशधाममा जान चाहन्छु' ।।३१-३६।।

**ब्रह्माजीले भन्नुभयो** - आफ्ना पुत्रका रूपमा रहनुभएका भगवान् श्रीगणेशले अब म धाममा फर्कन्छु भन्दा माता अदिति र पिता कश्यपले डाँको छाडेर रुँदै भन्नुभयो - 'हे प्रभु ! हजुरको दर्शन अब कहिले पाउनेछौं ?' ।।३७।। त्यसपछि अत्यन्त विह्वल भएकी आमालाई श्रीगणेशले भन्नुभयो- 'हे आमा ! पीर नगर्नुहोस् किनकि हजुरले दिनदिनै दुर्गाको मन्दिरमा मेरो दर्शन पाउनुहुनेछ । मेरो बचन खेर जाँदैन' ।।३८।। श्रीगणेशका कुरा सुनेर अदितिमाता केही भन्न चाहनुहुन्थ्यो, तर त्यसै बेला भगवान् श्रीगणेश अन्तर्धान हुनुभयो । श्रीगणेशको अन्तर्धानपछि अदिति र कश्यप खिन्न हुनुभयो ।।३९।। दुवै दम्पतीले मिलेर आफ्नो मनलाई शान्ति प्रदान गर्न श्रीगणेशको मूर्तिनिर्माण गरी मन्दिर पनि बनाउनुभयो। त्यस मन्दिरमा स्थापना गरिने मूर्तिलाई भक्तिपूर्वक विनायकमूर्ति भनी नामकरण गर्नुभयो ।।४०।। अदिति र कश्यपले त्यस मूर्तिमा आफ्ना पुत्र श्रीगणेशको ध्यान गर्दा भगवान् श्रीगणेशले बालगणेशका रूपमा प्रकट भएर दर्शन

तस्यां मूर्तौ ध्यातमात्रो नित्यं दर्शयते विभु: ।
स्वात्मानं सर्वगं नानारूपिणं स विनायक: ।।४१।।

दिने गर्नुहुन्थ्यो । आफ्नो आत्मालाई सर्वत्र व्यापक गराउनुहुने र अनेक रूपमा प्रकट हुनुहुने भगवान् श्रीगणेशका लागि त्यो कुनै कठिन विषय थिएन ।।४१।।

गृत्समद उवाच

एवं कीर्ते ! समाख्यातश्चरितं ते मया शुभम् ।
विनायकस्य देवस्य श्रवणात् सर्वसिद्धिदम् ।।४२।।

धन्यं यशस्यमायुष्यं सर्वोपद्रवनाशनम् ।
सर्वकामप्रदं सर्वपापसङ्क्षयनाशनम् ।।४३।।

पुनस्ते कथयिष्यामि सिन्धुदैत्यवधाय स: ।
अवतीर्ण: शिवगृहे मयूरेश्वरसंज्ञित: ।।४४।।

बाल्यात् प्रभृत्यद्‌भुतानि नानाकर्माणि योऽकरोत् ।।४५।।

**गृत्समदले भने** – 'हे कीर्ति ! मैले तपाईँका सामु भगवान् श्रीगणेशको पवित्र एवं मङ्गलमय चरित्रको व्याख्यान गरेँ । यसको श्रवणबाट सबै प्रकारका सिद्धिहरू प्राप्त हुन्छन् ।।४२।। यो श्रीगणेशको चरित्र धनधान्यदायक, कीर्तिदायक, आयुष्यदायक, आतङ्कनाशक, कामनापूरक र पापनाशक छ ।।४३।। अब यसपछि म तपाईँलाई भगवान् श्रीगणेशले दैत्यराज सिन्धुको वधका निमित्त भगवान् शिवको कैलासमा मयूरेश्वरका नामबाट अवतीर्ण भई बाल्यकालदेखि नै अद्‌भुत कर्महरू गर्नुभएको विषयमा सुनाउने छु' ।।४४-४५।।

ॐ

**इति श्रीगणेशपुराणे क्रीडाखण्डे विनायकचरित्रकथनं नाम द्विसप्ततितमोऽध्याय:**

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'कश्यपनन्दनको पवित्र चरित्रको वर्णन' शीर्षकान्वित बहत्तरौँ अध्याय पूर्ण भयो ।।७२।।

ॐ

## त्रिसप्ततितमोऽध्यायः { ७३ अध्याय }

व्यास उवाच

कथं ब्रह्मन् शिवगृहे मयूरेश्वरसंज्ञितः।
अवतीर्णः किमर्थं वा किञ्च तच्चरितं पितः।।१।।
मयूरेश्वरसंज्ञा च कथं जाता विनायके।
एतन्मे सर्वमाचक्ष्व शृण्वँस्तृप्यामि न क्वचित् ।।२।।

क उवाच

त्रेतायुगे महादैत्यः सिन्धुनामाऽभवत् पुरा।
स हतस्तेन बलिनाऽवतीर्णेन शिवालये।।३।।
अत्राप्युदाहरन्तीममितिहासं पुरातनम् ।
शौनकस्य च संवादं राज्ञा च चक्रपाणिना ।।४।।
मैथिले विषये राजा गण्डकीनगरे शुभे।
चक्रपाणिरिति ख्यातः साक्षाद् विष्णुरिवापरः ।।५।।
न गुणा वर्णितुं शक्याः शेषेणाऽस्य कदाचन।।६।।
तेजसा लोपयन् भानुं लावण्येन च मन्मथम् ।
मत्या बृहस्पतिं स्कन्दं विक्रमेण बलेन च।।७।।
येनेयं सकला पृथ्वी क्षणेन वशवर्तिनी।
कृता सर्वे च राजानः सेवायां विनियोजिताः।।८।।
तुरङ्गाणां गजानाञ्च पदातीनां जयैषिणाम् ।
रथानाञ्च न यस्यास्ति सङ्ख्यानं जगतीतले ।।९।।
साक्षाल्लक्ष्मीः स्थिरा यस्य गृहे दर्शनगोचरा।
रत्नकाञ्चनमुक्ताभिरनिशं भासयन् दिशः।।१०।।
भद्रं भद्रकरं यस्य लोकानामलकोपमम्।
यस्यामात्यौ महाबुद्धी साम्बश्चैव सुबोधनः।।११।।
सेवन्तौ स्वामिकार्यार्थे तृणीकृत्य स्वजीवितम् ।
यस्यासीत् प्रमदा रम्या नाम्नोग्रा चारुहासिनी ।।१२।।
कुमुदानि विकासन्ते दिवा यन्मुखचन्द्रतः।
अनेकभूषादीप्त्या या नाशयित्वाऽखिलं तमः।।१३।।

**व्यासले भन्नुभयो** - 'हे पितामह! भगवान् शिवको धाममा मयूरेश्वरको नाम लिएर भगवान् श्रीगणेश कुन उद्देश्यले अवतरित हुनुभयो ? उहाँले त्यस रूपमा के के लीला गर्नुभयो? भगवान्लाई मयूरेश्वर भन्नुको कारण के हो ? यी सबै कुराको उत्तर मलाई दिनुहोस् । श्रीगणेशका सम्बन्धमा चर्चा गर्दा मेरो मन कहिल्यै पनि अघाउँदैन' ।।१-२।।

**ब्रह्माजीले भन्नुभयो** - पहिले त्रेता युगमा सिन्धुनामक महादैत्य थियो । श्रीगणेशले शिवको धाममा अवतार लिएर त्यस दैत्यराज सिन्धुको हत्या गर्नुभएको थियो । यसै कथालाई पुष्टि प्रदान गर्ने एउटा पुरानो कथा रहेको छ । त्यो कथा चक्रपाणि राजा र शौनकको संवादका रूपमा रहेको छ । मिथिला क्षेत्रमा एउटा गण्डकीनगर छ । त्यहाँ चक्रपाणिनामक दोस्रा विष्णुसमान प्रतापशाली र विख्यात राजा भए ।।३-५।। तिनका गुणहरूको बयान शेषनागले पनि गर्न सक्दैनन् । राजा चक्रपाणिले आफ्नो तेजबाट सूर्यलाई र सौन्दर्यबाट कामदेवलाई जितेका थिए । बुद्धिबाट बृहस्पतिलाई र बल एवं पराक्रमबाट स्कन्दलाई जितेका थिए ।।६-७।। ती राजाले सम्पूर्ण पृथिवीलाई एकै छिनमा आफ्नो वशमा ल्याएका थिए । धर्तीका सबै राजाहरूलाई जितेर तिनले आफ्ना सेवक तुल्याएका थिए ।।८।। ती राजाका कति घोडा थिए ? कति हात्ती थिए ? कति विजयोत्सुक पैदलसेनाका वीरहरू थिए ? कति रथहरू थिए ? यी कुराको गणना संसारमा हुन सक्दैनथ्यो ।।९।। तिनका घरमा साक्षात् लक्ष्मी विराजमान थिइन् । तिनको कोषमा रहेका सुवर्ण, रत्न र मोतीका किरणहरूबाट दिशाहरू प्रकाशमान हुन्थे ।।१०।। तिनका कल्याणकारी कार्यहरू संसारका निमित्त आदरणीय र यशस्वी थिए । ती राजाका साम्ब र सुबोधननामक बुद्धिमान् दुई मन्त्रीहरू थिए ।।११।। ती मन्त्रीहरूले आफ्ना राजाका कार्यहरूको सिद्धि गर्दै आफूलाई राजसेवामा समर्पित गरेका थिए । चक्रपाणि राजाकी रानीको नाम चारुहासिनी थियो र ती अत्यन्त राम्री थिइन् । चारुहासिनीको मुखरूपी चन्द्रमाको दर्शन पाएर रात्रिमा फुल्ने कमलहरू विकसित हुन्थे । आफ्ना वस्त्र र आभूषणको कान्तिले तिनीले सम्पूर्ण अन्धकार नाश गर्दथिन्।।१२-१३।।

पतिव्रत्यगुणान् द्रष्टुं यान्ति सर्वाः पतिव्रताः।
स च राजा बुधैर्मान्यः सदा विष्णुपरायणः।।१४।।

पुराणश्रवणे सक्तो धर्मशास्त्रपरायणः।
सन्तत्या रहितः सोऽथ दुःखमाप दिवानिशम् ।।१५।।

सन्तानो जायते यद् यत् तत् तन्नश्यति तत्क्षणात् ।
अनेकव्रतदानानि यज्ञाँश्च कृतवान् बहून् ।।१६।।

ततः स राजा कस्मिँश्चित् समये निजभार्यया।
आकार्य प्रकृतीःपौरान् विरक्तो राज्यसंसदि ।।१७।।

उवाच सर्वान् दण्डञ्च कोशं राज्यं त्यजेऽधुना ।
किमपुत्रस्य राज्येन स्वर्गहीनस्य मेऽधुना ।।१८।।

यानि कर्माणि च मया पुत्रार्थे चरितानि च।
ईश्वरार्पणबुद्ध्या चेत् कृतानि स्युर्यदा तदा।।१९।।

मुक्तिः स्यादुभयोः पूर्वजन्मकर्मक्षयोऽपि च ।
गतमायुर्वृथा लोका ! वनं यास्ये मुदाऽधुना।।२०।।

सर्वं प्रकृतिमात्कृत्वा यूयं तद्वाक्यकारिणः।
गमिष्येऽहं वनं लोकास्तपस्तप्तुं हिताय वै ।।२१।।

कदाचिदिष्टसिद्धिश्चेत् पुनर्यास्ये निजां पुरीम् ।
अनुज्ञां मम पुनः प्रयच्छताधुना जनाः ।
एवं श्रुत्वा नृपवचः सर्वे दुःखितमानसाः।।२२।।

अश्रुधाराः प्रमुञ्चन्तः प्रोचुस्तं नृपसत्तमम् ।

पतिव्रता धर्मको पालन गर्ने र नारीहरूमा उत्तम नारीका रूपमा विख्यात चारुहासिनीका वरिपरि तिनको दर्शन गर्न आएका पृथिवीका पतिव्रता नारीहरूको भीड लाग्दथ्यो । यस किसिमबाट भाग्यशाली राजा चक्रपाणि ज्ञानी, बुद्धिमान् र सबैका मान्य भएर रहेका थिए। ती सर्वदा भगवान् नारायणको भक्तिमा लागिरहन्थे ।।१४।। चक्रपाणि पुराणहरू सुन्न मन पराउँथे र धर्मशास्त्रअनुसार कर्तव्य-पालनमा निरत थिए । यी सबै कुराहरूले गर्दा संसारमा अद्वितीय राजाको रूपमा विख्यात भए तापनि सन्तान नभएका कारणबाट तिनले अहोरात्र दुःख र वेदनाको अनुभव गरिरहेका थिए ।।१५।। जुन कर्म गर्नाले सन्तान पैदा हुन्छ त्यो कर्म तिनले तत्काल सम्पन्न गरे । अनेक थरि व्रत गरे, अनेक मूल्यवान् पदार्थहरूको दान गरे र अनेक ठूला-ठूला यज्ञयाग गरे ।।१६।। यी सबै कुराहरू सम्पन्न गर्दा पनि तिनलाई सन्तान भएन । त्यसपछि कुनै दिन राजाले आफ्नी रानीका साथ विश्राम गरिरहेको समयमा आफ्ना मन्त्री र नगरवासी गण्यमान्य सज्जनहरूलाई बोलाएर भने - 'म राज्य र सम्पत्तिबाट विरक्त भएको छु । अब राजनीति, राज्यलक्ष्मी, राज्यकोश र राज्यसमेतलाई म परित्याग गर्दैछु। म स्वर्गबाट वञ्चित अपुत्रका लागि राज्यले के सन्तोष दिन्छ र? त्यस कारण मलाई राज्यप्रति कुनै आसक्ति छैन।।१७-१८।। मैले पुत्रप्राप्तिका लागि जस्ता कर्म गरें र जस्ता आचारहरूको पालना गरें ती सबै कर्म र आचारहरू ईश्वरार्पणको भावनाले गरेको रहेंछु भने मैले कुनै दिन अवश्य मुक्ति पाउनेछु । हामी दुबै दम्पतीका पूर्वजन्ममा गरेका कर्महरू पनि नाश हुनेछन्। मैले जीवन व्यर्थमा गुमाएँ। हात केही लागेन। ईश्वरको आराधना-बाहेक अन्यत्र कतै पनि सुख र शान्ति प्राप्त नहुने रहेछ । अब म वन गई तपस्या गर्न चाहन्छु ।।१९-२०।। मेरा श्रीसम्पत्ति र राज्यलाई मन्त्री एवं जनताको हातमा सुम्पेर जान चाहन्छु । तपाईंहरूले आजसम्म मेरो आज्ञा पालन गर्दै आउनुभएको छ र अब पनि पालन गर्नुहुनेछ । म परम हितको प्राप्तिका लागि वनमा गई तपस्या गर्नेछु ।।२१।। तपस्या गर्दा मैले चाहेको कुरा पाएँछु भने फेरि यस नगरीमा आउनेछु। यसमा कुनै सन्देह छैन। आज तपाईंहरू सबैले मलाई वन जाने आज्ञा दिनुहोस् ।।२२।।' राजाका यस्ता कुरा सुनेर सबै मन्त्रीहरू र नगरवासी नर-नारीहरू अत्यन्त दुःखी भए । तिनीहरूले आँखाबाट आँसुका धारा बगाउँदै राजालाई भने ।

पौरा ऊचुः

जननी जनकस्त्वं नः कथं निष्ठुरतां गतः।
किमर्थं त्यजसे नस्त्वमपराधं विना प्रभो ।।२३।।

विना भवन्तं नो जन्म वृथैव मातरं शिशोः।
वयमप्यनुयास्यामो यत्र याति भवान् प्रभो।।२४।।

नगरवासीहरूले भने - 'हे राजन् ! हजुर हाम्रा पिता र मातासमान हुनुहुन्छ । किन आज यतिविधि निष्ठुर हुनुभयो ? हामीले कुनै अपराध गरेका छैनौं । अपराध नगर्ने हामीहरूलाई छोडेर किन जाँदै हुनुहुन्छ ? हजुरविना हाम्रो जन्म व्यर्थ छ । माता-पिताविना जसरी सन्तानको जीवन व्यर्थ हुन्छ त्यसैगरी हाम्रो जीवन पनि हजुरविना व्यर्थ हुनेछ। हे राजन् ! हजुर जहाँ जानुहुन्छ, हामी पनि पछि लागेर त्यहीँ जानेछौं' ।।२३-२४।।

क उवाच

एवं वदत्सु लोकेषु नृपेणाथागतो मुनिः।
शौनको मुनिशार्दूलो जातवेदा इवापरः।।२५।।

वेदवेदाङ्गशास्त्राणां वक्ता त्रैलोक्यविश्रुतः।
शक्रादिसुरवन्द्यो यो भूतभव्यभविष्यवित् ।।२६।।

तं दृष्ट्वा पुरतो राजा ननामोत्थाय चासनात् ।
स्वासने तमुपावेश्य पुपूज परया मुदा।।२७।।

भुक्तवन्तञ्च विश्रान्तं पादसंवाहनादिभिः।
चक्रपाणिरथोवाच पुण्यं किं फलितं मम।।२८।।

यज्जातं दर्शनं तेऽद्य सर्वपापहरं शुभम् ।
सर्वकामप्रदं नृणां दुर्लभं पापकर्मणाम् ।।२९।।

ततः प्रोचे मुनिश्चक्रपाणिं नृपतिसत्तमम् ।
सन्तुष्टः परया भक्त्या प्रश्रयेण दमेन च।।३०।।

ब्रह्माजीले भन्नुभयो - यसरी नर-नारीहरूले बिन्ती गरिरहेकै बेला त्यहाँ मुनिहरूमा उत्तम मुनि शौनक आइपुगे। ती दोस्रा ब्रह्माजीसमान थिए। तिनले वेद-वेदाङ्गशास्त्रका वक्ताका रूपमा तीनै लोकमा ख्याति पाएका थिए । इन्द्र आदि देवताद्वारा वन्दित महर्षि शौनक भूत, भविष्य र वर्तमानकालका ज्ञाता पनि थिए ।।२५-२६।। आफ्नासामु शौनक ऋषिलाई आएको देखेर राजा चक्रपाणि तत्काल आसनबाट उठे र आफ्नो आसनमा बसाएर हर्षपूर्वक तिनले ऋषिको पूजा गरे ।।२७।। भोजन गरेर पलङ्गमा गई आराम गरिरहेका ऋषिको पाउ दबाउँदै राजा चक्रपाणिले भने - 'आज मेरो पूर्वजन्मको पुण्य फलीभूत भएछ जसबाट सबै पापहरूको नाश गर्ने हजुरको मङ्गलमय दर्शन पाउन सकें । हजुरको दर्शन सबै कामनालाई पूर्ण गराउने र पापी मानिसहरूका निमित्त दुर्लभ दर्शन हो' ।।२८-२९।। राजा चक्रपाणिको निवेदन सुनेर तिनको परम भक्ति, सेवा र संयमजन्य सात्त्विक वृत्तिबाट प्रसन्न भएका शौनक ऋषिले भने ।।३०।।

मुनिरुवाच

मा चिन्तां कुरु राजेन्द्र ! मा च राज्यं परित्यज ।
पुत्रस्ते भविता सम्यङ् मद्वाक्यान्नात्र संशयः ।।३१।।

मया वाणी नोक्तपूर्वाऽनृता हासेऽपि कर्हिचित् ।

ऋषिले भने - 'हे राजेन्द्र! तपाईँले कुनै चिन्ता नगर्नुहोस् र राज्य छोडेर जाने कुरा पनि नगर्नुहोस् । तपाईँलाई छिट्टै पुत्रलाभ हुनेछ । यसमा कुनै सन्देह छैन ।।३१।। ऋषिको वाक्य हो भन्ने विचार गरेर तपाईँले विश्वास गर्नुहोस् । हे राजन् ! मैले हाँसखेल र ठट्टा गर्दा पनि कहिल्यै झुट्टा वचन बोलेको छैन ।'

क उवाच

एवमाकर्ण्य तद्वाक्यं जहृषे राजसत्तमः।।३२।।

अलङ्कारान् ददौ तस्मै रत्नकाञ्चननिर्मितान् ।
वस्त्राणि च महार्हाणि न च जग्राह वै मुनिः ।।३३।।

पुनः प्रोवाच नृपतिं वयं वल्कलधारिणः ।
निःस्पृहाः सर्वभोगेषु सर्वभूतहिते रताः ।।३४।।

ब्रह्माजीले भन्नुभयो - शौनक ऋषिका कुरा सुनेर राजा चक्रपाणि अत्यन्त खुसी भए ।।३२।। तिनले शौनक ऋषिलाई सुवर्णनिर्मित अलङ्कार र बहुमूल्य वस्त्र प्रदान गरे, तर ऋषिले ती सबै कुरालाई स्वीकार गरेनन् ।।३३।। त्यसपछि ऋषिले राजालाई भने - 'हामी रूखको बोक्रालाई वस्त्र बनाएर धारण गर्ने वनवासी ऋषि हौं । हामीलाई भोगमा कुनै इच्छा छैन । सबै प्राणीहरूका कल्याणको चिन्तन गर्दै संसारमा डुल्दछौं।।३४।।

सृष्टिसंहारकरणे समर्थाः करुणाब्धयः।
साधूनां दर्शनरताः समलोष्ठाश्मकाञ्चनाः ।।३५।।

विद्वत्सु कमला नैव स्थानं धत्ते कदाचन।
तस्मान्नेदं ग्रहीष्यामि काञ्चनं वसनं शुभम् ।।३६।।

तीर्थयात्राप्रसङ्गेन त्वामहं समुपागतः ।
दिनानि च व्यतीतानि बहूनि तव दर्शने ।।३७।।

क उवाच

पुनस्तौ नेमतुः सम्यग् दम्पती शौनकं मुनिम् ।
पप्रच्छतुरुपायं तं सन्तानोत्पादने क्षमम् ।।३८।।

सर्वव्रततपोयज्ञान् मत्वा दानानि वै वृथा।
ततोऽब्रवीन्मुनिः सौरं व्रतं सर्वार्थदं नृणाम् ।।३९।।

अनेकजन्मपापानां शमनं पुत्रपौत्रदम् ।

मुनिरुवाच

मासमात्रं व्रतं कार्यमारभ्य भानुसप्तमीम् ।।४०।।

कृत्वाऽऽभ्युदयिकं श्राद्धं मातृपूजनपूर्वकम् ।
अभ्यर्च्य गणनाथञ्च स्वस्तिवाच्यद्विजर्षभान् ।।४१।।

सुवर्णकलशैः स्थाप्य सौवर्णं रविमण्डलम् ।
उपचारैः षोडशभिर्भक्तिभावसमन्वितः।।४२।।

रक्तचन्दनमिश्रैश्च तण्डुलैः कुसुमैरपि।
रत्नैर्नानाविधै रत्नैः फलैश्च विविधैरपि।।४३।।

अर्घ्यैर्द्वादशसङ्ख्यैश्च नमस्कारैः परिक्रमैः।
स्तुतिभिः प्रार्थनाभिश्च प्रार्थयेत् परमेश्वरम् ।।४४।।

ततो लक्षनमस्कारान् कुर्वीत कारयीत वा।
प्रत्यहं लक्षविप्राँस्तु भोजयेत् परया मुदा ।।४५।।

गामेकां प्रत्यहं दद्याद् वेदज्ञाय कुटुम्बिने।
ब्रह्मचर्येण तिष्ठेच्च सपत्नीको नृपोत्तमः ।।४६।।

हामीहरू सृष्टि र संहार गर्न समर्थ छौं । हामी दयाका सागर पनि कहलाउँछौं र नित्य सज्जनहरूकै सङ्गतिमा रहन्छौं । हाम्रा निमित्त सुन र ढुंगामा कुनै अन्तर हुँदैन ।।३५।। त्यस कारण हामीजस्ता विद्वान्हरूका नजिकमा भगवती लक्ष्मीले पनि वास गर्ने चाहना गर्दिनन् । तसर्थ तपाईंले दिएका यी बहुमूल्य गहना र वस्त्रलाई म ग्रहण गर्दिनँ ।।३६।। म त तीर्थयात्राको प्रसङ्गले तपाईँको नजिकमा आएको हुँ । तपाईँको दर्शन नपाएको पनि धेरै समय भइसकेको थियो' ।।३७।।

**ब्रह्माजीले भन्नुभयो** - फेरि पनि ती राजा-रानीले मुनि शौनकलाई प्रणाम गरेर सन्तान उत्पत्तिको उत्तम उपाय बताउन निवेदन गरे ।।३८।। सबै प्रकारका व्रत, तपस्या, यज्ञ र दान व्यर्थ भइसकेकाले तीभन्दा विशिष्ट र तत्काल फल प्रदान गर्ने उपाय बताउनका लागि ती दुवैले मनैदेखि अनुरोध गरे । त्यसपछि शौनक मुनिले मानिसहरूलाई सबै प्रकारका कामनाहरूको फल प्रदान गर्ने, अनेक जन्ममा गरिएका पापहरूको नाश गर्ने र पुत्र एवं पौत्र प्रदान गर्ने सूर्यव्रतको सम्बन्धमा उपदेश गरे ।

**शौनकले भने** - 'हे राजन् ! तपाईँहरूले रविवारका दिन सप्तमी तिथि हुँदा सूर्य व्रतको आरम्भ गरी एक महिनासम्म त्यसको अनुष्ठान गर्नुपर्दछ ।।३९-४०।। आरम्भमा आभ्युदयिक श्राद्ध, मातृकापूजन, गणपतिपूजन र स्वस्तिवाचन गर्नुपर्दछ । त्यसपछि सुवर्णमय कलशमाथि राखिएको सुवर्णकै थालीमा सुवर्णकै सूर्यको प्रतिमा बनाएर राख्नुपर्दछ । भक्ति र भावनाले परिपूर्ण भई षोडशोपचारद्वारा सूर्यको पूजा गर्नुपर्दछ । रातो चन्दन मिसिएका चामलको अक्षता, राता फूल, रातो रङ्गका अनेक थरि रत्न र अनेक किसिमका राम्रा फलहरू टक्र्याएर पूजा गर्नुपर्दछ ।।४१-४३।। पूजा गर्दा बाह्र पटकसम्म अर्घ्य दिने, बाह्र पटकसम्म नमस्कार गर्ने, बाह्र पटकसम्म परिक्रमा गर्नेजस्ता कर्म गरी स्तुति र प्रार्थनाद्वारा परमेश्वर सूर्यनारायणको आराधना गर्नुपर्दछ ।।४४।। पूजा सकिएपछि सूर्यलाई एक लाख पटक नमस्कार गर्ने र गराउने काम गर्नुपर्दछ । राजाले यसरी सूर्यको आराधना गर्दा परम आनन्दका साथ दिनदिनै एक लाख ब्राह्मणहरूलाई भोजन गराउनुपर्दछ।।४५।। दिनदिनै वेद जान्ने सपत्नीक ब्राह्मणलाई गोदान गरी दिनुपर्दछ। आफू एक महिनासम्म पत्नीसहित भगवान्को आराधना गर्दै ब्रह्मचर्यपूर्वक रहनुपर्दछ।।४६।।

दीनान्धकृपणेभ्यश्च दद्यादन्नं दयान्वितः।
मासान्ते सर्वसम्भारान् ब्राह्मणाय समर्पयेत् ।।४७।।

एवं व्रते कृते राजन् ! पुत्रस्ते मत्प्रसादतः।
भविष्यति महाख्यातः सूर्यभक्तियुतः शुचिः।।४८।।

क उवाच

एवं व्रतं समादिश्य शौनकोऽन्तर्हितस्तदा ।
ततश्चकार नृपतिर्यथादिष्टं व्रतं तु तत् ।।४९।।

पत्न्या सह विनीतात्मा सूर्यभक्तिपरायणः।
ब्राह्मणान् भोजयामास यथेच्छं लक्षसङ्ख्यया ।।५०।।

उपवासयुतः पत्न्या मासमात्रं बभूव सः।
गोदानञ्च नमस्कारांश्चक्रे चाकारयद् द्विजैः।।५१।।

सूर्यमन्त्रं जपन्नित्यं तन्नामस्मरणं सदा।
ततः कदाचित् तत्पत्नी रात्रौ स्वप्ने ददर्श तम् ।।५२।।

निजभर्तृद्विजरूपं सवितारं मनोरमम् ।
चकमे कामरूपं तं मदनाग्निप्रपीडिता ।।५३।।

उवाच परितप्ताङ्गी कामो मे बाधते भृशम् ।
ऋतुं मे देहि भर्तस्त्वं नो चेन्मृत्युर्भवेन्मम ।।५४।।

सोऽपि बन्ध्यं विनिश्चित्य तत्पतिं कामुकाञ्च ताम् ।
स्वप्न एव भर्तृरूपी सविता तामृतुं ददौ ।।५५।।

सा प्रबुद्धा ततः प्राह समुत्थाप्य निजं पतिम् ।
नियमस्थेन किं ब्रह्मँस्त्वया मे ऋतुरर्पितः।।५६।।

स उवाच ततस्तां तु नाहं व्रतमनाः शुभे।
उपवासरतः क्षीणो रराम रविभक्तिमान् ।।५७।।

साधकले दयामय बनेर दीन, दुःखी, अन्धा, बहिरा र गरीब मानिसहरूलाई अन्नदान गर्नुपर्दछ। महिना दिन पुगेपछि व्रतको उद्यापन गरी पूजामा राखिएका सम्पूर्ण सामग्रीहरू ब्राह्मणलाई टक्र्याउनुपर्दछ ।।४७।। हे राजन्! तपाईंले यसरी नियमपूर्वक व्रत गर्नुभयो भने मेरो कृपाबाट पवित्र आचार-विचार भएको सूर्यनारायणमा भक्ति गर्ने र अत्यन्त यशस्वी पुत्र तपाईंले प्राप्त गर्नु हुनेछ' ।।४८।।

**ब्रह्माजीले भन्नुभयो** - राजा चक्रपाणिलाई सूर्यव्रतको उपदेश दिएर महर्षि शौनक अन्तर्धान भए । मुनि गएपछि राजाले पनि मुनिले बताएअनुसार व्रत आरम्भ गरे ।।४९।। आफ्नी पत्नीका साथ भक्तिभावले नम्र भएर राजा चक्रपाणिले सूर्यको आराधना गरिरहेका थिए । तिनले दिनदिनै एक लाख ब्राह्मणहरूलाई आफ्नो घरमा भोजन गराए ।।५०।। आफ्नी पत्नीका साथ एक महिनासम्म तिनले उपवास गरे । शास्त्रले बताएअनुसार गाई दान गरे । स्वयं र ब्राह्मणहरूद्वारा पनि सूर्यलाई एक लाख नमस्कार गर्ने र गराउने काम गरे ।।५१।। ती दुवै राजा र रानीले निरन्तर सूर्य भगवान्को मन्त्रजप र नामसङ्कीर्तन गरिरहेका थिए । एक दिन रानीले रात्रिमा सपना देखिन् ।।५२।। सपनामा तिनले सूर्यनारायणलाई आफ्ना श्रीमान्को रूपमा देखिन् । आफ्ना पतिको अनुहार लिएर आउने ती सूर्यनारायण अत्यन्त आकर्षक थिए । सपनाकै समयमा कामदेवद्वारा सताइएकी रानीले सपनामै देखिएका सूर्यनारायणसँग भोग गर्ने चाहना गरिन् ।।५३।। तिनले हात जोडेर भनिन् - 'कामदेवको सन्तापले गर्दा मेरा अङ्ग-प्रत्यङ्ग गलेका छन् र ठूलो बाधा भइरहेको छ । हे पतिदेव! मलाई यसै बेला ऋतुदान गर्नुहोस् । मैले ऋतुदान पाइन भने मेरो तत्कालै मृत्यु हुनेछ' ।।५४।। सपनामा देखिएका सूर्यनारायणले पनि राजा र रानीलाई पुत्रहीन जानेर फेरि रानीलाई पनि कामवेदनाले सम्भोगको प्रार्थना गरिरहेकी देखेर ती रानीलाई ऋतुदान दिए। त्यसपछि ती जागिन् र आफ्ना पतिलाई जगाउँदै भनिन् - 'हे स्वामी ! तपाईं ब्रह्मचर्यको नियममा बस्नुभएको छ तर त्यो नियममा रहेर के भयो ? किनकि तपाईंले मलाई सपनामा ऋतुदान दिनुभएको छ' ।।५५-५६।। रानीको वचन सुनेर राजाले भने- 'हे कल्याणी! यदि त्यसो हो भने अब म व्रत गर्न चाहन्नँ । उपवास गर्नाले साह्रै दुर्बल भएको छु ।' रानीसँग यी कुरा गरेर तिनले सूर्यमा

ततः भर्ता पुनः प्राह नान्यं जाने कथञ्चन ।
त्वद्रूपेणैव ध्यायामि सवितारं व्रते स्थिता ।।५८।।

[illegible]न च दग्धाऽहं वह्निनाऽन्तर्गतेन ह ।
ततः पुनश्चक्रपाणिरूचे तां प्रियभाषिणीम् ।।५९।।

नृप उवाच

तुष्टोऽसौ सविता कान्ते ! नमस्कारैश्च भोजनैः।
ब्राह्मणानां गवां दानैरुपवासैर्जपैरपि।।६०।।

[illegible]त्वां सिद्धिं ददौ सम्यक् पुत्रस्तव भविष्यति ।

क उवाच

दिने दिने गर्भवृद्धौ तस्यास्तापोऽभिवर्द्धते ।।६१।।

सा मुमूर्षुश्चन्दनानि सोशिराणि निषेवते ।
विलेपाऽङ्गे च कर्पूरं तापो नास्याः शशाम च ।।६२।।

न चार्द्रवस्त्रपवनैस्ततः सा सखीभिः सह।
तत्याज सिन्धुतीरे तं गर्भं गत्वा महत्तरम् ।।६३।।

आययौ साथ विश्रान्ता सखीभिर्निजमन्दिरम् ।
निवेद्य भर्त्रे त्यक्तं तं गृहकार्यरताऽभवत् ।।६४।।

भक्तिप्रदर्शन गर्दै उपवासबाट विश्राम लिए ।।५७।। त्यसपछि ती रानीले भनिन् – 'हे स्वामी ! मैले अरू कुनै पुरुषको अनुहार आजसम्म हेरेकी छैन । अब म हजुरकै रूपमा सूर्यनारायणको ध्यान गर्दछु । मैले व्रतको त्याग गर्दिनँ, तर सपनामा सूर्यका रूपमा आउनुभएका हजुरले सम्भोग गर्दा जुन वीर्यदान गर्नुभयो त्यसको तापले मलाई पोलिरहेको छ ।' त्यसपछि चक्रपाणिले ती मधुरभाषिणी प्रियासँग भने ।।५८-५९।।

**राजाले भने** – 'हे सुन्दरी ! भगवान् सूर्य प्रसन्न हुनुभएछ । हामीले गरेका नमस्कार, ब्राह्मणभोजन, गोदान, उपवास र मन्त्रजपबाट उहाँ सन्तुष्ट हुनुभएछ ।।६०।। उहाँले हामीलाई सिद्धि प्रदान गरिसक्नुभयो । तिम्रो गर्भबाट पुत्र पैदा हुनेछ भन्ने मलाई विश्वास छ ।'

**ब्रह्माजीले भन्नुभयो** – दिनदिनै गर्भ बढिरहेको थियो र रानीको सन्ताप पनि बढिरहेकै थियो ।।६१।। भित्रको तेजले मरणान्त कष्ट भोगिरहेकी रानीले शरीर र मनलाई ठण्डा गराउन शीतल पदार्थहरूको सेवन गरिरहेकी थिइन् । तिनले सम्पूर्ण अङ्गहरूमा कपूरको लेपन गरिन्, ताप शान्त भएन ।।६२।। तिनले कपडा भिजाएर ज्यानमा लपेटिन्, त्यसबाट पनि शान्ति भएन । आफ्ना सखीहरूलाई पङ्खा हम्काउन लगाएर हावाको सेवन गरिन्, त्यसबाट पनि तिनको ताप कम भएन। त्यसपछि ती रानी आफ्ना सँगिनीहरूका साथ सिन्धुनदीको तीरमा गइन्। त्यहाँ गएर तिनले आफ्नो गर्भ परित्याग गरिन् ।।६३।। केही बेर विश्राम गरी ती सखीहरूकै साथ घरमा आइन् । घरमा आएपछि सिन्धुनदीका तीरमा गई गर्भत्याग गरेको कुरा आफ्ना पतिलाई बताएर घरको कार्यमा संलग्न भइन् ।।६४।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे सिन्धूत्पत्तिवर्णनं नाम त्रिसप्ततितमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'सिन्धु दैत्यको उत्पत्ति वर्णन' शीर्षकान्वित त्रिहत्तरौं अध्याय पूर्ण भयो ।।७३।।

ॐ

## चतु:सप्ततितमोऽध्याय:        { ७४ अध्याय }

क उवाच

त्यक्ते गर्भे तया सिन्धौ वालोऽजनि महाबल:।
तेजस्वी विकरालास्यो दीर्घभालस्त्रिलोचन: ।।१।।

रक्तकेशजटाभारश्चक्रपाणिस्त्रिशूलभृत् ।
बालशब्देन तस्याथ चकम्पे भुवनत्रयम् ।।२।।

आजानुबाहुराक्रान्तुमियेष विष्टपत्रयम् ।
चुक्षुभे सागरस्तेन यादोभिर्मुनिसत्तम ।।३।।

तत्र स्थितस्तु बालोऽसौ समुद्रमुपशोषयत् ।

समुद्र उवाच

जीवनाय मम सुतं नेष्य एनं नृपालयम् ।।४।।

क उवाच

इत्यानिनाय तं बालं समुद्रो नृपमन्दिरम् ।
दम्पत्योः पुरत: स्थाप्य प्रोच एवं द्विजस्तदा ।।५।।

तव पत्न्याऽत्याजि गर्भो दु:सहत्वान्ममोदरे।
उग्रो बालस्ततो जातोऽखिललोकभयङ्कर: ।।६।।

यस्य प्रथमशब्देन कम्पितं भुवनत्रयम् ।
नेत्राभ्यां नेक्षितुं शक्योऽत एवैनमुपानयम् ।।७।।

इत्युक्त्वा बालकं मुक्त्वाऽन्तर्दधे सागरस्तदा ।
तत एनं कराभ्यां सा कटौ दधे नृपाङ्गना ।।८।।

स्थापयित्वा ददौ प्रेम्णा स्तनपानं मुदान्विता ।
उभावानन्दयुक्तौ तौ दम्पती पुत्रदर्शनात् ।।९।।

यथा चिरं योगनिष्ठो लब्ध्वा ब्रह्मामृतं परम् ।
तत आकारयामास ब्राह्मणान् सुहृदोऽपि च।।१०।।

**ब्रह्माजीले भन्नुभयो** - महारानीले सिन्धु नदीका तीरमा गई गर्भपात गरेपछि त्यस गर्भबाट महाबली, तेजस्वी, डरलाग्दो अनुहार भएको, चौडा निधार भएको, तीन आँखा धारण गर्ने, राता जटा भएको, हातमा चक्र र त्रिशूल धारण गर्ने बालक पैदा भयो । त्यसको भयानक शब्दले स्वर्ग, मर्त्य र पाताल कम्पायमान भए । घुँडा छुने लामा लामा हातले युक्त भएको त्यस बालकले जन्मनासाथ स्वर्ग, मर्त्य र पातालमा आक्रमण गर्न खोज्यो । अनेक जीवजन्तुले भरिभराउ महासागर पनि त्यस बालकको स्पर्शबाट क्षुब्ध भयो ।।१-३।। त्यस बालकले समुद्रको किनारमा रही समुद्रलाई नै सुकाउन थाल्यो।

**समुद्रले भन्यो** - 'मेरो तटमा जन्मेकाले यस बालकलाई मैले मेरो पुत्र भन्नुपर्दछ, तर यसको लालनपालन गर्ने मेरो सामर्थ्य छैन । त्यस कारण यसलाई म राजाको दरबारमा पुऱ्याउँछु'।।४।।

**ब्रह्माजीले भन्नुभयो** - यसरी विचार गरेर समुद्रले बालकलाई राजदरबारमा पुऱ्यायो । त्यसले राजालाई भन्यो- 'तपाईंकी रानीले गर्भको तेज सहन नसकेर मेरो पानीमा आई गर्भत्याग गरिन्। त्यस कारण मैले यस बालकलाई तपाईंसमक्ष ल्याइपुऱ्याएको छु ।' राजा-रानीका सामु बच्चालाई राखेर समुद्रले सबै कुरा सुनाएपछि त्यो बालक उग्ररूपमा संसारलाई भय प्रदान गर्दै गर्जन गर्न थाल्यो ।।५-६।। त्यसको गर्जनबाट सम्पूर्ण ब्रह्माण्ड कम्पायमान भयो । त्यसको तेजोमय शरीरलाई कसैले पनि आँखाले हेर्न सकेन। समुद्रले भन्यो - 'यो बालक जन्मदा मैले यस्तै अनुभव गरेको हुँ। त्यस कारण यहाँ लिएर आएँ। यस बालकलाई स्वीकार गर्नुहोस् ।' यसरी निवेदन गरेर समुद्र अन्तर्धान भयो। त्यसपछि रानीले त्यस बालकलाई दुइटा हातले समातेर काखमा राखिन् र प्रेमपूर्वक त्यसलाई स्तन चुसाइन् । तेजस्वी बालक पैदा भएकोमा दुबै दम्पती आनन्दित भए।।७-९।। योगीले चिरकालसम्म उपासना गरी ब्रह्मरूप अमृतको पान गर्दा जस्तो स्थिति हुन्छ त्यही स्थिति राजा र रानीको पनि भयो। त्यसपछि राजाले ब्राह्मण र

ज्योतिर्विद्भिर्विचार्याऽस्य सिन्धुरित्यभिधां शुभाम् ।
राज्ञी चक्रे नृपश्चास्य जातकर्म यथाविधि ।।११।।

कृत्वा ददौ ततो दानमनेकं हर्षनिर्भरः।
अनेकेभ्यो द्विजातिभ्यो वस्त्राणि विविधानि च ।।१२।।

दापयामास नगरे पताकाभिरलङ्कृते ।
वाद्यत्सु सर्ववाद्येषु शर्कराश्च गृहे गृहे ।।१३।।

गतेषु सर्वलोकेषु रक्ताङ्ग इति नाम च ।
चक्रतुर्दम्पती स्नेहादथामात्यौ समूचतुः ।।१४।।

उग्रायास्तनयश्चायमुग्रमुद्राधरोऽपि च।
अयमुग्रेक्षण इति नाम्ना ख्यातो भविष्यति ।।१५।।

विप्रप्रसादन इति पौरा नाम प्रचक्रिरे ।
ततः सर्वे पौरजना उपदा विविधास्तदा ।।१६।।

ददुर्नृपाय सोऽप्येतान् दापयामास तत्क्षणात् ।
ववृधे बालकः सोऽथ शुक्लपक्षे यथा शशी।।१७।।

यथाऽग्निर्वायुवेगेन वर्धते क्षणमात्रतः ।
तथा स्वतेजसा बालः प्रवृद्धो गगनं स्पृशन् ।।१८।।

क्रीडन्नेव सदा बालो वृक्षान् गृहगतान् बहून् ।
उत्पाट्य पातयामास वामहस्ततलेन ह ।।१९।।

अरण्ये क्रीडता तेन पर्वताश्चूर्णिता द्रुमाः।
उड्डीय चन्द्रहरिणं क्षणं जग्राह कर्हिचित् ।।२०।।

जलावतारमार्गे तु रुद्धे क्वापि करेणुना ।
मुष्टिघातेन बिभिदे गण्डमस्याः पपात सा ।।२१।।

एवं तस्याद्भुतं कर्म दृष्ट्वा लोका विसिस्मिरे ।
जहर्ष जननी चास्य पिता ज्ञात्वाऽतिमानुषम् ।।२२।।

एवं प्रवृद्धो बालोऽसौ सिन्धुनामा महाबलः।
उवाच पितरं यास्ये तपस्तप्तुमहं नृप ।।२३।।

मित्रहरूलाई बोलाए।।१०।। ज्योतिषीहरूले जन्मकाल र ठाउँसमेत विचार गरेर त्यसको नाम सिन्धु राखे । राजा र रानीले मिलेर बालकको जातकर्म संस्कार पनि सम्पन्न गरे।।११।। जातकर्म गरेपछि आनन्दित भएका राजाले अनेक ब्राह्मणहरूलाई अनेक वस्त्रहरू दान गरे।।१२।। ध्वजा-पताकाद्वारा सजाइएको नगरमा कुमार जन्मको खुसियालीमा अनेक किसिमका बाजा बजिरहेका थिए। त्यस बेला घर-घरमा सक्खर पठाइयो । सबै मानिस गएपछि राजा र रानीले भने - 'यस बालकको नाम सिन्धु भए तापनि हामीले बोलाउने नाम रक्ताङ्ग हुनेछ।' मन्त्रीहरूले पनि प्रेमपूर्वक त्यस बालकलाई रक्ताङ्ग भनी बोलाए।।१३-१४।। कसैले भने- यो उग्रा चारुहासिनीको छोरा हो र यसले उग्र स्वभाव धारण गरेको छ । त्यस कारण यसलाई उग्रेक्षण भनी पुकार्नु पर्दछ । नगरवासीहरूले त्यस बालकको नाम विप्रप्रसादन भनी राखे । त्यसपछि तिनीहरूले अनेक थरि उपहार टक्र्याए। राजाले पनि ती नगरवासीहरूलाई आफ्नो तर्फबाट नाना किसिमका उपहार टक्र्याए। त्यो बालक शुक्लपक्षको चन्द्रमाझैं बढिरहेको थियो।।१५-१७।। वायुको सहयोग पाएर आगाको ज्वाला फैलिएझैं राजाको समृद्धि र राम्रो हेरचाह पाएर बालक पनि शारीरिक दृष्टिबाट विकसित हुँदै गयो । बालकले आफ्नो तेजबाट आकाशस्पर्श गर्दथ्यो र खेल्दाखेल्दै बायाँ हातले घर वरिपरिका रूखहरूका हाँगा भाँच्ने गर्दथ्यो ।।१८-१९।। वनमा खेलिरहँदा त्यसले साना-साना पर्वतका चुचुरा र ठूला-ठूला रूखहरूलाई पनि भुइँमा ढलाउँथ्यो । कुनै दिन चन्द्रमण्डलमा रहेको हरिणलाई छुन्छु भनेर त्यो आकाशमा उफ्रिएको थियो । कहीं कुनै हात्तीले नदीको प्रवाहमार्ग रोकिदिएमा त्यसले त्यहाँ गई आफ्नो मुड्की बजार्दै हात्तीका गाला फोर्ने काम गर्दथ्यो। यसरी त्यस बालकका अद्भुत कर्म देखेर सबै चकित थिए । माता र पिता पनि बालकको असामान्य चरित्र देखेर विस्मित थिए । यसरी बढ्दै गएको सिन्धुनामक बालकले एक दिन आफ्ना पितासँग भन्यो - 'म वनमा तपस्या गर्न जान्छु । तपस्याबाट वरदान प्राप्त गरेर पृथिवी, पाताल र स्वर्गमा आक्रमण गर्नेछु।

अनुष्ठित्य स्वर्गलोकं भूलोकञ्च रसातलम् ।
आक्रमिष्ये वृथायुर्मे गच्छतीति मतिर्मम ।।२४।।

एवमाकर्ण्य तद्वाक्यमूचतुः पितरौ च तम् ।
उत्कर्षं स्वस्य पुत्रस्य नित्यं प्रार्थयते पिता ।।२५।।

जननी सर्वदेवेभ्यो व्रतदानादिनापि च ।
एवमाज्ञामवाप्यैव नत्वा तौ स ययौ वनम् ।।२६।।

तत्र भ्रमन् ददर्शाथ कासारं जलजैर्युतम् ।
तत्र स्थातुं मनश्चक्रे विविक्तमिति हर्षितः ।।२७।।

एकाङ्गुष्ठेन भूमिष्ठ ऊर्ध्वबाहू रविं स्मरन् ।
शुक्रोपदिष्टं तं मन्त्रं जपन् पर्वतनिश्चलः ।।२८।।

दक्षिणे जानुनि सदा वामपादं निधाय च ।
अञ्जलिं हृदि विन्यस्य ध्यायन् दिनमणिं तदा ।।२९।।

शीतवातातपजलवृष्टीनां सहनो दृढः।
वायुमात्राशनस्तस्थौ वल्मीकाक्रान्तविग्रहः।।३०।।

अस्थिमात्रावशिष्टोऽपि जपत्येव महामनुम् ।
एवं तस्य व्यतीयाय शरदां द्विसहस्रकम् ।।३१।।

तस्य सिन्धोः शरीरोत्थास्तेपुर्भासो रविं तदा।
एवमुग्रं तपो दृष्ट्वा प्रत्यक्षोऽभूद् दिवाकरः।।३२।।

उवाच परमप्रीतोऽनुष्ठानेन तवाधुना।
वरं वरय चित्तस्थं दास्यामि जीविताविधि ।।३३।।

सिन्धुस्तदाकर्ण्य वचो भाषितं भानुना स्वयम् ।
देहभावं गतोऽपश्यत् पुरतो भास्करं प्रभुम् ।।३४।।

नत्वा तत्पादकमलं बद्धाञ्जलिपुटोऽब्रवीत् ।
नमस्ते दीननाथाय नमस्ते सर्वसाक्षिणे ।।३५।।

नमस्ते त्रिदशेशाय ब्रह्मविष्णुशिवात्मने ।
नमस्ते विश्ववन्द्याय नमस्ते विश्वहेतवे ।।३६।।

तपस्या गर्न नगएमा मेरो आयु खेर जानेछ र मैले जीवनमा कुनै खास उपलब्धि प्राप्त गर्न सक्नेछैन' ।।२०-२४।। आफ्ना छोराको कुरा सुनेर माता-पिताले भने- 'बाबु! हरेक पिताले आफ्ना छोराको उन्नति चाहन्छ र हरेक माताले सबै देवताहरूको आराधना, व्रत र दानादि कर्म गरेर आफ्ना सन्तानको उन्नति र सुरक्षा चाहन्छिन्। हामी तिमीलाई तपस्याबाट रोक्दैनौं।' माता र पिताको आज्ञा प्राप्त गरी दैत्यबालक सिन्धु तपस्या गर्न वनतर्फ गयो।।२५-२६।। त्यसले वनमा घुम्दा कमलले भरिभराउ एउटा पोखरी देखेर प्रसन्न भई त्यसका किनारमा एकान्तसाधना गर्ने विचार गर्‍यो ।।२७।। त्यसले खुट्टाको बूढीऔंलाले भुइँमा टेकेर दुबै हात माथि उठाई भगवान् सूर्यको ध्यान गर्दै शुक्राचार्यद्वारा दिइएको मन्त्रलाई पर्वतझैं निश्चल भएर जप्न थाल्यो।।२८।। आफ्नो दायाँ घुँडामाथि बायाँ खुट्टा राखेर हृदयक्षेत्रमा हातको अञ्जली थापी सूर्यको ध्यान गर्दै त्यसले सूर्यमन्त्रको जप गरिरहेको थियो ।।२९।। ठण्डी, गर्मी, हावा र वर्षा यी सबैलाई सहँदै निश्चल भएर वायुपान गरी त्यसको तपस्या चलिरहेको थियो । समय बित्दै जाँदा त्यसको शरीर धमिराले उठाएको माटोले पुरियो ।।३०।। निरन्तर तपस्या गरिरहँदा त्यसको शरीर सुक्दै गयो र हाडछालामात्र देखिए । यस्तो स्थितिमा पनि तेजले बलिरहेको बालक सिन्धुले उत्साहपूर्वक सूर्यको महामन्त्र जपिरहेको थियो । यसरी तपस्या गर्दा त्यसले दुई हजार वर्ष बितायो।।३१।। दैत्यबालक सिन्धुका शरीरबाट उठेका अग्निज्वालाले सूर्यलाई पनि सन्तप्त बनाए। त्यसको उग्र तपस्या देखेर भगवान् सूर्यले दर्शन दिए ।।३२।। दर्शन दिएपछि सूर्यले भने -'हे सिन्धु ! म तिम्रो अनुष्ठानबाट अत्यन्त प्रसन्न छु । तिमीले वर माग, म तिमीले चाहेको वर प्रदान गर्नेछु ।।३३।।' सूर्यले भनेका कुरा सुनेर सिन्धुले देहभावमा आई उहाँको दर्शन गर्दै पाउमा प्रणाम गरेर हात जोडी प्रार्थना गर्‍यो - 'हे दीनदुःखीका स्वामी र सबैका साक्षी सूर्यनारायण ! हजुरलाई नमस्कार छ । देवताहरूका स्वामी र ब्रह्मा, विष्णु एवं शिवरूप हजुरलाई नमस्कार गर्दछु। विश्वका वन्दनीय देवताका रूपमा रहनु भएका हजुरलाई नमस्कार गर्दछु। विश्वका आदिकारण हजुरलाई नमस्कार गर्दछु ।।३४-३६।।

नमस्ते वृष्टिबीजाय सस्योत्पादनहेतवे ।
परब्रह्मस्वरूपाय सृष्टिस्थित्यन्तहेतवे ।।३७।।

गुणातीताय गुरवे गुणक्षोभविधायिने ।
सर्वज्ञाय ज्ञानदात्रे सर्वस्य पतये नमः।।३८।।

धन्यं मे जन्म देवेश ! वंशो मे जनकोऽपि च।
जननी च तपश्चापि यज्जातं तव दर्शनम् ।।३९।।

वरदश्चेद् दिनेश ! त्वं देहि मे सर्वतोऽमृतिम् ।
तव प्रसादात् सङ्ग्रामे जयेयं सर्वदेवताः।।४०।।

वर्तमानाद् देवगणात्र मे मृत्युर्भवेदिति।
एवं तस्य वरान् श्रुत्वा परितुष्टो विभावसुः।
उवाच निजभक्तं तमनुष्ठानकृशं भृशम् ।।४१।।

सूर्य उवाच

न भयं विद्यते देवयोनिभ्यो नृभ्य एव च।
न तिर्यग्भ्यो न नागेभ्यो न दिवा न निशि क्वचित् ।।४२।।

नोषःकाले न सन्ध्यायां मम वाक्याद् भविष्यति ।
मरणं ते नृपसुत ! गृहाणामृतभाजनम् ।।४३।।

इदं यावत् कण्ठगतं तावन्मृत्युर्न ते भवेत् ।
निष्कासयेदिदं यस्ते तस्मान्मृत्युर्भविष्यति ।।४४।।

देवो योऽवतरेत् कोऽपि धुन्वन् केशाग्रतो दिवम् ।
यस्याङ्गुष्ठनखाग्रे स्युर्ब्रह्माण्डानां हि कोटयः ।।४५।।

स त्वां हनिष्यति विभुरन्यस्मादभयं तव।
मद्वरस्य प्रसादेन सर्वं तृणमयं तव ।।४६।।

त्रैलोक्यराज्यं ते दत्तं नात्र कार्या विचारणा।

क उवाच

एवं नानावरान् दत्त्वाऽन्तर्दधे सविता तदा ।।४७।।

वर्षाका मूल कारण र अन्न उत्पादनका एकमात्र कारण सूर्यलाई प्रणाम गर्दछु। परब्रह्मस्वरूप, सृष्टि; स्थिति र संहारका कारण सत्त्व; रज एवं तमोगुणदेखि पर रहनुभएका, संसारका गुरु, सत्व रज र तमोगुणमा क्षोभ पैदा गर्ने, सर्वज्ञ, ज्ञानका दाता, सबैका पति सूर्यदेवलाई नमस्कार गर्दछु ।।३७-३८।। हे सूर्यनारायण ! आज हजुरको दर्शन पाएर मेरो जन्म धन्य भएको छ र मेरो कुल पनि धन्य भएको छ । मेरा माता-पिता धन्य हुनुभएको छ र मेरो तपस्या पनि सफल भएको छ । हे सूर्यनारायण ! हजुरले मलाई वरदान दिन चाहनुहुन्छ भने मेरो मृत्यु कसैबाट पनि नहुने वरदान दिनुहोस्। हजुरको कृपाबाट सङ्ग्राममा सधैं देवताहरूमाथि विजय गर्न सकूँ ।।३९-४०।। सङ्ग्राममा रहेका देवताहरूबाट पनि मेरो कहिल्यै मृत्यु नहोस्।' यस्ता याचनाहरू सुनेर सूर्य प्रसन्न भए । मन्त्रको जप गर्दा अत्यन्त दुर्बल तर तेजस्वी भक्त बालकलाई उनले भने ।।४१।।

**सूर्यले भने-** 'हे बालक! तिमीलाई देवता र मानिसहरूबाट कुनै डर हुनेछैन । चराचुरुङ्गी र सर्पहरूबाट पनि तिमीलाई भय हुनेछैन । रात, दिन, प्रातःकाल र सन्ध्यासमयमा पनि तिमीलाई कसैले केही गर्न सक्नेछैन । तिमीले मबाट एउटा अमृतले भरिएको पात्र ग्रहण गर ।।४२-४३।। जबसम्म यस पात्रमा घाँटीघाँटीसम्म अमृत रहन्छ तबसम्म तिम्रो मृत्यु हुनेछैन। जसले यस पात्रबाट अमृत निकालिदिनेछ त्यस पुरुषबाट मात्र तिम्रो मृत्यु हुनेछ ।।४४।। भविष्यमा कुनै देवता धर्तीमा अवतरित हुनेछन् । तिनले आफ्नो केशराशि कपाउँदा स्वर्ग पनि कम्पायमान हुनेछ । तिनका बूढीऔंठाको नङको टुप्पामा एक करोड ब्रह्माण्डको वास हुन्छ । हे बालक ! ती देवताले नै तिम्रो वध गर्नेछन् । अरूबाट तिमीलाई अभय हुनेछ । मेरा वरदानको प्रतापले तिमीले स्वर्ग, मर्त्य र पातालको राज्य प्राप्त गर्नेछौ । सम्पूर्ण वीरहरू तिम्रा लागि घाँसको त्यान्द्रासमान बलहीन हुनेछन् ।।४५-४६।। अरू कुनै विचार अथवा सन्देह गर्नु पर्दैन ।'

**ब्रह्माजीले भन्नुभयो -** यसरी सूर्यनारायण दैत्यबालक सिन्धुलाई वरदान दिएर गए । त्यो बालक पनि आनन्दित भई आफ्नो घरतर्फ लाग्यो । तपस्या गरेर वरदान प्राप्त गरी

सोऽप्यानन्दसमायुक्तो जगाम निजमन्दिरम् ।
जननी च पिता तस्य मूर्ध्न्याघ्रायापतुर्मुदम् ।।४८।।

ऊचतुस्तं तदा पुत्रं विरहात्तेऽन्नवर्जितौ ।
चिन्तया कृशतां यातौ पश्य पुत्रदशामिमाम् ।।४९।।

तयोः पादौ प्रणम्याह स पुत्रो हर्षनिर्भरः ।
प्रसन्नः सविता मह्यं त्रैलोक्यस्वामितामदात् ।।५०।।

साधयिष्ये तद्वरात् तां न चिन्तां कर्तुमर्हथः ।।५१।।

घर फिर्ने छोरालाई देखेर खुसी भएका बाबुआमाले त्यसको निधार सुँघेर परम आनन्दको अनुभव गरे ।।४७-४८।। त्यसपछि माता-पिताले भने - 'हे बाबु ! तिम्रो विरहका कारण हामीले अन्न-पानीसमेत छोड्यौं र चिन्ताले दुर्बल भयौं । त्यसैले आज हाम्रो यो दशा भएको छ' ।।४९।। आमा-बाबुले भनेका सुनेर बालक सिन्धुले पनि हर्षित भई बाबुआमालाई प्रणाम गर्दै भन्यो- 'हे माता-पिता! मेरो तपस्याबाट प्रसन्न हुनुभएका सूर्यनारायणले मलाई स्वर्ग, मर्त्य र पातालको स्वामी बनाउनुभएको छ । उहाँले दिएको वरदान-अनुसार अब आफ्नो पराक्रमद्वारा ती सबै लोकहरूलाई अधीनमा ल्याउनेछु । तपाईँहरूले कुनै चिन्ता नगर्नुहोस् ।।५०-५१।।

ॐ

**इति श्रीगणेशपुराणे क्रीडाखण्डे वरप्रदानं नाम चतुःसप्ततितमोऽध्यायः**

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'सूर्यद्वारा सिन्धुलाई वर प्रदान' शीर्षकान्वित चौहत्तरौं अध्याय पूर्ण भयो ।।७४।।

ॐ

## पञ्चसप्ततितमोऽध्याय: { ७५ अध्याय }

क उवाच

बुद्धिमन्तं सुतं ज्ञात्वा सवितुर्वरदर्पितम् ।
राज्यं तस्मै ददौ सर्वं देशकोशबलान्वितम् ।।१।।

पिता वनं ययौ तस्य स्वात्मसाधनलालस:।
स तु पित्राभिषिक्त: सन् राज्यं कर्तुं मनो दधे ।।२।।

श्रेणीमुख्यान् समाहूय प्रकृतीरधिकारिण:।
आस्थापयत् स्वाधिकारे मानयित्वांऽशुकादिभि:।
डिण्डीरवेण स्वाज्ञाया भङ्गदोषमघोषयत् ।।३।।

दिग्जयार्थं ततो वीरानाज्ञापयत सत्वरम् ।
तेजसाऽहेपयत् सूर्यमतिभीषणविग्रह:।।४।।

वीरा अग्रे प्रयान्ति स्म विकरालारुणानना: ।
नग्ननानाशस्त्रधरा रजश्छादितभास्करा: ।।५।।

ततो गजाश्चतुर्दन्ता नानावर्णविभूषिता: ।
ययुर्महाशृङ्खुलिन: कम्पयन्तो वसुन्धराम् ।।६।।

महामात्रसमारूढाश्चञ्चला: पर्वता इव।
नानावर्णध्वजयुता दिग्गजान् भेत्तुमिच्छव:।।७।।

घण्टाघोषेण महता नादयन्तो दिगन्तरम् ।
अश्वारोहा ययु: पश्चान् नानालङ्करणान्विता:।।८।।

असङ्ख्यतूणधनुषां शस्त्राणां मण्डलान्विता:।
सिन्धुदैत्यश्चमूमध्ये रराज हयपृष्ठग:।।९।।

मुक्तामालालसत्कण्ठो धनुर्बाणलसत्कर:।
खड्गखेटधरो गच्छँश्चूर्णयन् द्रुमपर्वतान् ।।१०।।

यद् यन्नगरमुद्दिश्य याति दैत्यो महाबल:।
तस्य तस्याधिपं वीरा धृत्वा निन्युर्निजाधिपम् ।।११।।

स्वकीयं नायकं चिह्नं मुद्रां तत्र न्यवेशयन् ।
ततोऽन्ये शरणं याता दासभावमुपागता: ।।१२।।

**ब्रह्माजीले भन्नुभयो** - आफ्नो बुद्धिमान् छोरा सिन्धुलाई सूर्यनारायणबाट वर प्राप्त भएका कारण अभिमानी हुँदै गएको जानेर राजा चक्रपाणिले अमात्य कोश आदि सम्पूर्ण राज्यको अभिभारा त्यसलाई सुम्पिदिए।।१।। त्यसपछि चक्रपाणि आत्मदर्शन गर्ने इच्छाले तपस्या गर्न वनतर्फ लागे । राजा सिन्धु पनि पिताद्वारा राज्यसिंहासनमा अभिषिक्त भएपछि राज्यसञ्चालन गर्न तत्पर भयो ।।२।। विभिन्न जातजाति र वर्गका मुख्य मानिसहरू, मन्त्रीहरू र राज्यका अधिकारीहरूलाई बोलाएर त्यसले विभिन्न अधिकारमा स्थापित गऱ्यो। तिनलाई उपहार दिएर प्रसन्न तुल्यायो। त्यसपछि त्यसले सम्पूर्ण राज्यमा ढोल पिटाएर राजा सिन्धुको आज्ञा भङ्ग गर्ने मानिसलाई कठोर दण्ड दिइनेछ भन्ने घोषणा गर्न लगायो ।।३।। घोषणापछि आफ्ना वीर सैनिकहरूलाई दिग्विजय गर्न आज्ञा दियो । अत्यन्त भयङ्कर स्वरूप भएको त्यस दैत्यले आफ्नो तेजबाट आफैलाई वरदान दिने सूर्यलाई पनि हेपिसकेको थियो ।।४।। दिग्विजयका लागि राता राता अनुहार भएका भयङ्कर वीरहरूले प्रस्थान गरेका थिए । नाना जातजातिबाट आएका ती वीरहरूले दिग्गजहरूलाई पनि परास्त गर्न चाहन्थे । तिनले ठूलो घण्टाको घोषबाट दिशा र विदिशालाई पनि शब्दायमान तुल्याएका थिए । पैदलसेनाका वीरहरूपछि घोडसवार वीरहरूले प्रस्थान गरे । ती पनि अनेक अलङ्कारद्वारा अलङ्कृत थिए ।।५-८।। वीरहरूका हातमा असंख्य धनु, शस्त्र र अस्त्र थिए । तिनीहरूको बीचमा दैत्यराज सिन्धु घोडामा सवार भएको थियो ।।९।। त्यसको घाँटीमा मोतीको हार चम्किरहेको थियो र हातमा धनुष एवं बाण थिए । तरबार एवं ढाल धारण गर्ने महाबली सिन्धु वन, पर्वत र वृक्षहरूलाई चूर्ण-चूर्ण बनाउँदै जुन जुन नगरमा विजय गर्ने उद्देश्यले जान्थ्यो त्यस त्यस नगरका राजाहरूलाई जितेर त्यहाँ आफ्नो शासन प्रवर्त्तन गरी राजचिह्न र राजमुद्राको प्रचलन गराउँथ्यो । त्यसको वीरता देखेर अरू राजाहरू पनि शरणमा आई त्यसकै सेवक बनेर रहेका थिए ।।१०-१२।। दैत्यराज सिन्धुले तिनलाई अब

करदाँस्तान् स कृत्वैव ररक्ष स्वपदे बलात् ।
एवं सर्वान् वशञ्चक्रे दैत्यकोट्यस्ततोऽन्वयुः ।।१३।।

शुम्भो निशुम्भो वृत्रश्च प्रचण्डः काल एव च।
कदम्बासुरनामा च शम्बरः कमलासुरः ।।१४।।

कोलासुरोऽब्रवीत् तत्र यथा त्रिपुरदैत्यराट् ।
विजित्य लोकत्रितयमधिकारान् हि नो ददौ १५।।

तथा यच्छाधिकारान्नो जित्वा त्रैलोक्यमोजसा।
तस्मिन् हते शिवेनाऽद्य दृष्टोऽसि प्रबलोऽसुरः ।।१६।।

न ते पराक्रमतुलां कृतान्तोऽपि लभेत् क्वचित् ।
तवाज्ञां कर्तुमिच्छामस्तव सेवां महाबल ।।१७।।

एवमाकर्ण्य तद्वाक्यं सन्तुष्टः सिन्धुदैत्यराट् ।
ददावश्वान् गजान् तेभ्यो वस्त्राणि भूषणानि च ।।१८।।

सिन्धुरुवाच

प्रबलस्तु तदाऽहं स्यां यदा जेष्येऽमरावतीम् ।
हरविष्णुसत्यलोकान् पातालानि च सप्त च ।।१९।।

क उवाच

साधु साध्विति सर्वेषु ब्रुवत्सु सर्वदैत्यपाः।
जगर्जुश्च जहृषुश्च ब्रह्माण्डं पर्यकम्पयन् ।।२०।।

न भूप ! युद्धात् कण्डुर्नो ह्यशमद्, देवयुद्धतः।
शमं यास्यत्यतो जग्मुः शीघ्रमेवाव्रजन् दिवम् ।।२१।।

तिमीहरूले मलाई कर दिए हुन्छ, आफ्नो पदमा रही राज्य गर भनी त्यहीं नै नियुक्त गर्दथ्यो । यसरी करोडौंको संख्यामा रहेको सिन्धुको सेना सबै राजाहरूलाई आफ्नो वशमा तुल्याएर विश्वविजय गर्न अगाडि बढिरहेको थियो ।।१३।। दैत्यराज सिन्धुको सेनामा शुम्भ, निशुम्भ, वृत्र, प्रचण्ड, कालासुर, कदम्बासुर, शम्बरासुर, कोलासुर आदि वीरहरू रहेका थिए।।१४।। तीमध्ये कोलासुरले एक दिन सिन्धुलाई निवेदन गऱ्यो – 'हे राजन् ! प्राचीन समयमा त्रिपुरासुर दैत्यले तीनै लोकमाथि विजय गरी त्यहाँका सम्पूर्ण अधिकार आफ्नो हातमा लिएर हामीलाई अधिकार प्रत्यायोजन गरी कज्याएका थिए ।।१५।। त्यसैगरी तपाईँले पनि आफ्नो तेजबाट स्वर्ग, मर्त्य र पातालमाथि विजय गरी हामीलाई अधिकार प्रदान गर्नुहोस्। शिवले त्रिपुरासुरलाई मारेपछि हाम्रा अधिकार खोसिए । आज हाम्रो अधिकार दिलाउन सुयोग्य वीरका रूपमा हजुरको उदय भएको छ ।।१६।। हजुर अतुलनीय पराक्रमले सम्पन्न हुनुहुन्छ त्यस कारण हजुरलाई यमराजले पनि जित्न सक्दैनन् । हामी हजुरको आज्ञा पालन गर्न चाहन्छौं र हजुरकै सेवामा आफ्नो जीवन समर्पित गर्न चाहन्छौं ।।१७।।' कोलासुरका यी कुरा सुनेर प्रसन्न भई सिन्धु दैत्यले त्यसलाई घोडा, हात्ती, वस्त्र र अलङ्कार प्रदान गर्दै भन्यो ।।१८।।

**सिन्धुले भन्यो** – 'हे कोलासुर ! जुन दिन मैले इन्द्रको राजधानी अमरावती, कैलास, वैकुण्ठ, सत्यलोक र सात थरिका पाताललोकहरूमा अधिकार जमाउनेछु त्यस दिनमात्र तिमीले मेरो अतुलनीय पराक्रमको प्रशंसा गर्नेछौं' ।।१९।।

**ब्रह्माजीले भन्नुभयो** - सिन्धु दैत्यका कुरा सुनेर सबैले राम्रो ! राम्रो ! भन्दै प्रशंसा गरे । दैत्यसेनाका नायकहरू हर्षित भएर ब्रह्माण्ड नै कपाउँदै गर्जन गर्न थाले।।२०।। तिनले भने- 'हे राजन् ! युद्ध गरेर हाम्रो चिलाइ शान्त भएको छैन तर देवताहरूसित युद्ध गरेपछि भने अवश्य शान्त हुनेछ । त्यस कारण हजुरले हाम्रो युद्ध गर्ने इच्छालाई पूर्ण तुल्याइदिनुहोस् ।' तिनीहरूको निवेदनअनुसार दैत्यराज सिन्धुको आज्ञा पाएर ती वीरहरूले देवराज इन्द्रको अमरावतीलाई चारैतिरबाट घेरे । जसरी ब्राह्मणहरू धनी यजमानका वरिपरि रहन्छन् त्यसैगरी

रुरुधुस्ते शक्रपुरीं ब्राह्मणा इव वित्तदम् ।
मध्यं विविशुरपरे लुण्ठन्तो रत्नसञ्चयान् ।।२२।।

कोलाहलो महानासीद् देवानां तत्र गर्जताम् ।
ततः सभामध्यगतो हरिर्दूतमुखात् ततः।।२३।।

शुश्राव दैत्याभिगमं वेष्टिताञ्च निजां पुरीम् ।
ऐरावतारूढो वज्रहस्तोऽमरान्वितः।।२४।।

आययौ तेन दैत्येन योद्धुकामः सुराधिपः।
केचिदूचुः सुरास्तत्र नाऽयं युद्धक्षमो हरे।।२५।।

विना रमापतिञ्चास्य न समो दृश्यते क्वचित् ।
यावद् वदत्सु तेष्वेवं तावद् दैत्यो महाबलः।।२६।।

शक्रं सुरगणैर्युक्तमविध्यच्छरवृष्टिभिः।
तावद् देवगणाः केचित्पलायनपरा ययुः।।२७।।

ततोऽधावन् महेन्द्रोऽसौ गर्जमानो रुषान्वितः।
घ्नन् दैत्यगणान् सर्वान् वज्रोद्यतकरोऽरिहा ।।२८।।

अहनद् दैत्यराजं तं मस्तके वज्रतो दृढम् ।
स मूर्च्छां महतीं प्रायान्मुहूर्तात् पुनरुत्थितः।।२९।।

उवाच च हरिं गच्छ स्वक्षयं न क्षयं व्रज।
मम मुष्टिप्रहारेण कालो मृत्युं गमिष्यति ।।३०।।

तव का गणना तेऽस्ति नाशृणोत् तद्धरिर्वचः।
संग्रामे महादैत्यस्ततो मुष्टिप्रहारतः।।३१।।

बिभेद गजकटं रुधिरौघप्रवर्षितम् ।
तत उद्धृत्य दैत्यस्तच्चतुर्दन्तानधारयत् ।।३२।।

अपातयद् गजपतिमाश्चर्यं हरिराययौ।
तदा च हरिं पादेऽपोथयद् यावदेव तम् ।।३३।।

तावत् सूक्ष्मेण वपुषा निर्गतो हस्तमध्यतः।
पलायन् दूरदेशं स मनसा प्रशशंस तम् ।।३४।।

दैत्यहरू पनि अमरावतीका वरिपरि घेरा हालेर बसेका थिए। केही दैत्य अमरावतीको बीच भागमा पुगे र कसैले रत्न एवं धातु लुट्न थाले ।।२१-२२।। दैत्यहरूको आक्रमणबाट आत्तिएका देवताहरूको ठूलो कोलाहल मच्चियो । देवसभाको माझमा रहेका इन्द्रले दूतका मुखबाट दैत्यको सेनाले अमरावतीलाई चारैतिरबाट घेरेको कुरा सुने । त्यसपछि इन्द्र ऐरावत हात्तीमा सवार भएर हातमा वज्र लिई देवसेनाका साथ सिन्धु दैत्यसँग युद्ध गर्न युद्धको मैदानमा आए । कुनै देवताले भने - 'हे इन्द्रमहाराज ! देवताहरू सिन्धु दैत्यसँग युद्ध गर्न समर्थ छैनन् ।।२३-२५।। तपाईँले युद्धको पहल नगर्नुहोस् । देवसेना पराजित हुनेछ । भगवान् नारायणविना दैत्यराज सिन्धुसँग युद्ध गर्न सक्ने बलवान् कुनै पनि देवता छैनन् ।' यसरी देवताहरूले भनिरहेकै समयमा महाबली दैत्य सिन्धुले देवताहरूसहित इन्द्रमाथि बाणप्रहार गरी तिनलाई घाइते बनायो। देवताहरू डराएर भाग्न थाले ।।२६-२७।। त्यसपछि रिसाएका र गर्जन गरिरहेका इन्द्र दैत्यराज सिन्धुमाथि प्रहार गर्न अगाडि बढे । ती आफ्नो वज्र प्रहार गरेर दैत्यहरूलाई मार्दै सिन्धुका समीपमा पुगे । त्यहाँ गएर तिनले सिन्धुको निधारमा वज्र प्रहार गरे । त्यो केही बेर मूर्च्छित भयो, त्यसपछि होशमा आएर तुरुन्तै उठ्यो ।।२८-२९।। त्यसले भन्यो - 'हे इन्द्र ! तिमी नारायणको शरणमा जाऊ, आफ्नो दरबारमा नजाऊ, किनकि अब तिम्रो राजधानी तिम्रो हातमा रहेको छैन । मेरो मुड्कीको प्रहारबाट कालले पनि मृत्यु प्राप्त गर्नेछ ।।३०।। तिम्रो त कुनै गणना छैन ।' सिन्धु दैत्यको यो अभिमानपूर्ण वचनलाई बेवास्ता गरी इन्द्रले युद्ध गरी नै रहे । इन्द्रको युद्धमा संलग्नता देखेर रिसाएको दैत्यराज सिन्धुले आफ्नो मुड्की प्रहार गरेर इन्द्रको वाहन ऐरावत हात्तीको गण्डस्थल भेदन गऱ्यो ।। त्यसपछि त्यस दैत्यले उफ्रिएर ऐरावतका चारवटै दाँत धुती शस्त्रप्रहार गरेर त्यसलाई भुइँमा लडायो । दैत्यराज सिन्धुको यो पराक्रम देखेर इन्द्र अत्यन्त चकित भए । त्यसपछि दैत्य सिन्धुले इन्द्रलाई समातेर भुइँमा पछाऱ्यो ।।३१-३३।। त्यस बेला इन्द्रले पनि आफ्नो शक्ति प्रयोग गरेर आफ्नो आकार सानो बनाई सिन्धु दैत्यको हातबाट फुत्केर ज्यान जोगाए । भागेर टाढा पुगी मनमनै ती सिन्धुका

नैतादृशं बलं दृष्टमतिष्ठञ्चेन्मृतोऽभवम् ।
ततोऽमरगणैः सार्द्धं शरणं तं हरिं हरिः ।।३५।।

जगाम वपुषाऽन्येन विसृज्यैरावतं गजम् ।
सिन्धुदैत्यस्तु सेन्द्रेषु देवेषु विद्रुतेषु च ।।३६।।

इन्द्रासनसमारूढो दैत्यवृन्देन वेष्टितः ।
ददौ पदानि देवानां दैत्येभ्यः सकलानि सः ।।३७।।

ततः शुम्भादयो दैत्याः स्थितास्तेषु निराकुलाः ।
नमस्यन्तोऽसुरपतिं प्रशंसन्तो बलाधिकम् ।।३८।।

नानावादित्रनिर्घोषैर्नादयन्तस्त्रिविष्टपम् ।।३९।।

पराक्रमको प्रशंसा गर्न लागे ।।३४।। तिनले भने - 'मैले यस्तो बल कसैको पनि देखेको थिइनँ । म यदि त्यहीं रहन्थे भने मेरो अवश्य मृत्यु हुने थियो ।' त्यसपछि देवराज इन्द्र देवताहरूलाई साथ लिएर वैकुण्ठका स्वामी नारायणको शरणमा गए ।।३५।। इन्द्र आदि देवताहरू भागेर गएपछि सिन्धु दैत्यले पनि अमरावतीको इन्द्रासनमा आरोहण गऱ्यो । चारैतिर दैत्यसेनाका वीरहरूले पहरा दिएर त्यसको रक्षा गरे । देवताहरूले स्वर्गको राज्य चलाउन जुन जुन पदमा अधिकार गरेका थिए ती ती पदमा दैत्यवीरहरूलाई नियुक्त गरियो ।।३६-३७।। त्यसपछि सिन्धुसेनाका शुम्भ आदि वीरहरू अधिकार पाएर निर्भय भई स्वर्गराज्यको सञ्चालनमा सहयोग गर्न थाले । देवताका स्वामी सिन्धु दैत्यको जय होस् भन्दै प्रशंसा गरिरहेका ती दैत्यवीरहरूले अनेक थरि विजयका बाजा बजाएर स्वर्गलाई नै शब्दायमान तुल्याए ।।३८-३९।।

ॐ

**इति श्रीगणेशपुराणे क्रीडाखण्डे सुरपराजयो नाम पञ्चसप्ततितमोऽध्यायः**

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'सिन्धुद्वारा देवताहरूको पराजय' शीर्षकान्वित पचहत्तरौं अध्याय पूर्ण भयो ।।७५।।

ॐ

## षट्सप्ततितमोऽध्यायः { ७६ अध्याय }

क उवाच

वैकुण्ठे सुखमासीनमागतोऽमरसंयुतः ।
इन्द्रस्तं नमस्कृत्य निजगाद प्रयोजनम् ।।१।।

इन्द्र उवाच

किं न जानासि गोविन्द ! सिन्धुदैत्यकृतामिमाम् ।
आपदं नोऽमगवत्यां दुष्टैराक्रमणं कृतम् ।।२।।

तेन सार्द्धं कृतं युद्धं यथाशक्ति सुरैः सह ।
न स जेतुं क्षमो दैत्योऽतस्त्वां शरणमन्वियाम् ।।३।।

न त्वां विना गतिर्नोऽस्ति सर्वदा त्वं गतिर्हि नः ।
निहत्यैनं नो देहि स्थानानि जगदीश्वर ।।४।।

क उवाच

श्रुत्वा इन्द्रवचो विष्णुश्चिन्ताश्चर्यसमन्वितः ।
उवाच न न भीः कार्या प्रविजेष्येऽसुरं क्षणात् ।।५।।

इत्युक्त्वा हृषीकेशो रुरोह निजवाहनम् ।
तद्ध्वनेन च तदा चकम्पे भुवनत्रयम् ।।६।।

पतिता अवनौ वृक्षाः पक्षिवृन्दसमन्विताः ।
किरीटकुण्डलधगे वनमालाविभूषितः ।।७।।

कौस्तुभार्चिर्लसद्वक्षाः कस्तूरीतिलकोज्ज्वलः ।
शङ्खचक्रगदापद्महस्तो यातोऽमरावतीम् ।।८।।

**ब्रह्माजीले भन्नुभयो** - देवतालाई साथमा लिएर वैकुण्ठमा गएका इन्द्रले आफ्नो आसनमा सुखपूर्वक विराजमान हुनुभएका नारायणलाई प्रणाम गरेर आफ्नो आगमनको उद्देश्य बताए ।।१।।

**इन्द्रले भन्नुभयो** - 'हे भगवन् नारायण ! हजुरलाई थाहा छ कि छैन ? सिन्धु दैत्यले हाम्रो दुर्दशा गरायो । हामी आपत्तिमा परेका छौं । देवताहरूको राजधानी अमरावतीमा दैत्यहरूले आक्रमण गरे ।।२।। मैले देवसेनालाई साथमा लिएर दैत्यराज सिन्धुका साथ युद्ध गरें, तर बल र पराक्रमबाट त्यसलाई जित्न सकिनँ । अहिले म हजुरको शरणमा आएको छु ।।३।। हे नारायण ! हजुरविना हामी देवताको कुनै अर्को गति र उपाय छैन । जहिले पनि हामीलाई आपत्ति पर्दा उद्धार गर्ने हजुरमात्र हुनुहुन्छ । हजुरले सिन्धुलाई समाप्त पारी हाम्रा गुमेका पद दिलाउनुहोस् ।।४।।'

**ब्रह्माजीले भन्नुभयो** - इन्द्रका कुरा सुनेर भगवान् नारायण एकछिन चिन्ता र आश्चर्यले युक्त हुनुभयो । केही बेर सोचेर भन्नुभयो - 'हे इन्द्र ! तिमीले कुनै डर नमान, मैले केही समयमा शत्रुलाई परास्त गर्नेछु' ।।५।। इन्द्रलाई आश्वस्त बनाएर नारायण आफ्नो वाहन गरुडमा सवार हुनुभयो । भगवान् गरुडमा सवार भई आकाशमार्गमा उड्न लाग्दा पैदा भएको शब्दले स्वर्ग, मर्त्य र पाताल कम्पायमान भएका थिए ।।६।। रूखहरूका साथै आकाशमा उडिरहेका चराहरू पनि भुइँमा खसेका थिए । भगवान् नारायणले किरीट र कुण्डल धारण गर्नुभएको थियो ।।७।। उहाँको छातीमा वनमाला सुहाएको थियो । कौस्तुभ मणिको किरणबाट उहाँको हृदयप्रदेश प्रकाशमान थियो । उहाँको निधारमा कस्तूरीको टीका चम्किरहेको थियो । उहाँले हातमा शङ्ख, चक्र, गदा र पद्म धारण गर्नुभएको थियो। यसरी आफ्नो सुन्दर र महिमामय स्वरूपका साथ भगवान् नारायण अमरावती पुग्नुभयो ।।८।।

ज्ञात्वा देवगणान् प्राप्तान् गरुडासनसंयुतान् ।
युद्धायाजग्मुरसुरा नानाशस्त्रधरास्तदा ।।९।।
धनुश्चक्रधरो दैत्यः सतूणो हयसङ्गतः ।
सिन्धुरप्यागतो रोषाद् योद्धुकामो महाबलः ।।१०।।
ततः कुबेरो वरुणो वायुरग्निः पुरन्दरः ।
सोमो मित्रश्च भौमश्च नासत्यौ मदनोऽपि च ।।११।।
ततोऽभवद् द्वन्द्वयुद्धं सिन्धुदैत्ये पुरः स्थिते ।
प्रचण्डो वरुणेनाजौ कमलेन च यक्षराट् ।।१२।।
वृत्रेण शतयज्वा च निशुम्भः पवनेन च ।
शुम्भोऽपि युयुधे तत्र विष्णुना प्रभविष्णुना ।।१३।।
वह्निश्चण्डेन मुण्डेन सोमश्च युयुधे भृशम् ।
कदम्बेन च भौमश्च मदनेन च शम्बरः ।।१४।।
नासत्यौ कालदैत्येन सर्व एव च सैनिकाः ।
शस्त्रैरस्त्रैः प्रजघ्नुस्ते मर्मस्थानानि चासकृत् ।।१५।।
केचिद् युयुधिरे मल्ललीलया युद्धदुर्मदाः ।
परस्परं शस्त्रघातैः केचित् तत्र प्रपेदिरे ।।१६।।
मृता मुमूर्षवः केचिद् व्यङ्गाश्चैव ववल्गिरे ।
जयं पराजयं ते न प्रापुः क्वाचित्कमेव च ।।१७।।
ततो वृत्रासुरः शक्रमहनन् मुष्टिघाततः ।
मस्तकं मस्तकेनैव निजघ्नतुरथौजसा ।।१८।।
एवं हस्तेन हस्तञ्च पादं पादेन जघ्नतुः ।
वक्षःस्थलेन वक्षश्च ततो वज्रेण सोऽहनत् ।।१९।।
जघान वृत्रः शक्रं तं सोऽपतन्मूर्च्छितो भुवि ।
यावत् पलायति पुरो वमन् रक्तं मुखाद् बहु ।।२०।।
ततः पपात भूपृष्ठे हतो मूर्च्छां गतो भृशम् ।
पुनः संज्ञामवाप्यैव वज्रकल्पेन मुष्टिना ।।२१।।
जघान वृत्रः शक्रन्तं सोऽपतन्मूर्च्छितो भुवि ।
यावत् पलायति सुरो वमन् रक्तं मुखाद् बहु ।।
तावद् दैत्या योद्धुकामाः समीयुः सर्वतोदिशम् ।
दृष्ट्वा पराक्रमं तेषां मघवाऽन्तर्दधे तदा ।।२२।।

देवताहरूलाई अमरावतीमा आएको देखेर अनेक शस्त्र-अस्त्रले सुसज्जित दैत्यवीरहरू पनि युद्ध गर्न नारायण भएको ठाउँमा आए ।।९।। दैत्यवीरको आगमनपछि हातमा धनु र चक्र धारण गर्ने, काँधमा ठोक्रो भिरेको दैत्यराज सिन्धु पनि रिसाउँदै भगवान्सँग युद्ध गर्ने इच्छा गरी घोडामा सवार भई आयो ।।१०।। त्यसपछि देवता पक्षका वीरहरू क्रमशः कुबेर, वरुण, वायु, अग्नि, इन्द्र, चन्द्रमा, मित्र, मङ्गल, अश्विनीकुमार र कामदेव पनि त्यहाँ जम्मा भए।।११।। दैत्यराज सिन्धुका सामु दैत्यवीर र देववीरहरूको मल्लयुद्ध आरम्भ भयो । प्रचण्डनामक दैत्य वरुणका साथ, कमलासुर कुबेरका साथ, वृत्रासुर इन्द्रका साथ, निशुम्भ वायुका साथ, शुम्भ भगवान् नारायणका साथ, अग्नि चण्डका साथ, मुण्ड चन्द्रमाका साथ, कदम्ब मङ्गलका साथ, शम्बर कामदेवका साथ र कालदैत्य अश्विनीकुमारका साथ युद्ध गरिरहेका थिए । ती वीरहरूले आ-आफ्ना शस्त्र र अस्त्रद्वारा आफ्ना शत्रुका मर्मस्थलमा बारबार प्रहार गरिरहेका थिए ।।१२-१५।। केही वीरहरू युद्धको उन्मादले उन्मत्त भएर मल्लयुद्ध गरिरहेका थिए । केही परस्परमा शस्त्रप्रहार गर्दै युद्ध गरिरहेका थिए । दुबै पक्षका केही वीर मरे, केही वीर मर्ने इच्छाले रणस्थलमा लत्रिए, केही विकलाङ्ग बने, केही घाइते भएर चिच्याउन थाले भने केही वीरहरू रिसाएर बकवाद गर्न थाले । दुबै पक्षका वीरहरूमध्ये कसैले पनि न जित्न सके न त हारे । यसरी युद्ध चलिरह्यो ।।१६-१७।। त्यसपछि वृत्रासुरनामक दैत्यले आफ्नो मुड्कीले इन्द्रमाथि प्रहार गऱ्यो । ती दुबै वीरहरू ओजपूर्वक टाउकाले टाउकामा, हातले हातमा, खुट्टाले खुट्टामा र छातीले छातीमा प्रहार गर्दै युद्ध गरिरहे । केही समयपछि रिसाएका इन्द्रले वृत्रासुरमाथि वज्रद्वारा प्रहार गरे ।।१८-१९।। वृत्रासुरले पनि इन्द्रमाथि वज्रले प्रहार गऱ्यो र इन्द्र केही बेर मूर्च्छित भए। होशमा आएपछि भाग्न खोजिरहेका र मुखबाट रगतको धारा बगाइरहेका इन्द्रलाई चारै दिशाबाट युद्ध गर्ने इच्छाले आएका दैत्यवीरहरूले घेरे। दैत्यहरूको पराक्रम देखेर इन्द्र अन्तर्धान भए। यसैगरी देवतापक्षका मल्लयुद्धमा संलग्न

एवं ये ये द्वन्द्वयुद्धं कुर्वन्तो देवतागणाः ।
ते सर्वे भग्नदर्पास्तु पलायनमकुर्वत ।।२३।।

एवं देवेषु भग्नेषु गरुडं प्राहिणोद्धरिः ।
चक्रदीप्त्या स्वदीप्त्या च भासयन् विदिशो दिशः।।२४।।

अहनच्चक्रधाराभिर्दैत्यश्रेणीरनेकशः ।
केचिद् भग्नानना दैत्याः केचिद् भग्नशिरोधराः ।।२५।।

केचिच्च शतधा जाताः शीर्णजानूरुबाहवः ।
केचिच्च शरणं याता न ममार जनार्दनः ।।२६।।

सर्वे महाबला दैत्या मुक्तिं हरिहता गताः ।
मेदोमांसवहा नद्यः सद्यस्तत्र प्रवर्तिताः ।।२७।।

ततः शङ्खनिनादेन हरिः सर्वं व्यनादयत् ।
एवं जयति गोविन्दे सर्वे शुम्भादयोऽसुराः ।।२८।।

तमेव योद्धुमायाता द्वन्द्वयुद्धं विहाय तत् ।
विराड्रूपेण भगवान् धृत्वा ताँश्चतुरोऽसुरान् ।।२९।।

भिन्दीपालेन पाषाणं यथा क्षिपति मानवः ।
तथा चण्डञ्च मुण्डञ्च निशुम्भं शुम्भमेव च ।।३०।।

भ्रामयित्वाऽक्षिपद् दूरे मध्ये कृत्वा सरिद्वराम् ।
ते मूर्च्छां परिभूयैव पुनश्च वाहिनीं गताः ।।३१।।

हृदि प्रचण्डं पृष्ठे तु वृत्रं मुष्टिप्रहारतः ।
जघान हरिरव्यग्रः कालं कमलमेव च ।।३२।।

भौमासुरञ्च शिरसि कदम्बञ्चक्रघाततः ।
कोलासुरञ्च गदया विव्याध हृदि माधवः ।।३३।।

ततः सिन्धुरगात्तूर्णं कृतकोलाहलारवः ।
दिगन्तान् नादयन् प्रोचे बलं ते दर्शितं हरे ।।३४।।

वीरहरू पनि दैत्यवीर-हरूको प्रहारबाट घाइते र भग्नदर्प भई भाग्न विवश भए ।।२०-२३।। देवसेनाले पलायन गरेपछि आफ्ना चक्रको कान्तिबाट सबै दिशा र विदिशाहरूलाई प्रकाशित गरिरहनु भएका नारायणले गरुडलाई युद्धभूमितर्फ जान अभिप्रेरित गर्नुभयो ।।२४।। युद्धभूमिमा जानुभएका नारायणले आफ्नो चक्र घुमाएर असंख्य दैत्यहरूलाई मार्नुभयो। कुनै दैत्यका मुखमा घाउ लागेको थियो, कसैको घाँटी काटिएको थियो, कसैका तिघ्रा चुँडिएका थिए र हात टुक्रिएका थिए भने कसैका शरीर सय टुक्रा भएर भुइँमा फैलिएका थिए । केही दैत्य डराएर भगवान् नारायणको शरणमा आए । ती शरणार्थीहरूलाई भगवान् नारायणले मार्नुभएन ।।२५-२६।। युद्धभूमिमा भगवान् नारायणको हातबाट वीरगति प्राप्त गर्ने महाबली दैत्यहरूले मुक्ति प्राप्त गरे । रगत, बोसो र चर्बीबाट बनेका अनेक नदीहरू त्यहाँ बग्न थाले ।।२७।। विजयको उपलक्ष्यमा नारायणले शङ्खघोष गर्नुहुँदा संसार नै नादमय बन्न पुग्यो । यसरी भगवान् नारायणले विजय प्राप्त गरेपछि शुम्भ आदि असुरहरू युद्ध छाडी भगवान्सँग मल्लयुद्ध गर्न भनी अगाडि सरे । त्यस बेला भगवान्ले विराट् रूप धारण गर्नुभयो र शुम्भ आदि असुरलाई समात्नुभयो । मानिसले हथौडाले प्रहार गरेर ढुंगालाई चूर्णचूर्ण बनाएझैं नारायणले पनि चण्ड, मुण्ड, शुम्भ र निशुम्भलाई समाती आकाशमा धेरै बेरसम्म रिंगाएर टाढा नदी पारि फ्याँकि-दिनुभयो । भुइँमा पछारिएका ती दैत्यवीरहरू मूर्च्छित भए । मूर्च्छाबाट जागेपछि फेरि लड्न आए ।।२८-३१।। निश्चिन्त र शान्त हुनुभएका भगवान् नारायणले प्रचण्डको मुटुमा र वृत्रासुरको पिठ्यूँमा मुड्की प्रहार गरेर तिनलाई मार्नुभयो । कालासुर, कमलासुर र भौमासुरका शिरमा प्रहार गरेर मार्नुभएपछि नारायणले कदम्बासुरलाई चक्रको प्रहार गरेर मार्नुभयो । त्यसपछि उहाँले गदाप्रहार गरेर कोलासुरलाई मार्नुभयो । ती सबै वीरहरूको वध भएपछि रिसाएको दैत्यराज सिन्धु गर्जनद्वारा दिशा र विदिशालाई थर्कमान तुल्याउँदै नारायणलाई सम्बोधन गरी भन्न थाल्यो – 'हे नारायण! तिम्रो पराक्रम देखायौ ।।३२-३४।।

**ममापि पौरुषं पश्य न च गन्तुं त्वमर्हसि ।**
**न मे दृष्टिगतो जीवन् रिपुर्याति कदाचन ।।३५।।**

**भूतभव्यभविष्यज्ञ ! किं पूर्वं न विचारितम् ।**
**यस्य शब्देन च भृशं कम्पते भुवनत्रयम् ।।३६।।**

**तत्पुरः कथमायातः खद्योत इव भूषणम् ।**
**ततोऽमरगणाः प्रोचुर्वल्गन्तं सिन्धुदैत्यपम् ।।३७।।**

**शूरा न हि प्रजल्पन्ति दर्शयन्त्येव पौरुषम् ।**
**अस्माकं न हरेराज्ञा नो चेत् त्वं शतधा भवेः ।।३८।।**

अब तिमीले पनि मेरो पराक्रम हेर्नुपर्छ। तिमी यहाँबाट भाग्न पाउँदैनौ । मेरा आँखासामु परेको शत्रु भागेर कहीं पनि जान सक्दैन ।।३५।। हे नारायण ! तिमीले त भूत, वर्तमान र भविष्यत्कालको ज्ञाता म हुँ भन्दछौ। तिमीले पहिले विचार गरेनौ ? जसको शब्दको उच्चारणबाट स्वर्ग, मर्त्य र पाताल काँप्दछन् त्यस्तो वीरशिरोमणि म दैत्यराज सिन्धुका सामु तिमी जूनकिरी सूर्यमा ठोकिएझैं ठोकिन आएका छौ ।' त्यसपछि देवताहरूले आफ्नो बखान गरिरहने सिन्धुलाई भने- 'हे दैत्यराज सिन्धु ! वीरहरू गफ गर्दैनन् र बकवाद गर्दैनन् तर तिनीहरूले पुरुषार्थ देखाउँछन् । अब तिमीले पुरुषार्थ देखाउने बेला आएको छ। अहिले नारायणले हामीलाई तिम्रो वध गर्न आज्ञा दिनुभएको छैन अन्यथा तिमी सय टुक्रा भएर भुइँमा लडेका हुने थियौ ।।३६-३८।।'

ॐ

**इति श्रीगणेशपुराणे क्रीडाखण्डे देवदानवयुद्धवर्णनं नाम षट्सप्ततितमोऽध्यायः**

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'देवता र दैत्यहरूको युद्धवर्णन' शीर्षकान्वित छहत्तरौं अध्याय पूर्ण भयो ।।७६।।

ॐ

# सप्तसप्तितितमोऽध्यायः { ७७ अध्याय }

क उवाच

इति तद्वचनं श्रुत्वा क्रोधाद् वह्निकणान् वमन् ।
यथा सिंहो गजानीकं याति तद्वद् ययौ सुरान् ।।१।।

सिन्धुर्मुष्टिप्रहारेण जघान बलसूदनम् ।
पपात स धरापृष्ठे वाताहत इव द्रुमः ।।२।।

भालदेशे कुबेरञ्च हनौ च वरुणं यमम् ।
पृष्ठदेशे जघानासौ चक्राघातेन दैत्यराट् ।।३।।

तालुदेशे पावकञ्च मन्मथं लत्तयाऽहनत् ।
अनिलं पादघातेन शनैश्चरमपोथयत् ।।४।।

सोमं भौमं भ्रामयित्वा तत्याज भूतले बलात् ।
पृष्ठभागेऽहनच्चैव सनकञ्च सनन्दनम् ।।५।।

नासत्यौ नारदश्चापि कुत्रापि च पलायिताः ।
ततः पलायिताः सर्वे दृष्ट्वा वीर्यं सुरास्तदा ।।६।।

पतिता मूर्च्छिताः केचिद् दैत्यश्चक्रेण माधवम् ।
मुष्टिदेशे जघानासौ चक्रं तस्याऽपतद् भुवि ।।७।।

माधवो गदया मूर्ध्नि दैत्येशं तमताडयत् ।
वञ्चयित्वा च शतधा गदां स्वाञ्च व्यचिक्षिपत् ।।८।।

ज्ञात्वा पराक्रमं तस्य प्रोचे तं मधुसूदनः ।
वरयस्व वरं दैत्य! यत् ते मनसि वर्तते ।।९।।

नैतादृशो मयाऽदर्शि पुरुषार्थोऽसुरे क्वचित् ।
ततोऽब्रवीद् दैत्यपतिः परमाह्लादसंयुतः ।।१०।।

यदि तुष्टोऽसि देवेश ! यदि देयो वरो मम ।
गण्डकीनगरे मे त्वं परिवारयुतो हरे ।।११।।

सर्वकालं वस विभो ! नान्यं याचे वरं परम् ।
तत ऊचे महाविष्णुः स्थास्यामि नगरे तव ।।१२।।

**ब्रह्माजीले भन्नुभयो** – देवताहरूका कुरा सुनेर रीसले मुखबाट आगाका फिलिङ्गाहरू निकाल्दै सिन्धु दैत्यले हात्तीको झुण्डमा सिंहले आक्रमण गरेझैं देवताहरूमाथि आक्रमण गऱ्यो ।।१।। त्यसले बलसूदन नामक देवतालाई मुड्कीले प्रहार गऱ्यो। ती देवता हावाले लडाएको रूखझैं भुइँमा लडे । त्यसले कुबेरको निधारमा, वरुणको च्यापुमा र यमराजको पिठ्यूँमा चक्रले प्रहार गऱ्यो। त्यसैगरी त्यसले अग्निको तालुमा हिर्काउँदै कामदेवलाई लात्तीले प्रहार गऱ्यो । वायुलाई खुट्टाले प्रहार गरी शनिश्चरलाई धर्तीमा पछाऱ्यो ।।२-४।। चन्द्रमा र मङ्गललाई पनि आकाशमा फनफनी रिगाउँदै भुइँमा पछाऱ्यो। त्यसैगरी सनक र सनन्दनलाई पिठ्यूँमा हान्यो ।।५।। यसरी त्यसले प्रहार गरिरहेको दृश्य देखेर अश्विनीकुमार र नारद ऋषि युद्धको मैदानबाट भागे । तिनीहरू भागेको देखेर अरू देवताहरू पनि सिन्धु दैत्यको पराक्रमबाट डराई भाग्न थाले।।६।। केही देवताहरू भुइँमा लडे र केही बेहोश भए । त्यसपछि सिन्धुले नारायणमाथि चक्रले प्रहार गऱ्यो । तर त्यो चक्र नारायणको शरीरमा नपुग्दै भुइँमा खस्यो ।।७।। नारायणले पनि गदा फनफनी घुमाएर त्यसलाई भ्रान्तिमा पार्दै टाउकामा प्रहार गर्नुभयो। त्यसपछि त्यसले पनि गदाको प्रहारबाट आफूलाई चतुरतापूर्वक जोगाई आफ्नो गदाले नारायणमाथि प्रहार गऱ्यो ।।८।। दैत्यराज सिन्धुको पराक्रम थाहा पाएर भगवान् नारायणले भन्नुभयो - 'हे दैत्यराज ! तिम्रो मनमा के इच्छा छ भन ? म तिमीलाई वरदान दिन्छु ।।९।। तिमीजस्तो पुरुषार्थी दैत्य मैले अहिलेसम्म कहीं पनि देखेको छैन।' त्यसपछि अत्यन्त आनन्दित भएको दैत्यराज सिन्धुले भन्यो- 'हे नारायण! यदि तपाईं ममाथि प्रसन्न हुनुहुन्छ र मलाई वरदान दिनुहुन्छ भने तपाईं मेरो गण्डकीनगरीमा स-परिवार सधैं बस्नुहोस् ।'।।१०-११।। हे प्रभु ! योभन्दा अरू वरदान मलाई चाहिएको छैन। त्यसपछि नारायणले भन्नुभयो- 'तिमीलाई वचन दिइसकेको छु म बोलेको व्यर्थ हुँदैन । म गण्डकी नगरीमा स-परिवार रहनेछु ।।१२।।

दत्तो वरो यतो नूनं ततोऽस्मि वशगस्तव ।
ततः स सत्यलोके च कैलासे वैष्णवे पदे ।।१३।।

आस्थापयद् दैत्यपतीन् स्वयं शाक्रे पदेऽवसत् ।
तत्राप्यन्यं स्थापयित्वा रमापतियुतः स्वयम् ।।१४।।

वाद्यदुन्दुभिनिर्घोषैः स्वपुरीं गण्डकीं ययौ ।
नुवन्ति बन्दिनस्तं तु नेदृशोऽभूत् पुमान् क्वचित् ।।१५।।

येन विष्णुर्गृहं स्वीयं जित्वाऽनायि सुरान् बहून् ।
ददृशुर्नागरास्तस्य समीपे वरुणं हरिम् ।।१६।।

कुबेरं देवमुख्याँश्च ततः स्वभवनं ययुः ।
ततः प्रोचे हरिं दैत्यो गण्डकीनगरे सुखम् ।।१७।।

विहरस्वामरैः सार्द्धं ततः सोऽपि तथाऽकरोत् ।
परितो दूरतो दैत्यो दैत्यानन्यान् न्यवेशयत् ।।१८।।

ततो देवा हरिं प्रोचुः किं कृतं गरुडध्वज ! ।
त्यक्त्वा स्वविक्रमं किं त्वं स्थितोऽस्यानन्दनिर्भरः ।।१९।।

कथं कारागृहे प्राप्ता मृत्युलोकं गताः कथम् ।
कथमन्तो भवेदस्य भोगस्य जगदीश्वर ।।२०।।

तत ऊचे हरिः सर्वान् कालो हि दुरतिक्रमः ।
कालेन जायते सर्वं ह्रसते वर्धतेऽपि वा ।।२१।।

तस्मात् कालं प्रतीक्षध्वं काल एनं प्रसिष्यति ।
एवं जित्वा त्रिलोकीं स महाबलपराक्रमः ।।२२।।

ततो दैत्यो जगौ सर्वं वृत्तान्तं पितरौ मुदा ।
आशिषं ददतुस्तौ च ज्ञात्वा पौरुषमस्य ह ।।२३।।

वरदान दिएका कारण तिम्रो वशीभूत भएको छु ।' त्यसपछि दैत्यराज सिन्धुले ब्रह्माजीको धाम सत्यलोक, शिवजीको धाम कैलास र विष्णुको धाम वैकुण्ठमा आफ्ना दैत्यनायकहरूलाई नियुक्त गऱ्यो र आफू इन्द्रको सिंहासनमा बसेर शासन गर्न थाल्यो। केही दिनपछि इन्द्रको सिंहासनमा प्रतिनिधिको रूपमा कुनै दैत्यवीरलाई राखेर आफू विष्णुका साथ बाजागाजा बजाउँदै आफ्नो राजधानी गण्डकी नगरीमा गयो । दैत्यराज सिन्धु गण्डकी नगरमा पुग्दा स्तुतिपाठ गर्ने बन्दीहरूले स्तुति गरिरहेका थिए । तिनीहरूले भने– 'दैत्यराजाहरू त धेरै भए तर विष्णुलाई आदर गरेर गण्डकीनगरीमा ल्याई स्वागत गर्ने त दैत्यराज सिन्धुमात्र हुन् ।।१३-१५।। यिनले विष्णुलाई घरमा ल्याए र अरू देवताहरूमाथि पनि अधिकार कायम गरे। यी साह्रै ठूला पराक्रमी दैत्यराज हुन् ।' त्यसपछि नगरवासीहरूले पनि सिन्धु दैत्यका वरिपरि वरुण, इन्द्र, कुबेर आदि देवताहरूलाई देखे। त्यसपछि ती नगरवासी नर-नारीहरू आ-आफ्ना घरतर्फ गए। दैत्यराज सिन्धुले भगवान् नारायणलाई भन्यो – 'हे नारायण ! तपाईं आनन्दपूर्वक आफ्ना देवताहरूका साथमा यो गण्डकी नगरीमा रही विहार गर्नुहोस्।' त्यसले भनेको वचन सुनेर भगवान् नारायणले पनि त्यसै गर्नुभयो। भगवान् नारायण र देवताहरूको सुरक्षाका लागि अनेक दैत्यवीरहरू खटाइएका थिए।।१६-१८।। एक दिन देवताहरूले नारायणसँग निवेदन गरे – 'हे नारायण हजुर! आफ्नो पराक्रम बिर्सेर दैत्यराजले जे भन्यो त्यो स्वीकार गरी यहाँ आएर त्यसको वशवर्ती भई आनन्दपूर्वक बस्नुभएको छ। यो के गर्नुभयो ? हाम्रा देवताहरू कसरी कारागारमा थुनिए र कसरी मृत्युलोकमा पुगे ? यस्ता पापी दानवको अन्त्य कसरी गर्ने हो ?' ।।१९-२०।। देवताहरूका यी कुरा सुनेर नारायणले भन्नुभयो – 'हे देवता हो ! काललाई कसैले जित्न सक्दैन। कालकै कारण सम्पूर्ण पदार्थ पैदा हुन्छन्, घट्छन् र बढ्छन् पनि।।२१।। तपाईंहरूले उचित कालको प्रतीक्षा गर्नुहोस्। एक दिन स्वयं कालले यसलाई मुखको गास बनाउनेछ।' यता दैत्यराज सिन्धुले त्रिलोकीलाई आफ्नो वशमा पारी आफ्ना माता-पिताका सामु गएर युद्धको सम्पूर्ण वृत्तान्त बतायो। त्यसका माता-पिताले आफ्ना छोराको विचित्र पुरुषार्थ देखेर प्रसन्न भई अनेक थरि आशीर्वाद दिए ।।२२-२३।। त्यसपछि

ततो दैत्यो दुष्टमतिर्भूतले समघोषयत् ।
देवद्विजगवामर्चा क्रियते येन केनचित् ।।२४।।

स हन्तव्योऽथवा साधुरानेयो मम सन्निधौ ।
प्रतिमा यत्र यत्र स्यात् तां भङ्क्त्वा निक्षिपेज्जले ।।२५।।

ममैव प्रतिमां कृत्वा पूजयन्तु गृहे गृहे ।
प्राबोधयन् सिन्धुवचो दूता एवं स्थले स्थले ।।२६।।

भङ्क्त्वा प्रासादमूर्तींश्च तोयेऽगाधे च चिक्षिपुः ।
सिन्धोश्च प्रतिमां कृत्वाऽस्थापयन् परमादरात् ।।२७।।

पूजार्थं राक्षसाश्चापि ततो याता निजं पतिम् ।
ऊचुर्वैनायकहरहरिभानुरमादिकाः ।।२८।।

प्रतिमाः प्रविभज्याशु क्षिप्ताः सर्वा महाजले ।
तवैव प्रतिमास्तत्र स्थापिता राक्षसा अपि ।।२९।।

पूजार्थं स्थापिताः स्वामिन् ! आगताश्च तवान्तिकम्
एवं धर्मस्य सर्वस्य विच्छित्तिः समजायत ।।३०।।

यज्ञदानस्वधास्वाहावषट्कारान् न चाकरोत् ।
देवद्विजगुरूणाञ्च पूजनं क्वापि नाऽभवत् ।।३१।।

मेरुं याता ऋषिगणाः केचिद् भ्रंशमुपागताः ।
एवं त्रैलोक्यप्रबला दैत्या जाताश्च राक्षसाः ।।३२।।

विलीना निधनं प्राप्ताः साधवो देवतागणाः ।
यथा देवगणा मोक्षं सिन्धोः प्राप्ताः शृणुष्व तत् ।।३३।।

अहङ्कारले मति बिग्रेको दुष्ट दैत्यले पृथिवीतलमा आई घोषणा गर्‍यो – 'हे मेरा सेवकहरू ! यदि कसैले देवता, ब्राह्मण र गाईको पूजा गर्छ भने तिमीहरूले त्यसको वध गर्नुपर्नेछ अथवा त्यसलाई जिउँदै मेरासामु ल्याउनु पर्नेछ । जहाँ–जहाँ देवताका मूर्ति छन् तिनलाई टुक्र्याएर जलमा फ्याँकिदिनुपर्छ र घरघरमा सबैले मेरो प्रतिमा बनाएर पूजा गर्नुपर्छ ।' दैत्यराज सिन्धुको यस घोषणालाई त्यसका दूतहरूले ठाउँ–ठाउँ र गाउँ–गाउँमा गएर प्रचार गरे ।।२४–२६।। राजाको आज्ञाअनुसार जनताले मन्दिरमा रहेका मूर्तिहरू फुटाएर गम्भीर जलाधारहरूमा लगी फ्याँकिदिए र दैत्यराज सिन्धुको प्रतिमा बनाई पूजा गरे । राक्षसहरूले पनि त्यसैगरी आफ्ना दैत्यराज सिन्धुको प्रत्यक्ष मूर्तिमा पूजा गरे । तिनीहरूले सिन्धु दैत्यलाई भने- 'हे महाराज ! हामीले गणेश, शिव, नारायण, सूर्य र लक्ष्मीका मूर्तिलाई टुक्र्याएर ठूलो जलराशिमा फ्याँकिदिएका छौं । जहाँ–जहाँ ती मूर्तिहरू थिए, त्यहाँ–त्यहाँ हजुरको प्रतिमा र राक्षसकुलका उत्तम पुरुषहरूको प्रतिमा पनि स्थापना गरिएको छ। सबैले ती राक्षसमूर्तिहरूको पूजा गर्नुपर्छ भन्ने कुरा पनि बताइएको छ। त्यो काम सम्पन्न गरेपछि हामीहरू हजुरको नजिकमा आएका छौं।' यसरी दैत्यराज सिन्धुको शासनकालमा सनातन धर्मको उच्छेद भयो ।।२७–३०।। कुनै पनि ठाउँमा यज्ञ, दान, स्वधाकार, स्वाहाकार र वषट्कारमा आधारित कर्म गरिएनन्। देवता, ब्राह्मण र आचार्यहरूको पूजा कहीं पनि भएन । धर्मको नाश देखेर खिन्न भएका केही ऋषिहरू सुमेरु पर्वततर्फ गए । केही चिन्तैचिन्ताले नष्ट भए । यसरी स्वर्ग, मर्त्य र पातालमा राक्षस र दैत्यहरूको ठूलो बिगबिगी भयो ।।३१–३२।। सज्जन र देवताहरूमध्ये कुनै लुके र कुनै मरे । जसरी देवताहरूले दैत्यराज सिन्धुबाट उन्मुक्ति प्राप्त गरे त्यस विषयमा म फेरि बताउनेछु।।३३।।

ॐ

**इति श्रीगणेशपुराणे क्रीडाखण्डे क्रीडाखण्डे सिन्धुदुःशासनवर्णनं नाम सप्तसप्ततितमोऽध्यायः**

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'सिन्धुद्वारा देवाहरूको पराजय, सिन्धुको कुशासन र देवताहरूको पलायन' शीर्षकान्वित सतहत्तरौं अध्याय पूर्ण भयो ।।७७।।

ॐ

# अष्टसप्ततितमोऽध्यायः { ७८ अध्याय }

क उवाच

सर्वे निगृहीता देवाः सिन्धुना प्रभविष्णुना ।
तस्यैव च वधोपायं चिन्तयामासुरुत्सुकाः ।।१।।

हरिरुवाच

सर्वेषां सम्मतं ज्ञात्वा कर्तव्यः कार्यनिश्चयः ।
तस्मात् सर्वे ब्रुवन्त्वद्य मतं यस्य यथा भवेत् ।।२।।

क उवाच

इति शक्रवचः श्रुत्वाऽब्रुवन् ब्रह्मादयः सुराः ।
ईश्वरः सर्वकर्ताऽस्ति स कल्याणं करिष्यति ।।३।।

स येन तुष्यते देवः स उपायो विधीयताम् ।
स एनं परिभूत्वैव पदानि नः प्रदास्यति ।।४।।

ततो वक्तृप्रधानोऽसौ बृहस्पतिरभाषत ।
स्वल्पया पूजया सद्यः प्रसन्नो जायते विभुः ।।५।।

चराचरगुरुः सद्यः सर्वैः प्रार्थ्योऽसुरान्तकः ।

देवा ऊचुः

को देवः प्रार्थनीयस्ते मतो वाचस्पते ! वद ।।६।।
तस्य तुष्टिं करिष्यामः स्वपदप्राप्तयेऽखिलाः ।

गुरुरुवाच

सृजति पाति यो विश्वं हन्ति रूपत्रयात्मकः ।।७।।

अवीजो बीजभूतश्च शेषवाचामगोचरः ।
नित्यो ब्रह्ममयो ज्योतिस्वरूपः शास्त्रगोचरः ।।८।।

अनादिमध्यनिधनो निर्गुणो यो निरामयः ।
वहुरूपैकरूपश्च यस्य नामाखिला जनाः ।।९।।

गृहीत्वा सर्वकार्येषु सिद्धिं यान्ति निजेप्सिताम् ।
सङ्कष्टं हरते भक्त्या पूजितः स विनायकः ।।१०।।

**ब्रह्माजीले भन्नुभयो** - बाँकी रहेका देवताहरूलाई प्रभावशाली र पराक्रमी दैत्यराज सिन्धुले समातेर कारागारमा राख्यो। केही देवताहरूले त्यसको वध कसरी गर्ने भन्ने विषयमा विचार-विमर्श गर्न थाले ।।१।।

**इन्द्रले भन्नुभयो** - सबैको सम्मति लिएर कर्तव्यको निश्चय गर्नुपर्छ । त्यस कारण तपाईंहरू सबैले सिन्धुको नाश कसरी गर्न सकिन्छ भन्ने विषयमा आ-आफ्ना विचार दिनुहोस् ।।२।।

**ब्रह्माजीले भन्नुभयो**- इन्द्रका यी कुरा सुनेर ब्रह्मा आदि देवताहरूले भने - ईश्वर सबै संसारका कारण हुन् र तिनले कल्याण गर्नेछन् । ईश्वर कसरी प्रसन्न हुनुहुन्छ, त्यो उपाय गर्नुहोस्। ईश्वरले सिन्धुलाई मारेपछि मात्र हामीलाई हाम्रा पद दिलाउनुहुनेछ।।३-४।। त्यसपछि प्रवक्ताहरूमा उत्तम बृहस्पतिले भने- 'ईश्वर सानो पूजाले मात्र तत्काल प्रसन्न हुनुहुन्छ ।।५।। उहाँ स्थावर-जङ्गम सबैका पिता हुनुहुन्छ । हामीले मिलेर असुरहरूका संहारक भगवान्को प्रार्थना गर्नुपर्दछ ।'

**देवताहरूले भने** - 'हे देवगुरु बृहस्पति ! तपाईं भन्नुहोस् हामीले मिलेर कुन ईश्वरको प्रार्थना गरौं ?।।६।। तपाईंले ईश्वर तोक्नु भएपछि हामी ती ईश्वरको सन्तुष्टिका लागि कर्म गर्नेछौं र आफ्नो पद प्राप्त गर्न पनि प्रयास गर्नेछौं ।'

**बृहस्पतिले भने** - 'जगत्को सृष्टि, पालन र संहार गर्नुहुने जुन ईश्वर ब्रह्मा, विष्णु र शिवजीका रूपमा रहनुहुन्छ, उहाँ निर्बीज र सबैका बीज पनि हुनुहुन्छ। शेषनागले पनि आफ्ना एक हजार मुखबाट ईश्वरको गुणगान गर्न सक्दैनन्। ती ईश्वर नित्य र ब्रह्मज्योतिका रूपमा हुनुहुन्छ। शास्त्रको अभ्यासबाट विद्वान्हरूले ईश्वरको स्वरूपबोध गर्दछन्। उहाँको आदि, अन्त्य र मध्य केही पनि छैन । ईश्वर निर्गुण हुनुहुन्छ र निरामय पनि । उहाँ एकरूप हुनुहुन्छ र अनेकरूप पनि। जुन ईश्वरको नाम लिएर सबै भक्त मानिसहरूले सम्पूर्ण कार्यहरूमा आफूले चाहेको सिद्धि प्राप्त गर्दछन्, ती ईश्वरले भक्तिपूर्वक आराधना गर्दा सबैका सङ्कट हरण गर्नुहुन्छ । उहाँको नाम विनायक अर्थात् श्रीगणेश हो'।।७-१०।। तपाईंहरू सबैले

आराधयन्तु सर्वे तं स वः सिद्धिं विधास्यति ।
माघस्य कृष्णपक्षोऽयं सम्प्रवृत्तोऽधुना सुराः ॥११॥

चतुर्थी भौमयुक्ताऽस्य प्रिया विघ्नहरस्य ह ।
स एव प्रकटीभूय दास्यते स्वपदानि वः ॥१२॥

सिन्धुं स सन्निहत्यैव नात्र कार्या विचारणा ।
यद् यत् कामयते यो यस्तत् तत् सर्वं प्रदास्यति ॥१३॥

देवा ऊचुः

सम्यगुक्तं गुरो ! वाक्यं येन तृप्ता वयं मुने ।
मज्जमानांवहात्रस्त्वं कर्णधारोऽसि साम्प्रतम् ॥१४॥

ब्रह्मोवाच

ततस्ते शक्रवरुणकुबेरमधुसूदनाः ।
गुरुभौमशशांकाश्च यमाग्न्यनिलकादयः ॥१५॥

पञ्चामृतं गन्धमाल्यं शमीदूर्वाश्च पल्लवान् ।
फलानि वन्यजातानि विविधानि च मृत्तिकाः ॥१६॥

अनेकैः समादाय गण्डकीं तां नदीं ययुः ।
मण्डपं विपुलं कृत्वा भङ्क्त्वा वृक्षाननेकशः ॥१७॥

लताभिः कदलीस्तम्भैः सुच्छायञ्च सुशीतलम् ।
स्नात्वा नित्यक्रियाः कृत्वा मूर्तीश्चक्रुः सुशोभनाः ॥१८॥

सिंहारूढा दशभुजा दशायुधविराजिताः ।
शुण्डादण्डाः करिकरा नानाभूषाविराजिताः ॥१९॥

सिद्धिबुद्धियुताः पार्श्वे किरीटकुण्डलोज्ज्वलाः ।
पीतवस्त्रपरीधानाः सर्पभूषाविराजिताः ।

तस्मिन् मण्डपमध्ये ताः स्थापयित्वा यथाविधि ।
पुपूजुः परया भक्त्या षोडशैरुपचारकैः ॥२०॥

पञ्चामृतैः शुद्धजलैर्वस्त्रगन्धादिदीपकैः ।
नैवेद्यैर्विविधैश्चैव फलैरारार्तिकैः शुभैः ॥२१॥

एवं सम्पूज्य ते मन्त्रं जेपुः सवितृतुष्टये ।
अस्तं याते सवितरि सन्ध्यां कृत्वाऽस्तुवन् विभुम् ॥२२॥

भगवान् श्रीगणेशको आराधना गर्नुहोस्, उहाँले सिद्धि प्रदान गर्नुहुनेछ । हे देवताहरू! अहिले माघको कृष्णपक्ष लागेको छ। मङ्गलवारका दिन चतुर्थी तिथि पर्‍यो भने त्यो चतुर्थी श्रीगणेशलाई अत्यन्त प्रिय हुन्छ। तपाईंहरूले आराधना गर्नुभयो भने उहाँले प्रकट भएर तपाईंहरूलाई आ-आफ्ना पद प्रदान गर्नुहुनेछ ॥११-१२॥ भगवान् श्रीगणेशले सिन्धु दैत्यको वध गरेर हाम्रो कल्याण गर्नुहुनेछ भन्ने विषयमा धेरै सोचविचार गर्नु नै पर्दैन। वास्तवमा जसले जुन-जुन कामना गर्दछ ती-ती कामनाका फल श्रीगणेशले प्रदान गर्नुहुनेछ' ॥१३॥

**देवताहरूले भने-** हे देवगुरु बृहस्पति ! हजुरले उत्तम कुरा गर्नुभयो । त्यो सुनेर हामी तृप्त भएका छौं । संसारसागरमा डुबिरहेका हामीहरूको उद्धार गर्न तपाईं कर्णधार हुनुहुन्छ॥१४॥

**ब्रह्माजीले भन्नुभयो -** त्यसपछि इन्द्र, वरुण, कुबेर, नारायण, बृहस्पति, मङ्गल, चन्द्रमा, सूर्य, यमराज, अग्नि, वायु, ब्रह्मा आदि देवताहरू पञ्चामृत, चन्दन, माला, शमीपत्र, दूबो, वनमा पैदा भएका अनेक फल, अनेक थरि चोखो माटो तयार गरी हातमा लिएर गण्डकी नदीमा गए । गण्डकीको तटमा अनेक रूख, लता र केराका स्तम्भद्वारा विशाल र सुन्दर मन्दिर तयार गरे । स्नान गरी नित्यक्रिया सम्पन्न गरेर तिनहरूले श्रीगणेशका अनेक प्रतिमाहरूको निर्माण गरे। सिंहारूढ, दशहाते, अनेक थरि अस्त्र हातमा लिनुहुने, सूँढले सुहाएका, अलङ्कारहरूद्वारा अलङ्कृत, समीपमा रहेका सिद्धि र बुद्धिद्वारा शोभायमान, किरीट र कुण्डलले उज्ज्वल, पहेंलो वस्त्र पहिरिएका, विभूषणहरूद्वारा आकर्षक श्रीगणेशका प्रतिमाहरू तयार गरिएका थिए। २४९ ती प्रतिमाहरूलाई मण्डपको माझमा स्थापना गरी सबै देवताहरूले ठूलो भक्तिका साथ पञ्चामृत, चोखो जल, वस्त्र, चन्दन, अक्षता, धूप, दीप, नैवेद्य, अनेक फल, आरती आदि षोडशोपचारले पूजा गरे । यसरी श्रीगणेशका प्रतिमाहरूमा पूजा गरेपछि तिनीहरूले सूर्यनारायणको प्रसन्नताका लागि मन्त्रजप गरे र सूर्य अस्ताएपछि सन्ध्याकर्म गरेर भगवान् श्रीगणेशको स्तुति गरे ॥१५-२२॥

सर्वे ऊचुः

दीननाथ ! दयासिन्धो ! योगिहृत्पद्मसंस्थित ! ।
अनादिमध्यरहितस्वरूपाय नमो नमः ।।२३।।

जगद्भास ! चिदाभास ! ज्ञानगम्य ! नमो नमः ।
मुनिमानसविष्टाय नमो दैत्यविघातिने ।।२४।।

त्रिलोकेश ! गुणातीत ! गुणक्षोभ ! नमो नमः ।
त्रैलोक्यपालन! विभो! विश्वव्यापिन्! नमो नमः।।२५।।

मायातीताय भक्तानां कामपूराय ते नमः ।
सोमसूर्याग्निनेत्राय नमो विश्वम्भराय ते ।।२६।।

अमेयशक्तये तुभ्यं नमस्ते चन्द्रमौलये ।
चन्द्रगौराय शुद्धाय शुद्धज्ञानकृते नमः ।।२७।।

क उवाच

एवं स्तुवत्सु देवेषु तेजोराशिरभूत् पुरः ।
सर्वे हतदृशो देवा विस्मिता अभवँस्तदा ।।२८।।

ततस्तत्कृपया देवः सौम्यतेजा अजायत ।
ततस्ते ददृशुर्देवं सिंहारूढं विनायकम् ।।२९।।

दशायुधधरं तावद्भुजं दिव्यकिरीटिनम् ।
नानाभूषाभिरामङ्ग मुक्तादामविभूषितम् ।।३०।।

दिव्यगन्धानुलेपाढ्यं व्यालबद्धोदरं विभुम् ।
क्षुद्रघण्टाक्वणत्पादं कस्तूरीतिलकोज्ज्वलम् ।।३१।।

**देवताहरूले भने** - 'हे भगवन् श्रीगणेश ! दीनदुःखीका स्वामी, दयाका सागर, योगीहरूका हृदयकमलमा वास गर्ने, आदि, अन्त र मध्यहीन स्वरूप धारण गर्नुहुने हजुरलाई प्रणाम गर्दछौं । संसारलाई नै प्रकाशित गर्ने चैतन्यको ज्योतिले सम्पन्न र ज्ञानद्वारा मात्र प्राप्त गर्न सकिने स्वरूप धारण गर्नुहुने हे गणपति ! हजुरलाई नमस्कार गर्दछौं । मुनिका मनमा प्रवेश गर्नुहुने र दैत्यहरूको नाश गर्नुहुने हजुरलाई नमस्कार गर्दछौं।।२३-२४।। तीन लोकका स्वामी, गुणातीत र गुणहरूलाई क्षुब्ध तुल्याउने हे गणनाथ! हजुरलाई नमस्कार गर्दछौं । स्वर्ग, मर्त्य र पातालको पालन गर्नुहुने, सबैका घटघटमा अन्तर्यामी भएर विराजमान हुनुहुने र आफ्नो महिमाले विश्वलाई नै व्याप्त गर्नुहुने हे गणपति! हजुरलाई बारबार नमस्कार गर्दछौं ।।२५।। मायादेखि पर रहनु भएका र भक्तहरूको कामना पूरा गर्नुहुने हे श्रीगणेश ! हजुरलाई नमस्कार छ । चन्द्रमा, सूर्य र अग्निलाई आफ्नो नेत्रज्योतिका रूपमा प्रकाशित गर्नुहुने, विश्वका पालक भगवान् श्रीगणेशलाई नमस्कार गर्दछौं।।२६।। अनन्त-शक्तिसम्पन्न र शिरमा चन्द्रमा धारण गर्नुहुने हे श्रीगणेश ! हजुरलाई नमस्कार गर्दछौं । चन्द्रमाझैं गोरो वर्णले सुहाउनु भएका शुद्ध एवं निर्मल स्वरूप धारण गर्नुहुने, आफ्ना भक्तहरूका हृदयमा निर्मल ज्ञान प्रकाशित गर्नुहुने हे भगवन् श्रीगणेश ! हजुरलाई नमस्कार गर्दछौं' ।।२७।।

**ब्रह्माजीले भन्नुभयो** - यसरी देवताहरूले स्तुति गरिरहेकै समयमा तिनीहरुका सामु एउटा तेजको पुञ्ज प्रकट भयो । त्यसलाई देखेर सबै देवताहरूका आँखा तिरमिराए र ती आश्चर्यचकित भए ।।२८।। देवताहरूका आँखा तिरमिराएको जानेर भगवान् श्रीगणेशले ती सबै देवताहरूमाथि कृपा गरी आफ्नो तेजलाई सौम्य र शान्त तुल्याउनुभयो। त्यसपछि मात्र सबै देवताहरूले सिंहमा सवार हुनुभएका, आफ्ना दश हातमा दशथरिका शस्त्र-अस्त्र धारण गर्नुहुने, दिव्य किरीट धारण गर्नुहुने, अत्यन्त सुन्दर वस्त्रालङ्कारले रमणीय, मोतीको हारले सुहाउनुभएका, दिव्य चन्दनको लेप गर्नुभएका, पेटमा शेषनागलाई कन्धनी बनाएर धारण गर्नुहुने, सर्वव्यापी, आफ्ना पाउमा घुँघरु धारण गर्नुभएका र कस्तूरीको तिलकले

एवं दृष्ट्वा सुरा देवं नमस्कृत्योचिरे तदा ।
यश्चिन्तितो गुरोर्वाक्यात् स एवायं विनायक: ।।३२।।

स एव दृष्ट: साक्षात् तु वाङ्मनोऽगोचरो विभु: ।
जन्म धन्यं दृशिर्धन्या तपो दानञ्च न: सुरा: ।।३३।।

तत ऊचे सुरान् देवस्तृप्तोऽहं भवतां स्तवै: ।
पूजया चैव भक्त्या च सङ्कष्टीव्रततोऽपि च ।।३४।।

सङ्कष्टहरमेतच्च स्तोत्रं ख्यातं भविष्यति ।
य: पठेत् प्रयतो नित्यं स मे मान्यो भवेत् सुरा: ।।३५।।

तस्य दर्शनत: सर्वे नश्येयुर्यक्षराक्षसा: ।
भोगान् भुनक्ति विविधानन्ते मोक्षपदं लभेत् ।।३६।।

शृण्वन्तु मे पुनर्वाक्यं सिन्धुदैत्येन पीडिता: ।
शरणं मे प्रपन्नाश्च यज्ञवेदविवर्जिता: ।।३७।।

निरुद्धा गण्डकीदेशे स्वधास्वाहाविवर्जिता: ।
ततो ह्यस्य वधं कर्तुमवतारान्तरं मम ।।३८।।

गिरिजाया गृहे देवा भविष्यामि च साम्प्रतम् ।
मयूरेश्वरनाम्नाऽहं ख्यातिं यास्ये तदा च व: ।।३९।।

पदानामाश्रमाणाञ्च प्राप्ति: सिन्धौ हते मया ।
भविष्यति न सन्देहो यत: कृतयुगे सुरा: ।।४०।।

सिंहारूढो दशभुजस्तेजोरूपी विनायक: ।
षड्भुज: शशिवर्णश्च त्रेतायां बर्हिवाहन: ।।४१।।

मयूरेश्वरनामा च द्वापरे रक्तवर्णवान् ।
चतुर्बाहुराखुवाहो भूत्वा चाहं गजानन: ।।४२।।

सुहाउनुभएका भगवान् श्रीगणेशलाई यस रूपमा देखेर प्रणाम गरी ती देवताहरूले भने - 'हामीले बृहस्पतिको वचन सुनेर जुन भगवान् श्रीगणेशको चिन्तन गरिरहेका थियौं, आज उहाँ नै यसरी हाम्रासामु प्रत्यक्ष हुनुभएको छ।।२९-३२।। उहाँलाई नै हामीले आफ्ना आँखाले देख्न पायौं । वास्तवमा उहाँ त वाणी र मनबाट पनि देख्न नसकिने अन्तर्यामी हुनुहुन्छ। हाम्रो जन्म धन्य छ, आँखा धन्य छन्, तपस्या र दान पनि धन्य छन्।' तिनीहरूको प्रार्थना सुनेपछि भगवान् श्रीगणेशले ती देवताहरूलाई भन्नुभयो - 'हे देवगण ! तपाइँहरूका स्तुति, पूजा, भक्ति र सङ्कष्टचतुर्थीको व्रतबाट म ज्यादै प्रसन्न भएको छु।।३३-३४।। तपाइँहरूले पाठ गर्नुभएको यो स्तोत्र संसारमा सङ्कष्टहरस्तोत्रको नामबाट प्रख्यात हुनेछ। जसले सावधान भएर नित्य यस स्तोत्रको पाठ गर्दछ त्यो मानिस संसारमा मान्य हुनेछ । त्यसको दर्शनबाट सबै यक्ष र राक्षसहरू नष्ट हुनेछन् । यो स्तोत्र पाठ गर्ने भक्तले यस संसारका अनेक भोगहरू भोग्न पाउनेछ र अन्त्यमा त्यसले मोक्षको पद पनि प्राप्त गर्नेछ'।।३५-३६।। हे देवगण ! तपाइँहरूले मेरो कुरा फेरि सुन्नुहोस्। आज तपाइँहरू दैत्यराज सिन्धुबाट सताइनुभएको छ र मेरो शरणमा आउनुभएको छ। तपाइँ यज्ञ र वेदपाठबाट वञ्चित हुनुहुन्छ र स्वधा एवं स्वाहाको फलबाट पनि रहित हुनुहुन्छ। दैत्यराज सिन्धुले तपाइँहरूलाई गण्डकीक्षेत्रमा ल्याएर थुनेको छ। त्यसको वध गर्न मैले अवतार लिनेछु ।।३७-३८।। म भगवती पार्वतीको घरमा उहाँको छोरा भएर प्रकट हुनेछु । त्यस बेला संसारमा मयूरेश्वर गणेशका नामबाट प्रख्यात भई मैले सिन्धु दैत्यको वध गर्नेछु र तपाइँहरूले पनि आफ्ना गुमाएका पद एवं आश्रम प्राप्त गर्नुहुनेछ। यसमा कुनै सन्देह छैन । मेरो स्वरूपको बारेमा म तपाइँहरूलाई सुनाउँछु - 'हे देवगण! सत्ययुगमा मेरा दश हात हुन्छन्, म तेजको रूपमा बलिरहेको हुन्छु, विनायकका नामबाट प्रसिद्ध हुन्छु र आफ्नो वाहन सिंहमा सवार हुन्छु। त्रेतायुगमा मेरा छ वटा हात हुन्छन्, म चन्द्रमाजस्तो उज्यालो वर्णको हुन्छु र मेरा वाहन मयूर हुन्छन् । त्यस बेला मलाई भक्तहरूले मयूरेश्वरका नामबाट सम्बोधन गर्छन्। द्वापरयुगमा म रातो वर्णको हुन्छु, मेरा चार हात हुन्छन्, म मूसामा सवार हुन्छु र मलाई मानिसहरूले गजाननको नामबाट चिन्दछन् ।।३९-४०।।

ततः कलियुगे प्राप्ते श्यामवर्णो दृषन्मयः ।
धूमकेतुरिति ख्यातो भविष्यामि सुरा अहम् ।।४३।।
शीघ्रमेव करिष्यामि भवतां वाञ्छितं सुराः ।

क उवाच

एवं निवेद्य तान् देवस्तत्रैवाऽन्तर्दधे विभुः ।।४४।।
आनन्दञ्च सुराः प्रापुः स्वकार्ये कृतनिश्चयाः ।
य इदं परमाख्यानं शृणुयाच्छ्रावयेच्च यः ।।४५।।
पठेच्च परया भक्त्या ध्यात्वा देवं विनायकम् ।
सर्वान् कामानवाप्नोति प्रेत्य ब्रह्ममयो भवेत् ।।४६।।

त्यसपछि कलियुगमा म श्यामवर्णको हुनेछु र धूम्रकेतुको नामबाट संसारमा प्रख्यात हुनेछु । हे देवगण! मैले युग-युगमा आफूले लिने अवतार र स्वरूपको विषयमा बताएँ। अब मैले छिट्टै अवतार लिएर तपाईँहरूको इच्छा पूरा गर्नेछु।'

**ब्रह्माजीले भन्नुभयो** - यसरी देवताहरूलाई बताएर भगवान् श्रीगणेश त्यहीं अन्तर्धान हुनुभयो ।।४१-४४।। आफ्नो कार्यलाई सम्पन्न गर्न दृढ निश्चय गरेका देवताहरूले पनि आनन्द प्राप्त गरे । जुन भक्तले श्रीगणेशको यो कथा सुन्दछ, सुनाउँछ र भगवान् श्रीगणेशको ध्यान गरी पाठ गर्दछ त्यो यस लोकमा सबै कामनाहरूका फल प्राप्त गरी मृत्युपछि ब्रह्मरूप भएर विराजमान हुन्छ।।४५-४६।।

ॐ

**इति श्रीगणेशपुराणे क्रीडाखण्डे सुरर्द्धिवरप्रदानं नामाष्टसप्ततितमोऽध्यायः**

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'देवताहरूद्वारा आराधना गरिनुभएका श्रीगणेशद्वारा वर प्रदान' शीर्षकान्वित अठहत्तरौं अध्याय पूर्ण भयो ।।७८।।

ॐ

# एकोनाशीतितमोऽध्याय: { ७९ अध्याय }

### क उवाच

निर्जितान् सिन्धुना देवान् ज्ञात्वा शम्भुर्निजस्थलात् ।
सप्तकोटिगणाकीर्णस्त्रिसन्ध्याक्षेत्रमभ्यगात् ।।१।।

स्वाहास्वधावषट्कारवेदाध्ययनवर्जिता: ।
निवसन्ति भयात् सिन्धोर्गौतमाद्या महर्षय: ।।२।।

दृष्ट्वा ते त्र्यम्बकं देवं परिवव्रु: समन्तत: ।
यथा तीर्थं विप्रवरा बालका जननीं यथा ।।३।।

प्रणम्य तं प्रपूज्यैव प्रोचुर्धन्यतमा वयम् ।
अनुष्ठानं दृशिर्जन्म धन्यं ज्ञानं यतो हर: ।।४।।

अगोचरो दृष्टिगतो दण्डकारण्यमागत: ।
दुरितं विलयं यातं पुण्यञ्च फलितं महत् ।।५।।

इदानीं न च दु:खं नो दृष्टे देवे भविष्यति ।
यथोदिते दिवानाथे न ध्वान्तं दृश्यते क्वचित् ।।६।।

ततोऽब्रवीन् महादेव: सर्वास्तान् मुनिपुङ्गवान् ।

### शिव उवाच

सिन्धुनाऽक्रामि त्रैलोक्यं कृतो देवविनिग्रह: ।।७।।

मुनीनामपि केषाञ्चित् तेन खिन्नं मनो मम ।
विश्रान्तिं न लभे स्थाने ततोऽहमिह चागत: ।।८।।

भवतां दर्शनेनाऽहं परितुष्टो मुदान्वित: ।
इदानीमवकाशं सपरिवारस्य दीयताम् ।।९।।

अतिपुण्येन व: प्राप्तं दर्शनं पापनाशनम् ।
यत्र स्थित्वा परं ध्यानं करिष्ये जगदीशितु: ।।१०।।

**ब्रह्माजीले भन्नुभयो** - भगवान् शङ्कर दैत्यराज सिन्धुबाट देवताहरू पराजित भएको थाहा पाएर सात करोड आफ्ना शिवगणलाई साथमा लिई कैलासबाट त्रिसन्ध्याक्षेत्रतर्फ लाग्नुभयो ।।१।। त्यस क्षेत्रमा गौतम आदि महर्षिहरू दैत्यराज सिन्धुको डरका कारण स्वाहाकार, स्वधाकार, बषट्कार र वेदाध्ययनदेखि रहित भएर बसिरहेका थिए ।।२।। भगवान् शङ्करलाई त्यहाँ आएको देखेर ब्राह्मणहरूले तीर्थ र बालकहरूले आमालाई घेरेझैं ती सबैले उहाँलाई चारैतिरबाट घेरेका थिए।।३।। शङ्करलाई प्रणाम गरेर विधिपूर्वक पूजा गरी तिनीहरूले भने- 'हे प्रभु ! आज हामी धन्य भएका छौं र हाम्रो अनुष्ठान पनि धन्य भएको छ। हाम्रा आँखाहरू धन्य भएका छन्, हाम्रो जन्म धन्य भएको छ र हाम्रो ज्ञान पनि धन्य भएको छ। ठूला-ठूला ऋषि महर्षिहरूका लागि पनि दुर्लभदर्शन मानिनुभएका हजुर हाम्रासामु यस दण्डकारण्यमा पाल्नुभएको छ। हाम्रा पाप अहिले विलीन भएका छन् र पुण्यका वृक्षहरू फलेका छन्।।४-५।। हजुरको दर्शन पायौं । त्यस कारण अब हामीले दु:ख पाउने छैनौं । जसरी सूर्यको उदय भएपछि अन्धकार देखिँदैन त्यसरी नै हाम्रा दु:ख र विघ्न पनि समाप्त हुनेछन् ।' ।।६।। त्यसपछि भगवान् शङ्करले ती सबै उत्तम मुनिहरूसँग कुराकानी गर्दै भन्नुभयो।

**शिवजीले भन्नुभयो** - 'हे महर्षिगण ! सिन्धु दैत्यले स्वर्ग, मर्त्य र पातालमाथि अधिकार जमाएको छ । त्यसले देवताहरूमाथि आफ्नो नियन्त्रण कायम गरेको छ । केही मुनिहरू पनि त्यसको नियन्त्रणभित्र परेका छन् । यी सबै कुरा सुनेर मेरो मन अत्यन्त खिन्न भएको छ। मैले कैलासमा बस्दा यस्तै चिन्ता पर्नाले शान्ति र आराम पाउन सकिनँ । त्यस कारण म तपाइँहरूको क्षेत्रमा आएको छु ।।७-८।। तपाइँहरू जस्ता ऋषि-महर्षिहरूको दर्शनबाट म प्रसन्न र सन्तुष्ट छु । अहिले मलाई यहाँ आराम गर्ने स्थान दिनुहोस् ।।९।। ठूलो पुण्यले तपाइँहरूजस्ता तपस्वी ऋषिहरूको पवित्र र पापनाशक दर्शन पाएँ । मैले तपाइँहरूको यस पवित्र क्षेत्रमा रहेर जगदीश्वरको ध्यान गर्नेछु ।।१०।।

क उवाच

इति शूलिवचः श्रुत्वा प्रोचुः सर्वे महर्षयः ।
सर्वेश्वरस्य ते देव ! दाता स्थानस्य को भवेत् ।।११।।

कल्पद्रुमस्य कः कामः केनासौ परिपूर्यते ।
क्षीरार्णवतृषा किं वा पल्वलेन गमिष्यति ।।१२।।

तवैव रूपं पृथिवी तव वश्याऽत्र सर्वदा ।
त्वमीशः सर्वलोकस्य यथेच्छसि तथा कुरु ।।१३।।

दर्शयामः सुरपते ! सुन्दरं तव चाश्रमम् ।
नानावृक्षलताकीर्णं रम्यवापीसरोजलम् ।।१४।।

यादोभिः पक्षिभिर्युक्तं घनच्छायं सुविस्तृतम् ।
स्वादुकन्दफलोपेतं मृदुघाससमन्वितम् ।।१५।।

यदीच्छाऽत्र वस त्र्यक्ष ! परिपालय नोऽखिलान् ।

क उवाच

तत्राऽवसन्महादेवो गङ्गागौरीगणैर्युतः ।।१६।।

कैलासादधिकं मेने मुनेराश्रममण्डलम् ।
तदाश्रयेण ते सर्वे गौतमाद्या महर्षयः ।।१७।।

चेरुस्तपाँसि विविधान्यासँस्ते विगतज्वराः ।
शिवोऽपि तप आरेभे गङ्गागौरीसहायवान् ।।१८।।

ततो गणाश्च सामग्रीं तस्य चक्रुर्महात्मनः ।
कस्मिँश्चित् समये गौरी पृच्छति स्म सदाशिवम् ।।१९।।

त्वमेव कर्ता हर्ता त्वं पाता विश्वस्य शङ्कर ! ।
अष्टमूर्तिरमूर्तिस्त्वं सर्वशः सर्वभावतः ।।२०।।

सर्वश्रेष्ठतमस्त्वञ्च सर्वेषां सर्वकामदः ।
अष्टानां कर्मणां देव फलदाताऽखिलार्थवित् ।।२१।।

त्वत्तः श्रेष्ठतमः कोऽस्ति यं त्वं ध्यायसि तं वद ।
देवाश्च मुनयो नागा यक्षमानुषराक्षसाः ।।२२।।

**ब्रह्माजीले भन्नुभयो** – भगवान् शङ्करका यी कुरा सुनेर सबै महर्षिहरूले भने – हे भगवन् शङ्कर ! हजुर सबैका ईश्वर हुनुहुन्छ । हजुरलाई स्थान दिने काम कसले गर्न सक्छ? सबैका दातालाई कसले के दिन सक्छ ? सबैका कामना पूरा गर्ने कल्पवृक्षको कामना कसले पूरा गर्न सक्छ ? के क्षीरसागर तिर्खा लाग्यो भनेर सानो कुवामा पानी माग्न जान्छ र ? हे शङ्कर ! यो सम्पूर्ण संसार हजुरकै स्वरूप हो । यी पृथिवी हजुरकै वशमा छन् । हजुर स्वर्ग, मर्त्य र पाताल यी तीनै लोकका स्वामी हुनुहुन्छ । त्यस कारण हजुर जुन कुरा गर्न चाहनुहुन्छ त्यो गर्नुहोस् ।।११-१३।। हे देवाधिदेव ! हजुरका निमित्त उपयोगी सुन्दर आश्रम देखाउनेछौं । त्यो आश्रम अनेक थरि वृक्ष र लहराले जेलिएको छ, सुन्दर पोखरी र तलाउका जलले घेरिएको छ, वनचर जीवजन्तु र पक्षीहरूले सम्पन्न छ, बाक्लो छायाँ भएका ठूला-ठूला रूखहरूले युक्त छ, अत्यन्त मीठा कन्दफलले सम्पन्न छ र त्यसका वरिपरि चौरमा कोमल र हरिया घास लहलहाइरहेका छन् ।।१४-१५।। यदि हजुरलाई इच्छा लाग्छ भने त्यहाँ बस्नुहोस् र हामी सबैको रक्षा गर्नुहोस् ।

( **ब्रह्माजीले भन्नुभयो** – महर्षिहरूको अनुरोधलाई स्वीकार गरी गङ्गा, गौरी र गणहरूका साथ भगवान् शङ्कर त्यहाँ बस्नु-भयो ।।१६।। मुनिहरूको त्यो आश्रममण्डललाई उहाँले कैलासभन्दा पनि राम्रो मान्नुभयो । भगवान् शङ्करको आश्रय पाएर निश्चिन्त भएका गौतम आदि महर्षिहरूले पनि अनेकरूपका तपस्या गरे । त्यसपछि गङ्गा र गौरीलाई साथमा लिएर भगवान् शङ्करले पनि तपस्या आरम्भ गर्नुभयो ।।१७।। भगवान्को तपस्याका लागि आवश्यक सामग्री जुटाउने काम शिवगणले सम्पन्न गरे । आश्रमनिवासको क्रममा कुनै दिन भगवती पार्वतीले सदाशिवलाई सोध्नुभयो- 'हे भगवन्! हजुर नै संसारका कर्ता, हर्ता र पालक हुनुहुन्छ । हजुर अष्टमूर्ति र मूर्तिहीन पनि हुनुहुन्छ। हजुर सबैका स्वामी र अभिभावक हुनुहुन्छ। हजुर सर्वश्रेष्ठ पुरुष हुनुहुन्छ र सबै प्रकारका कामना पूर्ण गराउने ईश्वर पनि हुनुहुन्छ। हे शङ्कर ! हजुर पाँच ज्ञानेन्द्रिय सहित तीन अन्तःकरण- मन, बुद्धि एवं चित्तद्वारा गरिएका आठ प्रकारका कर्महरूका फलदाता र सकल रहस्यका ज्ञाता पनि हुनुहुन्छ । यस्ता महिमामय सबैका देवता महादेव भएर पनि हजुर किन तपस्या गर्दै हुनुहुन्छ ? हजुरभन्दा ठूलो को छ, हजुरले जसको ध्यान गर्दै हुनुहुन्छ ती देवता को हुन्? मलाई बताउनुहोस् । हजुरको

यत्सत्तयाऽखिलं विश्वं त्वत्त: श्रेष्ठतमस्तु क: ।
त्रयस्त्रिंशत्कोटिदेवै: पूज्यसे सिद्धसाधकै: ।।२३।।

क उवाच

इति तद्वचनं श्रुत्वा शिवो वचनमब्रवीत् ।

शिव उवाच

सम्यक् पृष्टं त्वया देवि ! तुष्टो वाक्येन तेऽनघे ।।२४।।

शृणुष्वाऽवहिता देवि ! विस्तरेण ब्रवीमि ते ।
अद्यापि न कथं ज्ञातो यं ध्यायामि सुरेश्वरि ।।२५।।

तत्स्वरूपं निरूपिष्ये तव प्रीतिचिकीर्षया ।
लोकानामुपकाराय संसारोत्तारणाय च ।।२६।।

यो देव: सर्वभूतेषु गूढश्चरति विश्वकृत् ।
योऽनन्तशीर्षानन्तश्रीरनन्तचरण: स्वराट् ।।२७।।

अनन्तश्रुतिनेत्रश्चानन्तनामा गुणातिग: ।
अनन्तरूपी यो देवो वेदकर्ताऽखिलार्थद: ।।२८।।

योऽनन्तशक्तिर्विश्वात्माऽनुपमेय: पुरातन: ।
नोपमा शेषचन्द्राब्धिव्योम्नां नारायणस्य च ।।२९।।

भारतस्य च वेदस्य व्यासस्य च मुनेरपि ।
यतो जीवा अनन्ताश्च जायन्तेऽम्बुमुचो यथा ।।३०।।

जलधारा यथाऽग्नेर्वा विस्फुलिङ्गा भवन्ति हि ।
ब्रह्मविष्णुशिवादीनां गुणत्रयप्रद: प्रभु: ।।३१।।

सृष्टिपालनसंहारानाज्ञापयत तैरिह ।
ततो गुणविभागेन गणेश इति पप्रथे ।।३२।।

अस्तित्व भएकै कारण देवता, मुनि, नाग, यक्ष, मानव, राक्षस र सम्पूर्ण संसारको अस्तित्व छ। तसर्थ हजुरभन्दा श्रेष्ठ को हुनसक्छ ? किनभने हजुर त तेंत्तीस कोटि देवता, सिद्ध र साधकहरूद्वारा पुजिनुहुन्छ'।।१८-२३।।

**ब्रह्माजीले भन्नुभयो** - पार्वतीका यी प्रश्न सुनेर शिवजीले उत्तर दिनुभयो ।

**शिवजीले भन्नुभयो** - 'हे निष्पाप पार्वती ! तिमीले उत्तम कुरा सोधिकी छ्यौ र म तिम्रो प्रश्नबाट प्रसन्न भएको छु । हे देवी ! तिमी सावधान भएर सुन । म तिम्रा प्रश्नहरूको उत्तर दिन्छु । के तिमीले आजसम्म मैले कसको ध्यान गर्छु भन्ने कुरा थाहा पाएकी छैनौ ?।।२४-२५।। आज मैले तिम्रो मनलाई प्रसन्न गराउन र तिम्रो स्नेह बढाउन, म जुन देवताको ध्यान गर्छु तिनको स्वरूप बताउनेछु । जुन देवता लोकहरूको उपकार गर्न र संसारको उद्धार गर्न सम्पूर्ण प्राणीहरूमा लुकेर विचरण गर्नुहुन्छ, जसले विश्वको निर्माण गर्नुहुन्छ, जसका अनन्त शिर, अनन्त लक्ष्मी, अनन्त शोभा, अनन्त पाउ छन् र जुन देवता स्वप्रकाश हुनुहुन्छ, उहाँ मेरा आराध्य हुनुहुन्छ। जुन देवताका असंख्य कान, असंख्य आँखा र अनन्त नामहरू छन् ती देवता मेरा आराध्य हुनुहुन्छ। जुन देवता सत्त्व, रज र तमोगुणदेखि पर हुनुहुन्छ, जुन देवता अनन्त रूपले सम्पन्न, वेदका निर्माता र साधकका सम्पूर्ण कामनाहरूलाई पूर्ण गराउन समर्थ हुनुहुन्छ, ती देवता मेरा आराध्य हुनुहुन्छ। जुन देवता अनन्त-शक्तिसम्पन्न हुनुहुन्छ, विश्वको आत्मा भएर विराजमान हुनुहुन्छ र सम्पूर्ण उपमानहरूका लागि उपमेयका रूपमा विराजमान हुनुहुन्छ, ती देवता मेरा आराध्य हुनुहुन्छ। जुन देवता सबैभन्दा प्राचीन हुनुहुन्छ र जसको शेषनाग, चन्द्रमा, महासागर, आकाश एवं भगवान् नारायणसँग पनि तुलना हुन सक्दैन, ती देवता मेरा आराध्य हुनुहुन्छ । महाभारतका रचयिता र वेदका विभाजक वेदव्यास मुनिले पनि जसको तुलना गर्न सक्दैनन्, ती देवता मेरा आराध्य हुनुहुन्छ। बादलबाट अनन्त जलधारा बर्सिएझैं जसले अनन्त जीवराशिलाई निरन्तर बर्साइरहनुभएको छ, अग्निबाट फिलिङ्गाहरू बर्सिएझैं जसले जीवराशिको वर्षा गराइरहनुभएको छ, ती देवता मेरा आराध्य हुनुहुन्छ। जुन देवताले ब्रह्मा, विष्णु र शिवजीलाई पनि सत्त्व, रज एवं तमनामक गुण दिएर क्रमश: सृष्टि, पालन र संहार कर्ममा प्रवृत्त गराउनुहुन्छ । ब्रह्मा आदि देवतालाई रज आदि

तमिमं परमात्मानं परात्परतरं विभुम् ।
गुणेशमनिशं ध्याये परब्रह्मस्वरूपिणम् ।।३३।।

गौर्युवाच

तुष्टाऽहं तव वाक्येन प्रत्ययो मे कथं भवेत् ।
तं गुणेशं कथं साक्षात्करोमि च भजामि च ।।३४।।

तमुपायं वद विभो ! यदि तुष्टोऽसि शङ्कर !।

क उवाच

इति तस्या वचः श्रुत्वा पुनरूचे महेश्वरः ।।३५।।

शिव उवाच

एकनिष्ठतया यावत् तपसाराधितो न ते ।
तावत् प्रत्यक्षतां देवि ! कथं यास्यति स प्रभुः ।।३६।।

देव्युवाच

कथं मया तपः कार्यं केनोपायेन वा विभो ! ।
यदि तुष्टोऽसि देवेश ! वद सत्यं ममानघ ।।३७।।

क उवाच

एवं तदादरं बुद्ध्वा प्रोवाच गिरिजां हरः ।
येन तस्या भवेत् प्रीतो गुणेशो गुणवल्लभः ।।३८।।

एकाक्षरमनुं तस्यै ददौ सम्यग्घरस्तदा ।
द्वादशाब्दं कुरु तपस्ततस्तुष्टो भवेद् विभुः ।।३९।।

साक्षात्कारं गुणेशस्ते प्रदास्यति न संशयः ।
तदैव सा नमस्कृत्य गिरीशं हृष्टमानसा ।।४०।।

जगाम तपसे गौरी मन्त्रध्यानपरायणा ।
जीर्णापुरादुत्तरे तु लेखनाद्रिं मनोहरम् ।।४१।।

गुण वितरण गरेका कारण जसलाई भक्तहरूले गुणेश भनेर पनि चिन्दछन्, ती परभन्दा पर रहनुभएका अन्तर्यामी परब्रह्मस्वरूप श्रीगणेश अथवा गुणेश मेरा आराध्य हुनुहुन्छ र म उहाँकै ध्यान गरिरहेको छु।'।।२६-३३।।

**पार्वतीले भन्नुभयो** - 'हे शङ्कर ! हजुरका यी वचन सुनेर म सन्तुष्ट भएकी छु । जबसम्म ती देवतालाई आँखाले देख्न पाउँदिन, तबसम्म मैले ती देवतामा कसरी विश्वास गरूँ? भगवान् गुणेशरूप श्रीगणेशलाई कसरी साक्षात्कार गरी ध्यान गर्न पाउँछु ? त्यो उपाय मलाई बताउनुहोस् । हे भगवन्! यदि हजुर प्रसन्न हुनुहुन्छ भने त्यो उपाय दुर्लभ हुनेछैन ।'

**ब्रह्माजीले भन्नुभयो** - पार्वतीका यी कुरा सुनेर फेरि शङ्करले उत्तर दिनुभयो।।३४-३५।।

**शिवजीले भन्नुभयो** - 'हे पार्वती ! जबसम्म तिमीले भगवान् श्रीगणेशमा लीन भएर तपस्याद्वारा उहाँको आराधना गर्दिनौ तबसम्म श्रीगणेश प्रभु तिम्रा आँखासामु प्रत्यक्ष भएर कसरी आउनसक्नुहुन्छ ?'।।३६।।

**पार्वतीले भन्नुभयो** - 'हे अन्तर्यामी प्रभु ! मैले कुन विधिले तपस्या गरूँ ? कुन उपायले तपस्या गरूँ ? हजुर प्रसन्न हुनुहुन्छ भने त्यो विधि र उपाय मलाई बताउनुहोस् ?'।।३७।।

**ब्रह्माजीले भन्नुभयो** - भगवती पार्वतीको भगवान् श्रीगणेशप्रति ठूलो भक्ति देखेर शङ्करले पार्वतीलाई श्रीगणेशको विषयमा बताउनुभयो । जसरी आराधना गर्दा गुणहरूका प्यारा भगवान् गुणेश अथवा श्रीगणेश प्रसन्न हुनसक्नुहुन्छ त्यसरी उहाँले पार्वतीलाई भगवान् श्रीगणेशको एकाक्षरी मन्त्र प्रदान गरेपछि भन्नुभयो - 'हे पार्वती ! तिमीले यो मन्त्र जप्दै बाह्र वर्षसम्म तपस्या गर, त्यसबाट भगवान् श्रीगणेश प्रसन्न हुनुहुनेछ। उहाँले तिमीलाई प्रत्यक्ष दर्शन पनि दिनुहुनेछ। यसमा कुनै सन्देह छैन।' भगवान् शङ्करका वचन सुनेर प्रसन्न भएकी पार्वती उहाँलाई नमस्कार गरेर मन्त्रको ध्यान गर्दै जीर्णापुरदेखि उत्तर दिशामा रहेको लेखनाद्रिमा तपस्याका लागि जानुभयो ।।३८-४१।।

ॐ

**इति श्रीगणेशपुराणे क्रीडाखण्डे गौरीमन्त्रप्रदानं नाम एकोनाशीतितमोऽध्यायः**

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'शिवजीद्वारा पार्वतीलाई श्रीगणेशको एकाक्षरी मन्त्र प्रदान' शीर्षकान्वित उनासीऔं अध्याय पूर्ण भयो ।।७९।।

ॐ

# अशीतितमोऽध्याय: { ८० अध्याय }

क उवाच

तत्र सा काननं दृष्ट्वा रम्यं पुष्पजलान्वितम् ।
तस्थौ पद्मासनगता नासाग्रन्यस्तलोचना ॥१॥

गणेशध्याननिरता प्राङ्मुखी जपतत्परा ।
एकाक्षरस्य मन्त्रस्य शुष्कद्रुम इव स्थिता ॥२॥

न फलं न जलं मूलं पर्णं कन्दं न मारुतम् ।
अत्ति सा निश्चला तत्र निर्वाणं परमं श्रिता ॥३॥

एवं सा द्वादशाव्दानि व्यतीतानि ततो विभुः ।
कृपयाऽऽविरभूत् प्रीतो गुणेशो गुणवल्लभः ॥४॥

किरीटकुण्डलधरो दशवाहुस्त्रिशूलभृत् ।
भालचन्द्रः शङ्खचक्रमुक्तामालाविभूषितः ॥५॥

अक्षमालाञ्च कमलं कस्तूरीतिलकं दधत् ।
मध्ये नारायणमुखो दक्षिणे च शिवाननः ॥६॥

वामे ब्रह्ममुखः शेषे पद्मासनगतो विभुः ।
तत्फणामण्डलच्छायः कुन्दकर्पूरसन्निभः ॥७॥

उवाच जगदम्बां तां यं ध्यायसि दिवानिशम् ।
गुणेशो गुणेश इति सोऽहं ते दर्शनङ्गतः ॥८॥

तव निष्ठाञ्च भक्तिञ्च तप उग्रमवेक्ष्य च ।
मम स्वरूपं वक्ष्यामि प्रीतस्तव वरानने ॥९॥

त्रयस्त्रिंशत्कोटिदेवेष्वधिको न च मत्परः ।
गुणत्रयविभागाच्च गुणेश इति मां विदुः ॥१०॥

**ब्रह्माजीले भन्नुभयो** – तपस्याका निमित्त लेखनाद्रिमा पुगेकी पार्वतीले त्यहाँ अत्यन्त सुन्दर फूल र जलले परिपूर्ण राम्रो जङ्गल देख्नुभयो। पार्वती नाकको टुप्पामा दृष्टि केन्द्रित गर्दै पद्मासन कसेर श्रीगणेशको ध्यान गरी पूर्वतर्फ फर्की एकाक्षरी मन्त्रको जपमा तल्लीन हुनुभयो । उहाँ मन्त्रजपमा तल्लीन हुनुहुँदा जङ्गलमा सुकेको काठको ठूटोझैं निश्चल हुनुहुन्थ्यो॥१-२॥ मूलमन्त्रलाई सम्पुटित गरी जप गरिरहेकी पार्वतीले न त फल ग्रहण गर्नुभयो, न त जल नै । उहाँले कन्दमूल, पात र हावाको पनि सेवन गर्नुभएन। निश्चल भएर एकाग्र भई तपस्या गर्नुभयो। यसरी तपस्या गर्दा बाह्र वर्ष बिते। त्यसपछि प्रसन्न हुनुभएका गुणहरूका स्वामी भगवान् गुणेश अर्थात् श्रीगणेश कृपापूर्वक प्रकट हुनुभयो ॥३-४॥ प्रकट हुनुभएका भगवान् श्रीगणेशले किरीट र कुण्डल धारण गर्नुभएको थियो, दश भुजाले सुहाउनुभएको थियो र त्रिशूल धारण गर्नुभएको थियो । उहाँको निधारमा चन्द्रमा सुहाएको थियो। उहाँ शङ्ख, चक्र र हारले अलङ्कृत हुनुहुन्थ्यो । उहाँको कण्ठमा रुद्राक्षको माला र हातमा कमल शोभायमान थिए । उहाँले कस्तूरीको टीका लगाउनुभएको थियो । उहाँको दर्शन गर्दा मुखमण्डलको मध्य भाग नारायणको थियो भने दायाँतर्फको अनुहार शिवजीको थियो । बायाँतर्फको अनुहार ब्रह्माजीको थियो। शेषनागको शय्यामा पद्मासन लगाएर विराजमान हुनुभएका प्रभुलाई शेषनागका एक हजार फणाले छाता बनेर छाया दिइरहेका थिए ॥५-७॥ उहाँ कुन्दपुष्प र कपूरझैं गौरवर्णका देखिनुहुन्थ्यो । यसरी भगवान् श्रीगणेशले दर्शन दिएपछि माता पार्वतीलाई भन्नुभयो – 'हे देवी ! तपाईं जुन देवताको निरन्तर ध्यान गरिरहनुभएको छ, त्यो देवता, गुणहरूको स्वामी गुणेश अर्थात् गणेश म तपाईंलाई दर्शन दिन आएको छु । तपाईंका निष्ठा, भक्ति र उग्र तपस्या देखेर म प्रसन्न छु । हे देवी ! म तपाईंलाई आफ्नो स्वरूपको विषयमा पछि बताउनेछु। तेंतीस कोटि देवताहरूमा म नै सर्वाधिक महत्त्व भएको देवता हुँ। मभन्दा पर कुनै तत्त्व छैन। सत्त्वगुण, रजोगुण र तमोगुणको विभाग गरेका कारण मलाई भक्तहरूले गुणेश भन्दछन् ॥८-१०॥

त्रिदेहो गुणतश्चाहं सन्तुष्टस्तपसा च ते ।
वरं वरय मत्तस्त्वं यत्ते मनसि वर्तते ।।११।।

असाध्यमपि दास्यामि त्रैलोक्येऽस्मिन् महेश्वरि !।
इति तद्वचनं श्रुत्वा हर्षगद्गदनिःस्वना ।।१२।।

उन्मील्य नयने गौरी पश्यति स्म पुरो विभुम् ।
गुणेशं त्रिगुणेशञ्च त्रितनुं प्रणनाम सा ।।१३।।

उवाच जन्म निष्ठा च तपो मन्त्रो हरोऽपि च ।
अद्य धन्यतमो जातो दृष्ट्वा ते पदपङ्कजम् ।।१४।।

अद्य सिद्धिः परा प्राप्ता साक्षाद् दृष्टो यतो भवान् ।
न काङ्क्षेऽन्यवरं कञ्चित् त्वद्वाक्यं न च लङ्घये ।।१५।।

अतस्त्वं पुत्रतां याहि मम प्रीतिकरो भव ।
निरन्तरं दर्शनं ते सेवनं पूजनं भवेत् ।।१६।।

इति तस्या वचः श्रुत्वा गणेशो हर्षनिर्भरः ।
उवाच गिरिजां तां स भविष्यामि सुतस्तव ।।१७।।

वाञ्छितं पूरयिष्यामि लोकानाञ्च तवापि च ।
एवमुक्त्वा गुणेशस्तामन्तर्धानमगात् क्षणात् ।।१८।।

न ददर्श यदा देवी गुणेशं तं क्षणात् तदा ।
अमन्यत मया दृष्टः स्वप्नः किं सुखदः क्षणम् ।।१९।।

ईश्वरस्योपदेशेन दृष्टो देवोऽखिलार्थदः ।
न सोढुं विरहं तस्य शक्ताऽस्मीति व्यधाच्छिवा ।।२०।।

गुणेशप्रतिमां कृत्वा स्थापयामास सादरम् ।
प्रासादं कारयामास चतुर्द्वारं सुशोभनम् ।।२१।।

गिरिजात्मजसंज्ञां वै कारयामास सुन्दरम् ।
सिद्धिक्षेत्रमिति ख्यातं भविष्यति नृणामिह ।।२२।।

अनुष्ठानवतां सिद्धिर्भविष्यति न संशयः ।
इति दत्त्वा वरं तत्र सम्पूज्य च यथाविधि ।।२३।।

गुणहरूकै कारण मैले ब्रह्मा, विष्णु र शङ्करका रूपमा तीनवटा शरीर धारण गरेको छु। म अहिले तपाईँको तपस्याबाट सन्तुष्ट भएको छु । तपाईं के चाहनुहुन्छ? तपाईँका मनमा कस्ता इच्छा छन् ? ती इच्छाहरूलाई पूरा गर्न मसँग वरदान माग्नुहोस् ।।११।। मैले त्रिलोकीभित्र रहेका दुर्लभ विषय पनि तपाईँलाई प्रदान गर्नेछु।' भगवान् श्रीगणेशका यी वचन सुनेर हर्षले गद्गद शब्द उच्चारण गरिरहनुभएकी गौरीले आँखा खोलेर हेर्दा आफ्नो सामुमा तीन गुणका स्वामी ब्रह्मा, विष्णु र महेश्वररूप भगवान् गुणेशलाई देखेर प्रणाम गर्नुभयो ।।१२-१३।। त्यसपछि उहाँले भन्नुभयो- 'हे भगवन् ! हजुरका चरणकमलको दर्शन पाएर मेरा जन्म, निष्ठा, तपस्या र मन्त्र धन्य भएका छन् तथा मेरा आराध्य स्वामी शङ्कर पनि धन्य हुनुभएको छ ।।१४।। मैले हजुरको प्रत्यक्ष दर्शन पाएँ, यो नै मेरालागि परमसिद्धिको विषय हो। अब मलाई कुनै वर माग्ने इच्छा छैन, तर हजुरको आज्ञा भने पालन गर्नेछु। तसर्थ हजुर मेरो छोरा भएर जन्मनुहोस् र मलाई माया गर्नुहोस्। हजुर मेरो काखमा बालकका रूपमा रहनुभयो भने मैले निरन्तर दर्शन, सेवा र पूजा गर्ने अवसर पाउनेछु ।।१५-१६।।' पार्वतीका यी वचन सुनेर हर्षमा मग्न हुनुभएका भगवान् गुणेशले उहाँलाई भन्नुभयो- 'हे देवी! म तपाईँको छोराका रूपमा पैदा भई इच्छा पूरा गर्नेछु र सम्पूर्ण संसारमा रहेका भक्तहरूको इच्छा पनि पूरा गर्नेछु ।' यसरी पार्वतीलाई वचन दिएर भगवान् श्रीगणेश तत्काल अन्तर्धान हुनुभयो ।।१७-१८।। भगवान्को अन्तर्धानपछि पार्वतीले यताउति हेर्दा कहीं पनि उहाँको दर्शन पाउनु भएन र मनमनै भन्नुभयो- 'के मैले साँच्चै सुखदायक स्वप्नदर्शन गरें ? ईश्वरको उपदेशबाट यदि मैले सकल कामनाका दाता भगवान् श्रीगणेशको दर्शन पाएकी रहेंछु भने उहाँको विरह कसरी सहन गरूँ ?' यसरी पार्वतीले चिन्ता गर्नुभयो ।।१९-२०।। त्यसपछि भगवान् श्रीगणेशको प्रसन्नताका लागि उहाँको प्रतिमा बनाएर आफूले तयार गरेको चार ढोके सुन्दर मन्दिरमा प्रतिष्ठा गराउनुभयो र उहाँको गिरिजात्मज गणेश भन्ने नामकरण गर्नुभयो। त्यसपछि उहाँले भन्नुभयो- 'मैले तपस्या गरेको यो क्षेत्र सिद्धिक्षेत्रका नामबाट संसारमा प्रख्यात हुनेछ । यहाँ गरेका अनुष्ठानहरू सिद्ध हुनेछन्।' यसरी वरदान दिएर भगवान् श्रीगणेशको पूजा, प्रदक्षिणा र

प्रदक्षिणानमस्कारान् कृत्वा च द्विजपूजनम् ।
दत्त्वा दानानि तेभ्यश्च गृहीत्वाशीर्वचो द्विजात् ।
त्रिसन्ध्याक्षेत्रमगमद् योगस्थं ददृशे हरम् ।।२४।।

तत्पादपङ्कजे स्वीयं शिरःपद्मं न्यधाच्छिवा ।
उवाच निजवृत्तान्तमाज्ञां प्राप्य विभो ! तव ।।२५।।

उपदेशं मनोश्चापि द्वादशाब्दं कृतं तपः ।
अवायुभक्षया स्वामिन् ! ततस्तुष्टो गुणेश्वरः ।।२६।।

उवाच परमप्रीतो भावं ज्ञात्वा परं मम ।
तवोदरेऽवतारन्तु करिष्याम्यचलात्मजे ।।२७।।

वाञ्छितञ्च करिष्यामि देवानाञ्च तवापि च ।
एवमुक्त्वा क्षणेनाऽसौ तत्रैवाऽन्तर्दधे विभुः ।।२८।।

ततोऽहं परमप्रीता मूर्तिं प्रासादमेव च ।
विधाय स्थापयित्वा तां तवान्तिकमुपागता ।।२९।।

क उवाच

एवं श्रुत्वा प्रियावाक्यं प्रहृष्टमानसो हरः ।
प्रोत्फुल्लनयनः प्राह धन्याऽसि गिरिजात्मजे ।।३०।।

साक्षाद् दृष्टो गुणेशस्ते गृहे सोऽवतरिष्यति ।।३१।।

हनिष्यति महादैत्यं भूभारञ्च हरिष्यति ।
इन्द्रादिलोकपालानां स्वपदानि प्रदास्यति ।।३२।।

एतन्मम वचो देवि ! न च विस्मतुमर्हसि ।

क उवाच

एवमुक्त्वा शिवो देव आलिलिङ्ग शिवां तदा ।।३३।।

आनन्दाश्रूणि मुञ्चन्तौ रोमाञ्चिततनू उभौ ।
तिष्ठन्तौ परमाह्लादयुतावम्बामहेश्वरौ ।।३४।।

नमस्कार गरी ब्राह्मणहरूको पनि पूजा गर्नुभयो । तिनीहरूलाई दान दिएर आशीर्वाद प्राप्त गरी पार्वती दण्डकारण्यमा रहेको त्रिसन्ध्याक्षेत्रमा पुग्नुभयो । त्यहाँ गएर उहाँले समाधिमा रहनुभएका भगवान् शङ्करको दर्शन गर्नुभयो ।।२१-२४।। भगवान् शङ्करका चरणकमलमा शिर राखेर आफ्ना सम्पूर्ण वृत्तान्त बताउँदै पार्वतीले भन्नुभयो- "हे प्रभु! हजुरबाट आज्ञा, उपदेश र मन्त्रसमेत पाएर मैले बाह्र वर्षसम्म लेखनाद्रिमा तपस्या गरें। हावा पनि नखाईकन कठोर तपस्या गरेका कारण भगवान् गुणेश्वर श्रीगणेश प्रसन्न हुनुभयो ।।२५-२६।। त्यसपछि उहाँले मेरा भावनाहरू थाहा पाएर भन्नुभयो - 'मैले तपाईंको गर्भबाट अवतार लिनेछु र तपाईंसमेत देवताहरूले चिताएका कामनाहरू पुऱ्याउनेछु ।' यसरी वरदान दिएर एक क्षणमै अन्तर्यामी भगवान् श्रीगणेश अन्तर्धान हुनुभयो ।।२७-२८।। त्यसपछि मैले अत्यन्त खुसी भएर श्रीगणेशको मूर्ति निर्माण गराई मन्दिर बनाउन लगाएँ । त्यस मन्दिरमा मूर्तिको प्रतिष्ठा गरेपछि अहिले हजुरका नजिकमा आएकी छु' ।।२९।।

**ब्रह्माजीले भन्नुभयो** - आफ्नी प्रियतमा पार्वतीका कुरा सुनेर भगवान् शङ्कर पनि प्रसन्न हुनुभयो । खुसी भई चारैतिर नजर घुमाउँदै भन्नुभयो - 'हे हिमालयकी छोरी पार्वती! तिमी धन्य छौ किनकि आज तिमीले साक्षात् श्रीगणेशको दर्शन पायौ । अब भगवान् श्रीगणेशले तिम्रा घरमा अवतार लिनुहुनेछ र दैत्यराज सिन्धुको हत्या गर्नुहुनेछ । त्यसपछि उहाँले पृथिवीको भार हरण गरी इन्द्र आदि लोकपालहरूलाई तिनीहरूका गुमेका पद दिलाउनुहुनेछ ।।३०-३२।। यो मेरो सत्यवचन हो र यसलाई तिमीले बिर्सने छैनौ ।'

**ब्रह्माजीले भन्नुभयो** - यसरी पार्वतीसँग कुरा गरी शिवजीले उहाँलाई आलिङ्गन गर्नुभयो ।।३३।। यो घटनापछि दुबै दम्पती आनन्दका आँसु बर्साउँदै र रोमाञ्चित हुँदै परम आनन्दमा मग्न भएर रहनुभयो ।।३४।।

ॐ

**इति श्रीगणेशपुराणे क्रीडाखण्डे श्रीगणेशदर्शनं नामाऽशीतितमोऽध्यायः**

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'पार्वतीबाट आराधित श्रीगणेशद्वारा दर्शन र वर प्रदान' शीर्षकान्वित असीऔँ अध्याय पूर्ण भयो ।।८०।।

ॐ

## एकाशीतितमोऽध्यायः { ८१ अध्याय }

क उवाच

ततः सा पार्वती हृष्टा सखीजनमगान्निजम् ।
वृत्तान्तं सर्वमाचख्यौ हृष्टरूपोऽपि सोऽभवत् ।।१।।
ततः प्रभृति सा देवी गुणेशमानसाऽभवत् ।
पश्यति स्माऽन्यबालं सा गुणेशोऽयं भवेदिति ।।२।।
ग्रहीतुं धावति तदा तन्मात्रा सा निषिध्यते ।
न क्वापि विश्रमं याति गुणेशध्यानतत्परा ।।३।।
तन्नाम जपते नित्यं तन्मयं लोकते जगत् ।
पप्रच्छ च सखीः सर्वा गुणेशो यास्यते कदा ।।४।।
पित्रा मे कथितं पूर्वं व्रतमीशाप्तये शुभम् ।
पार्थिवस्य गणेशस्य पूजनञ्च यथाविधि ।।५।।
तेन व्रतप्रभावेण प्राप्ताऽस्मि शङ्करं प्रियम् ।
पुनस्तदाचरिष्यामि गुणेशप्राप्तयेऽधुना ।।६।।
ततो भाद्रचतुर्थ्यां सा कृत्वा मूर्तिं मृदान्विताम् ।
उपचारैः षोडशभिः पुपूज च गजाननीम् ।।७।।
षड्भिर्ध्यानादिकैः पञ्चामृतैर्वस्त्रैरनेकशः ।
यज्ञोपवीतगन्धैश्च धूपदीपैर्यथाविधि ।।८।।
नानापुष्पैश्च नैवेद्यैर्नानाविधफलैरपि।
ताम्बूलैरार्द्रपूगैश्च लवङ्गादिसमन्वितैः ।।९।।
दूर्वाभिश्च शमीपत्रैर्दक्षिणाभिरनेकशः।
आरार्तिक्यैर्विचित्रैश्च मन्त्रपुष्पैः स्तवैरपि।।१०।।
प्रदक्षिणाप्रार्थनाभिर्ब्राह्मणानाञ्च पूजनैः।
परितुष्टा मूर्तिरसौ पार्थिवी चेतनामगात् ।।११।।
तदैव प्रभया तस्याः कोटिसूर्यप्रभा जिता।
कल्पानलार्चिर्विजिताऽनन्तचन्द्रप्रभा हृता ।।१२।।

**ब्रह्माजीले भन्नुभयो**– त्यसपछि प्रसन्न मुद्रामा रहेकी पार्वती आफ्ना सँगिनीहरूका नजिकमा जानुभयो र तिनीहरूलाई सम्पूर्ण वृत्तान्त बताई प्रसन तुल्याउनुभयो ।।१।। त्यस दिनदेखि पार्वतीले श्रीगणेशलाई आफ्नो हृदयमा राखेर आराधना गर्न थाल्नुभयो । उहाँले कुनै बालकलाई देख्दा पनि यी भगवान् श्रीगणेशकै रूप हुन् कि भन्ने भावना गर्नुहुन्थ्यो ।।२।। कहिलेकाहीं भावावेशमा कुनै आमाको छोरालाई गणेश हुन् कि भनेर समाउन जाँदा बच्चाका आमाहरूले पार्वतीलाई रोक्ने गर्दथे । वास्तवमा पार्वती गणेशमय बन्नुभएको थियो र अहोरात्र गणेशकै ध्यान गर्नुहुन्थ्यो । उहाँले नित्य गणेशको नामजप गर्दै सम्पूर्ण संसारमा गणेशकै अनुहार देख्नुहुन्थ्यो। एक दिन पार्वतीले आफ्ना सँगिनीहरूसँग सोध्नुभयो– 'श्रीगणेश मेरो गर्भमा कहिले आउनु हुनेछ ? ।।३-४।। मेरा पिताले पहिले मलाई भगवान् शङ्करको प्राप्तिका लागि पार्थिव श्रीगणेशको पूजा विधि बताउनुभएको थियो ।।५।। त्यस पार्थिव पूजाको प्रभावले मैले भगवान् शङ्करलाई प्यारा पतिका रूपमा प्राप्त गरें । अहिले फेरि गुणेशलाई पुत्रका रूपमा प्राप्त गर्न पनि मैले पार्थिवपूजन गर्नेछु ।।६।। त्यसपछि भाद्रशुक्ल चतुर्थीका दिन हर्षपूर्वक पार्वतीले श्रीगणेशको पार्थिव मूर्ति तयार गरी षोडशोपचारले त्यस मूर्तिमा उपचार गर्नुभयो । पार्वतीले ध्यान, आवाहन, आसन, पाद्य, अर्घ्य, आचमनीय गरी ६ प्रकारका ध्यानादि उपचार पञ्चामृत, वस्त्र, जनै, गन्ध, धूप, दीप, अनेक पुष्प, अनेक फल, नैवेद्य, पान, सुपारी, ल्वाङ, दूबो, शमीपत्र, दक्षिणा, आरती, मन्त्र पुष्पाञ्जलि, स्तुति, प्रदक्षिणा, प्रार्थना र ब्राह्मणपूजन श्रद्धा र विधिपूर्वक सम्पन्न गरेपछि श्रीगणेशको पार्थिव मूर्तिमा चैतन्य प्रकट भयो ।।७-११।। मूर्तिबाट प्रकट भएको कान्तिले करोडौं सूर्यको कान्तिलाई परास्त गरिरहेको थियो । प्रलयकालको अग्निको ज्वालालाई पनि त्यसले मन्द तुल्यायो र अनन्त चन्द्रमाका कान्तिपुञ्जलाई पनि शोभाहीन तुल्यायो । त्यस कान्तिपुञ्जबाट पार्वतीका आँखा तिरमिराए। पार्वतीले त्यो तेज सहन सक्नुभएन र मूर्च्छित भई भुइँमा

हतनेत्रप्रभा गौरी मूर्च्छिता पतिता भुवि।
मुहूर्तात् सावधाना सा प्रोवाच जगदीश्वरम् ।।१३।।

किं मया विकृतं देवपूजने न च तर्कये।
अभिचारोऽथवा केन प्रयुक्तोऽयं न वेद्मि तम् ।।१४।।

कथं मे विफलो यत्नो जातो देव ! कृपानिधे ! ।

क उवाच

श्रुत्वेत्थं वचनं तस्याः सौम्यतेजा अभूत् प्रभुः।।१५।।

सा तदैवाभवद् हृष्टा बालं वीक्ष्य पुरोगतम् ।
असङ्ख्यवक्त्रनयनमसङ्ख्याङ्घ्रिशिरोधरम् ।।१६।।

असङ्ख्यमुकुटं सूर्यचन्द्राग्निलोचनं विभुम् ।
मुक्तामणिमयीं मालां बिभ्रतं दीप्तिमत्परम् ।।१७।।

अनेकायुधहस्तञ्च सर्वावयवसुन्दरम् ।
दृष्ट्वा तु पार्वती रूपं पवित्रं परमाद्भुतम् ।।१८।।

अतर्कयच्चेतसा सा निमील्य नयने शुभे ।
कम्पमानाङ्गयष्टिः सा कर्तव्यं नाभ्यपद्यत ।।१९।।

चिन्तितं किं मया दृष्टमरिष्टमद्भुतं नु किम् ।
उन्मील्य नयनेऽपश्यद् दिव्यदृष्टिर्धरात्मजा ।।२०।।

तावच्छिवोपदिष्टं तदवेदीच्च जगाद च ।

पार्वत्युवाच

अस्यैव मायया भ्रान्ता न जानामि विभुं प्रभुम् ।।२१।।

पप्रच्छ तं ततः कस्त्वं कुत आगमनं तव ।
किमर्थं त्वं गुणेशश्चेद् भवितासि वदस्व माम् ।।२२।।

लड्नुभयो । दुई घडीपछि होशमा आएर पार्वतीले भगवान् श्रीगणेशसँग प्रार्थना गर्नुभयो ।।१२-१३।। 'हे भगवन् ! हजुरको पूजा गर्दा मैले केही नराम्रो गरें कि भन्ने तर्क उठेको छैन । पूजा गर्दा त्यसलाई सफल हुन नदिन कसैले तान्त्रिक अविचार गरेको पनि मलाई थाहा छैन । हे कृपासागर भगवन्! किन मेरो पूजा विफल भयो ?'

**ब्रह्माजीले भन्नुभयो** - पार्वतीका यस्ता कुरा सुनेर तेजोमय भगवान् श्रीगणेश सौम्य तेजले सम्पन्न हुनुभयो ।।१४-१५।। त्यस बेला पार्वतीले आफ्नासामु सुन्दर बालकलाई देखेर प्रसन्नताको अनुभव गर्नुभयो । बालकले असंख्य आँखा, असंख्य मुख, असंख्य पाउ र असंख्य शिर धारण गरेका थिए । तिनका शिरमा गनेर नसकिने मुकुटहरू सुहाएका थिए । सूर्य, चन्द्रमा र अग्नि तिनका आँखा बनेर टल्किरहेका थिए । ती बालक सर्वव्यापक विभुका रूपमा देखिएका थिए । मोती र मणिको हार धारण गरेका, अत्यन्त तेजस्वी स्वरूपद्वारा शोभायमान, आफ्ना हातमा असंख्य शस्त्र-अस्त्र धारण गर्ने, प्रत्येक अङ्ग-प्रत्यङ्गबाट सौन्दर्यका किरणहरू प्रकट गरिरहेका र पवित्र एवं परम अद्भुत बालक श्रीगणेशको स्वरूपलाई देखेर पार्वतीले मनमा तर्क गर्नुभयो- 'मैले कसरी यी बालकको स्वागत गरूँ? यति बेला के गरूँ?' यसरी तर्क गरेपछि उहाँले आँखा चिम्लनुभयो। पार्वतीको शरीर लहराझैं काँपिरहेको थियो । उहाँले धेरै बेर चिन्तन गर्दा पनि के गर्ने भन्ने कुरा ठम्याउन सक्नुभएन ।।१६-१९।।

**पार्वतीले भन्नुभयो**- 'मैले के सोचेकी थिएँ, के देखें? कुनै अद्भुत अरिष्ट त मैले देखिनँ ? त्यसपछि दिव्यदृष्टि प्राप्त गर्नुहुने पार्वतीले आँखा खोलेर चारैतिर हेर्नुभयो । त्यस बेला भगवान् शिवजीका उपदेशको रहस्य बुझेर भन्नुभयो - 'वास्तवमा यी बालककै मायाले म भ्रान्तिमा परेँ र संसारका स्वामी अन्तर्यामी प्रभुलाई चिन्न सकिनँ ।' त्यसपछि उहाँले बालकसँग भन्नुभयो- 'हजुर को हुनहुन्छ? कहाँबाट आउनुभएको हो? किन आउनु-भएको हो ? यदि हजुर श्रीगणेश हुनुहुन्छ भने मसँग कुरा गर्नुहोस्' ।।२०-२२।।

क उवाच

इति तद्वचनं श्रुत्वाऽवदत् स पुरुषो महान् ।
स्वनेन नादयन् सर्वा दिशो विदिश एव च ।।२३।।

देव उवाच

यं ध्यायसि दिवारात्रावनुष्ठानवती शुभे ।
सोऽहं गुणेशस्ते गेहेऽवतीर्णः परमः पुमान् ।।२४।।

परात्परतरो यस्मादवदं त्वां वरार्थिनीम् ।
यास्ये ते पुत्रतां देवि ! यत्कृत्यं मे शृणुष्व तत् ।।२५।।

उभयोः सेवनं कार्यं सिन्धुदैत्यविनाशनम् ।
अमराणां पदप्राप्तिं कृत्वा यास्ये निजं पदम् ।।२६।।

क उवाच

पीत्वा वाक्यामृतं तस्य प्रीता सा गिरिजात्मजा ।
उवाचेह परं भाग्यं परमं मे तपःफलम् ।।२७।।

नायकोऽनन्तकोटीनां ब्रह्माण्डानां विभुर्मया।
दृष्टश्चिदानन्दघनो यस्मात् सृष्टमनेकशः।।२८।।

पञ्चभूतानि ब्रह्मेशौ हरिश्चन्द्रेन्द्रभास्कराः।।
नक्षत्राणि च गन्धर्वा यक्षा मुनिगणा द्रुमाः ।।२९।।

शैलाः पक्षिगणाः सर्वे भुवनानि चतुर्दश।
स्थावरं जङ्गमं यस्मात् सचेतनमचेतनम् ।।३०।।

स त्वं मम कुमारत्वं प्राप्तोऽसीति विडम्बनम् ।
अथ त्वां प्रार्थये देव ! प्राकृतो भव साम्प्रतम् ।।३१।।

येन ते लालनं कुर्यां सेवनं परमादरात् ।

क उवाच

यावद् वदति सैवं तु ददर्श पुरतस्तु तम् ।।३२।।

षड्भुजश्चन्द्रसुभगं लोचनत्रयभूषितम् ।
सुनासभ्रुवदनं स्थूलवक्षसमीश्वरम् ।।३३।।

**ब्रह्माजीले भन्नुभयो** – पार्वतीका यी कुरा सुनेर बालकरूप तेजोमय महापुरुषले आफ्नो गर्जनबाट दिशा र विदिशालाई शब्दायमान तुल्याउँदै भन्नुभयो ।।२३।।

**श्रीगणेशले भन्नुभयो** – 'हे कल्याणी पार्वती ! दिन र रातमा मन्त्रको जप गर्दै तपाईंले जसको ध्यान गर्नुभएको छ, त्यो गुणेश म तपाईंका घरमा परम पुरुषका रूपमा अवतीर्ण भएको छु । म परभन्दा पर रहने ब्रह्मतत्त्व हुँ । कुनै दिन मैले तपाईंसँग छोरा भएर जन्मनेछु भन्ने वाचा गरेको थिएँ । त्यो वाचा पूरा गराउन अहिले आएको छु । अब म किन अवतरित भएको छु, त्यस विषयमा पनि सुन्नुहोस् । अहिले दैत्यराज सिन्धुको नाश गर्नु र देवताहरूलाई तिनका गुमेको पद प्राप्त गराउनु मेरा दुई परम उद्देश्य छन् । ती उद्देश्यहरूको पूर्ति नै मेरो कर्तव्य हो। त्यसपछि म आफ्नो धाममा फर्किनेछु'।।२४-२६।।

**ब्रह्माजीले भन्नुभयो** – भगवान् श्रीगणेशका वचनामृत पान गरेर हिमालयकी छोरी पार्वतीले अत्यन्त प्रसन्न हुँदै भन्नुभयो– 'अहिले मेरो भाग्योदय भएको छ र तपस्याको अत्यन्त उत्तम फल प्राप्त गरेकी छु । अनन्तकोटि ब्रह्माण्डका नायक, सत्स्वरूप, चित्स्वरूप र आनन्दघन अन्तर्यामी श्रीगणेश परमात्माको दर्शन गर्ने मौका पाएकी छु । जुन प्रभुले पाँच महाभूत, ब्रह्मा, शिव, नारायण, चन्द्र, इन्द्र, सूर्य, नक्षत्र, गन्धर्व, यक्ष, मुनिगण, रूख-बिरुवा, पर्वत, पक्षिगण, माथिका सात लोक, तलका सात लोक, स्थावर, जङ्गम, चेतन र जड यी सबै तत्त्वहरूको सृष्टि गर्नुभएको छ त्यस्ता सकल ब्रह्माण्डका स्वामी भगवान् पनि मेरो छोरा भएर अवतरित हुनुभयो । यो कति विचित्र विषय हो ! अब म हजुरसँग सामान्य मानिसको रूप धारण गर्न प्रार्थना गर्दछु ।।२७-३१।। हजुर सामान्य बालक हुनुभयो भने मैले काखमा राखेर स्तन चुसाउने र परम आदरपूर्वक लालनपालन गर्ने अवसर पनि पाउनेछु ।'

**ब्रह्माजीले भन्नुभयो** – यसरी प्रार्थना गर्दागर्दै पार्वतीले आफ्नासामु भगवान् श्रीगणेशको दिव्यरूप दर्शन गर्नुभयो ।।३२।। छ वटा भुजा धारण गर्ने, चन्द्रमाझैं रमणीय, त्रिनयन, सुन्दर नाक, आकर्षक अनुहार र विशाल वक्षस्थलद्वारा शोभायमान चरणकमलमा ध्वज, अङ्कुश, ऊर्ध्वरेखा र कमल धारण

ध्वजाङ्कुशोर्ध्वरेखाब्जचिह्नितं पादपङ्कजम् ।
कोटिस्फटिकसङ्काशं कोटिचन्द्रप्रभं विभुम् ।।३४।।

हेमतारानिभान् केशान् दधतं बालरूपिणम् ।
कुर्वन्तं प्रथमं शब्दं कम्पयन्तं वसुन्धराम् ।।३५।।

गर्नुहुने, करोडौं स्फटिक मणिको कान्तिझैं उज्ज्वल कान्तिले ज्योतिर्मय रूपमा देखिनुभएका, कोटि चन्द्रमाको कान्तिले सुहाउनुभएका, सुनले बनेका तारजस्ता सुन्दर केशराशि धारण गर्नुहुने र पहिलो शब्द उच्चारण गर्दा धर्ती नै कँपाउनुहुने बालकरूप भगवान् श्रीगणेशको दर्शन गर्नुभयो ।।३३-३५।।

जनाः स्थानानि मर्यादां तत्यजुस्तस्य शब्दतः।
नीरसा वृक्षनिचयाः सपल्लवचयास्तदा ।।३६।।

जाता गावो बहुक्षीरास्त्रैलोक्यं जहृषे पुनः।
देवदुन्दुभयो नेदुः पुष्पवृष्टिरथापतत् ।।३७।।

दृष्ट्वा बालन्तु गिरिजा हस्ताभ्यां जगृहे मुदा।
स्नापयामास पयसा तप्तेन स्नेहभावतः ।।३८।।

प्रस्नुतौ पाययामास स्तनौ परमहर्षिता ।
शिवोऽपि जहृषे तेन शिशुना परमेण ह ।।३९।।

बालगणेशको प्रथम शब्दको गम्भीरतालाई सहन नसकी भयभीत भएका मानिसहरू अमर्यादित र अस्तव्यस्त भए । त्यस बेला नीरस रूखहरू फलफूल र पालुवाले सम्पन्न भए। गाईका कल्चौडाहरू बढे । तीनै लोकमा हर्ष छायो । स्वर्गका दमाहा बजे । स्वर्गबाट धर्तीमा फूलको वर्षा भयो । सुन्दर बालकलाई सामान्य अवस्थामा आएको देखेर पार्वतीले तिनलाई आफ्नो हातले समाउनुभयो र पानी तताएर प्रेमपूर्वक नुहाइदिनुभयो । अत्यन्त प्रसन्न हुनुभएकी पार्वतीले दूधका धारा बगाइरहेका स्तन चुसाएर बालक श्रीगणेशलाई दूध पिवाउनुभयो । ध्यानदृष्टिले पुत्र जन्म भएको थाहा पाएर भगवान् शिवजी पनि परम प्रसन्न हुनुभयो ।।३६-३९।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे गणेशाविर्भावो नामैकाशीतितमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'श्रीगणेशको मयूरेशावतार' शीर्षकान्वित एकासीऔँ अध्याय पूर्ण भयो ।।८१।।

ॐ

## द्व्यशीतितमोऽध्यायः { ८२ अध्याय }

क उवाच

ततः शिवगणाः शम्भुं वृत्तान्तं तं न्यवेदयन् ।
आश्चर्यं परमं देवं शिवा पुत्रसमन्विता ।।१।।

जाता पुत्रावलोकार्थं ततो याहि निजं स्थलम् ।
एवं गणवचः श्रुत्वा तुतोष गिरिजापतिः।।२।।

आगत्य वीक्ष्य तं बालमद्भुतं शशिसन्निभम् ।
स्फटिकाद्रिनिभं कुन्दधवलं कञ्जलोचनम् ।।३।।

आश्चर्यं परमं लेभे प्रोवाच स वचस्तदा ।

शिव उवाच

नायं बालोऽनादिसिद्धो जराजन्मविवर्जितः।।४।।

लीलाविग्रहवानेष स्वप्रकाशो गुणातिगः।
शुद्धसत्त्वमयः सर्वजीवेशो भुवनेश्वरः।।५।।

मुनिध्येयोऽखिलाधारो ब्रह्मभूतोऽखिलप्रदः।

क उवाच

एवमुक्त्वा कराभ्यां स बालमादत्त शङ्करः।।६।।

लालयित्वा हृदि स्थाप्य सर्वहृत्स्थोऽपि यः सदा।
पुनरूचे च गिरिजां शिवोऽशिवहरो विभुः ।।७।।

परमात्मा गुणातीतः पुत्रतां ते समागतः ।
परानुष्ठानतो देवि ! साक्षाद् दृष्टो विभुस्त्वया ।।८।।

क उवाच

ततो विप्रान् समाहूय पूजयित्वा गणाधिपम् ।
पुण्याहं वाचयित्वा च मातृपूजनपूर्वकम् ।।९।।

कृत्वाऽऽभ्युदयिकं श्राद्धं प्राशयित्वा घृतं मधु ।
अभिमन्त्र्य शिशुं भूमिं गिरिजा तं स्तनं ददौ ।।१०।।

**ब्रह्माजीले भन्नुभयो** – त्यसपछि शिवगण गएर परम देवता शिवजीलाई पार्वतीले छोरा जन्माएको आश्चर्यपूर्ण घटना निवेदन गर्दै भने – 'पार्वतीलाई पुत्र जन्म भएको छ । हजुर पुत्रदर्शन गर्न पाल्नुहोस् । त्यसपछि मात्र आफ्नो धाममा जानुहुनेछ ।' यो समाचार सुनेर पार्वतीपति शङ्कर पनि प्रसन्न हुनुभयो ।।१-२।। पार्वतीका नजिकमा गएर उहाँले चन्द्रमाझैं सुन्दर, स्फटिक मणिको पर्वतजस्तै उज्वल, कुन्दपुष्पझैं गोरो वर्णका, कमलजस्ता सुन्दर आँखाले सुहाएका अद्भुत बालक देखेर अत्यन्त आश्चर्य मान्दै बालकका विषयमा भन्नुभयो ।

**शिवजीले भन्नुभयो** – 'यी बालक बालक होइनन्। यी त अनादिसिद्ध, वृद्धावस्था र जन्मदेखिरहित, आफ्नो मायाले शरीर धारण गर्ने, स्वयं प्रकाश, सत्त्व, तम र रजो गुणदेखि पर रहेका, शुद्ध सत्त्वले शोभायमान, सम्पूर्ण प्राणीहरूका स्वामी, सबै भुवनका अधिपति हुन् ।।३-५।। यी बालक मुनिहरूद्वारा ध्यान गर्न योग्य, सकल ब्रह्माण्डका आधार र भक्तहरूलाई सर्वस्व दिनसक्ने ब्रह्मरूप परमेश्वर हुन् ।

**ब्रह्माजीले भन्नुभयो** – शिवजीले यसरी विशेषता बताएपछि आफ्ना हातले बालक श्रीगणेशलाई समाउनुभयो।।६।। परमात्मा श्रीगणेश सबै प्राणीहरूका हृदयमा टाँसिएकै हुनुहुन्छ तापनि मायाद्वारा बालकरूपमा परिणत हुनु भएकाले स्नेहपूर्वक शिवजीले आफ्नो छातीमा टाँस्नुभयो । सबैका अमङ्गल नाश गर्ने, अन्तर्यामी शिवजीले पार्वतीलाई सम्बोधन गर्दै भन्नुभयो – 'हे पार्वती ! सम्पूर्ण गुणदेखि पर रहनुभएका, सबैका हृदयमा वास गर्नुहुने, सबैको उद्धारका लागि अवतार धारण गर्नुहुने परमात्मा श्रीगणेश आज तिम्रा छोरा भएर आउनु भएको छ । तिमीले प्राणीमात्रको कल्याणमा निरत अन्तर्यामी प्रभुलाई छोराको रूपमा देख्न पाएकी छ्यौ'।।७-८।।

**ब्रह्माजीले भन्नुभयो** – त्यसपछि शिवजीले ब्राह्मणहरूलाई बोलाएर भगवान् श्रीगणेशको पूजा गरी पुण्याहवाचन र मातृकापूजन गर्नुभयो ।।९।। आभ्युदयिक श्राद्ध गरेर बालकलाई घिउ र मह चटाएपछि शुद्ध जलले अभिमन्त्रित गरेर पार्वतीले आफ्नो स्तन चुसाउनुभयो । त्यसपछि गौतम

गौतमादीन् पूजयित्वा ददौ दानान्यनेकश: ।
ततस्ते तदनुज्ञाता नाम प्रोचुर्महर्षय: ।।११।।

अयं ते बालतां यातोऽनादिसिद्धोऽखिलेश्वर:।
निर्माता सर्वलोकानां चराचरगुरोर्गुरु:।।१२।।

मायावी वेदवेदान्ताऽगोचरो मध्यगे रवौ।
अवतीर्ण: सुमुहूर्ते कीर्तिमाविष्करिष्यति।।१३।।

भाद्रशुक्लचतुर्थ्यान्तु शशिवारे च वायुभे ।
सिंहलग्ने पञ्चशुभग्रहयुक्तेऽभवत् सुत:।।१४।।

श्रीमान् पराक्रमयुतोऽद्भुतकर्मा महाबल:।
भविष्यति च लोकानां भक्तानामतिसौख्यद:।।१५।।

एकादशदिने शम्भो ! कुरु नामास्य सुन्दरम् ।

क उवाच

एवमुक्त्वा गता: सर्वे मुनयो निजमन्दिरम् ।।१६।।

हरो बालं विनिक्षिप्य गिरिजाशयने शुभे ।
विसृज्य लोकानखिलान् बहिरायान्मुदान्वित:।।१७।।

तत: शेषो ययौ तत्र फणाच्छायामथाकरोत् ।
नीरजस्कां धराञ्चक्रुर्मेघास्तत्र सुखा ववु: ।।१८।।

मारुतो मालतीगन्धी ननृतुश्चाप्सरोगणा:।
जगुर्गन्धर्वसङ्घाश्च तुष्टुवुश्चारणा विभुम् ।।१९।।

ततो मुनिगणा: सर्वे मृन्मूर्तिं चक्रुरुत्तमाम् ।
मण्डपं शोभनं कृत्वा कदलीपुष्पमण्डितम् ।।२०।।

पुपूजु: परया भक्त्या पद्मासनगता मुदा।
गुणेशेति गुणेशेति जेपु: सर्वे निरन्तरम् ।।२१।।

अहोरात्रोषिता: सर्वे रात्रौ च जागरान्विता:।
यथाशक्ति द्विजान् भोज्य चक्रुस्ते पारणं द्विजा: ।।२२।।

एवं दशदिने विप्रान् भोजयामासुरादरात् ।
गृहे गृहे महोत्साहाँश्चक्रुर्देवस्य तुष्टये ।।२३।।

आदि ऋषिहरूको सम्मान गरी तिनीहरूलाई अनेक थरि दान दिनुभयो । पूजाको अन्तमा भगवान् शङ्करको आज्ञा पाएर महर्षिहरूले भने - 'हे शिवजी ! अनादिसिद्ध, सबैका स्वामी, सम्पूर्ण संसारका रचयिता, स्थावर एवं जङ्गमका अधिपति, सबैका पिता, मायाका स्वामी र वेद एवं वेदान्तद्वारा पनि दर्शन गर्न नसकिने भगवान् श्रीगणेश, सूर्य आकाशको मध्य भागमा शोभायमान हुँदा उत्तम मुहूर्तमा तपाईंका पुत्र बनेर अवतरित हुनुभएको छ। उहाँले ठूलो कीर्ति हुने काम गर्नुहुनेछ।।१०-१३।। भाद्र शुक्ल पक्षको चतुर्थी तिथि, सोमबार, वायुनक्षत्र र सिंहलग्नमा पाँच शुभ ग्रह रहेको अवसर पारेर बालक पैदा हुनुभएको छ । बालक ऐश्वर्यशाली र पराक्रमी हुनुहुनेछ । उहाँका अद्भुत कर्मको सबैले बयान गर्नेछन् । महाबली र सम्पूर्ण प्राणीहरूको उद्धार गर्नुहुने उहाँले आफ्ना भक्तहरूलाई परम आनन्द दिनुहुनेछ । हे शिवजी ! एघारौं दिनका दिन सुन्दर नाम जुराएर बालकको नामकरण गर्नुहोस् ।'

**ब्रह्माजीले** भन्नुभयो- यसरी शिवजीलाई निवेदन गरेर सबै मुनिहरू आ-आफ्नो आश्रमतर्फ गए ।।१४-१६।। शिवजी पनि आफूले हातमा लिएको बालकलाई पार्वती सुतिरहेको बिस्तरामा सुताएर सबैसँग बिदाबादी भई प्रसन्नतापूर्वक पार्वतीको निवासदेखि बाहिर आउनुभयो ।।१७।। त्यसपछि त्यहाँ आइपुगेका शेषनागले आफ्ना फणाहरूको छाता बनाएर श्रीगणेशलाई छाया प्रदान गरे । बादलले पानी बर्साएर पृथ्वीका धूलिकणहरूलाई शान्त तुल्याए। मालती फूलका गन्धले सुगन्धित एवं आनन्ददायक मन्द वायु चारैतिर प्रवाहित भयो। अप्सराहरू नाच्न थाले, गन्धर्वहरू गाउन थाले र चारणहरूले अन्तर्यामी बालक प्रभुको स्तुति गर्न थाले।।१८-१९।। त्यसपछि पद्मासन लगाएका मुनिहरूले श्रीगणेशको पार्थिव मूर्ति बनाएर केराका स्तम्भहरूले सुशोभित सुन्दर मण्डप तयार गरी परम भक्तिपूर्वक प्रभुको पूजा गरे । हे गुणेश र हे श्रीगणेश भन्दै निरन्तर नामजप गर्न लागे ।।२०-२१।। सबै रातभर जाग्राम बसेर उपवास गरे । बिहान तिनीहरूले आफ्नो शक्तिअनुसार ब्राह्मणहरूलाई भोजन गराएर पारायण गरे ।।२२।। यसैगरी दश दिनका दिन पनि ती सबैले ब्राह्मणहरू बोलाई भोजन गराए । त्यस बेला घर-घरमा प्रभुको प्रसन्नताका लागि नर-नारीहरूले ठूलो उत्सव गरे ।।२३।।

एकादशे तु दिवसे सर्वे मुनिगणाः शिवम् ।
आहूता आययुर्नाम कर्तुं शिवसुतस्य ह ।।२४।।

मानितास्तेन ते सम्यक् कारयामासुरुत्तमम् ।
सर्वेशत्वाद् गुणेशेति सर्वविघ्नहरं शुभम् ।।२५।।

शिवोऽपि तान् मुनीन् प्राह सम्यङ् नाम समीरितम् ।
सर्वारम्भेषु पूज्योऽयमिति तस्मै वरं ददौ ।।२६।।

पूजिता मुनयः सर्वे दत्त्वा दानानि सर्वशः।
आज्ञां गृहीत्वा शम्भोस्ते स्वस्वाश्रमपदं ययुः।।२७।।

अन्तर्गृहगता देवी पुपूजे देवताः स्वयम् ।
तदादि सा तिथिः ख्याता गुणेशस्य वरप्रदा ।।२८।।

तस्यां महोत्सवः कार्यश्चतुर्थ्यां स्वशुभाप्तये ।
मृन्मयीं प्रतिमां कृत्वा पूजयेच्च यथाविधि ।।२९।।

कृत्वा मण्डपिकाञ्चारुमुपोष्य जागृयान्निशि।
मोदकापूपलड्डूकैः पायसैः पूजयेद् विभुम् ।।३०।।

अपरस्मिन् दिने विप्रान् भोजयेच्च यथाविधि ।
एकविंशतिसङ्ख्याकान् यथाशक्ति च दक्षिणाम् ।।३१।।

दत्त्वा तेभ्यो नमस्कृत्य पश्चाद् भोजनमाचरेत् ।
यो न पूजयते चास्यां गणेशं मृन्मयं नरः।।३२।।

स विघ्नैरभिभूतः सन् नानारोगैः प्रपीड्यते।
न तस्य दर्शनं कुर्यात् पतितस्येव कर्हिचित् ।।३३।।

जाते तु दर्शने तस्य गणेशनाम संस्मरेत् ।
चतुर्थ्या महिमानं नो न शक्यं सुनिरूपितुम् ।।३४।।

एघारौं दिनका दिन भगवान् शिवजीद्वारा निम्ता गरिएका सबै मुनिहरू त्यहाँ आएर बालकको नामकरण संस्कार गर्ने कर्ममा जुटे । शिवजीले सबै ऋषिहरूको सम्मान गर्नुभयो । नामकरण संस्कार प्रारम्भ भएपछि सबै ऋषिहरूले भने – 'यी बालक सबैका स्वामी हुन्, सत्त्व, रज र तमोगुणका अधिपति हुन् । त्यस कारण यिनको नाम गुणेश राख्नुपर्छ । यो नाम मङ्गलमय र विघ्नविनाशक छ।' शिवजीले भन्नुभयो – 'हे मुनिहरू ! तपाईंहरूले उत्तम नाम राख्नुभएको छ । अब उप्रान्त सबै शुभकर्मको आरम्भमा भगवान् श्रीगणेशको पूजा हुनेछ ।' यसरी शिवजीले वरदान दिई अनेक थरि दान दिएर मुनिहरूको पूजा गर्नुभयो । ती मुनिहरू पनि शिवजीको आज्ञा पाएर आ-आफ्नो आश्रमतर्फ गए ।।२४-२७।। सुत्केरी बस्ने कोठामा रहेकी पार्वतीले आफै पनि देवताहरूको पूजा गर्नुभयो । त्यस दिनदेखि लिएर अहिलेसम्म श्रीगणेशको जन्म भएको चतुर्थी तिथि श्रीगणेशको आराधना गर्दा सफलता प्रदान गर्ने तिथिका रूपमा संसारमा प्रसिद्ध भयो ।।२८।। वास्तवमा सबैले आफ्नो कल्याणका लागि चतुर्थी तिथिमा श्रीगणेशको उत्सव गर्नुपर्दछ । माटाको प्रतिमा बनाएर विधिपूर्वक अन्तर्यामी श्रीगणेशको पूजा गर्नुपर्दछ ।।२९।। त्यस बेला सुन्दर मण्डप तयार गरी त्यहाँ गणेशमूर्तिको स्थापना गर्नुपर्दछ । दिनमा पूजा गरेपछि रातभर जाग्राम बस्नुपर्दछ । लड्डु, मालपुवा, मोहनभोग र खीरजस्ता पदार्थ टक्र्याई प्रभुको पूजा गर्नुपर्दछ ।।३०।। बिहान श्रीगणेशको फेरि पूजा गरी विधिपूर्वक एक्काइस ब्राह्मणहरूलाई भोजन गराउनु पर्दछ र शक्तिअनुसार दक्षिणा दिनुपर्दछ ।।३१।। ब्राह्मणहरूलाई प्रणाम गरी बिदा गरेपछि यजमानले सपरिवार भोजन गर्नुपर्दछ । चतुर्थी तिथिमा जसले पार्थिव श्रीगणेशको मूर्तिमा पूजा गर्दैन त्यसले जीवनमा हरेक कार्यमा विघ्नमात्र अनुभव गर्नुपर्छ र त्यसका शरीरमा अनेक थरि रोग लागिरहन्छन्। श्रीगणेशको पूजा नगर्ने मानिसलाई पतितसरह मानी कहिल्यै हेर्नुहुँदैन । त्यस्ता मानिसहरू संयोगवश भेटिए भने श्रीगणेशको संझना गर्नुपर्दछ। चतुर्थी तिथिको महिमा बताएर सकिँदैन ।।३२-३४।। भगवान्

कर्माणि तु गुणेशस्य यथामति निरूपये ।
गुप्तरूपा: सिन्धुदूता: शङ्करालयसंस्थिता:।।३५।।

तमुदन्तं तु ते गत्वा प्रावदन् सिन्धवे तदा ।
समासीनाय योधैश्च बहुभिर्वेष्टिताय च ।।३६।।

स्थापयित्वाऽप्सरोनृत्यं गानं गन्धर्वसम्भवम् ।

दूता ऊचु
दक्षिणे दण्डकारण्ये त्रिसन्ध्याक्षेत्रसंज्ञिते ।।३७।।

गत्वा तत्र दृष्टवन्तो भगवन्तं शिवाभिधम् ।
अष्टाशीतिसहस्राणां मुनीनामाश्रमान् बहून् ।।३८।।

एकस्मिन् दिवसे बालं शिवा प्रासूत षड्भुजम् ।
लावण्यकोशं त्रैलोक्येऽनुपमं महसोज्ज्वलम् ।।३९।।

दशाहस्सु महोत्साहैर्गतेषु मुनिपुङ्गवा:।
चक्रुर्नाम गुणेशेति तस्य बालस्य शङ्कर:।।४०।।

वयं वादित्रनिर्घोषैर्बधिरा इव तस्थिम ।
यदि हन्तुं गमिष्याम: सप्तकोटिगणास्तदा ।।४१।।

एकैकस्य बलं घोरं पर्वतोन्मूलनक्षमम् ।
निहन्यु: सहसाऽभ्येत्य वृत्तान्तं को निवेदयेत् ।।४२।।

क उवाच
एवं वदत्सु दूतेषु शुश्रुवे व्योमवाक् तदा ।
उत्पन्न: क्वापि ते हन्ता रे सावधानतां व्रज ।।४३।।

सिन्धुरुवाच
वध्यतां वध्यतां कोऽयं ब्रूते दुष्टवचोऽत्र ह।

क उवाच
केचिदुड्डीय पतिता धावयित्वाऽपरे ययु:।।४४।।

तावद् दैत्यो महामूर्च्छां सम्प्राप्त: पतितो भुवि।
चिन्तामग्नो म्लानमुखो निरुत्साहो हतप्रभ:।।४५।।

श्रीगणेशका लीलाहरूका विषयमा म आफ्नो बुद्धिअनुसार बताउनेछु । दण्डकारण्य वरिपरि गुप्तरूपमा घुमिरहेका दैत्यराज सिन्धुका दूतहरूले शङ्कर-पार्वतीलाई छोरा जन्मेको समाचार सिंहासनमा विराजमान, अनेक वीरहरूले घेरिएको, रङ्गमञ्चमा अप्सरा र गन्धर्वको नाचगान हेर्नमा व्यस्त दैत्यराज सिन्धुलाई बताए ।

**दूतहरूले भने** - 'हे महाराज ! दण्डकारण्यअन्तर्गतको त्रिसन्ध्या क्षेत्रमा गएर हामीले भगवान् शिवजीको दर्शन गर्‍यौं। त्यहाँ अठासी हजार ऋषिका आश्रम छन्।।३५-३८।। एक दिनको कुरा हो पार्वतीले ६ हात भएको, अत्यन्त सुन्दर, स्वर्ग, मर्त्य र पातालका कुनै पनि व्यक्तिसँग दाँज्न नसकिने गुण एवं रूपले सम्पन्न अत्यन्त तेजस्वी बालक पैदा गरिन्।।३९।। दश दिनसम्म त्यहाँ उत्सवै उत्सव भयो। एघारौं दिनका दिन मुनिहरूका साथ शिवजीले त्यस बालकको नाम गुणेश राखे। त्यहाँ विचित्र वाद्यघोष भयो । हामी त्यहाँ बहिराजस्ता भएर रहेका थियौं । त्यस बेला हामी यदि बच्चालाई मार्न अगाडि बढ्यौं भने सात करोड शिवगणले आएर हामीलाई मारिदिनेछन् भन्ने डर भयो । शिवगणमध्येमा प्रत्येक गणको बल पर्वतलाई उखेल्न समर्थ थियो । त्यस बेला आक्रमण गर्दा हामी सबै मारिएमा हजुरलाई घटनाको जानकारी कसले दिने भन्ने सोचेर पनि हामीले बालकमाथि आक्रमण गर्न सकेनौं ।।४०-४२।।

**ब्रह्माजीले भन्नुभयो** - दूतहरूले यसो भनिरहेकै समयमा दैत्यराज सिन्धुले आकाशवाणी सुन्यो - 'हे दैत्यराज! तिमीलाई मार्नसक्ने समर्थ पुरुष पैदा भएको छ । अब तिमी सावधान होऊ ।।४३।।'

**सिन्धु दैत्यले भन्यो** - 'आकाशवाणीको रूपमा कसले दुष्ट वचन बोलिरहेको छ ? सेवकहरू ! त्यसलाई मार ।'

**ब्रह्माजीले भन्नुभयो** - दैत्यराज सिन्धुको आज्ञा पाएर केही वीरहरू उडेझैं गरी तीव्र वेगमा चारैतिर हेर्न गए ।।४४।। त्यसै बेला दैत्यराज सिन्धु मूर्च्छित भएर भुइँमा लड्यो । चेतना फर्केपछि पनि त्यो चिन्तित र विवर्ण थियो । त्यसको हृदयमा कुनै उत्साह थिएन । त्यसका शरीरको रङ्ग उडेको थियो । चेतना पाएर त्यस अवस्थामा पुगेको त्यस दैत्यले

उवाच विस्खलद्वाचो मुहूर्तात् प्राप्य चेतनाम् ।
त्रैलोक्यकण्टकस्यापि कण्टकः क उपस्थितः ।।४६।।

कथं हन्याद् गजः सिंहं मशको वाथ वारणम् ।
त्रयस्त्रिंशत्कोटिदेवा निर्जिताः क्षणमात्रतः ।।४७।।

तस्य मे मरणं कस्माज्जायेत व्योमवाङ् मृषा।
ऋताऽस्तु वा गमिष्यामि भक्षितुं तमहं रिपुम्।।४८।।

एवमुक्त्वा क्षणार्धात् स भद्रासनगतोऽभवत् ।
सर्वे वीरास्ततो याताः श्रुत्वा वार्तां तथाविधाम् ।।४९।।

त्वमेव मृत्योर्मृत्युश्च तत्र मृत्युः कथं भवेत्।
इत्यूचुस्ते भवेद् वापि तं वयं घातयामहे ।।५०।।

स्वर्गे भूमौ तले वापि गगने वा वसेद् यदि।
देह्याज्ञां नो गमिष्यामो दैत्याँस्तानब्रवीदथ ।।५१।।

सखीनां सेवकानाञ्च पीत्वा वाक्यामृतं परम् ।
प्रीतोऽहं यान्तु शीघ्रं तु यत्र मे स रिपुर्भवेत् ।।५२।।

अनेकमायया हत्वा रिपुं मम निवेद्यताम् ।

क उवाच

एवामाज्ञां गृहीत्वा ते सङ्ख्यातीता ययुस्ततः ।।५३।।

त्रिसन्ध्याक्षेत्रमासाद्य गुप्तरूपेण चावसन् ।
गौरीसुतं तत्र कुत्र मायया हन्म इत्युत ।।५४।।

लरबराउँदै भन्यो – 'म सम्पूर्ण संसारको काँडो हुँ तर मेरा लागि पनि कुनै काँडो पैदा भएछ । हात्तीले सिंह मार्न सक्दैन, लामखुट्टेले हात्ती मार्न सक्दैन । मैले एक छिनमा तेत्तीस कोटि देवतालाई परास्त गरेको छु । मजस्तो वीरको मृत्यु कोबाट हुन सक्छ? त्यस कारण त्यो आकाशवाणी झुट्टा हो। यदि साँचो हो भने पनि म त्यो शत्रुलाई चपाएर निल्न त्यहाँ जानेछु' ।।४५-४८।। केही बेरपछि सिन्धु सिंहासनमा गएर बस्यो । दैत्यराज सिन्धुका कुरा सुनेर सबै वीरहरू त्यहाँ जम्मा भए ।।४९।। त्यसपछि ती वीरहरूले भने – 'हे महाराज! तपाईं मृत्युका पनि मृत्यु हुनुहुन्छ । तपाईंको मृत्यु कसरी हुनसक्छ ? यदि मृत्यु नै आक्रमण गर्न आयो भने पनि हामीले त्यसलाई सखाप पार्नेछौं। त्यो मृत्यु तपाईंसँग डराएर स्वर्ग, पृथिवी, पाताल र आकाशमध्ये जहाँ बसेको भए भने हामी गएर त्यसलाई मार्छौं, तपाईंले आज्ञा दिनुहोस् ।' दैत्यराजले भन्यो – 'हे वीरहरू ! आफ्ना मित्र र सेवकहरूका वचनामृत पान गरेर म प्रसन्न भएको छु । तिमीहरू जहाँ मेरो शत्रु बसेको छ त्यहाँ जाने काम गर । त्यसलाई छल, कपट इन्द्रजाल र मायामध्ये जुनसुकै प्रयोग गरेर भए पनि मार्ने काम गर । त्यसपछि आएर मलाई आफूले गरेका क्रियाकलापबारे जानकारी दिने काम गर ।'

**ब्रह्माजीले भन्नुभयो –** ती वीरहरू आफ्ना राजाबाट आज्ञा पाएर प्रस्थान गरे ।।५०-५३।। दण्डकारण्यको त्रिसन्ध्याक्षेत्रमा गई गौरीका पुत्र श्रीगणेशलाई जसरी भए पनि र जहाँ रहे पनि मार्नेछौं भन्ने सङ्कल्प गर्दै गुप्तरूपले बसे ।।५४।।

ॐ

**इति श्रीगणेशपुराणे क्रीडाखण्डे गुणेशनामकरणं नाम द्व्यशीतितमोऽध्यायः**

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'मयूरेश्वरको गुणेशनामकरण' शीर्षकान्वित बयासीऔं अध्याय पूर्ण भयो ।।८२।।

ॐ

## त्र्यशीतितमोऽध्याय:　　{ ८३ अध्याय }

क उवाच

शुक्लचन्द्र इव ब्रह्मन् ! ववृधे स दिने दिने ।
ततो हिमालय: प्रायाच्छ्रुत्वा गौरीसुतं शुभम् ।।१।।

अलङ्कारान् समादाय मूल्यरत्नसमन्वितान् ।
अजिरे तं निरीक्ष्यैव धावयित्वा ययौ सुता ।।२।।

आलिलिङ्ग मुदा गौरी बहुकालागतञ्च तम् ।
आनन्दाश्रूणि साऽमुञ्चत् सोऽपि सा तं ततोऽवदत् ।।३।।

गौर्युवाच

कथं निष्ठुरतां यातो वृत्तान्तं मम कर्हिचित् ।
न गृह्णासि न वा स्वीयं प्रेषयस्यपि निर्दय ।।४।।

हिमवानुवाच

सत्यं वदसि गौरि! त्वं कण्ठे प्राणा मम स्थिता:।
अतस्त्वद्दर्शनाकाङ्क्षी प्राप्तोऽहं हरवल्लभे ।।५।।

वत्से ! धेनुमनो यद्वद् तद्वत् त्वयि मनो मम ।

क उवाच

एवमाकर्ण्य तद्वाक्यं सा ददावासनं शुभम् ।।६।।

उपविष्टोऽब्रवीद् वाक्यं पुनर्गिरिवर: सुताम् ।
श्रुतो नारदवाक्येन पुत्रस्ते परमाद्भुत: ।।७।।

ततस्तं द्रष्टुमायात: सर्वविघ्नहरं शुभम् ।

क उवाच

पार्वती बालमादाय पितुरङ्के न्यवेशयत् ।।८।।
सोऽलङ्कारैरलङ्कृत्य महिमानं ततोऽब्रवीत् ।

स उवाच

अयं बालो महामाय: करिष्यति महीमिमाम् ।।९।।

निष्कण्टकां यथा चन्द्र: शीतलां स्वकरैरिमाम् ।
अयं देवगणान् सर्वान् स्वस्थाने स्थापयिष्यति ।।१०।।

**ब्रह्माजीले भन्नुभयो** – बालक श्रीगणेश शुक्लपक्षको चन्द्रमाझैं दिनदिनै बढ्न थाल्नुभयो । एक दिन हिमालय पर्वत आफ्नी छोरी पार्वतीका कोखबाट उत्तम पुत्रले जन्म लिएको सुनेर भेट्न आए ।।१।। हिमालय पर्वत छोरी भेट्न आउँदा मूल्यवान् रत्नजडित अलङ्कार लिएर आएका थिए । आफ्नो घरको आँगनमा पिता हिमालयलाई देख्नासाथ पार्वती दौडेर जानुभयो । उहाँले धेरै पछि आएका आफ्ना पितालाई आलिङ्गन गर्नुभयो । असीमित हर्षका कारण उहाँको हृदय पग्लियो र आँखाबाट आँसुका धारा बग्न थाले । छोरीको त्यो हालत देखेर हिमालयले पनि मन थाम्न सकेनन् र त्यसैगरी आँसुका धारा बगाए । त्यसपछि पार्वतीले हिमालयसँग भन्नुभयो ।।२-३।।

**पार्वतीले भन्नुभयो** – 'हे पिताश्री ! हजुर कति निर्दय हुनुभयो ? किन मेरो समाचार लिन खोज्नुभएन र आफ्नो समाचार पनि दिनुभएन ?' ।।४।।

**हिमालयले भने** – 'हे छोरी ! तिमीले साँचो भन्यौ । तिम्रो विरहका कारण मेरा प्राण घाँटीघाँटी भएका थिए । म तिमीलाई असाध्यै भेट्न चाहन्थें, तर अनुकूल भएन । अहिले म तिम्रो दर्शन गर्न यहाँ आएको छु ।।५।। जसरी गाईको मन बाच्छा-बाच्छीमा गएको हुन्छ त्यसरी मेरो मन पनि तिमीमा गएको छ ।'

**ब्रह्माजीले भन्नुभयो** - पिताका यी कुरा सुनेपछि पार्वतीले आसन टक्र्याउनुभयो ।।६।। आसनमा आसीन भएपछि हिमालयले भने - 'हे छोरी ! मैले नारदमुनिका मुखबाट तिमीलाई अद्‌भुत छोरा पैदा भएको कुरा थाहा पाएँ ।।७।। अहिले सबै प्रकारका विघ्नहरूको नाश गर्न समर्थ, मङ्गलमूर्ति तिम्रो छोरालाई हेर्न आएको छु ।'

**ब्रह्माजीले भन्नुभयो** – हिमालयका कुरा सुनेपछि पार्वतीले आफ्नो छोरा ल्याई आफ्ना पिताको काखमा राखिदिनुभयो ।।८।। हिमालयले पनि आफूले ल्याएका वस्त्र र आभूषणले बालकलाई सिँगारेर आनन्दपूर्वक कुराकानी गरे ।

**हिमालयले भने** – 'हे छोरी ! यी बालक मायाका पनि स्वामी हुन् । चन्द्रमाले आफ्ना किरणद्वारा पृथिवीलाई शीतल तुल्याएझैं यिनले पनि पृथिवीलाई निष्कण्टक र शीतल तुल्याउने

करिष्यन्त्यङ्घ्रिसेवां ते शिशोरस्य मुनीश्वराः।
एतस्य सर्वरूपाणि स्थावराणि चराणि च ।।११।।

अयमेव सदा ध्येयो ब्रह्मादीनां सहस्रदृक् ।
सहस्राङ्घ्रिः सर्वजगत्कारणानाञ्च कारणम् ।।१२।।

सहस्रास्योऽनन्तमूर्तिः समष्टिव्यष्टिरूपवान् ।
त्रैलोक्ये नेदृशो बालो दृष्टः क्वापि शुभाङ्गवान् ।।१३।।

अहं तन्मयतां यातो दृष्ट्वा तत्पादपङ्कजम् ।
यथाऽम्भसि पयः क्षिप्तं याति तन्मयतां क्षणात् ।।१४।।

अस्य यत्नं कुरु शुभे ! निधिरेष पुरातनः ।

क उवाच

मस्तके मुकुटञ्चास्य स्वाङ्गदे भुजयोरपि ।।१५।।

पङ्कजं हृदि श्रुत्योश्च कुण्डले रत्नभूषिते ।
कटिसूत्रं कटौ चाङ्घ्र्योर्महार्हाः क्षुद्रघण्टिकाः ।।१६।।

एवं दत्त्वा भूषणानि नाम चक्रे शुभं गिरिः ।
हेरम्बेति महाविघ्नहरं भक्ताभयप्रदम् ।।१७।।

ततो भुक्त्वा गृहीत्वाज्ञां ययौ स्वस्थानमद्रिराट् ।
एकस्मिन् दिवसे बालश्चिक्रीड निजमन्दिरे ।।१८।।

गृध्रासुरो गृध्ररूपी महाबलपराक्रमः ।
पक्षवातेन यस्याद्रिचयश्चूर्णत्वमीयिवान् ।।१९।।

गण्डशैलाश्च वृक्षाश्च पादाघातेन तस्य च ।
स पक्षच्छायया बालमाच्छाद्य खेऽभ्रमत्तदा ।।२०।।

नयनानि च सर्वेषां पक्षाघातरजःकणैः ।
आच्छादयन् महाशब्दैः श्रोत्रे बधिरतामिते ।।२१।।

छन्। जिनले पदाधिकारबाट च्युत भएका देवताहरूलाई आ-आफ्ना पदमा बहाली गराउनेछन् ।।९-१०।। यी बालकको चरणसेवामा मुनिहरू पनि समर्पित भएर लाग्नेछन् । यी देखिने स्थावर र जङ्गमका दृश्यहरू सबै बालक श्रीगणेशकै स्वरूप हुन् ।।११।। हजार आँखाले हेर्ने, हजार पाउ भएका, सबै जगत्का कारण, कारणका पनि कारण, हजार मुख भएका, अनन्तमूर्ति र समष्टि एवं व्यष्टि स्वरूप यी बालक ब्रह्मा आदि देवताहरूद्वारा पनि ध्यान गर्न योग्य छन् । स्वर्ग, मर्त्य र पातालमा यति सुन्दर र यस्तो मङ्गलमय मूर्ति कुनै बालक मैले देखेको छैन।।१२-१३।। यी बालक श्रीगणेशका चरणकमलको दर्शन पाएर म तन्मय भएको छु । जसरी पानीमा दूध मिसाउँदा तत्कालै एकरूपता हुन्छ त्यसरी नै यी बालक श्रीगणेशका चरणकमलको दर्शन पाएर म पनि गणेशमय भएको छु ।।१४।। तिमीले बालकको सुरक्षाका निमित्त प्रयत्न गर । हे कल्याणी पार्वती ! यी बालक सामान्य बालक होइनन् अपितु प्राचीन निधि हुन् ।'

**ब्रह्माजीले भन्नुभयो** - त्यसपछि हिमालयले श्रीगणेशका मस्तकमा मुकुट र दुवै भुजामा अङ्गद लगाइदिए ।।१५।। तिनले बालकको छातीमा कमलको माला पहिऱ्याए, कानमा रत्नद्वारा अलङ्कृत कुण्डल लगाइदिए, कटिमा कन्धनी र दुवै पाउमा बहुमूल्य घुँघरु बाँधिदिए । यसरी अनेक थरि अलङ्कार प्रदान गरेर तिनले आफ्ना नातिको श्रुतिमनोहर, विघ्ननाशक र भक्तलाई अभय प्रदान गर्न समर्थ हेरम्ब भनी नामकरण गरे।।१६-१७।। नामकरणपछि भोजन गरेर छोरीसँग आज्ञा लिई पर्वतराज हिमालय आफ्नो घामतर्फ लागे । एक दिनको कुरा हो, बालक श्रीगणेश आफ्नो घरमा खेलिरहनु भएको थियो । त्यस बेला गृध्रासुरनामक दैत्यले अत्यन्त बल र पराक्रमले सम्पन्न गिद्धको रूप धारण गऱ्यो र आफ्ना प्वाँखको हावाबाट पर्वतहरूलाई चूर्ण-चूर्ण तुल्याउँदै गणेश भएका ठाउँमा आयो ।।१८-१९।। त्यसले आफ्ना खुट्टाको प्रहारले साना-साना पर्वत र ठूला-ठूला वृक्षहरूलाई पनि भुइँमा लडायो । बालकहरूलाई अपहरण गरेर प्वाँखको छायाले ढाकी गृध्रासुर आकाशमा चक्कर काट्न थाल्यो ।।२०।। गिद्धले चक्कर काट्दा त्यसका प्वाँखबाट निस्केका वायुपुञ्जका कारण उडेको धूलाले सबै मानिसहरूका आँखा ढाकिदियो । गिद्धको ठूलो स्वरबाट सुन्ने मानिसका कान पनि बहिरा भए ।।२१।। जसरी गरुडले

ततश्चक्त्वा तु तं बालं गृहीत्वा गृध्रपुङ्गवः ।
व्योममार्गं गतो दूरं गरुडो भुजगं यथा ।।२२।।

बभ्राम गगने दुष्टोऽजानन् बालपराक्रमम् ।
ततोऽपश्यद् गिरिसुता बालः कुत्र कुतो गतः ।।२३।।

नापश्यच्चत्वरे तन्तु ततः शोकाकुलाऽभवत् ।
केन नीतो मम सुतो दुष्टेन च दुरात्मना ।।२४।।

उपविष्टा ततोऽपश्यद् व्योम्नि गृध्रमुखे सुतम् ।
मूर्च्छिता पतिता भूमौ धाव धावेति चाब्रवीत् ।।२५।।

मम प्राणा गमिष्यन्ति विना पुत्रं सुरेश्वर ! ।
कथं ममोपरि व्योम पतितं शङ्करः कथम् ।।२६।।

नैष्ठुर्यं परमं प्राप्तो मय्येव जगदीश्वरः ।
द्वादशाब्दं तपस्तप्तं निराहारतया मया ।।२७।।

करुणाब्धिः स्वप्रकाशोऽवतीर्णोऽभून्ममालयम् ।
स गतो निधिरूपो मेऽभाग्यायाः पापसञ्चयात् ।।२८।।

गते बाले गतं सर्वं सुखमात्यन्तिकं मम ।

क उवाच

एवं तस्यान्तु शोचन्त्यां शुशुचुस्तत्सखीजनाः ।।२९।।

ततस्ते तत्समाधानञ्चक्रुर्ज्ञानेन युक्तिभिः ।
अनादिनिधने बाले न शोकं कर्तुमर्हसि ।।३०।।

स्वप्रकाशेऽवतीर्णे ते बह्वनुष्ठानयोगतः ।
कुत्र वा मृन्मयी मूर्तिश्चेतनामगमद् वद ।।३१।।

स्थिरा भव क्षणेन त्वं द्रक्ष्यसे स्वसुतं शुभे ! ।
अन्तकस्यान्तको बालः पुनरेष्यति निष्ठया ।।३२।।

सखीजने वदत्येवं तावद् बालः स्वमुष्टिना ।
दधार चञ्चु बलवान् यथा श्वासो न निर्ययौ ।।३३।।

सर्पलाई समातेर आकाशमा पुर्‍याउँछ त्यसैगरी गृध्रासुरले बालकलाई समातेर आकाशमा धेरै माथि पुर्‍यायो ।।२२।। बालकको पराक्रमबाट अपरिचित त्यो दैत्य आकाशमा घुम्न थाल्यो । केही बेरपछि पार्वतीले आफ्नो छोरा गणेशलाई खोज्दा कतै पनि नदेखेर मेरो बालक कहाँ गयो भन्दै चारैतिर हेर्नुभयो, तर ती बालक कहीं पनि देखिएनन् । बालकलाई कतै नदेखेर पार्वती शोकले व्याकुल हुनुभयो । कुन दुष्ट र दुरात्माले मेरा छोराको अपहरण गर्‍यो भनी चिन्तित भएकी पार्वतीले आकाशमा उडिरहेका गिद्धको मुखमा बालकलाई देख्नुभयो र बालकको दुर्दशा देखेर मूर्च्छित भई भुइँमा लड्नुभयो । होशमा आएपछि उहाँले आफ्ना सेवकहरूलाई दौड ! दौड ! मेरा बालकको रक्षा गर भन्नुभयो ।।२३-२५।। त्यसपछि आफ्ना प्राणनाथ शिवजीलाई सम्बोधन गर्दै भन्नुभयो- 'हे प्राणनाथ ! पुत्रविना मेरा प्राण जानेछन्। पुत्रको रक्षा गर्नुहोस् । आज ममाथि आकाशै खस्यो । अब म कहाँ जाऊ ? हे शङ्कर ! हजुर ममाथि किन निष्ठुर हुनुभयो? मैले पुत्र प्राप्तिका लागि निराहार रहेर बाह्र वर्षसम्म तपस्या गरेकी थिएँ । मेरो तपस्याबाट प्रसन्न हुनुभएका करुणासागर भगवान् श्रीगणेश मेरा घरमा पुत्रका रूपमा अवतीर्ण हुनुभएको हो । मेरा निधिसमान बालक श्रीगणेश आज म अभागिनीको पापका कारण मलाई छोडेर जानुभयो)।२६-२८।( हे प्रभु ! बालक गएपछि मेरो सर्वस्व र परम सुख पनि गयो ।'

**ब्रह्माजीले भन्नुभयो-** यसरी पार्वतीले शोक गरिरहँदा उहाँका सखीहरूले पनि शोक गरे, तर तिनीहरूले आफ्नो ज्ञान र युक्तिद्वारा पार्वतीको चिन्ता समाधान गर्दै भने- 'हे पार्वती ! धेरै दिनको तपस्याबाट तपाईंको पुत्रका रूपमा अवतीर्ण हुनुभएका आदि, अन्त्य र मध्यहीन स्वप्रकाश भगवान् श्रीगणेशका विषयमा तपाईंले शोक गर्नु उचित हुँदैन ।।२९-३०।। माटाको मूर्तिले कहाँ चेतना पाउँछ ? तर तपाईंले आफ्नो तपस्याबाट पार्थिव मूर्तिलाई चैतन्यपूर्ण बनाउनुभएको छ। हे कल्याणी ! तपाईं स्थिर हुनुहोस्, केही बेरमा नै तपाईंले आफ्ना पुत्रको दर्शन पाउनुहुनेछ । श्रीगणेश यमराजका पनि काल हुनुहुन्छ । तपाईंको भक्ति देखेर फेरि यहाँ आउनुहुनेछ'।।३१-३२।। सखीहरूले यसरी सम्झाइरहँदा आकाशमा रहनुभएका बालक श्रीगणेशले आफ्नो मुड्कीले गिद्धको मुखको चुच्चो समाउनुभयो । त्यसको श्वास-

श्वासरोधाद् गतासुः स गृध्रस्तेन समन्वितः ।
निपपात महीपृष्ठे वज्राहत इवाचलः ।।३४।।

पतमानो गृध्रदेहो दशयोजनविस्तृतः ।
चूर्णयामास गेहानि तच्चित्रमभवद् भृशम् ।।३५।।

चैत्यवृक्षेषु भग्नेषु ययुः पक्षिगणा दिशः ।
ततो दृष्ट्वा तु तं बालमवदत् स सखीगणः ।।३६।।

अयमक्षतदेहस्तु पतितो गिरिजासुतः ।

क उवाच

श्रुत्वेत्थं वचनं तस्य त्वरिता बालमाददे ।।३७।।

गौरी निधाय हृदये परमानन्दमाप च ।
आश्चर्यं परमं प्राप्य ददौ दानान्यनेकशः ।।३८।।

गतमस्य महारिष्टमग्रे न स्यादिति द्विजाः ।
नमस्कृत्य द्विजान् प्रायान्मन्दिराभ्यन्तरं शिवा ।।३९।।

दशयोजनविस्तारः क्वासुरो बलवत्तरः ।
क्व बालः कोमलतनुर्लघुरूपो जघान तम् ।।४०।।

एतावतो बलमिदमग्रे किं वा करिष्यति ।
अयं लघुर्न मन्तव्यो यथा वह्निकणो दहेत् ।।४१।।

महान्तं काष्ठनिचयं तथाऽनेन हतोऽसुरः ।
इत्युवाच सखीं गौरी स्तनपानं ददौ मुदा ।।४२।।

ततस्तद्देहखण्डानि गणा दूरे निचिक्षिपुः ।
शृणुयादिदमाख्यानं सोऽसुरैर्नाभिभूयते ।।४३।।

प्रश्वास रोकियो र प्राणत्याग गऱ्यो । मरेको त्यो गृध्रासुर बालकका साथमा भुइँमा खस्यो । इन्द्रको वज्रप्रहारबाट पर्वतहरू भुइँमा खसेझैं त्यो दानव पनि भुइँमा खसेको थियो ।।३३-३४।। त्यसको शरीर भुइँमा चालीस कोशसम्म फैलिएको थियो । त्यसले त्यहाँ वरिपरिका सारा घरहरूलाई धूलो-पीठो बनाएको थियो ।।३५।। आफू बसेका पीपल आदि वृक्षहरू भुइँमा लडेपछि चराहरू पनि कराउँदै दसै दिशातिर फैलिएका थिए । बालकलाई देखेर पार्वतीका सँगिनीहरूले भने - 'हे पार्वती ! आकाशबाट भुइँमा खसेका तपाईंका छोराको शरीरमा कुनै चोटपटक लागेको छैन।'

**ब्रह्माजीले भन्नुभयो--** आफ्ना सँगिनीहरूको कुरा सुनेर पार्वतीले आत्तिदै आई बालकलाई समाउनुभयो ।।३६-३७।। उहाँले बालकलाई काखमा राखेर परम आनन्दको अनुभव गर्नुभयो । आकाशबाट भुइँमा खस्दा पनि चोटपटक नलागेका आफ्ना छोरालाई देखेर चकित भई उहाँले ब्राह्मणहरूलाई अनेक दान दिनुभयो ।।३८।। बालकको अरिष्ट गयो, अब यसले सङ्कट भोग्नुपर्दैन भनी ब्राह्मणहरूलाई नमस्कार गरी बालकका साथ घरभित्र प्रवेश गर्नुभयो।।३९।। चालीस कोशसम्म फैलिन सक्ने विशाल शरीर धारण गर्ने बलवान् राक्षस कहाँ ? कोमल र सानो शरीर भएका यी बालक कहाँ? तापनि बालकले भयानक असुरको वध गऱ्यो । अहिले त यस्तो बल छ भने भोलि यसले के नगर्ला ? यस बालकलाई सानो भन्न हुँदैन । आगाको फिलिङ्गो पनि सानै हुन्छ, तर त्यसले सर्वस्वदाह गर्नसक्छ । त्यसरी नै मेरो बालकले पनि महान् असुरको वध गरेको छ । यसरी पार्वतीले आफ्नी सँगिनीलाई भन्नुभयो र आनन्दपूर्वक बालकलाई स्तन चुसाउनुभयो ।।४०-४२।। त्यसपछि शिवगणले चालीस कोशसम्म फैलिएका गृध्रासुरका शरीरका टुक्राहरूलाई बटुलेर धेरै टाढा पुऱ्याई फ्याँकिदिए । जसले श्रीगणेशको यो कथा सुन्दछ त्यसलाई राक्षस, दानव र दैत्यहरूले केही गर्न सक्दैनन् ।।४३।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे गृध्रासुरवधो नाम त्र्यशीतितमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'गृध्रासुरको वध' शीर्षकान्वित त्रियासीऔँ अध्याय पूर्ण भयो ।।८३।।

ॐ

# चतुरशीतितमोऽध्याय: { ८४ अध्याय }

क उवाच

मासे द्वितीये गौरी तं सायमभ्यज्य बालकम् ।
स्थापयामास दोलायां गायति स्म मुदा बहु ।।१।।

तावदाखू समायातौ मायारूपधरौ सुतम् ।
तौ क्षेमकुशलौ दैत्यौ तद्वधकाङ्क्षिणावुभौ ।।२।।

नखदंष्ट्रायुधौ घोरौ मन्दिराभ्यन्तरं गतौ ।
युध्यन्तौ पालनाभ्याशे स्फुरदङ्गरुहौ खलौ ।।३।।

ययोश्चीत्कारशब्देन श्रुतयो बधिरीकृता: ।
पादाघातेन भू: सर्वा कृष्टक्षेत्रसमा कृता ।।४।।

ततो यष्टिं गृहीत्वा सा भीषयामास तावुभौ ।
पलायनपरौ चोभावुपरिष्टाद् गतौ तदा ।।५।।

युध्यन्तौ पतितौ घोरौ बालकोपरि तावुभौ ।
उर:स्थलाभिघातात् स बुबुधे बालकोत्तम: ।।६।।

कृत्वा कर्कशशब्दन्तु सा विभाय तदा शिवा ।
बालभावेन हस्तौ स चालयामास भीतित: ।।७।।

तदाघातादुभौ नष्टजीवितौ पतितावध: ।
वमन्तौ रुधिरं वक्त्राद् दृष्ट्वा भ्रान्ता शिवाऽभवत् ।।८।।

किञ्चिज्जीवितशेषौ तौ बहिर्नीतौ गणैस्तदा ।
मोक्षं जग्मतुराघाताद् गणेशकरसम्भवात् ।।९।।

तद्देहौ पतितौ घोरौ दशयोजनविस्तृतौ ।
कोलाहलो महानासीद् दृष्ट्वा देहौ तथा गतौ ।।१०।।

**ब्रह्माजीले भन्नुभयो** - गणेश जन्मनु भएको दोस्रो महिनामा पार्वतीले एक दिन साँझ बालकका शरीरमा विभिन्न थरिका सुगन्ध लेपन गर्नुभयो र झोलुङ्गामा राखी आनन्दपूर्वक मीठा गीत गाउनुभयो ।।१।। त्यस बेला बालक गणेशको हत्या गर्न चाहने क्षेम र कुशलनामक दुइटा दैत्य इन्द्रजालको प्रयोग गरी मूसाको रूप लिएर त्यहाँ आए । तिनका हातका नङ्ग्राहरू डरलाग्दा थिए । भयङ्कर देखिने ती मूसाका शरीर कुनै जोशले रोमाञ्चित थिए । ती दुवै राक्षसले पार्वतीको घरभित्र पसी बालकलाई सुताएको झोलुङ्गा नजिकै आएर युद्धको कौशल देखाउन थाले ।।२-३।। त्यहाँ तिनले डरलाग्दो चीत्कार गरे । त्यो सुनेर साह्रा मानिसहरूका कान बहिराइँ भएका थिए। तिनीहरूले आफ्नो खुट्टा बजारेर धर्तीलाई जोतेको जमिनजस्तो बनाए ।।४।। आफ्नो घरभित्र पसेर उपद्रव मचाउने दुईवटा मूसा देखेर पार्वतीले हातमा लौरो लिई तर्साउन खोज्नुभयो । उहाँलाई देखेर ती दुवै दगुर्न थाले । दगुर्दा-दगुर्दै आकाशमा उड्न पनि थाले ।।५।। आकाशमै आपसमा युद्ध गरिरहेका ती मूसाहरू क्रमश: तल ओर्लिंदै आएर बालक सुतेको झोलुङ्गामाथि नाच्न थाले । त्यस बेला तिनीहरूको छातीको प्रहार हुँदा सुतिरहेका श्रीगणेश जाग्नुभयो । पार्वतीले आफ्नो बच्चा जागेको र दुइटा मूसाहरू नजिकै युद्ध गरिरहेको देखेर ठूलो र कर्कश स्वरले मूसाहरूलाई तर्साउन खोज्नुभयो। झोलुङ्गामा रहनु भएका श्रीगणेशले पनि बच्चाको सहज स्वभावअनुसार डराएझैं गरी आफ्ना दुवै हात चलाउन थाल्नुभयो ।।६-७।। श्रीगणेशले हात चलाउँदा ती दुवै दैत्यहरूका शरीरमा स्पर्श भयो । स्पर्श हुनासाथ मरणासन्न भएका ती मूसाहरू मुखबाट रगत वमन गर्दै धर्तीमा लडे । तिनको ढुकढुकीमात्र बाँकी रहेको थियो । त्यस बेला शिवजीका गणले तिनलाई लतारेर बाहिर फाले। भगवान् श्रीगणेशको हातको स्पर्शबाट मृत्यु भएको हुँदा मूसाको रूपमा आएका ती दुवै दैत्यले मोक्षगति प्राप्त गरे ।।८-९।। ती दुवै मूसाका शरीर दश योजनसम्म फैलिएका थिए। एउटा सानो बच्चाले हातको स्पर्श गरेर त्यति विशाल दैत्यहरूलाई मारेको देख्दा आश्चर्य मानिरहेका मानिसहरूको

गणानाञ्च सखीनाञ्च पार्वत्या सुमहाँस्तदा ।
विध्वस्ता आश्रमा वृक्षाः पर्वता भुवनानि च ।।११।।

पतद्भ्यां तच्छरीराभ्यां निर्जीवाभ्यां महान्त्यपि ।
छित्त्वा छित्त्वा तु तद्देहौ गणा निन्युर्बहिस्तदा ।।१२।।

पार्वती भयवित्रस्ता बालमादाय सत्वरम् ।
पाययामास स्नेहेन स्तन्यं बालकवत्सला ।।१३।।

ऋषिपत्न्यः समायाताः पार्वतीमूचिरेऽनघाः ।
पुण्यं महत् तु ते गौरि ! येन विघ्नं विनश्यति ।।१४।।

द्विमासिकेन बालेन हतौ दुष्टौ महासुरौ ।
अग्रे त्रिभुवनेऽनेन सदृशो न भविष्यति ।।१५।।

मातः ! राक्षसभूरत्र यत्नः कार्यः शिशाविह ।
नेष्यन्ति राक्षसा गुप्ता असुरा मायिनः परे ।।१६।।

क उवाच

एवमुक्त्वा गता देव्यो गणास्तान्तु समूचिरे ।
अयन्तु ते शिवे ! बालो हनिष्यति दिने दिने ।।१७।।

अस्माभिस्तु कियत्कालं बहिष्कार्या हतासुराः ।
ततस्तु मुनयो जग्मू रक्षाञ्चक्रुरथार्भके ।।१८।।

ददौ दानानि तेभ्यः सा विससर्ज प्रणम्य तान् ।
ततस्तृतीये मासे तु स्वस्वकार्यरते जने ।
मध्याह्ने पार्वती बालं गृहीत्वा मञ्चकेऽस्वपत् ।।१९।।

तत्परिचारिकाः सुप्ताः काश्चित् कार्यान्तरे स्थिताः ।
चक्रुः काश्चिद् द्वारि वार्तामेतस्मिन्नन्तरेऽसुरः ।।२०।।

क्रूराख्यश्चोतुवेषेण विवेश गिरिजालयम् ।
वञ्चयित्वा लोकदृष्टिं श्वेव दुष्टो महाबलः ।।२१।।

स निरीक्ष्य शिवां सुप्तां जहर्षे मनसा तदा ।
यावन्निद्राति गिरिजा तावन्नेष्ये शिशुं त्वहम् ।।२२।।

ठूलो कोलाहल भयो ।।१०।। दैत्यका शरीर आकाशबाट भुइँमा खस्दा शिवगण, पार्वतीका सङ्गिनी, पार्वती र तपस्वीहरूका आश्रमका साथै पर्वत एवं भुवनहरू कम्पित भएका थिए। वृक्ष र पर्वतहरू भुइँमा लडेका थिए। शिवगणले ती विशालकाय दैत्यका शरीरलाई टुक्रा टुक्रा पारेर फ्याँकिदिए। यसरी आक्रमण भइरहँदा डराएकी पार्वतीले बालकलाई काखमा राखी माया देखाउँदै स्तन चुसाउनुभयो ।।११-१३।। त्यहाँ आएका निष्पाप ऋषि-पत्नीहरूले पार्वतीसँग भने - 'हे गौरी ! तपाइँको ठूलो पुण्य रहेछ, यस्ता विकट विघ्नहरू आउँछन् तर भगवान्‌का कृपाले ती सबै नष्ट हुन्छन् ।।१४।। जम्मा दुई महिना उमेर भएका बालकले त्यस्ता दुष्ट दानवहरूको हत्या गरे । यी बालक ठूला हुँदा त स्वर्ग, मर्त्य र पातालमा यिनको समानता गर्ने कुनै पराक्रमी हुनेछैन ।।१५।। यहाँ राक्षसहरू धेरै चलखेल गर्दछन् । त्यसो हुँदा तपाइँले असल माता भएर बालकको रक्षाका लागि प्रयत्न गरिरहनु पर्दछ । यहाँ लुकेर बस्ने राक्षस, असुर र अरू मायावी दानवहरूले बालकलाई कुनै दिन फेरि लैजान सक्छन् ।।१६।।

**ब्रह्माजीले भन्नुभयो -** यसरी कुरा गरेर ऋषिपत्नीहरू गए । त्यसपछि शिवगणले पार्वतीलाई भने- 'हे पार्वती ! तपाइँका छोराले दिनदिनै दैत्यहरूलाई मार्नेछन्, हामीले कहिलेसम्म मरेका लाश तानेर बसिरहने ?' त्यसपछि मुनिहरू पनि त्यहाँ गएर बालकको रक्षाको विधान गरे ।।१७-१८।। तिनलाई पार्वतीले दान दिई प्रणाम गरेर बिदा गर्नुभयो । बालक जन्मेको तेस्रो महिना लाग्यो । पार्वतीका घरमा मानिसहरू आ-आफ्ना काममा व्यस्त थिए। मध्याह्नको बेला थियो। पार्वती बालकलाई काखमा लिएर पलङ्गमा शयन गर्नुभयो ।।१९।। पार्वतीका सेविकाहरू पनि केही सुते, केही कार्यान्तरमा व्यस्त भए र केही ढोकानिर बसेर कुराकानी गरिरहेका थिए । यसै बीचमा एउटा क्रूर नाम गरेको दानव बिरालाको रूप लिएर पार्वतीको घरमा पस्यो । मानिसहरूको आँखा छलेर कुकुरसमान स्वभाव भएको त्यो दुष्ट पार्वतीलाई सुतिरहेकी देखेर अत्यन्त खुसी भयो। त्यसले मनमनै भन्यो- 'जबसम्म यी पार्वती निदाइरहन्छिन् त्यसै बीचमा म यो बालकलाई चोरेर लैजानेछु ।।२०-२२।।' यस्तो विचार

...ध्वान्मञ्चकारूढो बालमादाय मस्तके ।
...ञ्चकाध: पपाताशु चुक्रोश बालकस्तदा ।।२३।।

...त: प्रवुद्धा गिरिजा बिडालास्यगतं शिशुम् ।
...स्य धाव धावेति प्राक्रोशद् भयविह्वला ।।२४।।

...त्य नयने मूर्च्छामगाद् दु:खेन भीतित: ।
...ण्ठे दशति यावत् स तावद् बालो दधार तम् ।।२५।।

...योरुभयोर्दोर्भ्यां स्वभावात् पादताडनात् ।
...तयच्छिरोदेशे मञ्चकाधो महासुरम् ।।२६।।

... भिन्नहृदयोऽधावद् बहिर्गत्वा पपात ह ।
...वातेन वृक्षात् तु पक्वं किञ्चित्फलं यथा ।।२७।।

दुर्गन्धं रुधिरं तस्य पतितं धरणीतले ।
आच्छादयन्नासिकां सा गिरिजा शोकविह्वला ।।२८।।

आदाय तस्मै प्रादात् सा स्तनपानं शिशोस्तदा ।
आगता बालशब्देन सर्वास्ता: परिचारिका: ।।२९।।

स्पृशन्ति स्म तदङ्गानि प्रत्येकं कौतुकान्विता: ।
अजरामरतामस्य निश्चित्य मनसा तु ता: ।।३०।।

स तु दीर्घो बिडालोऽभूत् तदा द्वादशयोजनम् ।
कियत्यश्चूर्णिता: सख्य: कियत्य: परिचारिका: ।।३१।।

गणाश्चैव समायाता ओतुं दृष्ट्वा तथाविधम् ।
आश्चर्यं परमञ्चक्रुर्बालकस्य पराक्रमे ।।३२।।

क्व दैत्यो मायिको दुष्ट: क्व बालचरणाहति: ।
इन्द्रादीनामवध्या ये हन्यन्तेऽनेन लीलया ।।३३।।

इत्यनुज्ञां गृहीत्वा ते गणा याता निजं पदम् ।
केचिच्च बलिनो दैत्यमाकृष्य तत्यजुर्बहि: ।।३४।।

कटिदेशे गृहीत्वैनं साऽविशन्निजमन्दिरम् ।
ततश्चतुर्थे मासे तु मुनिपत्न्य: समागता: ।।३५।।

गरेर त्यसले शीघ्रतापूर्वक पलङमा चढेर बालकलाई टाउकामा राखी हिंड्न लाग्दा संयोगवश त्यो पलङबाट भुइँमा खस्यो । त्यसै बेला बालक श्रीगणेश जाग्नुभयो र रुन थाल्नुभयो । बालक रोएको सुनेर पार्वती पनि जाग्नुभयो । उहाँले बिरालाको मुखमा आफ्नो बालकलाई देखेर डराई लौरो लिएर झम्ट, पीट, मार मेरो बालकलाई बिरालाले लैजान लाग्यो भनी कराउनु भयो ।।२३-२४।। त्यसपछि बालकलाई बिरालाले मुखले समातेको दृश्य सहन नसकी उहाँ दु:खले मूर्च्छामा पर्नुभयो। बिरालाले आफ्नो घाँटीमा चिथोर्न लागिरहेको बेला श्रीगणेशले त्यसका कानमा समाउनुभयो र खुट्टाले प्रहार गरेर शिरको बलले भुइँमा पलङमुनि लडाउनुभयो ।।२५-२६।। त्यसको छातीमा ठूलो प्रहार गरिएको थियो । लरखराउँदै त्यो दौडियो र घरबाहिर गएर हुरी लाग्दा रूखबाट पाकेका फल भुइँमा खसेझैं खस्यो। त्यसपछि बिरालाको शरीरबाट दुर्गन्धमय रगत बगी पृथिवीमा छरियो । रगतको दुर्गन्धका कारण आफ्नो नाक छोप्दै शोकविह्वल पार्वतीले बालकलाई समातेर दूध पियाउनुभयो । बालक रोएको सुनेर घरका परिचारिकाहरू त्यहाँ आइपुगे ।।२७-२९।। ती सबैले आश्चर्य-चकित भएर श्रीगणेशका अङ्ग-अङ्गमा छोइरहेका थिए । तिनीहरूले मनमनै यी बालक गणेश अजर, अमर भगवान्‌कै स्वरूप हुन् भनिरहेका थिए । लामो आकारको र बाह्र योजनसम्म फैलिएको बिरालाको लाश भुइँमा खस्दा पार्वतीका केही सँगिनी र सेविकाहरू घाइते भए ।।३०-३१।। केही बेरपछि शिवगण पनि त्यहाँ आइपुगे। त्यति ठूलो आकारको बिरालाको लाश देखेर तिनीहरूले परम आश्चर्य माने र बालकको पराक्रम देखेर दङ्ग परे ।।३२।। कहाँ यो मायालाई खेलाउने विशाल आकारको दैत्य ? कहाँ यी साना तीन महिने बालकको चरणको प्रहार ? यस्तो पनि हुँदो रहेछ । इन्द्र आदि देवताहरूले पनि जसको वध गर्न सक्दैनन् ती दानवहरूलाई यिनले सजिलै मारिदिए ।।३३।। यसरी आफ्ना भाव प्रकाशन गरी आज्ञा लिएर ती गणहरू आफ्नो ठाउँतर्फ गए। केही गणहरूले मिलेर दैत्यको लाशलाई तानी बाहिर लगेर फ्याँकि ।।३४।। पार्वती पनि बालकलाई काखमा राखी आफ्नो कोठाभित्र पस्नुभयो । बालक जन्मेको चौथो महिना लागेपछि बालकको दर्शन गर्न मुनिका पत्नीहरू त्यहाँ आए ।।३५।।

नानासौभाग्यद्रव्याणि गृहीत्वोत्तरगे रवौ ।
अबालाश्च सबालाश्च पार्वत्या मन्दिरं शुभम् ।।३६।।

तासामासनसत्कारान् ददौ दाक्षायणी तदा ।
नमस्करोति ता नारीः कटौ बालं प्रगृह्य च ।।३७।।

परस्परं समर्चन्त्यो हरिद्राकुङ्कुमादिभिः ।
भूमौ संस्थाप्य बालानि गतिमन्त्यगतीनि च ।।३८।।

पार्वतीयस्ततस्तेषु क्रीडते स्मापि बालकः ।
तेन सर्वे शुशुभिरे शशिनोडुगणो यथा ।।३९।।

दृष्ट्वा ता मुनिपत्न्यस्तामूचुर्गिरिसुतामिति ।
धन्याऽसि गौरि ! पुत्रेण शिवदत्तेन भास्वता ।।४०।।

तव बालस्य सान्निध्याद् भासन्ते नोऽपि बालकाः ।
निधिसङ्गेन हेमत्वं लोहेनापि समाप्यते ।।४१।।

एवं कौतुकयुक्तास्ता आनर्चुश्च परस्परम् ।
हरिद्राभिः कुङ्कुमेक्षुखण्डचन्दनगृञ्जकैः ।।४२।।

तिलैर्गुडैस्तालपत्रैर्नानापरिमलैरपि ।
काश्चिदङ्गे हरिद्राञ्च मुखेषु च लिलिम्पिरे ।।४३।।

एतस्मिन्नन्तरे दैत्यो नाम्ना बालासुरो महान् ।
बालरूपी समवयास्तन्मध्ये क्रीडितुं ययौ ।।४४।।

चिक्रीड पार्वतीयेन युध्यन्निव विनोदतः ।
यथा सिंहेन क्रोष्टा तु महिषो वा गजेन च ।।४५।।

कण्ठेन कण्ठं सङ्घृष्य पेततुर्भुवि दारुणौ ।
मस्तके चरणाभ्यां सोऽहनद् दुष्टो गजाननम् ।।४६।।

त्यस बेला सूर्यनारायण उत्तरायणमा हुनुहुन्थ्यो । अत्यन्त पवित्र समय थियो । ती ऋषिपत्नीहरू सौभाग्यका सामग्रीहरू लिएर आएका थिए । तिनमा केही युवती, केही वृद्धा र केही किशोरीहरू पनि थिए । केही बालकरहित थिए भने केही बालकसहित पनि थिए ।।३६।। आफ्नो घरमा आएका ती नारीहरूलाई पार्वतीले आसन दिएर सत्कार गर्नुभयो। पार्वतीले बालकलाई काखमा राखेर ती सबैलाई नमस्कार पनि गर्नुभयो। ऋषिपत्नीहरू पार्वतीको सम्मान गरिरहेका थिए भने पार्वती पनि ती सबैको सम्मान गर्दै हुनुहुन्थ्यो । ती ऋषिपत्नीहरूले आफ्ना साना-साना हिंड्न नसक्ने र हिंड्नसक्ने बच्चा-बच्चीहरूलाई भुइँमा राखेर पार्वतीसँग मीठो भलाकुसारी गरिरहेका थिए । ऋषिका बालबच्चाहरूसँग पार्वतीका पुत्र भगवान् श्रीगणेश खेल्दै हुनुहुन्थ्यो । आफ्नो माझमा पार्वतीका पुत्रलाई पाएर ती ऋषिका बालबालिकाहरू चन्द्रमाको साथ पाएर तारा सुहाएझैं सुहाएका थिए ।।३७-३९।। बालकको दर्शन पाएर प्रसन्न भएका ऋषिपत्नीहरूले पार्वतीलाई भने - 'हे गौरी ! हजुर धन्य हुनुहुन्छ । यस्ता सुन्दर र पवित्र पुत्र तपाईंको काखमा खेलिरहेका छन् । शिवजीका कृपाले तपाईंले यस्ता पुत्रको प्राप्ति गर्नुभयो । यी तपाईंका पुत्र तेजले जाज्वल्यमान छन् । तपाईंका बालकको सामीप्य पाएर हाम्रा बालबालिका पनि अत्यन्त देदीप्यमान भएका छन् । पारसमणिको स्पर्श पाउँदा फलामले सुवर्णको रूप पाएझैं भएको छ' ।।४०-४१।। यसरी कौतूहलपूर्वक कुरा गर्दै ती नारीहरूले बेसार, कुंकुम, उँखुको टुक्रा, चन्दन, गाजर, तिल, गुड, तालपत्र र नानाथरि सुगन्धित पदार्थ टक्र्याएर पार्वतीको पूजा गरे । कसै-कसैले त पार्वतीका अङ्ग र मुखमा पनि बेसार दलिदिएका थिए ।।४२-४३।। यसैबीचमा बालासुरनामक महान् दैत्य बालकको रूप लिएर ती ऋषिपुत्र र गणेशकै उमेरको बनी तिनीहरूका बीचमा खेल्न आइपुग्यो। त्यो गणेशसँग विनोदपूर्वक युद्ध गरेझैं गरी खेल्न थाल्यो । सिंहसँग स्याल खेलेझैं, हात्तीसँग राँगो खेलेझैं श्रीगणेश पनि त्यस दानवसँग घाँटीमा घाँटी जोडेर खेल्नुभयो । खेल्दाखेल्दै त्यो बालासुर र भगवान् गणेश भुइँमा लडे । यही मौका पाएर त्यसले आफ्ना खुट्टाहरूले गणेशको निधारमा प्रहार गर्‍यो ।।४४-४६।। उहाँका

कच्चादानाय हस्ताभ्यां विचकर्ष बलादमुम् ।
स्वयञ्च गर्जते दुष्टो वृद्धः क्रोष्टा यथा निशि ।।४७।।

दृष्ट्वा तथाविधौ तौ सा गिरिजा प्राह ताः स्त्रियः ।
कस्यर्षेर्दृढबालोऽयं ताडयित्वा शिशुं मम ।।४८।।

क्रन्दनेऽसौ खर इव प्रहरे प्रहरे खलः ।
अर्भकाणां स्वभावोऽयमित्युपेक्षितवत्यसौ ।।४९।।

तौ तु भूमिगतौ बालौ लुण्ठतः स्मानुवत्सलौ ।
धृत्वा परस्परं केशानाकर्षन्तौ च सर्वशः ।।५०।।

हसन्तौ हासयन्तौ च बालकाँश्च मुनिस्त्रियः ।
जानन्नपि महादैत्यं खेलति स्म विनायकः ।।५१।।

ततो बालासुरो दुष्टो हस्ताभ्यां बलवत्तरम् ।
जीवग्राहं कण्ठदेशे दधार गणनायकम् ।।५२।।

तथा तं सोऽपि जग्राह रुद्धश्वासोऽसुरोऽभवत् ।
विह्वलं दैत्यपुत्रं तं दृष्ट्वा दुश्चित्ततां स्त्रियः ।।५३।।

ययुश्च चुक्रुशुर्बालो निहतोऽनेन निश्चितम् ।
धावमाना ययुः काश्चिन्नाशकन्मोचितुं हि तौ ।।५४।।

स्त्रियश्च पुरुषाः सर्वे ततस्तामम्बिकां शुभाम् ।
ऊचुर्विमोचयैनं त्वं मुनिपुत्रो मरिष्यति ।।५५।।

ततः सा पार्वती बालं मुञ्च मुञ्चेति साऽब्रवीत् ।
अस्मिन् मृते शपिष्यन्ति मुनयो नस्तपोन्विताः ।।५६।।

जीवदानात् परं पुण्यं नास्ति ब्रह्माण्डगोलके ।
गमिष्यति महाशक्तिस्तव तेषान्तु शापतः ।।५७।।

क उवाच

एवं यावत् प्रार्थयते गिरिजा तावदेव हि ।
नेत्रद्वारेण तत्प्राणा गता बुद्बुदवत्क्षणात् ।।५८।।

ददृशुस्तं ततः सर्वे दशयोजनमायतम् ।
करालवक्त्रं पतितञ्चूर्णयित्वा महाद्रुमान् ।।५९।।

केशका रौं समातेर बलपूर्वक तान्न थाल्यो । त्यस बेला रिसाएर गर्जन गर्ने त्यो बालासुर रातमा कराउने बूढो स्यालझैं देखिन्थ्यो ।।४७।। ती बालकहरूको यो अवस्था देखेर पार्वतीले ऋषिपत्नीहरूलाई भन्नुभयो- 'यो बालक मलाई मन परेन, कुन ऋषिको छोरा होला? यसलाई त्यस्तो उपद्रव गर्न दिनुभएन। यो त मेरो बच्चालाई पिटेर गधाको स्वरझैं कठोर स्वरमा चिच्याइरहेको छ ।' तर बालकहरूको यो हठ हो भन्ने संझी पार्वतीले ती दुबैको युद्धलाई उपेक्षा गर्नुभयो । ती दुबै बालक भुइँमा लडिबुडी गरिरहेका थिए। एकले अर्काका केश तानिरहेका थिए । त्यहाँ रहेका बालकगण र नर-नारीहरूलाई हँसाउने काम पनि गरिरहेका थिए । यो दैत्य ममाथि प्रहार गर्न आएको छ, यसले मेरो ज्यान लिन चाहन्छ भनी जान्दाजान्दै पनि भगवान् श्रीगणेश त्यस दैत्यसँग खेल्दै हुनुहुन्थ्यो।।४८-५१।। केही बेरपछि दुष्ट बालासुरले प्राणै लिने गरी आफ्ना हातले गणेशको घाँटी निमोठ्यो। भगवान्ले त्यसको रहस्य बुझेर त्यसको घाँटीमा प्राण लिने गरी समाउनुहुँदा त्यसको सास रोकियो । दैत्यपुत्र बालासुरलाई व्याकुल देखेर त्यहाँ रहेका ऋषिपत्नीहरू खिन्न भई बालक गणेशले निश्चय नै यस बालकलाई मार्ने भए भन्दै चिच्याउन थाले । त्यो सुनेर केही दगुर्दै छुट्याउन भनी गए तर तिनले छुट्याउन सकेनन् ।।५२-५४।। त्यसपछि नारी र पुरुषहरूले मिलेर प्रार्थनाको मुद्रामा पार्वतीलाई भने- 'भगवती ! हजुरले आफ्नो छोरालाई छुटाउनुहोस् अन्यथा यो कुनै मुनिको छोरा मर्नेछ ।' त्यो सुनेर पार्वतीले गणेशका सामु गएर भन्नुभयो - 'बाबु ! छोडिद्यौ, छोडिद्यौ । कथञ्चित् यो बालक मर्‍यो भने तपस्वी ऋषिहरूले हामीलाई सराप दिनेछन्। हे बाबु! संसारमा प्राणदानभन्दा ठूलो अरू दान हुँदैन । तिमीले यस बालकको हत्या गर्‍यौ भने ऋषिहरूको सरापबाट तिम्रो शक्ति समाप्त हुनेछ' ।।५५-५७।।

**ब्रह्माजीले भन्नुभयो** - यसरी पार्वतीले प्रार्थना गर्नुहुँदा बालासुरको आँखाबाट प्राण निस्क्यो र त्यसको शरीर भुइँमा ढल्यो । ती सबै ऋषि र ऋषिपत्नीहरूले दश योजन भूभागमा फैलिएको त्यसको लाश देखे । त्यसको मुख बाङ्गो थियो र शरीर पर्वतकै आकारको थियो । त्यो ढल्दा ठूला-ठूला रूख

ततः स्त्रियो ययुर्भीता बालमादाय सत्वराः ।
वृकवृन्दं हि दृष्ट्वैव धेनवोऽजा यथा भयात् ।।६०।।

गिरिजापि स्वकं गृह्य भ्रामयित्वा सुतं मृदम् ।
दत्त्वा स्तनं कारयित्वा शान्तिकं द्विजपुङ्गवैः ।।६१।।

ददौ दानानि तेभ्यः सा जगृहे आशिषो बहु ।
न जाने आसुरीं मायां कियन्तो यान्ति नाशितुम् ।।६२।।

ततस्ते विलयं यान्ति मम बालान्महाखलाः ।
ईश्वरे सानुकूले कः पीडितुं क्षमते जनम् ।।६३।।

क उवाच

एवमाकर्ण्य तद्वाक्यं मुनिपत्न्यो ययुश्च ते ।
गणास्तं दूरतः क्षिप्त्वा स्नात्वा स्वं धाम लेभिरे ।।६४।।

पनि धूलो-पीठो भएका थिए । यो दृश्य देखेर त्यहाँ बसेका सबै नारीहरू ब्वाँसो देखेर गाईहरू डराएझैं डराई आफ्नो बालक समातेर घरतर्फ लागे ।।५८-६०।। पार्वतीले पनि श्रीगणेशलाई काखमा लिई तिनका शिरमा पवित्र माटो छर्कनुभयो । त्यसपछि स्तनपान गराएर ब्राह्मणहरूलाई बोलाई स्वस्ति -शान्ति गराउनुभयो । ब्राह्मणहरूलाई दान दिएर तिनीहरूबाट धेरै आशीर्वाद लिएपछि पार्वतीले भन्नुभयो- 'असुरहरूको माया जान्न सकिंदैन । अझ कति यहाँ मर्न आउने हुन् ।।६१-६२।। ती दुष्टहरू मेरो बालकलाई मार्न भनी तम्सिंदै आउँछन् र आफै तुरुन्त मर्दछन् । ईश्वर अनुकूल हुनुभएसम्म मानिसलाई कसैले पनि केही गर्न सक्दैन ।।६३।।

**ब्रह्माजीले भन्नुभयो** - पार्वतीका यी कुरा सुनेर मुनिपत्नीहरू गए। शिवगण पनि बालासुरको लाशलाई धेरै टाढा लगेर फ्याँकिपछि स्नान गरेर आ-आफ्ना धामतर्फ गए ।।६४।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे विडालासुरबालासुरवधो नाम चतुरशीतितमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'विडालासुर र बालासुरको वध' शीर्षकान्वित चौरासीऔं अध्याय पूर्ण भयो ।।८४।।

ॐ

## पञ्चाशीतितमोध्यायः { ८५ अध्याय }

क उवाच

श्रुत्वा मुनिमुखात् पुत्रं गिरिजाया महाबलम् ।
पञ्चमे मासि सम्प्राप्ते मरीचिर्वीक्षितुं ययौ ।।१।।

भूतभव्यभविष्यज्ञः समलोष्टाश्मकाञ्चनः ।
वेदशास्त्रार्थतत्त्वज्ञो न्यस्तस्वपरविभ्रमः ।।२।।

संहारे रक्षणे सृष्टौ मनसा जगतः क्षमः ।
तं दृष्ट्वा पादयोस्तस्य सखीभिः पतिता सह ।।३।।

उपवेश्यासने पादौ क्षालयामास भक्तितः ।
तज्जलं पावनं पीत्वा सिषेचान्तर्गृहं मुदा ।।४।।

उपचारैः षोडशभिः पुपूजेश्वरभावना ।
उवाच पार्वती तुष्टाऽलभ्यं दृष्टं पदं हि ते ।।५।।

मुनिरुवाच

अहमात्ममना देवि ! न व्रजामि हि कुत्रचित् ।
अकस्माद् ध्यानविषयस्तव पुत्रो बभूव मे ।।६।।

तस्य ते दर्शनकाङ्क्षी शिवस्याप्यहमागतः ।

क उवाच

एवमाकर्ण्य सा वाक्यं तस्यर्षेस्तनयं स्वकम् ।।७।।

अतिप्रीतमना गौरी तस्याङ्के सन्न्यवेशत् ।
ऊचे सा तं महाभाग्यं फलितं दर्शनात् तव ।।८।।

पुण्यञ्च परमं प्राप्तं शुभमग्रे भविष्यति ।

मुनिरुवाच

गौरि ! तेऽयं सुतो ब्रह्मस्वरूपो भासते मम ।।९।।

षट्चक्रभेदनरता योगनिष्ठा महर्षयः ।
वायुभक्षा उपासन्ते यं ते सोऽयं तवात्मजः ।।१०।।

**ब्रह्माजीले भन्नुभयो** – मुनिहरूका मुखबाट पार्वतीका बलवान् पराक्रमी छोरा श्रीगणेशका अद्‌भुत लीला सुनेर पाँच महिना लाग्दा मरीचि ऋषि बालकको दर्शन गर्न आए।।१।। भूत, वर्तमान र भविष्य कालका ज्ञाता, सुन र ढुंगामा समान दृष्टि राख्न समर्थ, त्यागी, वेद र शास्त्रका अर्थ र रहस्यका वेत्ता, आफ्नो र पराइ भन्ने भावनादेखि पर रहेका, आफ्नो मनबाट जगत्‌को सृष्टि, रक्षा र संहार गर्न समर्थ ती ऋषिलाई देखेर पार्वती आफ्ना सँगिनीहरूका साथ उनको पाउमा पर्नुभयो ।।२-३।। मरीचि ऋषिलाई आसनमा बसाएर पार्वतीले भक्तिपूर्वक तिनका पाउ पखाल्नुभयो । पाउ पखालेको पवित्र जलपान गरी बाँकी रहेको जलले आनन्दपूर्वक घरभित्र र बाहिर पनि अभिषेक गर्नुभयो । अतिथिहरूमा ईश्वरको भावना राख्नुहुने पार्वतीले सोह्र प्रकारका उपचारहरूद्वारा मरीचि ऋषिको पूजा गर्नुभयो। त्यसपछि उहाँले हात जोडेर भन्नुभयो - 'हे मुनिवर ! सामान्य व्यक्तिले दर्शन गर्न नपाउने हजुरका दुर्लभ चरणकमलको दर्शन पाएँ ।।४-५।।

**मरीचिले भने**- 'म अन्तर्मुखी भएर साधनामा लागिरहन्छु। आफ्नो आश्रमको साधनास्थल छाडेर कतै जान मन लाग्दैन । एक दिन म ध्यानमा लागिरहँदा हजुरका बालक पुत्र मेरो ध्यानमा आइपुगे । मेरो मनमा अचानक तपाईंका बालकपुत्रको र भगवान् शिवजीको दर्शन गर्ने उत्कण्ठा जागृत हुँदा म यहाँ आइपुगें' ।।६।।

**ब्रह्माजीले भन्नुभयो** – मुनिका यी कुरा सुनेर पार्वतीले आफ्ना बालकलाई खुसी हुँदै तिनको काखमा राखिदिनुभयो। त्यसपछि पार्वतीले भन्नुभयो - 'हे महाभाग्यशाली ऋषि ! हजुरको दर्शन पाएर मेरो पुण्य फलित भयो । अब लाग्छ, मेरा आगामी दिन मङ्गलमय हुनेछन् ।'

**मरीचिले भने**- 'हे गौरी ! हजुरका यी छोरालाई मैले ब्रह्मरूप नै ठानेको छु ।।७-९।। स्वाधिष्ठान आदि चक्रहरूको भेदन गर्न समर्थ, निरन्तर योगमा आस्था राख्ने र वायुपान गरेर शरीर धारण गर्ने महर्षिहरूले जसको उपासना गर्दछन् ती परब्रह्म परमात्मा नै हजुरका पुत्रका रूपमा आउनुभएको छ ।।१०।। यी

गुणत्रयविभेदेन त्रितनुस्त्रिक्रियाकरः ।
यत्सत्तयाऽथ शेषोऽपि वहते मस्तके भुवम् ।।११।।

अणुरूपः स्थूलरूपः सप्तविंशतितत्त्वकृत् ।
चेतनाचेतनं विश्वं यद्रूपं सर्वकर्मकृत् ।।१२।।

युगे दशभुजः पूर्वे सिंहारूढो विनायकः ।
द्वितीये षड्भुजो बर्हिवाहनः शशिसन्निभः ।।१३।।

मयूरेश इति ख्यातो नानादैत्यनिवर्हणः ।
तृतीये तु युगे देवो रक्तवर्णश्चतुर्भुजः ।।१४।।

गजानन इति ख्यातो धूम्रवर्णः कलौ युगे ।
धूमकेतुरिति ख्यातो द्विभुजः सर्वदैत्यहा ।।१५।।

एतस्य रक्षणं गौरि ! दैत्येभ्यः कुरु सर्वदा ।

गौर्युवाच

एषोऽतिचपलो बालो दैत्यान् हन्ति बहूनपि ।।१६।।

अग्रे किं कर्म कर्तेति न जाने मुनिसत्तम! ।
दैत्या नानाविधा दुष्टाः साधुदेवद्रुहः खलाः ।
अतोऽस्य कण्ठे किञ्चित् त्वं रक्षार्थं बद्धुमर्हसि ।।१७।।

मुनिरुवाच

ध्यायेत् सिंहगतं विनायकममुं दिग्बाहुमाद्ये युगे
त्रेतायान्तु मयूरवाहनमिमं षड्बाहुकं सिद्धिदम् ।
द्वापारे तु गजाननं युगभुजं रक्ताङ्गरागं विभुं
तुर्ये तु द्विभुजं सिताङ्गरुचिरं सर्वार्थदं सर्वदा ।।१८।।

ब्रह्मरूप बालक नै सत्त्वगुण, रजोगुण र तमोगुणलाई भेदन गरेर ब्रह्मा, विष्णु र शिवजीका रूपमा प्रकट हुनुहुन्छ । त्यसपछि संसारको सृष्टि, संहार र पालन गर्नुहुन्छ । यहाँकै शक्ति र सामर्थ्य पाएर शेषनागले पनि आफ्नो शिरमा भूगोललाई धारण गर्दछन् ।।११। यी परमात्मरूप बालक कहिले अणु परिमाणका बन्नुहुन्छ र कहिले ब्रह्माण्डकै रूपमा विशाल आकृतिका देखिनुहुन्छ । यहाँले नै सत्ताइस प्रकारका तत्त्वहरूको निर्माण गर्नुभएको हो। चेतन र अचेतन तत्त्वले परिपूर्ण यो विश्व यहाँकै स्वरूप हो । यी ब्रह्मरूप बालकले नै संसारका सम्पूर्ण कर्म गर्नुहुन्छ।।१२।। यी गणेशरूप बालक सत्ययुगमा दशवटा हात धारण गर्ने र सिंहमा सवार हुने विनायकका रूपमा प्रसिद्ध हुनुभयो। यी बालकले त्रेतायुगमा छवटा हात धारण गर्ने, मयूरमा सवार हुने र चन्द्रमाझैं निर्मल कान्ति धारण गर्ने मयूरेश्वरका रूपमा विख्यात भएर अनेक थरि दैत्यहरूको संहार गर्नुभयो। द्वापरयुगमा यी ब्रह्मरूप बालक रातो वर्ण धारण गर्ने र चतुर्बाहुद्वारा शोभित गजाननका रूपमा प्रसिद्ध हुनुभयो। त्यसपछि अन्तिम कलियुगमा सम्पूर्ण दैत्यहरूको विनाश गर्ने र दुईवटा हात धारण गर्ने धूम्रकेतुका रूपमा विख्यात हुनुहुनेछ ।।१३-१५।। हे गौरी ! हजुरले यी परब्रह्मरूप बालकलाई दैत्यहरूबाट जोगाउनुहोस्।'

**पार्वतीले भन्नुभयो** - 'यी बालक साह्रै चञ्चल छन्। यो क्षेत्रमा दैत्यहरूको घना बस्ती छ र तिनीहरूले सबैलाई मार्ने काम गर्दछन् । यी बालकको रक्षा कसरी गर्ने हो ? के गरूँ ? कसरी गरूँ ? मैले बुझ्न सकेकी छैन । यहाँका यी दैत्यहरू दुष्ट छन् र साधु एवं देवतासँग द्रोह गर्दछन् तथा अत्यन्त नीच स्वभावका छन्। त्यस कारण हे मुनिवर! यी बालकको रक्षाका निमित्त यिनको घाँटीमा कुनै यन्त्र बाँधिदिनुहोस्' ।।१६-१७।। (त्यसपछि मरीचिले पार्वतीको आशय बुभेर ती बालकको रक्षाका लागि भगवान् गणेशको ध्यान र रक्षास्तोत्र पाठ गरे ।)

**मरीचिले भने** - 'भक्तले सत्ययुगमा सिंहमा सवार हुनुहुने, दश भुजाले सुहाउनु भएका दिगम्बर भगवान् श्रीगणेशको ध्यान गर्नुपर्दछ । त्रेतायुगमा छवटा भुजा धारण गर्ने, सिद्धिप्रदायक

विनायकः शिखां पातु परमात्मा परात्परः ।
अतिसुन्दरकायस्तु मस्तकं सुमहोत्कटः ।।१९।।

ललाटं काश्यपः पातु भ्रूयुगन्तु महोदरः ।
नयने भालचन्द्रस्तु गजास्यस्त्वोष्ठपल्लवौ ।।२०।।

जिह्वां पातु गणक्रीडश्चिबुकं गिरिजासुतः ।
वाचं विनायकः पातु दन्तान् रक्षतु दुर्मुखः ।।२१।।

श्रवणौ पाशपाणिस्तु नासिकां चिन्तितार्थदः ।
गणेशस्तु मुखं कण्ठं पातु देवो गणञ्जयः ।।२२।।

स्कन्धौ पातु गजस्कन्धः स्तनौ विघ्नविनाशनः ।
हृदयं गणनाथस्तु हेरम्बो जठरं महान् ।।२३।।

धराधरः पातु पार्श्वे पृष्ठं विघ्नहरः शुभः ।
लिङ्गं गुह्यं सदा पातु वक्रतुण्डो महाबलः ।।२४।।

गणक्रीडो जानुजङ्घे ऊरू मङ्गलमूर्तिमान् ।
एकदन्तो महावुद्धिः पादौ गुल्फौ सदाऽवतु ।।२५।।

क्षिप्रप्रसादनो वाहू पाणी आशाप्रपूरकः ।
अङ्गुलीश्च नखान् पातु पद्महस्तोऽरिनाशनः ।।२६।।

सर्वाङ्गानि मयूरेशो विश्वव्यापी सदाऽवतु ।
अनुक्तमपि यत् स्थानं धूम्रकेतुः सदाऽवतु ।।२७।।

र मयूरमा सवार हुनुभएका मयूरेश्वर भगवान्को ध्यान गर्नुपर्दछ। द्वापरयुगमा चारवटा भुजा धारण गर्नुहुने, रातो वर्णले सुहाउनु भएका, सबैका घटघटमा अन्तर्यामी भएर रहनुहुने भगवान् गजाननको ध्यान गर्नुपर्दछ । यसैगरी कलियुगमा दुईवटा हात धारण गर्नुहुने, गोरो वर्णले सुहाउनु भएका र भक्तलाई सम्पूर्ण पदार्थ प्रदान गर्नुहुने भगवान् श्रीगणेशको ध्यान गर्नुपर्दछ ।।१८।। (त्यसपछि तल लेखिएअनुसार भगवान्को रक्षास्तोत्र पाठ गर्नुपर्दछ ।) परमात्मा परब्रह्म विनायक भगवान्ले शिखाको रक्षा गरून् । अत्यन्त सुन्दर शरीर धारण गर्ने महोत्कटनामक भगवान्ले मस्तकको रक्षा गरून् । कश्यपपुत्रका रूपमा पैदा हुने काश्यप गणेशले निधारको रक्षा गरून् । भालचन्द्रनामक गणेशले आँखाहरूको रक्षा गरून्। हात्तीको जस्तो अनुहारले सुहाएका गजानन गणेशले दुबै ओठको रक्षा गरून्।।१९-२०।। आफ्ना गणहरूका साथ खेल्न रुचाउने भगवान् गणेशले जिब्राको रक्षा गरून् । पार्वतीका पुत्रका रूपमा पैदा हुने गणेशले चिउँडाको रक्षा गरून् । विनायकनामक गणेशले वाणीको रक्षा गरून् । दुर्मुखनामक गणेशले दाँतहरूको रक्षा गरून् ।।२१।। हातमा पाश धारण गर्ने पाशहस्त नामक गणेशले कानहरूको रक्षा गरून् । भक्तले चिताएको कामनालाई परिपूर्ण तुल्याउने गणेशले नाकको रक्षा गरून् । गणञ्जयनामक गणेशले मुख एवं घाँटीको रक्षा गरून् ।।२२। गजस्कन्धनामक गणेशले काँधहरूको रक्षा गरून् । विघ्नहरूको विनाश गर्ने विघ्नविनाशक गणेशले स्तनहरूको रक्षा गरून् । गणहरूका स्वामीका रूपमा विचरण गर्ने गणेशले हृदयको रक्षा गरून्। हेरम्बनामक गणेशले पेटको रक्षा गरून्। धराधरनामक गणेशले पार्श्वभागको रक्षा गरून्।।२३।। विघ्नहरनामक मङ्गलमूर्ति गणेशले पिठ्यूँको रक्षा गरून् । महाबली वक्रतुण्डनामक गणेशले सधैं मूत्रेन्द्रिय र मलेन्द्रियको रक्षा गरून् ।।२४।। गणक्रीडनामक गणेशले घुँडा र जाँघको रक्षा गरून् । मङ्गलमूर्तिनामक गणेशले तिघ्राको रक्षा गरून्। महाबुद्धि एकदन्तनामक गणेशले दुबै पाउ र गोलीगाँठाहरूको रक्षा गरून् ।।२५।। सबैको आशा परिपूर्ण तुल्याउने क्षिप्रप्रसादन-नामक गणेशले दुबै हात र खुट्टाको रक्षा गरून् । शत्रुनाशक पद्महस्तनामक गणेशले औंला र नङहरूको रक्षा गरून् ।।२६।।

आमोदस्त्वग्रतः पातु प्रमोदः पृष्ठतोऽवतु ।

प्राच्यां रक्षतु बुद्धीश आग्नेय्यां सिद्धिदायकः ।।२८।।

दक्षिणस्यामुमापुत्रो नैर्ऋत्यान्तु गणेश्वरः ।

प्रतीच्यां विघ्नहर्ताऽव्याद् वायव्यां गजकर्णकः ।।२९।।

कौबेर्य्यां निधिपः पायादीशान्यामीशनन्दनः ।

दिवाऽव्यादेकदन्तस्तु रात्रौ सन्ध्यासु विघ्नहृत् ।।३०।।

राक्षसासुरवेतालग्रहभूतपिशाचतः ।

पाशाङ्कुशधरः पातु रजः सत्त्वं तमः स्मृतिम् ।।३१।।

ज्ञानं धर्मञ्च लक्ष्मीञ्च लज्जां कीर्तिं दयां कुलम् ।

वपुर्धनञ्च धान्यञ्च गृहान् दारान् सुतान् सखीन् ।।३२।।

सर्वायुधधरः पौत्रान् मयूरेशोऽवतात् सदा ।

कपिलोऽजाविकं पातु गवाश्वं विकटोऽवतु ।।३३।।

भूर्जपत्रे लिखित्वेदं यः कण्ठे धारयेत् सुधीः ।

न भयं जायते तस्य यक्षरक्षःपिशाचतः ।।३४।।

त्रिसन्ध्यं जपते यस्तु वज्रसारतनुर्भवेत् ।

यात्राकाले पठेद् यस्तु निर्विघ्नेन फलं लभेत् ।।३५।।

युद्धकाले पठेद् यस्तु विजयं प्राप्नुयाद् ध्रुवम् ।

मारणोच्चाटनाकर्षस्तम्भमोहनकर्मणि ।।३६।।

सप्तवारं पठेद् यस्तु दिनानामेकविंशतिम् ।

तत् तत् फलमवाप्नोति साधको नात्र संशयः ।।३७।।

विश्वव्यापी भएर रहने मयूरेश गणेशले सबै अङ्गहरूको रक्षा गरून्। जुन स्थानको चर्चा गरिएको छैन ती स्थानको धूमकेतुनामक गणेशले रक्षा गरून् ।।२७।। मेरा अगाडि आमोद गणेशले रक्षा गरून् र पछाडि प्रमोदनामक गणेशले रक्षा गरून्। पूर्व दिशामा बुद्धीशनामक गणेशले रक्षा गरून् र आग्नेय दिशामा सिद्धिदायक गणेशले रक्षा गरून् ।।२८।। मेरो दक्षिण दिशामा उमापुत्र गणेशले रक्षा गरून् र नैर्ऋत्य दिशामा गणेश्वरले रक्षा गरून् । पश्चिम दिशामा विघ्नहर्ता गणेशले रक्षा गरून् र वायव्य दिशामा गजकर्ण गणेशले रक्षा गरून् ।।२९।। मेरो उत्तर दिशामा निधिहरूका स्वामी गणेसले रक्षा गरून् र ऐशान्य दिशामा शिवपुत्र गणेशले रक्षा गरून् । एकदन्त गणेशले दिनमा रक्षा गरून् र विघ्नहर्ता गणेशले सन्ध्याकाल एवं रात्रिमा रक्षा गरून् ।।३०।। पाश र अङ्कुश धारण गर्ने गणेशले राक्षस, असुर, बेताल, ग्रह, भूत र पिशाचहरूबाट मेरो रक्षा गरून् । ती एकदन्त गणेशले नै रजोगुण, सत्वगुण एवं तमोगुण, स्मृति, शक्ति, ज्ञान, धर्म, लक्ष्मी, लज्जा, कीर्ति, दया, कुल, शरीर, धन-धान्य, घर, पत्नी, पुत्र र मित्रहरूको रक्षा गरून्।।३१-३२।। सबै प्रकारका आयुधहरू धारण गर्ने भगवान् मयूरेशले मेरा छोरा-नाति र अन्य सन्तानको रक्षा गरून् । कपिलनामक गणेशले भेँडा-बाख्राको रक्षा गरून् । विकटनामक गणेशले गाई-घोडाको रक्षा गरून् ।।३३।।' हे पार्वती यो रक्षास्तोत्र मैले तपाईँलाई बताएँ । जुन मानिसले भोजपत्रमा यो स्तोत्र लेखेर आफ्नो घाँटीमा धारण गर्दछ त्यसलाई राक्षस, यक्ष र पिशाचबाट डर हुँदैन ।।३४।। जसले बिहान, दिउँसो र सायँकालमा यस स्तोत्रको पाठ गर्दछ त्यसको शरीर वज्रजस्तै कठोर हुन्छ । जुन मानिसले यात्राकालमा यस स्तोत्रको पाठ गर्दछ त्यसले निर्विघ्नरूपमा आफ्नो कार्य सम्पन्न गर्दछ ।।३५।। जुन योद्धाले युद्धकालमा यो रक्षास्तोत्र पाठ गर्दछ त्यसले निश्चित रूपमा विजय प्राप्त गर्दछ । जुन साधकले मारण, उच्चाटन, आकर्षण, स्तम्भन र मोहन यी कर्महरूमा एक्काइस दिनसम्म दिनको सातपटक यो स्तोत्र पाठ गर्दछ त्यसले ती ती कार्यहरूमा सफलता प्राप्त गर्दछ, यसमा कुनै सन्देह छैन ।।३६-३७।।

एकविंशतिवारञ्च पठेत् तावद् दिनानि य: ।
कारागृहगतं सद्यो राज्ञा वध्यञ्च मोचयेत् ।।३८।।

राजदर्शनवेलायां पठेदेतत् त्रिवारत: ।
स राजानं वशं नीत्वा प्रकृतिञ्च सभां जयेत् ।।३९।।

इदं गणेशकवचं मुद्‌गलेन समीरितम् ।
कश्यपाय च तेनाऽथ माण्डव्याय महर्षये ।।४०।।

मह्यं स प्राह कृपया कवचं सर्वसिद्धिदम् ।
न देयं भक्तिहीनाय देयं श्रद्धावते शुभम् ।
सर्वरक्षाकरं सर्वमन:कामप्रपूरकम् ।।४१।।

अनेनास्य कृता रक्षा न बाधाऽस्य भवेत् क्वचित् ।
राक्षसासुरवेतालदैत्यदानवसम्भवा ।।४२।

कुनै मानिस कारागारमा बन्दी भएको छ भने त्यसले आफ्नो मुक्तिका लागि आफू कारागारमा रहुञ्जेल दिनको एक्काइस पटक यस स्तोत्रको पाठ गर्दछ भने त्यसलाई राजा अथवा शासकले मार्दैनन् र मृत्युदण्डबाट पनि जोगाउँछन् । जसले राजाको दर्शन गर्ने प्रसङ्गमा तीनपटक यो स्तोत्र पाठ गर्दछ त्यसले राजालाई आफ्नो वशमा तुल्याई मन्त्री र राजसभालाई पनि वशवर्ती बनाउँछ ।।३८-३९।। कश्यप ऋषिले यस गणेशकवचको उपदेश गर्नुभएको हो । कश्यप ऋषिले मुद्‌गल ऋषिलाई, मुद्‌गलले माण्डव्य ऋषिलाई र माण्डव्यले म मरीचि ऋषिलाई उपदेश दिनुभएको हो । यो कवच सर्वसिद्धिदायक छ। भक्तिहीन मानिसलाई यसको उपदेश गर्नु हुँदैन । श्रद्धालु भक्तलाई मात्र यसको उपदेश गर्नुपर्दछ । यो स्तोत्रले सबै प्रकारबाट रक्षा गर्दछ र सबै प्रकारका मनका कामना पूर्ण गराउँछ । यसको पाठ गर्नाले राक्षस, असुर, बेताल, दैत्य र दानवहरूबाट कुनै कार्यमा बाधा आइपर्दैन ।।४०-४२।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे गणेशकवचं नाम पञ्चाशीतितमोऽध्याय:

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'श्रीगणेशकवचद्वारा बालगणेशको रक्षा' शीर्षकान्वित पचासीऔँ अध्याय पूर्ण भयो ।।८५।।

ॐ

## षडशीतितमोऽध्यायः　　{ ८६ अध्याय }

क उवाच

ततोऽस्याङ्कात् सुतं गौरी नमस्कृत्य समाददे ।
आज्ञां गृहीत्वा प्रायात् स्वं मन्दिरं भृशहर्षिता ।।१।।

सोऽप्यनुज्ञां ततो गृह्य शिवं नत्वाश्रमं ययौ ।
ततो गौरी चकाराऽस्य सुमुहूर्ते शुभे दिने ।।२।।

गौतमादीन् समाहूय ब्राह्मणानुपवेश्य च ।
द्विजेभ्यो नमयाञ्चक्रे सा प्रणम्य स्वयञ्च तान् ।।३।।

सर्वे देवगणास्तत्र नानोपायनपाणयः ।
आययुस्तं गणाश्चापि गन्धर्वाप्सरसस्तथा ।।४।।

उवाच गौरी तान् विप्रानुपवेशनमस्य ह ।
विचार्य सर्वमुनिभिः कुर्वन्तु द्विजपुङ्गवाः ।।५।।

त ऊचुर्मुनयः सर्वे गुरुवारस्त्रयोदशी ।
पौष्णं नक्षत्रमद्यास्ति तस्मात् कार्यो महोत्सवः ।।६।।

ततो गृत्समदः शीघ्रं नानारत्नचयं भुवि ।
निधाय च चकाराशु चतुष्कं रत्ननिर्मितम् ।।७।।

गणेशपूजनं कृत्वा पुण्याहवाचनं तथा ।
दिव्यवस्त्रावृते तस्मिन्नुपवेश्य शिवासुतम् ।।८।।

नीराजयामास च तं पतिवत्स्त्रीभिरादरात् ।
रत्नप्रभाजालगतं नानालङ्कारदीपितम् ।।९।।

उपायनानि ते सर्वे शिवाभ्यां तत्सुताय च ।
वाद्यत्सु दिव्यवाद्येषु प्रददुर्भक्तितत्पराः ।।१०।।

साऽपूजयत् ततो विप्रान् रत्नवस्त्रादिकाञ्चनैः ।
आशीर्वादाक्षताँस्तस्मिँश्चिक्षेप सकलार्पितान् ।।११।।

ब्रह्माजीले भन्नुभयो- त्यसपछि भगवती पार्वती मरीचिका काखबाट आफ्ना पुत्र गणेशलाई लिएर उहाँको आज्ञा प्राप्त गरी अत्यन्त हर्षका साथ आफ्नो धामभित्र प्रवेश गर्नुभयो ।।१।। मरीचि ऋषि पनि पार्वतीबाट आज्ञा पाएर शिवजीलाई प्रणाम गरी आश्रमतर्फ गए । एकदिन पार्वतीले उत्तम मुहूर्त र उत्तम दिनमा गौतम आदि ब्राह्मणहरूलाई बोलाई बालकलाई बसालेर उपवेशन संस्कार सम्पन्न गराई ब्राह्मणहरूलाई नमस्कार गर्न लगाउनुभयो।।२-३।। आफूले पनि आएका ऋषि र ब्राह्मणहरूलाई नमस्कार गर्नुभयो । त्यो उपवेशन संस्कार भव्यताका साथ सम्पन्न भएको थियो । त्यस बेला देवताहरू आ-आफ्ना हातमा भेटी र उपहार लिएर आएका थिए । शिवगण, गन्धर्व र अप्सराहरू पनि त्यहाँ दर्शनका लागि आएका थिए । आएका ब्राह्मणहरूसँग पार्वतीले भन्नुभयो - 'आज गणेशको उपवेशन संस्कारको दिन हो । त्यस कारण सबै मुनिहरूले विचारपूर्वक बालकको संस्कार सम्पन्न गराउनुहोस्'।।४-५।। त्यो सुनेर मुनिहरूले भने - 'आज बृहस्पतिवार, त्रयोदशी तिथि र रेवती नक्षत्रको योग परेको छ । त्यस कारण उपवेशन संस्कारको उत्सव मनाउनु पर्दछ ।।६।। यस्तो निश्चय गरेपछि गृत्समद ऋषिले अनेक थरि रत्नहरू ल्याई तुरुन्तै रत्नबाट बनेको चौकी तयार गर्नुभयो।।७।। गणेशको पूजा गरियो र पुण्याहवाचन पनि । दिव्यवस्त्रहरूले सिंगारिएको त्यस चौकोमा पार्वतीले आफ्ना पुत्र गणेशलाई राख्नुभयो र सधवा नारीहरूद्वारा अनेक थरि अलङ्कारले सुहाएका, रत्न एवं मणिको प्रभाले नुहाएका ती बालकको आरती गर्न लगाउनुभयो । आएका सबै मानिसहरूले शिव, पार्वती र उहाँका सुपुत्र गणेशलाई अनेक थरि उपहारहरू टक्र्याए । त्यहाँ दिव्य बाजाहरू बजिरहेका थिए र आएका मानिसहरू भक्तिपूर्वक शिवदम्पती र गणेशको दर्शन गरिरहेका थिए।।८-१०।। पार्वतीले पनि रत्न, वस्त्र र सुवर्ण दिएर ती सबैको सम्मान गर्नुभयो । सबैले दिएका भेटी र पूजाका सामानहरू र आशीर्वादका अक्षताहरूले गणेशको पूजा गराउनुभयो । त्यसपछि पार्वतीले कन्यासहित आएका मुनिपत्नीहरूको पनि पूजा गर्नुभयो । ती सबै मुनिपत्नीहरूले

भवानी पूजयामास मुनिपत्नीः सकन्यकाः ।
ता ऊचुर्गिरिजे ! धन्या त्वदन्या नास्ति कुत्रचित् ।।१२।।

एतादृशः सुतो वापि सर्वलक्षणमण्डितः ।

क उवाच

एवं वदत्सु सर्वेषु स्त्रीजनेषु महाखलः ।।१३।।

व्योमासुरो व्योमकर्णो नानामायाविशारदः ।
न बले सदृशस्तस्य कोऽपि त्रिभुवनेऽभवत् ।।१४।।

स तु द्वारि स्थितश्चूतं नानाशाखासमन्वितम् ।
अभेद्यं वारणशतैः कल्पान्तमारुतैरपि ।।१५।।

प्रविवेश तदा व्योमो मायया स तदन्तरम् ।
यथा दृष्टिवशाद् भूतं विशते दुष्टचेष्टिते ।।१६।।

दोलयामास तं वृक्षं कल्पान्ते मारुतो यथा ।
द्रुमपातभयात् सर्वे मुनयश्च समागताः ।।१७।।

भीताः प्रोचुर्विना वायुं कम्पते किं महाद्रुमः ।
तावत् कटकटाशब्दं शुश्रुवुर्वृक्षसम्भवम् ।।१८।।

स्त्रियो गणाश्च सर्वे ते चक्रिरे तु पलायनम् ।
विस्मृत्य बालकं भ्रान्ता गिरिजापि पलायिता ।।१९।।

एतस्मिन्नन्तरे वृक्षो निपपातार्भके तदा ।
हस्ताभ्यां निहतस्तेन शतचूर्णोऽपतद् भुवि ।।२०।।

यथा घननिपातेन क्रमुकं दृषदि स्थितम् ।
भ्रमन्ति स्म तदा व्योम्नि तच्छाखाः पल्लवान्विताः ।।२१।।

ऋषीणामाश्रमाः केचिद् भग्नाः शाखानिपाततः ।
पलायिते जने पेतुः काश्चिच्छाखाः सपल्लवाः ।।२२।।

पार्वतीलाई भने - हे हिमालयकी पुत्री ! यस संसारमा हजुरभन्दा धन्य अरू कुनै नारी छैनन् ।।११-१२।। हजुरका सबै लक्षणले सम्पन्न र अनुपम सौन्दर्यले युक्त छोरासमान अरूका छोरा देखिएका छैनन्।

**ब्रह्माजीले भन्नुभयो** - यसरी उपवेशन संस्कारमा आएका सबै थरिका अभ्यागत र नारीहरूले यसरी कुरा गरिरहेकै गरिरहँदा अत्यन्त दुष्ट, अनेक थरि माया खेलाउन सिपालु र आकाशझैं विशाल कान भएको व्योमासुर त्यहाँ आइपुग्यो । वास्तवमा स्वर्ग, मर्त्य र पातालमा व्योमासुरसमान बलवान् कोही पनि थिएन।।१३-१४।। त्यसले आउनासाथ भगवती पार्वतीको घरबाहिर ठूला-ठूला हाँगाहरूले झुम्म परेको विशाल आँपको वृक्ष देख्यो । त्यस वृक्षलाई सैकडौं हात्तीले पनि भेदन गर्न सक्दैनथे । प्रलयकालका उनन्चास वायुले पनि त्यस वृक्षलाई हल्लाउन सक्दैनथे ।।१५।। जसरी दुष्ट चेष्टा भएको मानिसमा राक्षसहरूको प्रवेश हुन्छ त्यसैगरी त्यस वृक्षमा व्योमासुरको प्रवेश भयो ।।१६।। त्यसले वृक्षभित्र गएर कल्पान्त वायुले संसार हल्लाएझैं त्यो वृक्ष हल्लाउन थाल्यो। अब रूख ढल्ने हो कि भन्ने डरले सारा मुनिहरू बाहिर आए । तिनीहरूले डराएर भने - हावा लागेको छैन तर थाम्नै नसकिने गरी यो महावृक्ष हल्लिरहेको छ। मुनिहरूले यसो भनिरहेकै बेला सबैले वृक्ष ढल्दा पैदा हुने कट्‌कट् शब्द सुने ।।१७-१८।। शिवगण र नारीहरू डरले भाग्न थाले । के हो भनेर डराएकी पार्वती पनि बालकलाई बिर्सेर ज्यान जोगाउन भाग्न थाल्नुभयो ।।१९।। यसै बीचमा त्यो वृक्ष बालकमाथि ढल्यो । तर बालक श्रीगणेशले आफ्ना दुइटा सुकुमार हात लगाएर त्यो विशाल वृक्षलाई छेकिदिनुभयो र बालकको स्पर्शबाट त्यो रूख सय टुक्रा भएर भुइँमा खस्यो। जसरी ढुङ्गामाथि राखिएको सुपारीलाई घनले हान्दा टुक्रा टुक्रा हुन्छ त्यस्तै त्यो रूख पनि टुक्रिएर भुइँमा फैलिएको थियो । त्यस बेला त्यस रूखका पातसहितका हाँगाहरू आकाशमा उछिट्टिएका थिए ।।२०-२१।। उछिट्टिएका ती रूखका हाँगाहरूबाट ऋषिका आश्रम छिन्नभिन्न भए । भागिरहेका मानिसहरूमाथि केही शाखाहरू लाग्न जाँदा ती मानिसहरू घाइते भएका थिए। त्यसै बेला व्योमासुरनामक दुष्ट पनि गणेशको स्पर्शबाट निष्प्राण भएर भुइँमा खस्यो । त्यसको खुला मुखबाट सैकडौं रगतका धारा बगिरहेका थिए। व्योमासुर

ततो व्योमासुरो दुष्टो गतासुर्निपपात ह ।
व्यादायास्यं वमन् रक्तं शतधा तेन सोऽभवत् ।।२३।।

आययुस्ते ततः सर्वे स्त्रियश्च बालकं तदा ।
ददृशुस्ते यथा पूर्वमुपविष्टं निराकुलम् ।।२४।।

सुमेरुनिश्चलं स्वस्थं ततः सर्वे विसिस्मिरे ।
पञ्चमासेन बालेन महाबलपराक्रमः ।।२५।।

लीलया हस्ततो दैत्यः स वृक्षः शतधा कृतः ।
हाहाकाररवा गौरी धावति स्म निजं सुतम् ।।२६।।

मुनयस्तामथोचुस्ते हतदैत्यः सुतस्तवः ।
सा ददर्श ततो बालं हिमवत्पर्वतोपमम् ।।२७।।

उत्थाय कटिदेशे तं धृत्वा स्तन्यं ददौ मुदा ।
मरीचिवाक्यं सस्मार प्रशशंस महेश्वरम् ।।२८।।

यमीश्वरोऽवति सदा तं हन्तुं यः समीहते ।
स एव विलयं याति पतङ्ग इव दीपगः ।।२९।।

मुनयो योषितः सर्वा ययुः स्वं स्वं निवेशनम् ।
ततो गणा ययुः केचिदक्षतं वीक्ष्य तत्सुतम् ।।३०।।

ऊचुर्धन्यतरा माता रक्षितस्ते सुतोऽसुरात् ।
दुष्टा एव लयं यान्ति साधुर्न क्वापि सीदति ।।३१।।

ततः सा शर्करां तेभ्यो दत्त्वाज्ञां प्रददौ शिवा ।
सर्वाभ्यश्च ततो याता दृष्टा तेन निजं गृहम् ।।३२।।

य इदं श्रृणुयात् पुण्यमाख्यानं भक्तिमान् नरः ।
न स बाधां लभेत् क्वापि सर्वत्र निर्भयो भवेत् ।।३३।।

ढलेपछि निर्भय भएका स्त्री र बालकहरू त्यहाँ आए र तिनले सुतिरहेका बालक श्रीगणेशलाई देखे । तिनले दर्शन गर्दा श्रीगणेश पहिलेजस्तै हाँसी हाँसी आनन्दले बस्नुभएको थियो । उहाँलाई कुनै पनि किसिमको डरको आभास थिएन । सुमेरु पर्वत निश्चल र स्वस्थ रहेझैं श्रीगणेश पनि स्वाभाविक मुद्रामा स्वस्थ हुनुहुन्थ्यो । त्यो देखेर सबै चकित भए । पाँच महिनाको बालकले महाबली र पराक्रमी व्योमासुर दैत्यलाई वृक्षसहित सयौं टुक्रा बनाएर सजिलै मारिदिनुहुँदा दर्शकहरू आश्चर्यमा नपर्ने कुरै थिएन। त्यसपछि डराएर भागेकी पार्वती पनि हा-हाकार गर्दै आफ्नो छोराका छेउमा आउनुभयो।।२२-२६।। मुनिहरूले पार्वतीलाई भने- 'हे पार्वती! तपाईँका पुत्रले विशालकाय व्योमासुरको वध गर्नुभएको छ ।' मुनिहरूका कुरा सुनेपछि पार्वतीले हिमालय पर्वतझैं अचल र उज्ज्वल आफ्ना पुत्रको दर्शन गर्नुभयो ।।२७।। त्यसपछि बालकलाई भुइँबाट उठाएर काखमा राखी स्तनपान गराउनुभयो । त्यस बेला पार्वतीले मरीचि ऋषिले भनेका वाक्यहरू सम्झनुभयो र भगवान् शङ्करको प्रशंसा गर्नुभयो ।।२८।। जसलाई ईश्वरले रक्षा गर्न चाहनुहुन्छ त्यो संसारमा जीवित रहन्छ । जसको विनाश गर्न चाहनुहुन्छ त्यो बत्तीमा झुम्मिएको पतङ्गझैं मर्दछ । ईश्वरको लीला विचित्र छ । त्यो घटनापछि मुनि र मुनिपत्नीहरू सबै आ-आफ्ना घरतर्फ लागे । शिवगण पनि अतुलनीय पराक्रमी बालकलाई देखेर भन्न लागे - 'धन्य हुन् पार्वती माता । आज उहाँका बालक पुत्रले अपूर्व पराक्रम देखाए । असुरहरूबाट ती बालकको रक्षा पनि भयो। वास्तवमा दुष्टहरूकै नाश हुन्छ। सज्जन मानिसले एक छिन दुःख पाए पनि अन्तमा आनन्द प्राप्त गर्दछ'।।२९-३१।। गणहरूका यी कुरा सुनेर पार्वतीले पनि हर्षपूर्वक ती सबैलाई चिनी प्रदान गर्नुभयो र तिनलाई आ-आफ्ना घर जान बिदा पनि गर्नुभयो । त्यसपछि आफू पनि आफ्नो घरमा प्रवेश गर्नुभयो । जसले भगवान् श्रीगणेशको यो आख्यान भक्तिपूर्वक सुन्दछ त्यसले कुनै पनि कार्यमा बाधा भोग्नु-पर्दैन । त्यो भक्त सर्वत्र निर्भय भई विचरण गर्दछ ।।३२-३३।।

ॐ

**इति श्रीगणेशपुराणे क्रीडाखण्डे भूम्युपवेशवर्णनं नाम षडशीतितमोऽध्यायः**

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'श्रीमयूरेश्वरको भूमि-उपवेशन संस्कार र व्योमासुर वध' शीर्षकान्वित छयासीऔँ अध्याय पूर्ण भयो ।।८६।।

ॐ

## सप्ताशीतितमोऽध्याय: { ८७ अध्याय }

क उवाच

व्योमासुरस्य भगिनी तस्य दु:खेन दु:खिता ।
निशामुखे दर्शदिने समुत्पन्ना क्षुधातुरा ।।१।।

भक्षयामास महिषान् शतसङ्ख्यान् महाबलान् ।
करालकेशी लम्बोष्ठी तालनासा दरीमुखा ।।२।।

हलदन्ता कूपनेत्रा श्रोत्रावरणसंयुता ।
दीर्घस्तनी महाघोरा भूमिस्पृक्कचका खला ।।३।।

दीर्घबाहुर्निम्ननाभिर्गोधेव कर्कशा त्वचि ।
नाम चक्रुस्तदा लोका: शतमाहिषभक्षणात् ।।४।।

अन्वर्थं भावदुष्टाया: स्फुटं तु शतमाहिषा।
सा ययौ बन्धुहन्तारं हन्तुं बन्धुप्रियङ्करी ।।५।।

कमनीयतरा भूत्वा सर्वावयवसुन्दरा।
नानालङ्कारसंयुक्ता गौरा षोडशवार्षिकी ।।६।।

कृत्वा षोडशशृङ्गारान् मोहयन्ती कटाक्षत:।
सा ययौ दुष्टभावेन गिरिजालयमुत्तमम् ।।७।।

प्रणाम शिवाङ्घ्रादौ प्रोवाच परमादरात् ।
धन्याऽहं कृतकृत्याऽहं प्राप्ताऽहमीप्सितं फलम् ।।८।।

त्वमम्ब सर्वजननी सर्वदेवमयी शुभा।
त्वं ध्येया सर्वसिद्धि: सर्वकारणकारणम् ।।९।।

जगन्मोहनदक्षा त्वं पुण्येन दृष्टिमागता।

क उवाच

श्रुत्वा वाचं नदींयां सा प्रोवाच गिरिजा तु ताम् ।।१०।।

**ब्रह्माजीले भन्नुभयो** – व्योमासुरकी बहिनी आफ्ना दाजुको मृत्युबाट अत्यन्त दु:खी भई र त्यसले औँसीको रातमा भोकाएर एक सय राँगाहरूको भोजन गरी । त्यसका केश कुटिल थिए, ओँठ लामा थिए, नाक ताडीपत्रझैं विशाल थियो, मुख गुफाजस्तै ठूलो थियो, दाँत हलाजस्ता थिए, आँखा कुवाजस्ता थिए, कान विशाल थिए र स्तनहरू पर्वतको आकारका थिए । त्यो भयङ्कर राक्षसीका कपालका केश भुइँ छुने गरी लत्रिएका थिए। त्यसका हात लामा-लामा थिए, नाभि गहिरो थियो र छाला गोहोराको जस्तो कर्कश थियो । त्यसले एक सय राँगा खाएका कारणबाट मानिसहरूले त्यही अर्थ बुझाउने सार्थक नाम शतमाहिषा राखेका थिए । त्यो राक्षसी एक दिन आफ्ना दाजुका संहारक श्रीगणेशको वध गर्ने विचारले प्रस्थान गरी ।।१-५।। त्यस बेला त्यसले मायाको प्रयोग गरेर आफ्नो शरीरलाई अत्यन्त सुन्दर तुल्याएकी हुँदा आकर्षक देखिन्थी । शरीरमा बहुमूल्य अलङ्कार सजिएकी त्यो १६ वर्षकी गोरी सुन्दरीका रूपमा मुस्कुराइरहेकी थिई । शरीरमा सोह्र प्रकारका शृङ्गारले सुहाएकी त्यसले आफ्नो कटाक्षप्रहारबाट युवकहरूलाई मोहित तुल्याइरहेकी थिई । त्यो भगवान् श्रीगणेशको वध गर्ने दुष्ट इच्छा लिएर पार्वतीको घरमा पुगी ।।६-७।। त्यहाँ गएर त्यसले सर्वप्रथम पार्वतीलाई प्रणाम गर्दै आदरपूर्वक भनी – 'हे पार्वती! आज म धन्य भएकी छु र कृतकृत्य पनि । मैले यति सुन्दर धाममा आएर संसारकी आमा तपाईंको दर्शन गर्ने सौभाग्य प्राप्त गरें । किनकि तपाईंका अङ्ग-प्रत्यङ्गमा देवताहरूको वास छ । तपाईं मङ्गलमूर्ति, सबैद्वारा ध्यान गर्न योग्य, सबै प्रकारका सिद्धिकी स्रोत, सबै कारणकी पनि कारण र संसारलाई मोहित गर्न कुशल हुनुहुन्छ। यस्ती जगदम्बाको मैले पुण्यका कारण आज दर्शन पाएँ ।'

**ब्रह्माजीले भन्नुभयो** - सोह्र वर्षे सुन्दरीको वचन सुनेर पार्वतीले त्यसलाई भन्नुभयो- 'हे सुन्दरी ! तिमी उठ,

उत्तिष्ठोत्तिष्ठ भद्रन्ते सन्तुष्टाऽहं तवेक्षणात् ।
कस्यासि कुत आयासि किमर्थञ्च वराङ्गने ।।११।।

कामं ते पूरयिष्यामि वद सत्यं ममाग्रतः।

शतमाहिषा उवाच

अहं चिरं वियोगार्ता शरणं त्वामुपागता ।।१२।।

श्रुतं स्यादमरावत्या नायकोऽसुरवर्जितः।
स लीनः क्वापि गिरिजे ! सर्वे देवगणा अपि ।१३।।

त्वं तु भाग्यवती देवी न वियोगो हरस्य ते ।
सह्यं भवेत् सर्वदुःखमसह्यन्तु वियोगजम् ।।१४।।

पार्वत्युवाच

बालोऽयं मम सुभगे ! हनिष्यति खलान् बलात् ।
मोचयिष्यति देवान् स कालः कश्चित् प्रतीक्ष्यताम्।।१५।।

एतदर्थं गुणेशेन धृतो देहो ममालये।
भूभारोत्तारणार्थाय मुनीनां पालनाय च ।।१६।।

क उवाच

इत्युक्त्वा पूजयामास पादक्षालनपूर्वकम् ।
सखीभिः कुङ्कुमाद्यैश्च भोजयामास सादरम् ।।१७।।

सापि भुक्त्वा शिवातल्पे सुष्वापोवाच तत्सखीः।
गिरिजाबालकं सख्य आनयन्तु ममान्तिकम् ।।१८।।

विश्वस्ताः सर्वसख्यस्ता ददुर्बालं तु तत्करे ।
लालयामास सा स्नेहान्मुखचुम्बनवल्गनैः ।।१९।।

तिम्रो कल्याण होस् । तिम्रो दर्शन पाएर म पनि खुसी भएकी छु । कसकी छोरी हौ ? कहाँबाट आयौ र किन आयौ ? हे उत्तम सुन्दरी ! तिमीले साँचो – साँचो भन, म तिम्रा कामनाहरू परिपूर्ण गर्नेछु ।'

**राक्षसीले भनी** – 'म आफ्ना प्रियतमको दीर्घकालीन वियोगले अत्यन्त आत्तिएर तपाईंको शरणमा आएकी छु।।८-१२।। तपाईंले सुन्नुभएकै होला स्वर्गको राजधानी अमरावतीका नायक इन्द्र असुरद्वारा परास्त भए। त्यहाँबाट भागेर कहीं गएर लुकिरहेका छन् र तिनका साथ भागेका सबै देवताहरू पनि त्यस्तै पर्वतका गुफाहरूमा लुकेका छन्। हे पार्वती ! तपाईं त भाग्यवती हुनुहुन्छ । तपाईंलाई भगवान् शङ्करको विरह खप्नुपरेको छैन । अरू कुरा त सहन सकिँदो रहेछ, तर पतिका वियोगको कष्ट भने सहन ज्यादै गाह्रो हुँदो रहेछ' ।।१३-१४।।

**पार्वतीले भन्नुभयो**- हे सुन्दरी! मेरो यो बालक पराक्रमी छ, यसले आफ्नो पराक्रमबाट दुष्टहरूको हत्या गर्नेछ। यस बालकले दैत्यहरूद्वारा परास्त गरिएका इन्द्र आदि देवताहरूलाई दुःखबाट मुक्त गर्नेछ । यसमा कुनै सन्देह छैन तर तिमीले केही समय भने पर्खनु पर्नेछ ।।१५।। ती दानवहरूको विनाश गर्न सत्त्व, रज र तमो गुणका स्वामी भगवान् गणेशले यो बालकका रूपमा मेरो घरमा अवतार लिनुभएको छ । उहाँको अवतारको उद्देश्य पृथिवीको भार हरण गर्नु र मुनिहरूको रक्षा गर्नु पनि हो ।।१६।।

**ब्रह्माजीले भन्नुभयो** – यसरी कुरा गरेर पार्वतीले आफ्नो घरमा पाहुना बनेर आएकी सुन्दरीको पाउ पखालेर पूजा गरी कुंकुम आदि चढाउनुभयो र आफ्ना सँगिनीहरूद्वारा तयार गरिएको स्वादिष्ट भोजन पनि प्रदान गर्नुभयो । षोडशी सुन्दरीका रूपमा परिणत भएकी राक्षसी पनि पार्वतीको बिस्तरामा गएर शयन गरी । त्यसपछि त्यसले पार्वतीका सखीहरूलाई बोलाएर भनी- हे पार्वतीका सखीहरू ! तपाईंहरूले पार्वतीका छोरालाई यहाँ लिएर आउनुहोस् ।।१७-१८।। पार्वतीका सखीहरूले पनि त्यस सुन्दरीका कुरा सुनेर विश्वास गरे । तिनले त्यो बालक ल्याएर त्यसका हातमा राखिदिए । त्यसले पनि

तज्जिघांसां स विज्ञाय सर्वज्ञः स शिवात्मजः।
राक्षसीमिति निश्चित्य हस्ताभ्यां श्रोत्रयोरधात् ।।२०।।

नासिकाञ्च ततो भारं महापर्वतसन्निभम् ।
तदङ्गं पातयामास सा च श्वासनिरोधतः ।।२१।।

विह्वला परिचिक्षेप पादाघातान् शिशौ भृशम् ।
मुञ्च मुञ्चेति भाषन्ती कौतुकं द्रष्टुमागताम् ।।२२।।

कथं हंसि स्त्रियं दुष्ट ! त्वनागस्कां शिवासमाम् ।

क उवाच

तदाक्रन्दनमाकर्ण्य सखीभिः सह पार्वती ।।२३।।

आगता मोचितुं पुत्रं नाशकत् तमुवाच सा ।
न मारयाशु मुञ्चैनां शक्रस्य महिषीं प्रियाम् ।।२४।।

श्रुत्वा मातृवचो बालो दूरे चिक्षेप तां तदा ।
पपातोपरि व्याजेन क्षणात् सोऽभ्युदतिष्ठत ।।२५।।

तत्कर्णं नासिका हस्तो दृष्टः सासृक्स्रवोऽपि च ।
तदङ्घ्रिघातात् सा प्राणाँस्तत्याज क्षणमात्रतः।।२६।।

गतासुं तां शुशोचाऽथ पार्वती स्नेहनिर्भरा ।
उवाच चपलो बालो दुर्यशोऽर्जितवानयम् ।।२७।।

श्रुत्वा शचीं हतामिन्द्रः किं वागत्य करिष्यति ।
ददर्श पुरतो गत्वा राक्षसीं तां शिवाऽशिवाम् ।।२८।।

दशयोजनविस्तीर्णां क्षतभूभूरुहां तदा।
तत्याज शोकं जहषे प्रशशंस निजं सुतम् ।।२९।।

आदाय सुतमव्यङ्गं पार्वती मन्दिरं ययौ ।
विस्मापयत्यसौ बाला शङ्किता बालपौरुषम् ।।३०।।

विस्मयं पौरुषे तस्य समपद्यत पार्वती ।
तत्सख्यश्छिन्नकर्णां तां छिन्ननासां व्यलोकयन् ।।३१।।

अत्यन्त प्रेम देखाउँदै मुखमा चुम्बन गर्दै खेलाउन थाली । गणेशले सुन्दरीको रूपमा आएकी राक्षसीले मलाई मार्न चाहन्छे भन्ने थाहा पाउनुभयो र आफ्ना हातले त्यसका नाक र कान समाउनुभयो । त्यसले हेर्दाहेर्दै त्यसका श्वास-प्रश्वास रोकेर महापर्वतकै आकारको त्यसको ज्यानलाई भुईँमा लडाउनुभयो। सास रोकिनाले व्याकुल भएकी त्यस राक्षसीले खुट्टा बजार्दै मलाई छोड, मलाई छोड, म तिमीलाई उत्कण्ठाले हेर्न आएकी हुँ, म नारी जातिलाई किन मार्दछौ ? मेरो कुनै अपराध छैन । म तिम्री आमा पार्वतीसमान छु भन्दै क्रन्दन गरी ।

**ब्रह्माजीले भन्नुभयो** - सुन्दरीका रूपमा आएकी यस राक्षसीको क्रन्दन सुनेर पार्वती आफ्ना सखीहरूका साथ त्यहाँ आइपुग्नुभयो ।।१९-२३।। कति प्रयास गर्दा पनि आफ्ना छोराको हातबाट त्यसलाई छुटाउन सक्नुभएन । त्यसपछि श्रीगणेशलाई भन्नुभयो- बाबु ! यसलाई नमार। चाँडै छोडिदेऊ। यी त इन्द्रकी प्यारी रानी हुन् । आमाको कुरा सुनेर बालक श्रीगणेशले त्यसलाई उचालेर टाढा फ्याँकिदिनुभयो र त्यसमाथि चढेर त्यसलाई च्याँप्नुभयो । राक्षसीका कान, नाक र हातबाट रगत बगिरहेका थिए । गणेशले पाउले प्रहार गर्दा त्यसले तत्कालै प्राणत्याग गरी ।।२४-२६।। त्यसलाई मरेकी ठानेर पार्वती प्रेमले विह्वल भएर चिन्ता गर्न लाग्नुभयो । आफ्ना सखीहरूलाई सम्बोधन गर्दै उहाँले भन्नुभयो- मेरो छोरा चञ्चल छ र उद्दण्ड पनि भइसकेछ। यसले आज नराम्रो नाम कमायो। इन्द्रले आफ्नी पत्नी इन्द्राणी मरेको थाहा पाएर के भन्नुहोला? के गर्नुहोला ? यस्ता कुरा गरिरहेकी पार्वती फेरि राक्षसीको लाश भएतर्फ जानुभयो । उहाँले दश योजनसम्म फैलिएको राक्षसीको लाश देख्नुभयो । त्यस बेला बल्ल उहाँले यथार्थ थाहा पाई शोकत्याग गरेर आफ्ना छोराको प्रशंसा गर्दै हर्ष प्रकट गर्नुभयो ।।२७-२९।। आफ्ना छोरालाई चोट लागेको छ कि भनी हेर्दा स्वस्थ र सुन्दर जानेर खुसी हुँदै काखमा राखी आफ्नो घरभित्र पस्नुभयो। सोह्र वर्षकी सुन्दरी यति विशाल शरीर धारण गर्ने राक्षसी रहिछे भन्दै आश्चर्य पनि व्यक्त गर्नुभयो । आफ्ना पुत्रको पुरुषार्थ देखेर पार्वती चकित हुनुभयो । पार्वतीका सँगिनीहरूले कान र नाक काटिएकी

कथमस्या लाघवञ्च कथमस्य बलं शिशोः।
अहसन् प्रावदन्नित्थं दत्त्वा तालं परस्परम् ।।३२।।

ततस्तां राक्षसीं दूराच्चिक्षिपुः प्रमथास्तदा ।
अरिष्टे विहते गौरी ददौ दानानि भक्तितः ।।३३।।

ततस्तु सप्तमे मासे प्रवृत्ते निद्रिते जने।
तमसा सर्वतो व्याप्ते दशदिङ्मण्डलेऽखिले ।।३४।।

निशीथेऽरण्यपशुषु रुवत्सु दर्दुरेषु च।
पर्यङ्के परिसुप्तायां पार्वत्यां दिव्यसंस्तरे ।।३५।।

सखीजने निद्रिते च सेवकानां गणे तथा ।
एतस्मिन्नन्तरे दुष्टो नाम्ना यः कमठासुरः।।३६।।

आच्छादयत् स्वदेहेन शिवाप्राङ्गणमद्भुतम्।
यस्य स्पर्शेन सहसा शीर्यते वज्रसंहतिः ।।३७।।

अतिशीतलगात्रः स पार्वणश्चन्द्रमा इव।
उदिते तु दिवानाथे तत्पृष्ठेऽविचरञ्जनाः।।३८।।

केचित् स्नात्वा स्थिता जप्तुं केचिन्निद्रां प्रचक्रिरे ।
स्खलित्वा पतिताः केचिदतिकोमलदेहतः।।३९।।

सिषिचुर्बालिका वारिगोमयैरङ्गमालिकाः।
चक्रुस्ततो बहिर्याता सबाला गिरिजा तदा ।।४०।।

आस्वापयत् सुतं गौरी महार्हास्तरणेऽत्र सा।
सखीस्तत्र च संस्थाप्य ययौ सा सेवितुं शिवम् ।।४१।।

एवं ज्ञात्वाऽसौ कमठः स्वस्य पृष्ठमचालयत् ।
भूमिकम्पः कथमिह किं वारिष्टं भविष्यति ।।४२।।

राक्षसीको लाश देखेर भने – त्यो सुन्दरीको कस्तो चातुर्य र यी बालकको कस्तो शौर्य ? हामी दङ्ग परेका छौं । त्यसपछि तिनीहरूले बालक र सुन्दरीका विषयमा हातले ताली बजाउँदै कुराकानी गरे ।।३०-३२।। यो घटनापछि प्रमथगणहरू त्यहाँ आइपुगे र तिनले राक्षसीको शरीरलाई टाढा लगेर फ्याँकिदिए। अरिष्टनाश भएको उपलक्ष्यमा पार्वतीले भक्तिपूर्वक अनेक थरि दान गर्नुभयो ।।३३।। बालक जन्मेको सातौं महिना लागेपछि एक दिन राति पार्वतीको परिवारका सेवक-सेविकाहरू निदाएपछि आकाश र धर्तीमा अन्धकारको राज्य आरम्भ भयो । जङ्गली जनावरहरू रुन थाले र भ्यागुताहरू टर्र-टर्र आवाजमा कराउन थाले । पार्वती आफ्नो पलङमा विश्राम गर्न जानुभयो र सेवकगणहरू मस्त निदाए । त्यस बेला पार्वतीको घरमा कमठासुरनामक दैत्य आइपुग्यो ।।३४-३६।। त्यसले आफ्नो शरीरद्वारा पार्वतीको आँगन पूरा ढाकिदियो । त्यस कमठासुरको स्पर्शबाट वज्रको समुदाय पनि टुक्रा-टुक्रा हुन्थ्यो । त्यसको शरीर पूर्णिमाको चन्द्रमाझैं अत्यन्त शीतल थियो । बिहान सूर्य उदाएपछि आँगनमा फैलिएर कछुवाको रूपमा रहेको कमठासुरको पिठ्यूँलाई मानिसहरूले त्यस रूपमा चिन्न सकेनन्। सामान्य धर्तीका रूपमा लिए र त्यसमा विचरण गरे।।३७-३९।। त्यहाँ कसैले स्नान गरेर जप गर्न लागेका थिए, कोही मस्त निद्रामा परिरहेकै थिए र कोही निद्राबाट जागेर घङ्घङाउँदै उठिरहेका थिए । कोही पार्वतीको घरमा काम गर्ने बालिकाहरूले घरका ढोकाहरूमा पानी सिञ्चन गरेर गोबरले पोत्ने काम गरिरहेका थिए । त्यस बेला पार्वती पनि घरभित्रबाट बाहिर आउनुभयो। बाहिर आएर अत्यन्त उत्तम वस्त्रहरूद्वारा तयार गरिएको बिस्तरामा आफ्ना प्यारा पुत्र गणेशलाई सुताउनुभयो । पार्वती आफ्ना केही परिचारिकाहरूलाई बालकको सुरक्षार्थ त्यहाँ खटाएर आफू आफ्ना पति शिवजीको सेवा गर्न जानुभयो।।४०-४१।। सबै मानिसहरूलाई कार्यव्यस्त र पार्वतीलाई शिवसेवामा तत्पर जानेर कमठासुरले आँगनमा व्याप्त गराएको आफ्नो पिठ्यूँमा कम्पन गरायो । त्यहाँका मानिसहरूले भूकम्प गएजस्तो माने र के अरिष्ट हुने हो भन्न

इत्यब्रुवन् स्थितास्तत्र गणाश्चकितमानसा: ।
निद्रिता: प्रतिबुद्धास्ते किं जातमिति चाब्रुवन् ।।४३।।

तदैव तेन वालेन सर्वज्ञेन विवर्तता ।
उदरं तस्य पृष्ठे तु न्यधायि धर्षता भृशम् ।।४४।।

चतुर्दशभुवनजं भारं निदधताऽत्र च ।
निरुद्धश्वासवायु: सोऽङ्गानि स्वानि व्यचालयत्।।४५।।

अस्रवद् रक्तमतुलमस्य देहात् तथाविधात् ।
उड्डानं कर्तुमारेभे नाशकत् कमठस्तत: ।।४६।।

ततो गणा ययु: सर्वे ये तत्रासन् सुखोषिता: ।
किमरिष्टं समुत्पन्नं मुहुर्भूश्चलते नु किम् ।।४७।।

सख्यश्च वालिका: सर्वा: पार्वतीं सेवितुं ययु:।
ऊचुश्च मातर्वालस्ते नीत: स्याद् वा मृतोऽपि वा ।।४८।।

तच्छ्रुत्वा पार्वती याता धावमाना बहि: सुतम् ।
ददर्श निश्चलं गौरी सोत्थापयितुमुद्यता ।।४९।।

भूगोलभारसदृशं मत्वा तस्थौ विमानसा ।
ततो ममर्द सहसा वालस्तं स ममार च ।।५०।।

तत: सा ददृशे दैत्यं दशयोजनमायतम् ।
उद्गारितमुखं कूर्मं वमन्तं रुधिरं बहु ।।५१।।

चूर्णयामास सहसाऽऽश्रमान् नानाविधान् द्रुमान् ।
तत: सा वालमादाय स्तनपानं ददौ मुदा ।।५२।।

न ज्ञायतेऽसुराणां हि नानामायां प्रकुर्वताम् ।
त्रिलोचनप्रसादेन पुनर्लब्ध: सुतो मया ।।५३।।

थाले । केही मानिसहरू चकित भएर हेर्न थाले । भूमिकम्प भएका कारण निदाइरहेका केही मानिसहरू पनि उठे । तिनले के भयो भन्न थाले ।।४२-४३।। त्यस बेला सर्वज्ञ भगवान् श्रीगणेशले बालकका रूपमा आफ्नो शरीरलाई कोल्टे पार्नुभयो र घस्रिंदै-घस्रिंदै गएर आफ्ना पेटले आँगनमा फैलिएको कमठासुरको पिठ्यूँलाई अठ्याउँनुभयो । चौध भुवनको भारलाई आफ्नो शरीरमा धारण गर्नुहुने भगवान् श्रीगणेशले अठ्याउँदा त्यसको प्राणवायु रोकियो र छट्पटिएर त्यसले आफ्ना अङ्ग चलाउन थाल्यो ।।४४-४५।। त्यसको शरीरबाट रगतका धारा बग्न थाले । त्यस बेला आफ्नो ज्यान जोगाउन त्यो उड्न खोज्यो तर उड्न सकेन । त्यसै बेला शिवजीका गणहरू त्यहाँ आइपुगे र भन्न थाले- के अरिष्ट हुनथाल्यो ? किन बारबार भूकम्प गइरहेको छ ? ।।४६-४७।। शिवगणका कुरा सुनेपछि पार्वतीका परिचारिका र सखीहरू पार्वतीसमक्ष गई भन्न थाले – हे जगदम्बा ! उठ्नुहोस्। तपाईंको बालकलाई कसैले आँगनमा पुऱ्याएको छ । ती बालक ज्यूँदै छन् कि मरिसके त्यो पनि हामीले थाहा पाएका छैनौं ।।४८।। सँगिनीका यी कुरा सुनेर पार्वती दौडिंदै आफ्नो छोरा भएको ठाउँमा पुग्नुभयो । श्रीगणेशलाई निश्चल अवस्थामा देखेर भुइँबाट माथि उठाउन थाल्नुभयो, तर सम्पूर्ण पृथिवीको भारभन्दा पनि गह्रौ आफ्ना छोराको शरीरको भार जानेर खिन्न भई उभिनुभयो। त्यस बेला बालक श्रीगणेशले कमठासुरको शरीरलाई निमोठेर मारिदिनुभयो ।।४९-५०।। कमठासुरको मृत्युपछि पार्वतीले दश योजनसम्म फैलिएको त्यसको लाश देख्नुभयो । लाशको मुखबाट रगतको धारा बगिरहेको थियो। त्यो भुइँमा खस्दा त्यसले अनेक आश्रम र वृक्षहरूलाई ध्वस्त बनाएको थियो । पार्वतीले ती सबै कुरा थाहा पाएर आफ्ना बालकका दिव्य चरित्रको संस्मरण गर्दै काखमा लिई हर्षपूर्वक स्तनपान गराउनुभयो ।।५१-५२।। त्यसपछि भन्नुभयो – असुरहरूको माया विचित्रको छ । ती अनेक रूप लिएर वञ्चना गर्न आउँछन्। मेरो सानो बालकमाथि अनेक प्रयोग गर्छन् तर भगवान् शङ्करको कृपाले आज पनि मैले मेरो

यतः कृतान्ताद् बलवान् निहतः कमठासुरः ।
सख्यश्च तद्गणाः प्रापुः पप्रच्छुः क्षेममर्भके ।।५४।।

क्षेममित्येव तान् गौरी निजगाद मुदान्विता ।
ततो गणाः खण्डशस्तं कृत्वा दूरतरं जहुः ।।५५।।

ववृषुः पुष्पवर्षाणि तस्मिन् देवगणास्तदा ।
य इदं परमाख्यानं शृणुयाच्छ्रावयेत् तथा ।।५६।।

सर्वारिष्टविनिर्मुक्तः सर्वान् कामानवाप्नुयात् ।।५७।।

छोरालाई स्वस्थ र सुन्दररूपमा नै प्राप्त गरें ।।५३।। यमराजभन्दा पनि बलवान् मेरो छोराले कमठा-सुरको हत्या गरेको छ । त्यस बेला शिवगण र सँगिनीहरू पनि त्यहाँ आइपुगे । तिनले बालकको कुशलक्षेम सोधे । पार्वतीले पनि आनन्दपूर्वक बालक सञ्चै छ र चिन्ता गर्नुपर्दैन भन्नुभयो। शिवगणले कमठासुर दैत्यको शरीरलाई टुक्रा-टुक्रा बनाएर टाढा लगेर फ्याँकिदिए ।।५४-५५।। त्यस बेला देवताहरूले आकाशबाट बालकमाथि फूलको वर्षा गरे । जसले यो उत्तम कथा सुन्दछ अथवा सुनाउँछ त्यो सबै प्रकारका अरिष्टहरूबाट मुक्त भई सम्पूर्ण चिताएका फल प्राप्त गर्न समर्थ हुन्छ।।५६-५७।।

ॐ

**इति श्रीगणेशपुराणे क्रीडाखण्डे शतमाहिषा-कमठासुरवधो नाम सप्ताशीतितमोऽध्यायः**

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'श्रीगणेशद्वारा शतमाहिषा र कमठासुरको संहार' शीर्षकान्वित सतासीऔं अध्याय पूर्ण भयो ।।८७।।

ॐ

## अष्टाशीतितमोऽध्याय: { ८८ अध्याय }

व्यास उवाच

अद्भुतानि चरित्राणि श्रुतानि त्वन्मुखाम्बुजात् ।
ब्रह्मन्नघौघहारीणि गुणेशेन कृतानि वै ।।१।।

तथापि श्रोतुमिच्छा नो नापैति सर्ववित्तम !
अतो बालस्य चरितं पुनर्मे ब्रूहि सादरम् ।।२।।

ब्रह्मोवाच

शृणुष्वावहितो ब्रह्मन् ! गुणेशस्य कथां पुन:।
श्रुतिरस्य च पापानां संहर्त्री धर्ममोक्षदा ।।३।।

अष्टमे मासि मध्याह्ने ग्रीष्मर्तौ गिरिजा किल।
ऊष्मणा पीडिता गेहे सा ययौ पुष्पवाटिकाम् ।।४।।

अशोकाश्चन्दना यत्र पनसाश्च बिभीतका: ।
मालतीचम्पका जातीचिञ्चिणीपिचुमन्दका: ।।५।।

पारिजातकवृक्षाश्च घनच्छायासमन्विता: ।
रम्यशीतजलश्चारु सर: कमलमण्डितम् ।।६।।

तत्र मञ्चकवर्ये सा सख्यानीते शुभास्तरे ।
सुष्वाप गिरिजा बालयुक्ता नि:शङ्कचेतसा ।।७।।

सखीभ्यां वीजिता बालव्यजनेनाश्ममुष्टिना ।
सुषुप्तिमगमद् यावत् तावद् दैत्यो महाबल: ।।८।।

तल्पासुर इति ख्यातो वायुरूपोऽविशत् तत:।
मञ्चकान्तर्गत: सोऽथ तेन साकं ययौ दिवम् ।।९।।

तस्य शब्देन संत्रस्ते ते सख्यौ पतिते भुवि।
आक्रन्दं परमञ्चक्रे पर्यङ्कस्था तदा शिवा ।।१०।।

व्योमस्था पर्यदेवत् सा धाव धावेति शङ्कर !
किं मया विकृतं देव किमर्थं मामुपेक्षसे ।।११।।

व्यासले भन्नुभयो- हे ब्रह्माजी ! मैले हजुरको मुखारविन्दबाट भगवान् गणेशका पापनाशक र अद्भुत चरित्रहरू सुनें । ती सबै चरित्रहरूको श्रवण गर्दा पनि भगवान् गणेशको विषयमा जान्ने इच्छा लागिरहन्छ। त्यस कारण बालगणेशका अरू चरित्रको विषयमा मलाई आदरपूर्वक बताउनुहोस् ।।१-२।।

**ब्रह्माजीले भन्नुभयो** - हे वेदव्यास ! श्रवण गर्दा रमणीय लाग्ने, पापहरूको संहार गर्ने र धर्म एवं मोक्ष प्रदान गर्ने भगवान् गुणेशको कथा सावधान भएर सुन्नुहोस् ।।३।। भगवान् गणेश आठ महिना लाग्नुभएपछि ग्रीष्मऋतुको कुनै दिनको मध्याह्नमा पार्वतीलाई असाध्य गर्मी लाग्यो । त्यसबाट पीडित भएकी पार्वती आफ्नो पीडा शान्त गर्न उद्यानमा जानुभयो ।।४।। त्यस उद्यानमा अशोक, चन्दन, कटहर, आँप, बर्रो, मालती, चाँप, जाती, इमली, नीम र पारिजातका छायादार वृक्षहरू थिए । ती वृक्षहरू नजिकै कमलद्वारा शोभायमान शीतल जल भएको सुन्दर सरोवर थियो ।।५-६।। त्यसको किनारामा आफ्ना सँगिनीहरू र सेविकाहरूद्वारा ल्याइएको पलङ्गमा राम्रा वस्त्र बिछ्याएर आफ्ना बालकलाई काखमा राखी मन निर्भय गराएर पार्वतीले सुकला गर्नुभयो ।।७।। दुइटी सखीहरूले ढुंगाको बीड भएको चामर हम्केर उहाँको सेवा गरिरहेका थिए । पार्वती आनन्दले निदाउनुभयो । त्यस बेला तल्पासुरनामक विख्यात महाबली दैत्य हावाको रूप लिएर त्यहाँ आइपुग्यो । पलङभित्र पसेर त्यसले पलङ र त्यसमा सुतेका बालक गणेशलाई उडाएर आकाशमा पुऱ्यायो।।८-९।। त्यसको शब्दले डराएका पार्वतीका दुई सखीहरू भुइँमा लडे। तिनीहरूको क्रन्दनबाट जागेकी र पलङमा सुतिरहेकी पार्वती पनि ठूलो स्वरले रुन लाग्नुभयो।।१०।। (त्यस आकाशमा उडिरहेकी पार्वतीले हे शङ्कर ! दौडेर आई हाम्रो रक्षा गर्नुहोस् भनी पुकार गर्नुभयो- मैले के पाप गरें र यस्तो भोग्नुपर्‍यो ? हजुरले मेरो किन उपेक्षा गर्नुहुन्छ ? यो दैत्य भयङ्कर बलवान् छ ।

अयं दैत्योऽतिबलवान् व्योमाक्रम्य प्रधावति ।
परहस्तगतां कान्तां शक्तः कथमुपेक्षसे ।।१२।।

अस्य पुत्रस्य योगेन नानादुःखमभून्मम ।
अस्माद् दैत्यान्मृतिर्मे किं सपुत्राया विनिर्मिता ।।१३।।

अयमेव न जातश्चेत्कथं बन्धनमाप्नुयाम् ।

क उवाच

एवमाक्रन्दनं श्रुत्वा चोमाबालो महामनाः ।।१४।।

तदा मुहुर्जगर्जासौ घनवद् गर्जयन् दिशः ।
चकम्पे धरणी तेन ससमुद्रवनाकरा ।।१५।।

तामदृष्ट्वा तु शोचत्सु गणेषु प्रमथादिषु ।
पादाघातेन बालोऽथ मञ्चकं समताडयत् ।।१६।।

बिभ्युर्भूतानि सहसा शतधेवाभवन्नभः ।
मञ्चकः खण्डशस्तेन भूत्वा निपतितो भुवि ।।१७।।

ततस्तल्पासुरो दृश्यो जातो बालो दधार तम् ।
हस्तेनैकेन जननीं दधारासौ स्वलीलया ।।१८।।

घनमुक्तं तोयबिन्दुञ्चञ्चवैव चातकः क्षणात् ।
स्कन्धारूढां तु तां कृत्वा शिखां वामेन तस्य च ।।१९।।

ततस्तत्याज भूदेशे तं बालः सहसा बलात् ।
पद्मासनं दैत्यदेहे कृत्वा योगीव तस्थिवान् ।।२०।।

स भूमौ पतितो दूरान्मर्दितो बलवत्तरम् ।
प्राणाँस्तत्याज दैत्योऽथ वमन्नास्यादसृङ् मुहुः ।।२१।।

स तु दृष्टो जनैर्दैत्य एकविंशतियोजनः ।
चूर्णयन् वृक्षपाषाणानाश्रमान् शरणान्यपि ।।२२।।

यसले हामी आमा-छोरामाथि आक्रमण गरी हामी दुबैलाई आकाशमा उडाइरहेको छ । हजुर शक्तिशाली भएर पनि अरूको हातमा परेकी आफ्नी प्रियाको किन उपेक्षा गर्नुहुन्छ?।।११-१२।। यो बालक जन्मेको दिनदेखि मैले पटक-पटक अनेक थरि कष्ट भोग्नु परिरहेको छ। के यस दैत्यको हातबाट पुत्रका साथमा मेरो पनि मृत्यु लेखिएको छ ? ।।१३।। यदि यो छोरा नजन्मेको भए म किन बन्धनमा पर्थें ?

**ब्रह्माजीले भन्नुभयो** – माता पार्वतीको यस्तो विलाप सुनेर उच्च आशय भएका बालक श्रीगणेशले बादलले गर्जेर सम्पूर्ण दिशाहरू थर्काएझैं ठूलो गर्जन गर्नुभयो । गणेशको गर्जनबाट समुद्र, वन, पर्वत र खानीसहित पृथिवी काँप्न थालिन् ।।१४-१५।। पार्वतीलाई नदेखेर प्रमथ आदि गणहरू चिन्तामग्न भइरहेको बेला बालक श्रीगणेशले पार्वती शयन गर्ने मञ्चमा चरणद्वारा प्रहार गर्नुभयो ।।१६।। गणेशले पलङमा प्रहार गर्दा उत्पन्न भएको भयङ्कर शब्दबाट प्राणीहरू डराए । आकाश सय टुक्रा भएजस्तो भयो । पलङ पनि टुक्राटुक्रा भएर भुइँमा छरियो ।।१७।। त्यस बेला आफूलाई लुकाउन सिपालु, हावाको रूप धारण गर्ने तल्पासुर मूर्तिमान् भएर देखियो। त्यसलाई भगवान् गणेशले आफ्नो एउटा हातले समाउनुभयो । अर्को हातले रक्षा गर्ने हिसाबले आफ्नी आमा पार्वतीलाई सजिलै धारण गर्नुभयो ।।१८।। जसरी स्वाती नक्षत्रका दिन काकाकुल चराले बादलद्वारा बर्साइएका पानीका थोपालाई छानेर ग्रहण गर्दछ त्यसरी नै गणेशले पनि निकै सावधानीसँग पार्वतीलाई आफ्नो काँधमा राखेर बायाँ हातले तल्पासुरको चुल्ठो समाती त्यसलाई बलपूर्वक भुइँमा पछार्नुभयो । पछारिएको दैत्यमाथि भगवान् श्रीगणेश योगीझैं पद्मासन कसेर बस्नुभयो।।१९-२०।। भगवान् गणेशद्वारा पछारिएको त्यो दानव भुइँमा लड्नासाथ निष्प्राण बनेको थियो र त्यसका मुखबाट रगतका धारा लागिरहेका थिए ।।२१।। त्यस दैत्यलाई मानिसहरूले चौरासी कोश भू-भागमा फैलिएको देखे । गणेशको प्रहारबाट भुइँमा पछारिँदा त्यसले रूख, ढुंगा, आश्रम र पर्णशालाहरूलाई धूलोपीठो बनाएको थियो ।।२२।। यसरी विशाल दैत्यलाई

ततो दृष्टो बालकोऽसौ गणै: सखिजनैरपि।

ऊचुस्ते गौरि ! बालोऽयं रमते कुशली बली ।।२३।।

सा तु भ्रान्त्यैव नाजानाद्गगनं धरणीं शिशुम् ।

मुनयस्तामथोचुस्ते सावधानमना सति ।।२४।।

भव दैत्यो हतस्तेन धृत्वा रूपं महत्तरम् ।

उन्मील्य नयने पश्य पुनर्बालं शिवं शुभम् ।।२५।।

क उवाच

तद्वाक्यात् प्रतिबुद्धा साऽपश्यद् दैत्यञ्च बालकम् ।

गौर्युवाच

विपरीतं मया दृष्टं मूढो बालेन वा कथम् ।।२६।।

हतोऽनेन महादैत्य एकविंशतियोजन: ।

मातृणामृणमुत्तीर्णो बालो मे जीवितप्रद: ।।२७।।

इत्युक्त्वा बालमादाय कारयामास शान्तिकम् ।

दत्त्वा दानानि च ददौ स्तनपानं शिशोरपि ।।२८।।

दृष्ट्वा ते कौतुकं तस्य प्रशशंसुर्मुदान्विता: ।

एतस्मिन्नन्तरे घोरञ्चक्रे शब्दं महासुर: ।।२९।।

दुन्दुभे: सदृशं सोऽपि ख्यातो दुन्दुभिनामत: ।

यस्य पाणितलाघाताद्धरा चूर्णत्वमागता ।।३०।।

आच्छादितो दिनमणिर्देहेन गगनस्पृशा ।

गणबालस्वरूपेण गौरी बालं जुहाव सा ।।३१।।

भुईंमा लडाएपछि शिवगण र गणेशका साथीहरूले श्रीगणेशको दर्शन गरे । ती सबैले पार्वतीलाई सम्बोधन गर्दै भने - 'हे भगवती गौरी ! हजुरको छोरा स्वस्थ हुनुहुन्छ, पराक्रममा केही कमी आएको छैन । त्यत्रो विशाल दैत्यसँग लड्दा पनि उहाँ आत्तिनु भएको छैन र आनन्दित हुनुहुन्छ' ।।२३।। विशालकाय दैत्यद्वारा आक्रान्त हुन पुगेकी पार्वतीले तिनीहरूले त्यति कुरा भन्दा पनि भ्रान्ति र भयका कारण आकाश, धर्ती र बालकको विषयमा केही जान्न सक्नुभएन । पार्वतीलाई परिस्थितिवश भ्रान्तिमा परेको जानेर ऋषिहरूले भने - 'हे सती पार्वती ! तपाइँ सावधान र शान्त हुनुहोस् । राम्रो घटना भएको छ । तपाइँका पुत्रले विशाल रूप धारण गरेर तल्पासुर दैत्यको वध गर्नुभएको छ । तपाइँले नआत्तिईकन आँखा खोलेर सुन्दर, मङ्गलमय र कल्याणकारी आफ्ना पुत्रलाई हेर्नुहोस् ।'

**ब्रह्माजीले भन्नुभयो** - ऋषिहरूको वाक्य सुनेर होशमा आई भ्रान्तिमुक्त बनेकी पार्वतीले दैत्यको लाश र बालकको अनुहार हेर्नुभयो ।

**पार्वतीले भन्नुभयो** - 'मैले हताश भएर अनुकूल दृश्यलाई पनि प्रतिकूल देखेंछु ।।२४-२६।। अहिले मलाई अचम्म लागेको छ । हावाको रूप लिएर लुक्न सक्ने कपटी र चौरासी कोश चौडा शरीर धारण गर्ने दानवलाई मेरो बालक पुत्रले कसरी मार्न सक्यो ? वास्तवमा यस बालकले मातृऋण तिरेको छ र मलाई नयाँ जीवन प्रदान गरेको छ ।।२७।। यसरी कुरा गरेर पार्वतीले बालकलाई काखमा लिनुभयो र ब्राह्मणहरू बोलाएर स्वस्तिशान्ति गराउनुभयो । ती ब्राह्मणहरूलाई यथाशक्ति दान दिएर बालकलाई स्तनपान गराउनुभयो ।।२८।। ऋषिहरूले पनि गणेशको आश्चर्यदायक लीला देखी हर्षित भएर पार्वतीका सामु आई बालक गणेशको धेरै प्रशंसा गरे । त्यसपछि दुन्दुभिनामक दमाहाको आकार भएको महादैत्यले भगवान् गणेशलाई भयभीत गराउन घोर शब्द गर्‍यो । दुन्दुभिको हातको प्रहारबाट पृथिवी पनि चूर्णचूर्ण भएको थियो । आकाशलाई पनि ढाक्ने त्यसको विशाल शरीरबाट सूर्य पनि छेकिए । त्यस बेला दुन्दुभि दैत्यले बालकगणका बीचमा बालककै रूप लिएर पार्वतीपुत्र गणेशलाई भन्यो -

इत एहि रमावोऽद्य सोऽपि यातस्तदैव तम् ।।
स्वाङ्कं कृत्वा तु तं बालं हालाहलफलं ददौ ।।३२।।

अद्ध्यद्धीति फलं बालं शीघ्रमित्यब्रवीच्च सः ।
दूरदेशात् समानीतं जन्ममृत्युजरापहम् ।।३३।।

स तु जानन् दुष्टभावं फलं तज्जगृहे ततः ।
अभक्षयदयाचत् स फलान्तरमभीः पुनः ।।३४।।

क उवाच

अमृतं विषतां याति विषं तत्तां शिवेच्छया ।
धृत्वा वक्षःस्थलं तस्य तत्क्षणादुदतिष्ठत ।।३५।।

तज्जानुनोर्न्यस्य पादौ कराभ्यां जगृहे शिखाम् ।
पराभ्यां श्मश्रुणी गृह्य दोलयामास लीलया ।।३६।।

ननर्त जानुभागेऽस्य भूमण्डलभरान्वितः ।
स पीडित उवाचाऽथ जानुभागादवातर ।।३७।।

तव भारेण नृत्येन मम देहोऽतिपीडितः ।
मुञ्च मुञ्च गमिष्यामि स्वालयं गिरिजासुत ।।३८।।

क उवाच

एवं सम्प्रार्थितस्तेन न मोचयति बालकः।
उदतिष्ठद् बलाद् दैत्यो भग्नदेहस्तु पूर्वतः ।।३९।।

बलाच्चकर्ष बालोऽपि मूर्धानमस्य तत्क्षणात् ।
कण्ठनालात् तच्छिरोऽपि बालहस्तगतं बभौ ।।४०।।

रुधिराक्ता मही सर्वा तत्क्षणं समपद्यत ।
शिरः कमलहस्तोऽसौ खेलते गिरिजासुतः ।।४१।।

'हे बाबु ! छिटो मेरासामु आऊ । तिमी र म क्रीडा गरी आनन्दी बनौं ।' त्यसको भनाइ सुनेर श्रीगणेश पनि छिट्टै त्यहाँ जानुभयो । दुन्दुभि दैत्यले गणेशलाई आफ्नो समीपमा आएको देखी समातेर काखमा राख्यो र उहाँलाई लौ खाऊ भनी एउटा विषफल दियो ।।२९-३२।। फेरि त्यसले भन्यो- 'बाबु यो मीठो फल छिटो खाऊ। यो फल मैले टाढाबाट ल्याएको हुँ । यसलाई खाँदा जन्म, मृत्यु र वृद्धावस्थाका दोषहरू समाप्त हुन्छन् । बालक गणेशले दुन्दुभि दैत्यको दुष्ट भावनालाई बुझेर पनि तत्कालै त्यो फल हातमा लिनुभयो । त्यसपछि नडराईकन त्यो फल खाएर अर्को फल पनि मलाई देऊ भन्नुभयो ।।३३-३४।।

**ब्रह्माजीले भन्नुभयो** - भगवान् शिवजीको इच्छाले अमृत विषको रूपमा परिणत हुन्छ र विष पनि अमृतको रूपमा परिणत हुन्छ । त्यस बेला गणेशले त्यसको छातीमा समाउनुभयो र त्यसलाई भुइँमा लडाएर उभिनुभयो ।।३५।। उहाँले त्यसका घुँडामा खुट्टाले टेकी आफ्ना दुइटा हातले त्यसको चुल्ठो समाउनुभयो । अरू दुइटा हातले त्यसको दाह्री-जुँगा समातेर कोक्रो हल्लाएझैं हल्लाउनुभयो ।।३६।। दुन्दुभि दैत्यको घुँडामा टेकिरहेका श्रीगणेशको बोझ पृथिवीमण्डलको बोझभन्दा पनि गह्रौ थियो। त्यो बोझ सहन नसकेर आत्तिएको दैत्यले हात जोडेर भन्यो – 'हे बालक ! मलाई असह्य पीडा भयो । तिमी घुँडाबाट झर । तिम्रो भार र नृत्यले गर्दा मेरो शरीर पीडित र कम्पायमान भएको छ । हे पार्वतीपुत्र ! मलाई छोडिदेऊ, म केही नगरी आफ्नो घरतर्फ फर्किनेछु' ।।३७-३८।।

**ब्रह्माजीले भन्नुभयो** - दुन्दुभि दैत्यद्वारा प्रार्थना गरिएका भगवान् श्रीगणेशले त्यसलाई छाड्नुभएन । त्यो दैत्य बलपूर्वक उठ्यो तर त्यसको शरीरको अगाडिको भाग अशक्त भएको थियो ।।३९।। त्यस बेला बालक गणेशले त्यसको टाउको बलपूर्वक तान्नुभयो । टाउको तान्दा घाँटीबाट त्यसको शिर टुक्रियो र बालकको हातमा टाउको आइपुग्यो ।।४०।। तत्काल पृथिवीले रक्तस्नान गरिन् । कमलको आकारको दुन्दुभिदैत्यको टाउको खेलाउँदै पार्वतीपुत्र श्रीगणेश रमाउनुभयो ।।४१।।

शोणितेन विलिप्ताङ्गो गणा मात्रे न्यवेदयन् ।
सा गत्वा पश्यति स्माऽथ पुत्रं दृष्ट्वा तथाविधम् ।।४२।।

तच्छिरो दूरतः क्षिप्त्वा वस्त्रेण च ममार्ज तम् ।
स्नापयित्वा स्वयं स्नात्वा ददौ स्तन्यं तदा मुदा ।।४३।।

ततः सख्यो गणाश्चापुः पप्रच्छुः क्षेममर्भकम् ।
सोवाच परमं क्षेम बालके शिवभक्तितः ।।४४।।

मरीचिरक्षणाच्चापि कुशलं मम बालके ।
ततस्ते तं निरासुर्वै दूरतो दुष्टदानवम् ।।४५।।

ततो हर्षयुता जग्मुर्गणाः सख्यो निजं गृहम् ।
पार्वती हर्षसंयुक्ता सबाला प्राविशद् गृहम् ।।४६।।

रगतको धारा बगिरहेको टाउको खेलाउँदा गणेशको शरीर पनि रक्ताम्य भयो। यो देखेर शिवगणले पार्वतीलाई गई निवेदन गरे । पार्वती पनि श्रीगणेश भएको ठाउँमा जानुभयो र पुत्रका विचित्र बाललीलाको दर्शन गर्नुभयो ।।४२।। उहाँले बालकका हातमा रहेको दानवको शिरलाई टाढा फ्याँकिदिएर कपडाले बालकको शरीर पुछ्नुभयो । त्यसपछि श्रीगणेशलाई तलाउमा लिएर गई नुहाइदिनुभयो र आफूले पनि नुहाउनुभयो ।।४३।। त्यसपछि श्रीगणेशलाई दूध पिवाउनु भएको बेला पार्वतीका सामु शिवगण र सखीगण आई भन्न लागे - 'हे पार्वती ! बालकको अवस्था त राम्रै छ ? केही त भएको छैन?' पार्वतीले पनि शिवजीमा भक्तिभावका कारण बालकलाई आराम छ, केही भएको छैन ।।४४।। मरीचि ऋषिको रक्षा प्राप्त भएका कारण पनि मेरो बालकको शरीरमा आराम छ' भन्नुभयो । यो संवादपछि प्रसन्न भएका गणहरूले दैत्यको लाशलाई टाढा लगेर फ्याँकिदिए ।।४५।। त्यसपछि प्रसन्न भएका सबै शिवगण र पार्वतीका सँगिनीहरू पनि आ-आफ्ना घरतर्फ लागे । बालकको सुरक्षा भएका कारण अत्यन्त रमाउनु भएकी पार्वती पनि बालकलाई लिएर आफ्नो घरभित्र प्रवेश गर्नुभयो ।।४६।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे मञ्चक-दुन्दुभिवधो नामाष्टाशीतितमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'श्रीगणेशद्वारा मञ्चक र दुन्दुभिको वध' शीर्षकान्वित अठासीऔं अध्याय पूर्ण भयो ।।८८।।

ॐ

# एकोनवतितमोऽध्यायः  { ८९ अध्याय }

क उवाच

ततस्तु दशमे मासे त्रिमुहूर्तागते रवौ ।
किञ्चिच्च रिङ्गमाणोऽसौ रमते च शिवासुतः ।।१।।

पादाभ्याञ्चालयन् क्वापि गूढं गूढञ्च भाषते ।
लुण्ठते नर्तते चापि रोदनं कुरुते च ताम् ।।२।।

दृष्ट्वा शिवाञ्च सहसा पृष्ठलग्नो व्रजत्यपि।
दृष्ट्वा तथाविधं बालं जहर्षे पार्वती तदा ।।३।।

एतस्मिन्नन्तरे दृष्टो दैत्य आजगराभिधः ।
वमन्नग्निकणान् दृष्ट्या वज्रसारतनुर्दृढः ।।४।।

ललज्जिह्वो दीर्घदेहो ग्रसन्निव महागिरिम् ।
उपविष्टो द्रुमतले द्वे जिह्वे लालयन्मुहुः ।।५।।

तं बालो बालभावेन रिङ्गित्वा विदधार ह ।
स निनाय च तं शीघ्रमास्यान्तः सह तेन च ।।६।।

अन्तःप्रविष्टे ओष्ठौ स न्यमीलयत वायुभुक् ।
नापश्यदङ्गणे बालं गौरी विह्वलमानसा ।।७।।

अत्र क्रीडन् स्थितो बालः केन नीतो हतो नु वा ।
शुशोच परमार्तासौ तताड मस्तकं निजम् ।।८।।

तावद् गणैर्निषिद्धा सा मा मातर्विमना भव।
बालप्रभावो विज्ञातः शतशो बलवत्तरः ।।९।।

बालस्तदुदरगतो ववृधे च निरुध्य च ।
श्वासं तस्य तु दैत्यस्य पुच्छान्तं सोऽप्यचालयत् ।।१०।।

प्राणवायुस्तु नेत्राभ्यां रुधिरेण विनिर्ययौ ।
विदार्य देहमस्यासौ बहिर्यातोऽम्बिकासुतः ।।११।।

ब्रह्माजीले भन्नुभयो - भगवान् श्रीगणेशले दसौं महिनामा प्रवेश गर्नु भएपछि एक दिन सूर्योदय हुँदा तेस्रो मुहूर्तमा पार्वतीपुत्र श्रीगणेश आँगनमा रिंगेर खेलिरहनु भएको थियो ।।१।। आफ्ना दुई पाउद्वारा जमिनमा टेक्दै मन्दमन्द केही बोलिरहनुभएको थियो । कहिले भुईंमा लडिबुडी खेल्नुहुन्थ्यो, कहिले उभिएर नाच्नुहुन्थ्यो र कहिले बसेर रुनुहुन्थ्यो । आमालाई देखेपछि दौडेर आमाका पछिपछि पनि भाग्नुहुन्थ्यो। आफ्ना बालक पुत्रका यी विचित्र लीला देखेर पार्वती अत्यन्त प्रसन्न हुनुभयो ।।२-३।। त्यसै बेला वज्रजस्तो कठोर शरीर भएको बलशाली आजगरनामक दैत्यलाई आँखाबाट अग्निका ज्वाला निकाल्दै आएको सबैले देखे । विशाल शरीर भएको त्यो दैत्य एकै गासमा ठूला पर्वतलाई पनि निल्ने छाँटले जिब्रो निकालेर लपलपाइरहेको थियो । केही बेरपछि त्यो आफ्ना दुइटा जिब्रा बाहिर निकाल्दै एउटा विशाल रूखको फेदमा बस्यो ।।४-५।। बालक गणेशले घुम्दै गई त्यसलाई समाउनुभयो । त्यसले श्रीगणेशलाई आफ्नो मुखभित्र निल्यो। श्रीगणेश त्यसका मुखभित्र पस्नुभएपछि त्यसले आफ्ना दुवै ओठ बन्द गर्‍यो । त्यस बेला आँगनमा खेलिरहेको आफ्नो बालकलाई नदेखेर पार्वती व्याकुल हुनुभयो।।६-७।। उहाँले भन्नुभयो - 'भर्खरै यहाँ खेलिरहेको मेरो बालकलाई कसले अपहरण गर्‍यो अथवा कसले मारिदियो ?' पार्वतीले यसरी चिन्ता गर्नुभयो र आर्त भएर आफ्ना हातले निधारमा प्रहार गर्न थाल्नुभयो ।।८।। त्यस बेला शिवगणहरू आएर पार्वतीलाई त्यसो नगर्न अनुरोध गर्दै भने- 'आमा पार्वती ! हजुरले बालकको प्रभाव जान्नु भएकै छ । त्यो दैत्यभन्दा बालक सयौं गुणा बलवान् हुनुहुन्छ, हजुरले धीर नगर्नुहोस्' ।।९।। आजगर दैत्यको पेटभित्र प्रवेश गर्नुभएका भगवान् गणेश त्यहाँ बढ्न थाल्नुभयो । उहाँको शरीर बढ्दै गएपछि त्यस दैत्यको श्वास रोकिन थाल्यो । त्यसबाट आत्तिएर दैत्यले पुच्छर कपाउन थाल्यो ।।१०।। त्यसका आँखाहरूबाट रगतका साथ प्राणवायु पनि निस्केर गयो । अजगर दैत्य मरेपछि त्यसको शरीरलाई च्यातेर पार्वतीनन्दन श्रीगणेश बाहिर आउनुभयो ।।११।। दैत्यको

चिक्रीड रुधिरार्द्राङ्गः किं न पुष्पितकिंशुकः ।
ततो गणास्तं निरीक्ष्य लिहन्तं स्वाङ्गुलिं शिशुम् ।।१२।।

उच्चैरूचुर्गिरिसुतामयं बालो विनिर्गतः ।
अस्यास्यान्मारयित्वा तं दैत्यमाजगरं खलम् ।।१३।।

क उवाच

तद्वधानन्तरं बालमादाय सत्वरं शिवा ।
स्नापयामास सहसा लालयित्वा स्तनं ददौ ।।१४।।

क्व गतोऽसि क्षणो बाल ! त्वां विनाब्दत्वमागतः ।
ततो ददर्शाजगरं विस्तीर्णं शतयोजनम् ।।१५।।

भयानकमुखं दुष्टं वमन्तं रुधिरं बहु ।
पतितं वृक्षजालानि पातयित्वा गृहाणि च ।।१६।।

गौर्युवाच

अस्मिन् स्थले कियन्तो नु भवेयुर्दैत्यराक्षसाः ।
कियन्तो निधनं प्राप्ता अस्य बालस्य विक्रमात् ।।१७।।

ततस्तं चिक्षिपुः सर्वे गणा दूरे महासुरम् ।
ततस्त्वेकादशे मासे द्वारदेशे शिवा ययौ ।।१८।।

पश्यन्ती सखीभिर्बालकौतुकानि बहून्यपि ।
कस्यचिद् वदनं बालश्चुम्बते चुम्बयत्यपि ।।१९।।

आच्छादते चक्षुषी च कस्यचित् पृष्ठगः स्वयम् ।
पिबते मातुरन्यस्याः स्तन्यं गत्वा बलादसौ ।।२०।।

मुखमाच्छाद्य वस्त्रेण बिभीषयति चापरान् ।
मुखं केशान्नासिकाञ्च कर्षते भूषणान्यपि ।।२१।।

वदते स्खलितां वाणीं परान् दृष्ट्वा स्वकानपि।
एतस्मिन्नन्तरे दुष्टो दानवः शलभासुरः ।।२२।।

ब्रह्मादीनामगम्योऽसौ पर्वतस्कन्धमण्डलः ।
व्योमस्फोटिमहामूर्धा नीलवर्णो यथा घनः ।।२३।।

रगतबाट रक्ताम्य हुनुभएका र राता फूलले भरिभराउ पलाशको वृक्षजस्तै देखिनुहुने श्रीगणेश आनन्दपूर्वक खेल्न लाग्नुभयो। त्यसपछि शिवगण त्यहाँ आए । तिनले आफ्ना औंला चाटिरहेका भगवान् श्रीगणेशलाई देखेर भने- 'हे पार्वती ! हजुर नआत्तिनुहोस्। बालक गणेश आजगर दैत्यलाई मारी त्यसको पेटबाट बाहिर आउनुभएको छ ।।१२-१३।।

**ब्रह्माजीले भन्नुभयो** - आजगर दैत्यको वधपछि पार्वतीले छिट्टै गएर बालकलाई काखमा लिनुभयो, नुहाइदिनुभयो र स्तनपान गराउनुभयो । स्तनपान गराउँदा पार्वतीले भन्नुभयो - 'हे बाबु ! तिमी कहाँ गएका थियौ ? तिमी नहुँदा एक छिन पनि मेरा लागि एक वर्षसमान भयो ।' त्यसै बेला पार्वतीले सय योजन फैलिएको आजगर दैत्यको लाश देख्नुभयो । त्यसको मुख भयङ्कर थियो । त्यसले रगत बान्ता गरिरहेको थियो । श्रीगणेशको प्रहारबाट भुइँमा ढल्दा त्यसले अनेक रूख र घरहरूलाई पनि ध्वस्त बनाएको थियो ।।१४-१६।।

**पार्वतीले भन्नुभयो** - 'यहाँ कति राक्षस र दैत्य होलान्? आक्रमण गर्न आएका कैयौं दैत्य र राक्षस मेरा बालकको पराक्रमबाट मरिसके' ।।१७।। त्यसपछि शिवगणले आएर महादैत्यको लाशलाई टाढा लगेर फ्याँकिदिए । गणेश एघार महिनामा लाग्नुभएपछि एक दिन पार्वती आफ्नो घरको ढोकामा उभिनुभएको थियो । उहाँ सँगिनीहरूका साथ रही बालकका अनेक विचित्र चरित्र हेरिरहनु भएको थियो । बालक गणेशले कुनै बालकको गालामा चुम्बन गरिरहेका थिए र कसैबाट आफ्नो गालामा चुम्बन गराइरहेका थिए ।।१८-१९।। फेरि कुनै बालकको पछाडिपट्टि गएर आफ्ना हातले त्यसका दुईवटै आँखा छोपिरहेका देखिन्थे । कुनै साथीकी आमासामु गई बलपूर्वक तिनका स्तन चुसिरहेका देखिन्थे ।।२०।। तिनले खेल्दै गएर अरू साथीहरूका मुख कपडाले ढाकेर तर्साउने गर्थे । कुनै साथीको मुख, केश, नाक र गहनाहरू बलपूर्वक तान्ने गर्दथे ।।२१। कुनै ठाउँमा गई आफ्ना साथी र अरूलाई पनि देखेर तोते बोलीले सबैको मन प्रसन्न गराउँथे । यसरी बाललीला चलिरहेकै बेला ब्रह्मा आदि देवताहरूले मार्न नसकिने पर्वतझैं विशाल काँध भएको, आकाशलाई छुने अग्लो र ठूलो टाउको भएको, बादलझैं श्यामवर्णको, बाह्रमासे फूलझैं राता आँखा भएको, आफ्ना सिङले बादललाई स्पर्श

जपाकुसुमनयनो मेघस्पृक्शृङ्गमण्डलः।
बालान्तिकमुपायातो ग्रसन्निव जगत्त्रयम् ।।२४।।

तं धर्तुं बालको याति यत्र यत्र स गच्छति ।
एवन्तौ सुचिरं कालं भ्रमतः स्म महाजवौ ।।२५।।

ततः श्रान्तोऽभवद् बालो रुषाऽधावत् तदन्तिकम् ।
दधार सहसा दैत्यं शलभं बलवत्तरम् ।।२६।।

स पक्षौ स्फालयामास श्येनो हस्तगतो यथा।
बाधते चरणाघातैस्तं बालं शलभासुरः।।२७।।

प्रसार्य नयने क्रूरे पश्यती स्म तदा शिशुम् ।
मुमुचे तं तदा बालो दधार च पुनःपुनः ।।२८।।

दर्शयामास जननीं धरापृष्ठे व्यपोथयत् ।
शिवोवाच दयाविष्टा तं बालं क्रूरमानसम् ।।२९।।

जीवघातो न कर्तव्यो मुञ्चैनं प्राणिनं शिशो !
बलात् पुनः शिलापृष्ठे हठाच्चिक्षेप बालकः ।।३०।।

स तदा शतधा जातो निपपात च भूतले ।
गर्जयन् गगनं वृक्षान् पातयन् गृहतोरणान् ।।३१।।

वमन् रक्तं बहु मुखाद् दशयोजनविस्तृतः।
चूर्णयन्नाश्रमान् वृक्षाँस्ततो माता निनाय तम् ।।३२।।

बालं संस्थापयामास प्रादात् स्तन्यञ्च भोजनम् ।
सख्यो निरीक्ष्य तं बालं मृतं दैत्यन्तथाविधम् ।।३३।।

साधु साध्विति ताः प्रोचुस्ताञ्च पर्वतकन्यकाम् ।
गृहं विवेश गिरिजा ताश्च सख्यो मुदान्विताः ।।३४।।

चिक्षिपुर्दूरतो दैत्यं तदाज्ञावशगा गणाः ।
मुमुचुः पुष्पवर्षाणि बालं देवगणास्तदा ।।३५।।

गर्ने शलभासुर-नामक दानव तीनै लोकलाई एकै गासमा खान खोजेझैं गरी श्रीगणेशका समीपमा आइपुग्यो ।।२२-२४।। बालक श्रीगणेश त्यो दानव जता जान्थ्यो त्यतै त्यसलाई समाउन अग्रसर हुनुभयो। यस क्रमले दुबै महाबली वीरहरू एकले अर्कालाई समाउने हिसाबले धेरैकालसम्म यताउति घुमिरहे । थाकेका बालक गणेशले त्यसलाई समाउनुभयो । हातमा समातिएको बाज चरोझैं त्यसले आफ्ना दुई प्वाँख फड्फडायो र खुट्टाले प्रहार गरेर गणेशलाई कष्ट दियो ।।२५-२७।। त्यसले डरलाग्दा आँखा फैलाएर क्रोधले बालक गणेशलाई हेऱ्यो । बालकले पनि एक छिन त्यसलाई आफ्नो हातबाट मुक्त गरी फेरि समाउनुभयो ।।२८।। सङ्घर्षपूर्ण युद्ध हुँदै जाँदा बालक गणेशले आफ्नी आमा पार्वतीलाई देखाउँदै त्यस शलभासुरलाई भुइँमा पछार्नुभयो । आफ्ना बालकलाई अत्यन्त क्रुद्ध र क्रूर भएको देखेर दयालु पार्वतीले भन्नुभयो - 'बाबु गणेश ! प्राणीको हत्या गर्नु हुँदैन । यस शलभासुरलाई छाडिदेऊ ।' आमाले भनेको कुरा सुनेर बालक गणेशले बलपूर्वक र हठपूर्वक त्यसलाई फेरि ढुंगामा पछार्नुभयो ।।२९-३०।। पछारिएको त्यो दैत्य सय टुक्रा भएर आकाशलाई शब्दायमान गराउँदै रूख र घरका तोरणहरूलाई ढलाउँदै भुइँमा लड्यो ।।३१।। मुखबाट रगत बान्ता गर्दै चालीस कोश फैलिएको शलभासुरको शरीर ढल्दा आश्रम र वृक्षहरू चूर्णचूर्ण भएका थिए ।।३२।। त्यसपछि माता पार्वतीले बालकलाई समातेर लैजानुभयो। उहाँले प्रेमपूर्वक दूध पियाएपछि भोजन गराउनुभयो । पार्वतीका सँगिनीहरूले अद्भुत पराक्रम भएका बालक गणेश र शलभासुरको लाशलाई देखेर राम्रो राम्रो भन्दै पार्वतीलाई धन्यवाद दिए। पार्वती आफ्नो घरमा प्रवेश गर्नुभयो र सखीहरू पनि प्रसन्न भए ।।३३-३४।। पार्वतीको आज्ञा पालन गर्ने शिवगणहरूले दैत्यको लाशलाई टाढा लगेर फ्याँकिदिए । आकाशबाट बालक श्रीगणेशमाथि देवताहरूले पुष्पवर्षा गरे ।।३५।।

ॐ

**इति श्रीगणेशपुराणे क्रीडाखण्डे आजगरासुरशलभासुरवधो नामैकोननवतितमोऽध्यायः**

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'आजगरासुर र शलभासुरको वध' शीर्षकान्वित उनानब्बेऔं अध्याय पूर्ण भयो ।।८९।।

ॐ

## नवतितमोऽध्यायः { ९० अध्याय }

क उवाच

ततो द्वादशमासे तु गिरिजा सुतमद्भुतम् ।
उपविष्टाऽऽलीभिः सार्धमङ्के कृत्वा स्वलङ्कृतम् ।।१।।

कोटिसूर्यनिभं कोटिभूषणैश्च विराजितम् ।
ततस्तस्या महानासीदुत्सवो नृत्यदर्शने ।।२।।

बालकानां हरस्याऽथ ज्ञात्वा वाञ्छां शिशुस्तदा ।
थेथेथेयीति शब्देन ननर्त गिरिजासुतः ।।३।।

श्रुत्वा तदीयं तं शब्दं हरो नर्तितुमागतः ।
शिवं नृत्यन्तमालोक्य ननर्त श्रीवरोऽपि च ।।४।।

तत इन्द्रादयो देवास्तत्र नर्तितुमागताः ।
स यथा नर्तते बालस्तेऽपि नृत्यन्ति तादृशम् ।।५।।

दर्शयन्ति तथा भावं स यथा दर्शत्यपि ।
मनुष्याः पशवो वृक्षा यक्षराक्षसपन्नगाः ।।६।।

मुनयो मानवो भूपा भुवनानि चतुर्दश ।
एकविंशतिस्वर्गस्थाः सचेतनमचेतनम् ।।७।।

बालप्रभावान्ननृते बालच्छन्देन भूतलम् ।
मुनिपत्न्यो देवपत्न्यो ननृतुर्गिरिकन्यया ।।८।।

नूपुराणां सिञ्जितेन क्षुद्रघण्टारवेण च ।
पादाघातस्य शब्देन दिशो विदिश एव च ।।९।।

गगनं पर्वता आसन् नादयुक्तास्तदा मुने ।
चकम्पे धरणी शेषो रविश्चन्द्रश्च तारकाः ।।१०।।

**ब्रह्माजीले भन्नुभयो** - बालक श्रीगणेशले बाह्रौं महिनामा टेकनुभएपछि सँगिनीहरूसहित रहनुभएकी पार्वती आफ्ना विचित्र पराक्रमी छोरालाई काखमा लिएर बस्नुभयो ।।१।। त्यस बेला बालक श्रीगणेश आफ्नो लीलाका कारण करोडौं सूर्यसमान ज्योतिले चम्किनुभएको थियो र अत्यन्त उत्तम अलङ्कारद्वारा शोभायमान हुनुहुन्थ्यो । पार्वती, भगवान् शङ्कर र श्रीगणेशका साथीहरूलाई सुन्दर बालक श्रीगणेशको नृत्य हेर्ने अत्यन्त उत्कण्ठा भयो । सबैको उत्कण्ठा बुझेर बालक श्रीगणेश ती सबैका सामु गई थै-थै गर्दै नाच्न थाल्नुभयो ।।२-३।। श्रीगणेशका मुखबाट निस्केको थै-थै शब्दले अत्यन्त हर्षित हुनुभएका भगवान् शङ्कर पनि नाच्न थाल्नुभयो । शिवजीलाई पनि नाचिरहनु भएको देखेर भगवान् विष्णु पनि नाच्न थाल्नुभयो। विष्णुलाई नाच्नुभएको देखेर इन्द्र आदि देवताहरू पनि त्यहाँ नृत्यकला देखाउन आइपुगे। बालक श्रीगणेश जुन शैलीबाट नाचिरहनुभएको थियो ती सबै देवताहरू पनि त्यही शैली अँगालेर नाचिरहेका थिए ।।४-५।। भगवान् श्रीगणेशजस्ता भावभङ्गी देखाउनुहुन्थ्यो त्यस्तै भावभङ्गी ती सबै देवताहरू पनि देखाइरहेका थिए । त्यस बेला मानिस, पशु, वृक्ष, यक्ष, राक्षस, सर्प, मुनिगण, मनुगण, राजगण, चौध भुवन र एक्काइस स्वर्गमा रहेका स्वर्गीय प्राणीहरू, स्थावर, जङ्गम सबै बालक श्रीगणेशको नृत्यकला अँगाली नाच्न थाले र पृथिवीतलको वातावरण नृत्यमय बन्यो। त्यस बेला भगवती पार्वती पनि नाच्न थाल्नुहुँदा मुनिपत्नी र देवपत्नीहरू पनि उमङ्गका साथ उहाँसँग नृत्य गर्न आइपुगे ।।६-८।। त्यहाँ नूपुरहरू बज्न थाले, घुँघुरुहरू निनादित भए र नृत्यमा सबैका चरणहरूको सञ्चालन हुँदा निस्केको महाशब्दले दिशा, विदिशा, आकाश एवं पर्वत सबै निनादित भए ।।९।। पृथिवी काँप्न थालिन्, शेषनाग पनि कम्पायमान भए, त्यतिमात्र होइन, सूर्य चन्द्रमा र ताराहरू पनि नृत्य गर्न लागे । संसारमा नृत्यबाहेक केही रहेन। नृत्य धेरै भयो भन्ने जानेर पार्वतीले

ततो नृत्यस्यातिशयं ज्ञात्वा गौरी न्यषेधयत् ।
न चक्रे बालको वाक्यं यदा गौरीसमीरितम् ।।११।।

नूपुराख्यो महादैत्यो महाकृष्णातनुर्दृढः ।
पातालचरणो व्योमसंस्पर्शिदृढमस्तकः ।।१२।।

नूपुरान्तर्गतो दुष्टः सूक्ष्मरूपः शिशोरसौ ।
स बालस्तं बबन्धाशु मायया बलवत्तरम् ।।१३।।

शृङ्खलाभिश्चतुर्दन्तं यथा मदच्युतं गजम् ।
अङ्के जग्राह तं बालं पुनरेवाद्रिकन्यका ।।१४।।

तद्भारेण पिपीडाऽथ भूभारेण समेन सा ।
उवाच वचसा गौरी कथं गुरुतरो भवान् ।।।१५।।

इदानीमेव जातोऽसि तस्मादुत्तर मेऽङ्कतः ।
मम प्राणा गमिष्यन्ति तव भारेण बालक ।।१६।।

क उवाच

श्रुत्वा मातुर्वचो बालः पीडितायाा भृशं तदा ।
उत्ततार बलादङ्काद् दधावङ्घ्रियुगं शिशुः ।।१७।।

ततो निसृत्य दैत्योऽसौ व्योम्नि बभ्राम पक्षिवत् ।
तमसाऽव्यापि भूः सर्वा तेन सञ्छादिते रवौ ।।१८।।

सोऽकस्मान्निपपातोर्व्यां शतधा चाभवत् खलः ।
ततस्ते मुनयो देवाः परमानन्दनिर्वृताः ।।१९।।

तुष्टुवुर्बालरूपं तं परमात्मानमव्ययम् ।

देवर्षय ऊचुः

न जानीमो वयं देव ! रूपाणि तव यन्महः ।।२०।।

आफ्ना बालपुत्र श्रीगणेशलाई ननाच भनी अनुरोध गर्नुभयो। तर श्रीगणेशले आफ्नी आमा गौरीले भनेको आज्ञा पालन गर्नुभएन र नृत्य चलिरह्यो ।।१०-११।। त्यस बेला कालो शरीर भएको, अत्यन्त बलवान्, आफ्ना खुट्टाले पातालसम्म टेक्ने र आफ्ना मस्तकले आकाशको स्पर्श गर्ने नूपुरनामक दैत्य सूक्ष्मरूप धारण गरी श्रीगणेशको नूपुरभित्र लुक्न आइपुग्यो । भगवान् श्रीगणेशले आफ्ना नूपुरमा नूपुरदैत्यको प्रवेश भएको जानेर आफ्नो मायाको प्रयोग गरी त्यस बलवान् दैत्यलाई जञ्जीरले बाँध्नुभयो । जसरी कुनै वीरले गालाबाट मदका धारा बगाउने चार दाँते हात्तीलाई बाँधिदिन्छन् त्यसैगरी भगवान् श्रीगणेशले त्यसलाई आफ्नो शक्तिबाट बन्धनमा पार्नुभएको थियो । त्यस बेला पार्वतीले आफ्ना पुत्र श्रीगणेशलाई काखमा लिनुभयो । श्रीगणेशको पृथिवीभन्दा पनि गह्रौं शरीरको भारले पार्वतीलाई असह्य पीडा भयो । पार्वतीले आफ्ना बालकलाई भन्नुभयो - 'हे बाबु ! मैले जन्माएका तिमी आज कसरी धर्तीभन्दा पनि गह्रौं भयौ ? कसरी तिम्रो शरीरमा भारीपन आयो ? म तिम्रो भार सहन सक्दिनँ । तिमी मेरो काखबाट उठ । तिमी नउठेमा हे बालक ! तिम्रो भारले मेरा प्राण जानेछन्' ।।१२-१६।।

**ब्रह्माजीले भन्नुभयो** - अत्यन्त पीडित भएकी आफ्नी आमाका कुरा सुनेर बालक श्रीगणेश आमाको काखबाट ओर्लनुभयो। त्यसपछि उहाँले दैत्यका दुबै खुट्टामा समाउनुभयो। त्यसै बेला बन्धनमा परेको त्यो दैत्य बन्धनमुक्त भएर पक्षीझैं आकाशमा उड्न थाल्यो । त्यसको अन्धकारमय विशाल शरीरबाट पृथिवी ढाकिइन् र सूर्य पनि ढाकिए । पृथिवीमा अन्धकार छाएपछि भगवान् श्रीगणेशले त्यस दैत्यलाई समातेर धर्तीमा पछार्नुभयो र त्यो दुष्ट सय टुक्रा भएर भुइँमा फैलियो (यो) घटनापछि देवता र ऋषिहरू परम आनन्दमा मग्न भए ।।१७-१९।। ती सबैले बालकरूपमा आउनुभएका अव्यय परमात्मा श्रीगणेशको स्तुति गर्दै भने ।

**देवता र ऋषिहरूले भने** - 'हे परब्रह्मरूप श्रीगणेश! हजुरका रूपहरूको विषयमा हामी जान्दैनौं ? हजुरको तेजोमय आत्मतत्त्वबाट पनि हामी अपरिचित छौं । दानव र दैत्यहरूको नाश गर्ने हजुरका अनेक लीला र मायाको विषयमा पनि हामी

लीलामायाश्च विविधा दैत्यदानवनाशिका: ।
चरणात् त्याजितो दैत्यो रविमण्डललोपक: ।।२१।।

भ्रमित्वा व्योमनि भृशं पतित: शतधाऽभवत् ।
संहृत्य जीवसङ्घातान् वृक्षानाश्रमपर्वतान् ।।२२।।

तव नृत्यं ततो वीक्ष्य सर्वे नृत्यं प्रचक्रिरे ।

क उवाच

ततस्ते पुपूजु: सर्वे तं बालं विश्वरूपिणम् ।
नृत्योत्सवे निवृत्ते तु गौतमादीन् विसृज्य सा ।।२३।।

पार्वती बालमादाय लालयित्वा स्तनं ददौ ।
स्त्रिय: सर्वा विसृज्याथ विवेश निजमन्दिरम् ।।२४।।

तत: पुन: कदाचित् स मुनिबालै: समन्वित: ।
गृहाद् बहि: क्रीडनार्थं ययौ चिक्रीड लीलया ।।२५।।

मल्लयुद्धञ्च ते चक्रुर्द्वन्द्वशोऽनेकधा बहु ।
पातयामासुरागृह्य शिखायान्ते परस्परम् ।।२६।।

जघ्नु: शिर: शिरोभिश्च जानुभिर्जानुनी तथा ।
कूर्परं कूर्परेणैव चरणं चरणेन च ।।२७।।

रुरुहु: पृष्ठभागं ते स्कन्धभागं परस्परम् ।
लत्ताप्रहारान्निर्जघ्नुरुदरे मस्तकेऽपि च ।।२८।।

केचिच्च पुपूजुर्बालं गन्धपुष्पाक्षतादिभि: ।
केचिन्नीत्वाश्रमपदं भोजयामासुरन्धसा ।।२९।।

नमश्चक्रु: पदयुगं केचिन्मालां ददु: शुभाम् ।
अविपुत्रस्वरूपेण दैत्य: सिन्धुप्रणोदित: ।।३०।।

अनभिज्ञ छौं । हजुरले सूर्यमण्डललाई आफ्नो तेजबाट ढाकिदिने दैत्यलाई पनि खुट्टाको प्रहारबाट भुइँमा लडाउनुभयो । त्यो दैत्य चक्कर काट्दै आकाशबाट भुइँमा खस्यो र हामीहरूले हेर्दाहेर्दै त्यसको शरीर सय टुक्रा भएर फैलियो । त्यसको शरीर खस्दा अनेक प्राणी, वृक्ष, आश्रम, पर्वत पनि ध्वस्त भए ।।२०-२२।। हजुरको नृत्य देखेर देवता आदि सम्पूर्ण भूमण्डलका प्राणी र जलचर नृत्यमा निमग्न भएका थिए । हजुरको महिमा अवर्णनीय छ ।'

**ब्रह्माजीले भन्नुभयो-** स्तुति गरेपछि ती देवता र ऋषिहरूले विश्वात्मा, विराट् रूपधारी भगवान् बालगणेशको पूजा गरे । नृत्यको उत्सव सकियो । पार्वतीले त्यहाँ आएर आनन्दपूर्वक श्रीगणेशको नृत्यमा सहभागी भएका गौतम आदि ऋषिहरूको बिदाइ गर्नुभयो । त्यसपछि आफ्ना बालक श्रीगणेशलाई काखमा राखी माया गर्दै स्तन चुसाउनुभयो । बालकले स्तनपान गरेपछि आफ्ना सँगिनीहरूलाई बिदाबादी गरी पार्वतीले आफ्नो घरमा प्रवेश गर्नुभयो ।।२३-२४।। कुनै दिन पार्वतीका पुत्र श्रीगणेश आफ्ना बालक मित्रहरूलाई लिएर आफ्नो घरदेखि बाहिर गई आनन्दपूर्वक बालक्रीडा गर्न लाग्नुभयो । उहाँ र उहाँका साथीहरू मैदानमा गई अनेक प्रकारबाट मल्लयुद्ध गर्न लागे । एकले अर्कालाई चुल्ठोमा समातेर भुइँमा लडाउने, फेरि उठ्ने र फेरि लडाउने यो शैलीबाट बालक्रीडा सम्पन्न भयो ।।२५-२६।। बालकहरू आपसमा शिरले शिरमा, घुँडाले घुँडा, कुहिनाले कुहिना र पाउले पाउमा प्रहार गर्दै मल्लयुद्ध गरिरहेका थिए । कुनै बालक आफ्नो साथीको पिठ्यूँमा सवार हुन्थ्यो भने कुनै बालक अर्का बालकको काँधमा सवार हुन्थ्यो । कुनै बालक आफ्नो साथीलाई लात्तीले प्रहार गरिरहेको देखिन्थ्यो । यसरी श्रीगणेशका साथीहरूले एक-आपसमा युद्ध गर्दा पेट र निधारमा पनि परस्पर प्रहार गरिरहेका थिए । केही बालकहरूले श्रीगणेशलाई आश्रममा लिएर गई चन्दन, पुष्प, अक्षता आदि चढाएर पूजा गरे । केही बालकहरूले आफ्नो घर लगेर उहाँलाई मीठा मीठा पदार्थ टक्र्याई भोजन गराए ।।२७-२९।। केही बालकहरूले आफ्नो घरमा लगेर श्रीगणेशका पाउमा प्रणाम गरे । कुनै बालकले श्रीगणेशलाई आफ्नो घरमा लगी अति उत्तम माला लगाइदिए। त्यसै बेला सिन्दूर दैत्यद्वारा पठाइएको एउटा दैत्य भेंडाको

यं दृष्ट्वा भयमभ्येति दण्डपाणिर्भयानकः ।
स्वबलेन जघानारींस्तीक्ष्णधारनखो बली ।।३१।।

विरुदं बाहुदेशे स जित्वा सर्वान् बबन्ध ह ।
विशालाक्षो बृहच्छृङ्गो महागोत्रविदारणः ।।३२।।

पुच्छाघातेन जीवानां यश्चक्रे नाशनं खलः ।
उन्मूलयामास द्रुमान् शृङ्गाघातेन पर्वतान् ।।३३।।

पृष्ठलग्नो मनुष्याणां बलान्मारयते बली ।
स ययौ पार्वतीबालं हन्तुकामो महासुरः ।।३४।।

पृष्ठतो धावयित्वा स यावन्मारयते तु तम् ।
दधार शृङ्गयोर्बालो हस्ताभ्यां तावदेव हि ।।३५।।

रुरोह च स तत्पृष्ठे हयपृष्ठे यथाऽर्भकः ।
ततो मुनिसुताः केचित् पुच्छं धृत्वा व्यकर्षयन् ।।३६।।

केचिद् दण्डैश्च लगुडैर्निजघ्नुर्दैत्यपुङ्गवम् ।
सोऽवमत्य तु ताञ्जघ्ने पुच्छान्तेन स सत्वरम् ।।३७।।

निपेतुस्ते तदा भूमौ पुच्छाघातेन पीडिताः ।
दृष्ट्वा तस्य बलं बालोऽवतरच्च दधार तम् ।।३८।।

आस्फालयत् तदा पृष्ठे भ्रामयित्वा चिरन्तु तम् ।
सहस्रधा विशीर्णाङ्गो ममार सहसाऽसुरः ।।३९।।

अन्त्यशब्देन तस्याथ बिभाय भुवनत्रयम् ।
वमन् रक्तं बहु मुखात् प्रसार्य विकृतं मुखम् ।।४०।।

ततो बाला मुनीनां तेऽकथयन्नचलोद्भवाम् ।
अनेन निधनं नीतो ह्यविजेयो महासुरैः ।।४१।।

निहन्तुं नः समायातः क्रीडता बलशालिना ।

रूप लिएर त्यहाँ आयो । त्यो दैत्य भयङ्कर थियो र त्यो यमराजका निमित्त पनि भयदायक थियो । नङको तीखो टुप्पालाई शस्त्रको रूपमा प्रयोग गर्ने त्यस दैत्यले आफ्नो पराक्रमबाट अनेक शत्रुहरूको वध गरेको थियो ।।३०-३१।। त्यसले विरुदनामक राजालाई युद्धमा जितेर सैनिकसहित कारागारमा थुनेको थियो। त्यसका आँखा ठूला थिए र सिङ लामा एवं तीखा थिए । त्यसले आफ्ना तीखा सिङबाट प्रहार गरेर पर्वतलाई पनि भुइँमा लडाउँथ्यो ।।३२।। त्यसले आफ्नो पुच्छरद्वारा प्रहार गरेर हजारौं जीवहरूको नाश गरेको थियो र आफ्ना तीखा सिङको प्रहारबाट वृक्ष र पर्वतहरूलाई जरैबाट उन्मूलन गरेको थियो ।।३३।। त्यसले आफ्नो जीवनमा बाटामा हिंड्ने मानिसहरूको पिछा गरी तिनको हत्या गरेको थियो । त्यो दानव पार्वतीनन्दन श्रीगणेशको वध गर्ने इच्छाले उहाँका पछि-पछि दौडन थाल्यो । आफ्नो पिछा गर्ने त्यस दानवका दुबै सिङ समाएर बालक श्रीगणेश त्यसको पिठ्यूँमा सवार हुनुभयो । घोडाको पिठ्यूँमा सवार हुँदा कुनै बालकको जुन शोभा हुन्छ, त्यही शोभा दैत्यको पिठ्यूँमा सवार हुनुभएका श्रीगणेशको थियो । त्यसपछि केही मुनिबालकहरूले त्यस दानवलाई पुच्छरमा समातेर तान्न थाले ।।३४-३६।। केही मुनिपुत्रहरू दैत्यमाथि लौरो प्रहार गर्न लागे । त्यस दैत्यले ती बालकहरूमध्ये कसैलाई पनि नगनेर आफ्ना पुच्छरले हिर्काउन थाल्यो । दैत्यको पुच्छरबाट प्रहार गरिएका ती मुनिबालकहरू भुइँमा लडे । भैंडाको रूपमा आएको त्यस दैत्यको बल विचार गरेर भगवान् श्रीगणेश आइपुग्नुभयो र त्यसलाई समाउनुभयो। उहाँले त्यसलाई धेरै बेरसम्म उचाली रिंगाएर जोडसँग भुइँमा पछार्नुभयो । भगवानद्वारा पछारिंदा त्यस दैत्यको शरीरका हजारौं टुक्रा भए र त्यसले प्राणत्याग गऱ्यो ।।३७-३९।। त्यसले प्राणत्याग गर्ने बेलामा उच्चारण गरेको डरलाग्दो शब्दले तीनै लोक काँपेका थिए । त्यो भुइँमा लड्दा त्यसको मुखबाट रगतका धारा बगेका थिए । त्यसपछि मुनिका बालकहरूले पार्वतीसँग भगवान् श्रीगणेशले भैंडाको रूपमा आएका दैत्यको वध गर्नुभएको घटना सुनाउँदै भने- 'हे पार्वती ! कसैले पनि जित्न नसकिने महादैत्यलाई बालक श्रीगणेशले मारिदिए । त्यो दैत्य हामीमाथि आइलागेको थियो तर यिनको पराक्रमका सामु त्यसको केही लागेन, आखिर पछारिएर मऱ्यो ।'

क उवाच

अम्बा निरीक्ष्य निहतं महादैत्यं सुतञ्च तम् ।।४२।।

आश्चर्यं परमं कृत्वा निनाय निजमन्दिरम् ।
दध्योदनं भ्रामयित्वा बालोपरि जलेन ह ।।४३।।

तत्याज दूरतो गेहात् स्तनपानं ततो ददौ ।
तानि खण्डानि दैत्यस्य तत्यजुर्दूरतो गणाः ।।४४।।

मुनयो मुनिपत्न्यश्च मुनिबालाः स्त्रियोऽपि च ।
प्रशंशसुः सुतं गौर्या देवाः पुष्पाणि तत्यजुः ।।४५।।

आशिषोऽपि ददुर्विप्रा नृत्यन्ते स्माप्सरोगणाः ।।४६।।

**ब्रह्माजीले भन्नुभयो** - मुनि बालकहरूको मुखबाट श्रीगणेशद्वारा भएको पराक्रमपूर्ण घटनाको विषयमा सुनेपछि पार्वतीले मरेको दैत्य र दैत्यहन्ता आफ्ना पुत्रको दर्शन गर्नुभयो ।।४०-४२।। आफ्ना पुत्रको पराक्रमबाट आश्चर्यचकित भएकी पार्वतीले पुत्रलाई समातेर घरभित्र लैजानुभयो । त्यहाँ गएर उहाँले बालकमाथि जलका साथै दही र चामल घुमाएर टाढा फ्याँकिदिनुभयो। त्यसपछि बालकलाई काखमा राखी स्तन चुसाउनुभयो । शिवगणले दैत्यका शरीरका टुक्राहरूलाई टाढा लगेर फ्याँकिदिए ।।४३-४४।। मुनि, मुनिपत्नी, मुनिबालक र अन्य नर-नारीहरू गौरीका पुत्रको पराक्रम देखेर प्रसन्न भई प्रशंसा गर्न थाले । देवताहरूले आकाशबाट पुष्पवर्षा गरे, ब्राह्मणहरूले आशीर्वाद प्रदान गरे र आनन्दमग्न अप्सराहरू नृत्य गर्न थाले ।।४५-४६।।

ॐ

**इति श्रीगणेशपुराणे क्रीडाखण्डे नूपुरासुर-मेषासुरवधो नाम नवतितमोऽध्यायः**

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'नूपुरासुर र मेषासुरको वध' शीर्षकान्वित नब्बेऔँ अध्याय पूर्ण भयो ।।९०।।

ॐ

## एकनवतितमोऽध्यायः　　{ ९१ अध्याय }

क उवाच

ततो द्वितीये वर्षे स बालो बालैरसङ्कुचकैः ।
चिक्रीड वाटिकामध्ये नानाद्रुमलताकुले ।।१।।

फलानि भक्षयामास खर्जूरीपनसानि च ।
ददौ तेभ्योऽतिबलात् स पातयित्वा बहून्यपि ।।२।।

कूटो नाम महादैत्यः कूटमायाकरः खलः ।
तत्तृषाकालमाज्ञाय वापिकायां विषाणि सः ।।३।।

लोडयामास दुर्बुद्धिः सर्वेषां हि जिघांसया ।
तेषां तु स्पर्शमात्रेण म्रियन्ते प्राणिनः क्षणात् ।।४।।

यदुत्थवायुना स्पृष्टा निपतन्ति खगा भुवि ।
ततः कूटो गतस्तत्र तस्थौ नाशदिदृक्षया ।।५।।

ततस्ते बालकाः पातुमज्ञानात् तु जलं ययुः ।
पपुः सर्वे स्वचुलुकैरञ्जलीभिश्च केचन ।।६।।

मृतान् मत्स्यान् समादाय बहिर्याता मृतास्तदा ।
रक्षको ग्राममध्ये तु घोषयामास तन्मृतिम् ।।७।।

ततो महारवं कृत्वा तत्रेयुः सर्वनागराः ।
घ्नन्तः पाणितलैर्वक्षः पाषाणैरपरे शिरः ।।८।।

हाहाकारो महानासीत् पुंवधूयोषितामपि ।
तेषामाक्रन्दनं श्रुत्वा शिवाया अपि बालकः ।।९।।

**ब्रह्माजीले भन्नुभयो** – पार्वतीपुत्र गणेशले दोस्रो वर्षमा प्रवेश गर्नुभएपछि एक दिन अनेक थरि वृक्ष र लहराले सुहाएको बगैंचामा गएर आफ्ना अनेक बालसखाहरूका साथ क्रीडा गर्नुभयो ।।१।। उहाँले त्यहाँ खजूर र कटहरका फल टिपेर खानुभयो । खजूर, कटहर आदि फलवृक्षहरूमा चढेर शक्तिपूर्वक हल्लाई अनेक फल भुइँमा झारेर आफ्ना साथीहरूलाई पनि खुवाउनुभयो ।।२।। त्यस बेला स्वभावले अत्यन्त दुष्ट, माया एवं इन्द्रजाल फैलाउन सिपालु र दुर्बुद्धि कूटनामक महादैत्यले साथीहरूसमेत श्रीगणेशलाई मार्ने इच्छाले 'गणेश र तिनका साथी फल खाएपछि तिर्खाउनेछन् र यहाँ पानी खान आउनेछन्' भनी नजिकै रहेको कुवामा विष राखेर पानी हुडल्ने काम गर्‍यो । जुन विषलाई छोएर फैलिने हावाको सम्पर्कले आकाशमा उडिरहेका चरा पनि भुइँमा खस्दछन् त्यस्तो विष त्यहाँ प्रयोग गरिएको थियो । यसरी विषको प्रयोग गरेपछि बालकहरूको विनाश आफ्नै आँखाले हेर्ने इच्छाले त्यो महादैत्य त्यहीं लुकेर रहेको थियो।।३-५।। जलाशयमा विषप्रयोग भएको कुरा थाहा नपाएका बालकहरू जलपान गर्न त्यहाँ आए । तिनीहरू सबैले हत्केलामा राखेर पानी खाए । कसैले अञ्जुलीमा भरेर पेटभरि पानी खाए ।।६।। तिनले त्यहाँ विषाक्त पानी खाएर मरेका माछाहरू देखे र आनन्दित भई माछा हातमा लिई बाहिर आउनासाथ विष लागेर एकै छिनमा ती सबै मरे । त्यस क्षेत्रको रक्षा गर्न खटिएको मानिसले गाउँमा गएर कुवामा पानी खाएका बालकहरू मरेको कुरा सुनायो । सबै बालकहरू मरेको थाहा पाएर नर-नारीहरू कोलाहल गर्दै त्यहाँ आइपुगे। आफ्ना बालकहरूलाई मरेको देखेर कसैले हातले छाती पिटिरहेका थिए भने कसैले ढुङ्गाले शिरमा प्रहार गरिरहेका थिए । त्यहाँ पुरुष र नारीहरूको शोकपूर्ण हाहाकार थियो । ती सबैको विलाप र क्रन्दन सुनेर पार्वतीका पुत्र गणेशले आफ्नो दृष्टिपातबाट मरेका ती सबै बालकहरूलाई जीवित

अजीवयद् दृष्टिपातैः सर्वास्तान् पुरबालकान् ।
क्रूरदृष्ट्या कूटदैत्यं मृतं भूमौ न्यपातयत् ।।१०।।

पञ्चयोजनविस्तीर्णां चूर्णितां तेन वाटिकाम् ।
ददृशुर्नागराः सर्वे कतिचिच्च पलायिताः ।।११।।

सोऽजीवयज्जलचरान्निर्विषां वापिकां व्यधात् ।
स्वं स्वं बालं समादाय सर्वे ते स्वालयं ययुः ।।१२।।

प्रशशंसुः शिवाबालं निनिन्दुर्नास्तिकाः खलाः ।
अस्य सङ्गादरिष्टानि नश्यन्तीति परेऽब्रुवन् ।।१३।।

ततस्तृतीयवर्षे तु प्रातःकालेऽद्रिजासुतः ।
वञ्चयित्वा बहिर्यातो मुनिबालास्तमन्वयुः ।।१४।।

अहोरात्रवियोगेन परस्परमथाश्लिषन् ।
त ऊचुर्निशि देव ! त्वां स्वप्ने पश्यामः सर्वदा ।।१५।।

रात्रिर्युगसमा देव ! जायते त्वामपश्यताम् ।
इदानीं त्वां निरीक्ष्यैव प्रसन्नाः स्मोऽखिला वयम् ।।१६।।

क्रीडामोऽद्य महासत्त्वं द्वन्द्वीभूय यथासुखम् ।
ततोऽर्ध एकतो भूत्वा परेऽर्धे परतोऽपि च ।।१७।।

अभ्यघ्नन् पङ्कगोलेन नादयन्तोऽथ रोदसी ।
आह्लादेनाऽथ युध्यन्तो विकर्षन्तः परस्परम् ।।१८।।

रमन्तस्ते ययुर्दूरमाश्रमं कस्यचिन्मुनेः ।
सरोवरे तत्र रेमुर्योजनायतविस्तरे ।।१९।।

तुल्याउनुभयो । रीसका कारण भयङ्कर देखिने आफ्ना आँखाले हेरी कूटनामक दैत्यको प्राण खिचेर त्यसलाई भुइँमा ढलाउनुभयो ।।७-१०।। त्यसले भुइँमा पछारिंदा पनि आफ्नो शरीरबाट बीस कोशको भूभागलाई ढाकेको थियो। जहाँ ती बालकहरू फल खान गएका थिए त्यो बगैंचा पनि त्यसको शरीरका अङ्ग-प्रत्यङ्ग फैलिनाले ध्वस्त भएको सबैले देखे । विशाल दैत्यको लाश देखेर मानिसहरू डरले भाग्न थाले। भगवान् श्रीगणेशले विषप्रयोगबाट मरेका कुवाका माछालगायत जलचर प्राणीहरूलाई जीवित र जलाशयलाई विषहीन तुल्याउनुभयो । नगरवासी नर-नारीहरू आफ्ना जीवित बालक-बालिकालाई लिएर घरतर्फ लागे । तिनीहरूले पार्वतीका पुत्र गणेशको अद्‌भुत पराक्रमको प्रशंसा गरे । तर नास्तिक र दुष्टहरूले भने श्रीगणेशको निन्दा पनि गरे । केही मानिसहरू 'श्रीगणेशको सङ्गत पाउँदा मानिसका सबै अरिष्ट र सङ्कट नष्ट हुन्छन्' भन्ने चर्चा गरिरहेका थिए ।।११-१३।। भगवान् श्रीगणेश तेस्रो वर्षमा प्रवेश गर्नुभएपछि एकदिन एकाबिहानै कसैलाई केही नभनी घरदेखि बाहिर जानुभयो । उहाँलाई बाहिर जान लागेको देखेर मुनिका बालकहरू पछि लागे । एक रातको वियोगले मात्र आत्तिएका ती मुनिबालकहरूले भगवान् गणेशलाई आलिङ्गन गरे । भगवान्ले पनि तिनीहरूलाई आलिङ्गन गर्नुभयो । मुनि बालकहरूले भने - 'हे प्रभु ! हामी त हजुरलाई सधैं सपनामा देख्ने गर्छौं ।।१४-१५।। हजुरको दर्शन नपाउँदा हामीलाई रात युगसमान हुन्छ । अहिले हजुरको दर्शन पाएर हामी सबै अत्यन्त खुसी भएका छौं । आज हामी ठूलो खेल खेलौं र आनन्द लिऔं ।' त्यसपछि त्यहाँ भएका बालकहरूमध्ये आधा बालकहरूले एउटा समूह बनाए भने बाँकी बालकहरूले अर्को समूह बनाए । अनि उनीहरू आनन्दपूर्वक खेल्न थाले । एकछिन त तिनीहरूले परस्परमा हिलो र माटाको ढेलाले प्रहार गरे । फेरि ती पृथिवी र आकाशलाई शब्दायमान तुल्याउँदै आह्लादपूर्वक तानातान गर्दै खेल्न थाले।।१६-१८।। यसरी खेल्दै ती सबै बालक टाढा कुनै ऋषिको आश्रममा पुगे । त्यहाँ ती सबै एक योजनसम्म फैलिएको ठूलो सरोवरभित्र पसेर आफ्ना अङ्गुलीको पानीले छ्यापाछ्याप

सिञ्चन्तोऽञ्जलिभिर्वारि द्वन्द्वीभूता यथा पुरा ।
निमज्य स्कन्धमारुह्य मज्जयन्तो बलात् परम् ।।२०।।

ततो दैत्यो मत्स्यरूपी तेषु क्रीडारतोऽभवत् ।
आस्फालयन् कराघातैस्तज्जलं तेषु पुच्छतः ।।२१।।

कलुषात्तज्जलाद्भङ्गाज्जग्मुस्तीरं मुहुर्मुहुः ।
तीरे दृष्ट्वाऽद्रिजापुत्रं मत्स्यस्तन्निकटं ययौ ।।२२।।

व्यादाय वदनं दध्रे तदङ्घ्री विचकर्ष च ।
निनाय धाव धावेति क्रोशयन्तं महाजले ।।२३।।

निमज्ज्य स जले तेन चिरकालं महासुरः ।
अरोदिषुर्मुनिसुता मग्नं वीक्ष्याद्रिजासुतम् ।।२४।।

हाहाकारं प्रकुर्वन्तः करपृष्ठोष्ठसंयुतम् ।
केचिद् गत्वा सरो रम्यं पश्यन्तो ददृशुर्न तम् ।।२५।।

भवानीताडनाद् भीताः केचिद् बालाः पलायिताः ।
केचित् ते बालका गत्वाऽशंसन् मग्नं शिशुञ्च तम्।।२६।।

सर्वान्नः क्रीडतो हित्वा नीतो मत्स्येन बालकः ।

क उवाच

श्रुत्वा तद्वचनं गौरी मूर्च्छिता पतिता भुवि ।।२७।।

मुहूर्ताच्चेतनां लब्ध्वा रोदमाना ययौ बहिः ।
मुञ्चन्ती नेत्रजं वारि मस्तकात् पतिताञ्चला ।।२८।।

स्खलन्ती निश्वसन्ती च पतन्ती धरणीतले ।
सख्यस्तामन्वयुः काश्चिद्धित्वा कार्याणि सत्वराः ।।२९।।

सरस्तीरं शीघ्रतरमागता सखीभिः सह ।
मुनयस्तमुदन्तञ्च श्रुत्वा याताः सरः प्रति ।।३०।।

अगाधेऽम्भसि ते केचिन्मग्ना नापुरुमासुतम् ।
तामूचुर्जननीं केचिन्मग्ना नो बालको जले ।।३१।।

गर्दै खेल्न लागे। त्यसपछि घाँटीघाँटीसम्म पानीमा डुबेर स्नान गरे । आफ्ना साथीहरूको काँधमा चढेर अरू साथीहरूलाई पानीमा डुबाउने र समाउने काम पनि गरे ।।१९-२०।। साथीहरूका साथ श्रीगणेशले जलक्रीडा गरिरहनु हुँदा माछाको रूप लिएर एउटा दैत्य त्यहाँ आयो । त्यो पनि बालकहरूकै बीचमा घुसेर खेल्न थाल्यो । दैत्यले आफ्नो पुच्छरले तलाउको जल हुँडलेर बालकहरूतिर फ्याँक्यो । विशाल दैत्यको ठूलो पुच्छरबाट पानी छ्याप्ने काम हुँदा तलाउको पानी धमिलियो। त्यो देखेर ती सबै बालक तलाउको तीरमा गए । पार्वतीनन्दन श्रीगणेशलाई तीरमा गएको देखेर माछाको रूपमा रहेको दैत्य उहाँको नजिकै पुग्यो।।२१-२२।। त्यहाँ गएर त्यसले आफ्नो मुख फैलायो र गणेशका कोमल दुई पाउलाई मुखभित्र च्यापी उहाँलाई तान्न थाल्यो। साथी हो! मलाई माछाले समात्यो, तिमीहरू दौडेर आओ भनी चिच्याइरहेका श्रीगणेशलाई गहिरो पानीमा डुबाउँदै त्यो दैत्य आफू पनि डुब्यो । पार्वतीनन्दन श्रीगणेशलाई पानीमा डुबेको देखेर मुनिपुत्रहरू रुन थाले ।।२३-२४।। हात र ओठको सम्मिलित स्वरका साथ ती बालकहरू हाहाकार गर्न थाले । केही बालकहरू सरोवरमा गएर गणेशलाई नियालेर हेरिरहेका थिए तर तिनले त्यहाँ श्रीगणेशलाई देखेनन् ।।२५।। केही बालकहरू अब हामीलाई पार्वतीले गाली गर्नुहुन्छ भनेर डराई त्यहाँबाट भागे । केही बालकहरूले पार्वतीका नजिकमा गएर श्रीगणेश पानीमा डुबेको खबर दिँदै भने - एउटा माछाको आकारको दैत्यले खेलिरहेका हामी सबै बालकहरूलाई छाडेर श्रीगणेशलाई तानी पानीमा डुबायो ।

**ब्रह्माजीले भन्नुभयो** - श्रीगणेश पानीमा डुबेको खबर सुनेर पार्वती बेहोश भएर भुइँमा पछारिनुभयो ।।२६-२७।। दुई घडीपछि पार्वती होशमा आउनुभयो । शरीरमा रहेको कपडा खसेको समेत थाहा नपाएकी पार्वती लामो श्वास लिंदै घरि पछारिंदै घरि उभिंदै घरबाट दौड्नुभयो । उहाँका सँगिनीहरू पनि पछि लागे । सबै तलाउको तीरमा आउनुभयो । मुनिहरू पनि श्रीगणेश डुबेको खबर थाहा पाएर त्यहाँ आइपुगे ।।२८-३०।। केही मुनिहरू गहिरो जलमा श्रीगणेशको खोजी गर्न गए, तर कसैले पनि उहाँलाई त्यहाँ भेट्टाउन सकेनन्। तिनीहरूले भने-

नै: पुनर्न च दृष्टश्च मत्स्योदरगत: सुत: ।
रोदनं पुनरारेभे गौरी श्रुत्वा तु तद्वच: ।।३२।।

उमोवाच

मम प्राणा गमिष्यन्ति विना तं सर्वसुन्दरम् ।
अतिक्लेशेन संलब्धमतिपौरुषमीश्वरम् ।।३३।।

चराचरगुरुं मायातीतं मायाविनं परम् ।
अनन्तकोटिब्रह्माण्डनायकं विश्वसम्भवम् ।।३४।।

ललाटं निजघानोरो वारं वारं करेण सा ।
रुरुदुर्मुनयो वीक्ष्य रुदतीं तां तथाविधाम् ।।३५।।

तत: कारुणिको देवो निशम्य करुणं वच: ।
स्वयमण्डजरूपोऽभूद् युयुधाते परस्परम् ।।३६।।

तदाघातेन जलजा मृतास्तीरे निपेतिरे ।
दंष्ट्राभ्यां दशत: स्मोभौ घ्नत: स्म पुच्छघातत: ।।३७।।

उदरं स्वोदरेणैव पृष्ठं पृष्ठेन जघ्नतु: ।
एवं चिरतरं युद्धं कृत्वा दारुणमोजसा ।।३८।।

मत्स्यरूपं गुणेशोऽथ बलाज्जघ्ने मुखे मुखम् ।
भग्नास्यो भग्नदर्पोऽसौ भग्ननेत्रोऽभवच्च स: ।।३९।।

पपात जलमध्ये स पृष्ठेऽगात्स उमासुत: ।
यत्र यत्र ययौ सोऽथ तत्र तत्राप्यसौ ययौ ।।४०।।

क्वचिल्लीनं तु तं दृष्ट्वा पुच्छाघातैरताडयत् ।
तत्पुच्छं तु मुखे धृत्वा गुणेशो बहिरानयत् ।।४१।।

चुचूर्ण निजभारेण गतासुं विससर्ज स: ।
त्यजन्तं रुधिरं वक्त्रान्नदन्तं बलवत्तरम् ।।४२।।

'हे पार्वती ! बालक पानीमा डुबेजस्तो लाग्दैन ।' वास्तवमा बालकलाई माछाले आफ्नो पेटभित्र निलेको घटना तिनले देखेका थिएनन्। त्यस कारण तिनीहरूले त्यस्तो अनुमान गरे । तिनीहरूका कुरा सुनेर पार्वती फेरि रुन थाल्नुभयो।।३१-३२।।

**पार्वतीले भन्नुभयो** - 'सर्वाङ्गसुन्दर मेरो बालक भेटिएन भने मेरा प्राण तुरुन्तै जानेछन् । मैले ठूलो तपस्याले गणेशलाई पुत्रका रूपमा प्राप्त गरेकी हुँ । उनी अमानुष पुरुषार्थ भएका ईश्वर नै हुन्।।३३।। मेरा बालक जड र चेतनका स्वामी, मायाभन्दा पर रहेका, ठूला मायावी, अनन्त कोटि ब्रह्माण्डका नायक र विश्वका स्रष्टा पनि हुन् ।' त्यसपछि पीरले अत्यन्त आत्तिएकी पार्वतीले आफ्नो घुँडामा निधार ठोक्नुभयो । पार्वतीको त्यो हालत देखेर ऋषिमुनि पनि रुन लागे।।३४-३५।। त्यसपछि करुणामय ईश्वर गणेशले आफ्नी आमा र ऋषिहरूका करुण वचन सुनेर माछाको रूप लिएर दैत्यसँग युद्ध गर्न थाल्नुभयो ।।३६।। दुबै वीरहरूको परस्पर प्रहारका कारण तलाउमा रहेका जलचरहरू मरेर तैरिंदै तीरमा आउन थाले। दुबै वीरहरूले दाँतले दाँतमा र पुच्छरले पुच्छरमा प्रहार गरिरहेका थिए ।।३७।। केहीबेरपछि पेटले पेटमा र पिठ्यूँले पिठ्यूँमा प्रहार गर्दै पनि लडे। यसरी धेरै समयसम्म कठोर युद्ध गरेर भगवान् श्रीगणेशले माछाको रूप लिने दानवका मुखमा मुखले प्रहार गर्नुभयो । त्यस प्रहारबाट त्यस दानवका मुखमा ठूलो घाउ लाग्यो र आँखामा पनि चोट लाग्यो।।३८-३९।। आफ्नो घमण्ड तोडिएपछि त्यो दैत्य पानीबाट निस्किएर भाग्न थाल्यो । भगवान् श्रीगणेश पनि भागिरहेका दैत्यको पिठ्यूँमा चढ्नुभयो । त्यो दानव जहाँ-जहाँ जान्थ्यो भगवान् श्रीगणेश पनि त्यहीं-त्यहीं पुग्नुभयो । श्रीगणेशले त्यस दैत्यलाई कहीं लुक्न लागेको देखेर पुच्छरको आधातले त्यसमाथि प्रहार गर्नुभयो। त्यस दानवको पुच्छरलाई मुखले तानेर बाहिर लिएर आउनुभयो ।।४०-४१।। श्रीगणेशका शरीरको बोझ सहन नसकी माछाको रूपमा आएको त्यो दानव टुक्रा-टुक्रा भयो । त्यस दानवलाई मरेको ठानेर भगवान् श्रीगणेशले छोडिदिनुभयो । आफ्ना मुखबाट रगतका धारा

तेन शब्देन महता चकम्पे भुवनत्रयम् ।
निर्ययौ जलमध्यात् स लिलिङ्ग पार्वतीं तदा ।।४३।।

आनन्दमग्ना गौरी तं स्तनपानं मुदा ददौ ।
मामपृष्ट्वाथ कुत्र त्वं गतोऽसि बालकैः सह ।।४४।।

यद् यदायाति विघ्नं ते तत् तद् दैवाद् विनश्यति ।
मरीचे रक्षणाच्छम्भोः कृपया जगदीशितुः ।।४५।।

कुरुषे किं चपलतां रक्षितव्यः कथं मया ।
त्वद्वियोगान्मम प्राणा गमिष्यन्ति प्रियार्भक ।।४६।।

क उवाच

ततो मुनिगणाः प्रोचुस्त्वां विना दुःखिता वयम् ।
इदानीं पुनरानन्दं प्राप्तास्त्वद्दर्शनाद् विभो ।।४७।।

पुपूजुर्मुनयो नानाद्रव्यैः सख्यः स्त्रियोऽपि च ।
नमस्कृत्य गुणेशञ्चाप्रार्थयन् सर्व एव तम् ।।४८।।

वयं त्वदीया देवेश ! न नस्त्यक्तुं त्वमर्हसि ।
ततोमा बालमादाय ययौ स्वस्थानमुत्तमम् ।।४९।।

अनन्तरं गणाः सख्यो मुनयो हर्षनिर्भराः ।
मार्गमध्ये परः शैलनामा दैत्यो महाबलः ।।५०।।

सर्वशत्रुहरो नक्रदृढाङ्गोऽशनिनाशनः ।
गिरीणां यस्य शब्देन दारणं जायते क्षणात् ।।५१।।

बगाउँदै ठूलो स्वरका साथ त्यो दानव भुइँमा खस्यो । दानवको शरीर भुइँमा पछारिँदा पैदा भएको शब्दबाट स्वर्ग, मर्त्य र पाताल तीनै लोकमा कम्पन भयो । त्यसपछि भगवान् श्रीगणेश पानीबाट बाहिर आउनुभयो र माता पार्वतीलाई आलिङ्गन गर्नुभयो।।४२-४३।। आफ्ना प्यारा पुत्रलाई सकुशल बाहिर आएको देखेर प्रसन्न हुनुभएकी भगवती पार्वतीले गणेशलाई आलिङ्गन गर्नुभयो । आनन्दमा डुबेर हर्षपूर्वक आफ्ना बालकलाई काखमा राखेर दूध चुसाउनुभयो । त्यसपछि माता पार्वतीले श्रीगणेशसँग सोध्नुभयो- 'बाबु ! तिमी मसँग नसोधीकन कहाँ गएका थियौ र अरू बालकहरूलाई लिएर के गरिरहेका थियौ? तिम्रो जीवनमा धेरै विघ्नबाधा आइपरे, अत्यन्त कष्ट भयो । हुन त ती विघ्न र कष्टलाई तिमीले समाप्त पारिसकेका छौ । मरीचि ऋषिको आशीर्वाद र भगवान् शङ्करको कृपाले कुनै नराम्रो भएको छैन । तिमी किन यस्तो चञ्चल हुन्छौ? मैले तिम्रो रक्षा कसरी गरूँ ? हे बाबु ! अब पनि यस्तै हुँदै रह्यौ भने तिम्रो शोक र वियोगबाट मेरा प्राण जानेछन् ।।४४-४६।।

ब्रह्माजीले भन्नुभयो- 'त्यसपछि श्रीगणेशीलाई मुनिहरूले भने- हे अन्तर्यामी प्रभु! तपाईँविना हामी दुःखित भएका थियौं। अहिले दर्शन पाएर फेरि आनन्दमा डुबेका छौं' ।।४७।। आफ्ना भाव व्यक्त गरेपछि मुनिहरूले अनेक थरि द्रव्यले भगवान् श्रीगणेशको पूजा गरे। पार्वतीका सखी र अरू नारीहरूले पनि भगवान् श्रीगणेशलाई नमस्कार गरेर प्रार्थना गर्दै पूजा गरे । त्यसपछि सबैले प्रार्थनाको स्वरमा भने- 'हे देवताका पनि देवता! हामी तपाईँका हौं, अब हामीलाई छोडेर एक्लै नजानुहोस् ।' केही बेरमा पार्वती आफ्ना बालक श्रीगणेशलाई लिएर उत्तम धाममा जानुभयो।।४८-४९।। उहाँका पछिपछि शिवगण, सखीहरू र मुनिहरू पनि लागे । यसरी तलाउबाट घरजान भनी प्रस्थान गरेपछि बीच बाटामा पुग्दा अर्को महाबली शैल नाम गरेको दैत्य आइपुग्यो ।।५०।। त्यस दैत्यले आफ्ना शत्रुहरूको सर्वनाश गरेको थियो । त्यसका शरीरका अङ्ग-प्रत्यङ्ग गोहीका अङ्ग-प्रत्यङ्गसमान बलिया थिए । त्यसले इन्द्रको वज्रलाई पनि टुक्रा-टुक्रा बनाउन

मार्गं निरुध्य सहसा संस्थिरो रोदसी स्पृशत् ।
द्वियोजनमस्तकोऽसावधो द्वादशयोजनः ।।५२।।

सरस्तडागा वृक्षाश्च लता यत्र विभान्ति च ।
क्रीडन्ति सिंहशार्दूला वारणा यक्षराक्षसाः ।।५३।।

सर्वे ते विह्वलाः प्रोचुः किमिदं विघ्नमुत्थितम् ।
तदन्तिके स्थिता गौरी तेऽपि सर्वे स्थितास्तदा ।।५४।।

ततस्ते मुनयः प्रोचुः कदा द्रक्ष्याम योषितः ।
अपत्यानि गुणेशस्य कदा स्यादत्र विक्रमः ।।५५।।

गमिष्यति वृथा होमकालोऽयं नः स्वधाक्रियाः।
गौरी जगाद तान् सर्वान् मा खेदं कर्तुमर्हथ ।।५६।।

ममापि चिन्ता सम्प्राप्ता शङ्करस्य हि जायते ।

क उवाच

श्रुत्वा वाक्यानि तान्याशु गुणेशो बुद्धिमत्तरः ।।५७।।

प्रगृह्य तु विराड्रूपं श्वासमात्रान्निराकरोत् ।
ददृशुर्न च तद्रूपं मोहिता मुनयोऽपि ते ।।५८।।

तच्छ्वासयोगात् स गिरिर्बभ्राम गगने तदा ।
आश्चर्यं परमं प्राप्ताः सर्वे ते तं प्रशंसिरे ।।५९।।

वात्यागतं यथा पत्रं ततोऽसौ पतितो भुवि ।
सहस्रधाऽभवच्छैलः पुनर्वृक्षानचूर्णयत् ।।६०।।

सक्थ्यो । त्यसले गर्जन गर्दा पर्वतका चुचुराहरू तत्काल चर्किन्थे । त्यो दैत्य त्यहाँ आयो र श्रीगणेशको बाटो छेकेर आफ्नो उचाईंले जमीन र आकाश स्पर्श गर्दै उभियो । त्यसको टाउकोमात्र चार कोश अग्लो थियो र धड अठ्चालीस कोश फैलिएको थियो । त्यहाँ तलाउ, कुवा, रूख-बिरुवा र लहरा रहेका थिए । बाघ, सिंह, हात्ती, यक्ष, राक्षस सानन्द विचरण गरिरहेका थिए । ती सबै त्यो दैत्यले टेक्दा र बाटो छेक्दा आत्तिए । अचानक के विघ्न आइलाग्यो भनी सबै विह्वल भए । भगवती पार्वती त्यस दैत्यका समीपमा उभिनुभएको थियो र अरू प्राणी एवं ऋषि-मुनिहरू पनि पार्वतीको समीपमा रहेका थिए।।५१-५४।। ऋषिहरूले भने- 'गृहिणी र बालबच्चालाई हामीले कहिले देख्न पाउनेछौं, कति बेला भगवान् गणेशले पराक्रम देखाउनु हुनेछ, हाम्रो होम आदि कर्म गर्ने समय खेर गइरहेको छ। स्वाहा-स्वधा केही गर्न पाएनौं ।' ऋषि-मुनिहरूका कुरा सुनेपछि पार्वतीले भन्नुभयो- 'हे ऋषिगण ! तपाईंहरू चिन्ता नगर्नुहोस् ।।५५-५६।। भगवान् शङ्कर पार्वती कतिबेला आउँछिन् भनेर पर्खनुभएको होला । मलाई उहाँको चिन्ता लागिरहेको छ ।'

**ब्रह्माजीले भन्नुभयो-** पार्वती आमाका यी कुरा सुनेर बुद्धिमान् श्रीगणेशले विराट् स्वरूप धारण गर्नुभयो र आफ्नो प्रचण्ड श्वास-प्रश्वासबाट त्यस दैत्यलाई उडाइदिनुभयो । श्रीगणेशको मायाबाट मोहित भएका मुनिहरूले दैत्यको रूप पनि देखेनन् ।।५७-५८।। भगवान् गणेशको श्वास-प्रश्वासको वेगबाट उडेको त्यो पर्वतरूपी शैलासुर आकाशमा घुम्न थाल्यो। सबै दर्शकहरू परम आश्चर्यमा प्राप्त भए र श्रीगणेशको प्रशंसा गर्न लागे । त्यसपछि जसरी आँधी-बेहरीले उडाएका सुकेका पातहरू भुइँमा खस्छन् त्यसैगरी त्यो दैत्य शैलासुर आकाशबाट रूखहरूलाई चूर्ण-चूर्ण बनाउँदै भुइँमा खसी एक हजार टुक्रा भएर फैलियो।।५९-६०।। त्यसपछि ती मुनिहरूले भगवान्

ततस्तें मुनयः प्रोचुः साधु साधु गुणेश्वर ।
दूरीकृतमरिष्टं नः स्वाश्रमस्था वयं सुखम् ।।६१।।

वसामस्त्वत्प्रसादेन स्वस्वकर्मरता भृशम् ।

क उवाच

एवमुक्त्वा च नत्वा च दृष्ट्वा सम्पूज्य तं ययुः ।।६२।।

पार्वती च तमादाय विवेश निजमन्दिरम् ।
सख्यश्च मुनिपत्न्यश्च पृष्ट्वा तां स्वगृहं ययुः ।।६३।।

इदं यः शृणुयान् मर्त्यः सर्वत्र सुखमाप्नुयात् ।
आयुरारोग्यमैश्वर्यं सर्वत्र विजयन्तथा ।।६४।।

श्रीगणेशको साधुवाद र जयकार गर्दै भने- 'हे प्रभु! हजुरले हाम्रो अनिष्ट समाप्त पारिदिनुभयो। अब हामी आफ्नो आश्रममा गएर सुखपूर्वक बसी नित्यकर्म सम्पन्न गर्नेछौं ।।६१।। हजुरको कृपा पाएर आ-आफ्नो कर्ममा निरन्तर लागिरहने छौं ।'

**ब्रह्माजीले भन्नुभयो -** यसरी ती ऋषिहरूले आफ्नो भावनिवेदन गरी नमस्कार गरेर भगवान् श्रीगणेशको आज्ञासमेत लिई उहाँको पूजा गरेर त्यहाँबाट प्रस्थान गरे ।।६२।। माता पार्वती पनि आफ्ना छोरा गणेशलाई लिएर धाममा प्रवेश गर्नुभयो। पार्वतीका सँगिनी र मुनिपत्नीहरू पनि पार्वतीको आज्ञा लिएर आ-आफ्ना घरमा गए ।।६३।। जुन मानिसले भगवान् गणेशको यो लीलाकथा श्रवण गर्दछ त्यसले सर्वत्र सुख प्राप्त गर्नेछ । त्यसले आयु, आरोग्य र ऐश्वर्यका साथै सर्वत्र विजय पनि प्राप्त गर्नेछ ।।६४।।

ॐ

**इति श्रीगणेशपुराणे क्रीडाखण्डे कूट-मत्स्य-शैलासुरवधो नामैकनवतितमोऽध्यायः**

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'कूट-मत्स्य र शैलासुरको वध' शीर्षकान्वित एकानब्बेऔं अध्याय पूर्ण भयो ।।९१।।

ॐ

## द्विनवतितमोऽध्याय: { ९२ अध्याय }

क उवाच

ततः कदाचिद् गिरिजा प्रातःस्नात्वा त्वरान्विता ।
सुप्ते बाले चतुर्वर्षे लिङ्गपूजां चकार सा ।।१।।

वामहस्ते निधायैव पार्थिवीं मूर्तिमुत्तमाम् ।
स उत्थाय रुदन् स्तन्यं ययाचे हठतत्परः ।।२।।

क्षणं तिष्ठ क्षणं तिष्ठेत्येवं माता न्यषेधयत् ।
स रुषाऽपातयन् मूर्तिं तद्धस्ताद्धस्तघाततः ।।३।।

तञ्च सा हस्तघातेन जघान दृढरोषतः ।
स रुषा पुनरागत्य ददंशाङ्गुलिमुल्बणम् ।।४।।

मुञ्च मुञ्च मम प्राणा गमिष्यन्तीति साऽब्रवीत् ।
दष्टामङ्गुलिमुत्सृज्य पपाल दूरतोऽर्भकः ।।५।।

अस्रवद्रुधिरं तस्या अङ्गुलेर्बहुलं भुवि ।
यथा क्षीरमर्कवृक्षाद् दृढाघातेन पीडितात् ।।६।।

ततो यष्टिं समादाय ताडितुं सा सुतं ययौ ।
धावयित्वा दधारैनं ददर्श शिवरूपिणम् ।।७।।

पञ्चवक्त्रं दशभुजं त्रिनेत्रं शेषशोभितम् ।
त्रिशूलं डमरुं भस्म रुण्डमालाञ्च बिभ्रतम् ।।८।।

वसानं चर्मणी हस्तिव्याघ्रयोः शशिशेखरम् ।
दृष्ट्वेत्थं लज्जिता यष्टिं तत्याजाधोमुखी शिवा ।।९।।

पुरो वा मन्दिरं वापि गन्तुं सा नाशकत् तदा ।
तच्चिन्तां स परिज्ञाय बभूवार्भकरूपवान् ।।१०।।

**ब्रह्माजीले भन्नुभयो** – बालक श्रीगणेशले चौथो वर्षमा प्रवेश गर्नुभएपछि एक दिन बिहानै भगवती पार्वतीले स्नान गर्नुभयो। सुतिरहेका बालक श्रीगणेश उठ्न सक्छन्, ती उठ्नभन्दा पहिले धन्दा सम्पन्न गर्छु भन्ने चिताएर आत्तिदै पार्थिव मूर्तिलाई बायाँ हातमा राखेर पार्वतीले शिवलिङ्गको अर्चना गर्नुभयो । त्यसै बेला बालक श्रीगणेश नीदबाट जाग्नुभयो र आफ्नी आमासँग स्तनपानका लागि हठ गर्नुभयो ।।१-२।। हे बाबु! म अहिले पूजा गरिरहेकी छु, तिमीलाई दूध खुवाउन सक्दिनँ, एकछिन पख भन्नुभयो । बालक श्रीगणेशले रिसाएर पार्वतीले हातमा लिएको मूर्तिलाई आफ्नो हातले प्रहार गरेर भुइँमा खसाइ-दिनुभयो।।३।। पार्वतीले रिसाएर आफ्नो हातले श्रीगणेशलाई पिट्नुभयो। प्रत्युत्तरमा श्रीगणेशले क्रोधपूर्वक आफ्नी आमाको औंलामा टोकिदिनु भएपछि पार्वतीले 'साह्रै दुःख्यो, मेरा प्राण जान लागे, नटोक नटोक' भनेर श्रीगणेशलाई टोक्नबाट रोक्ने प्रयास गर्नुभयो । बेस्सरी टोकेपछि श्रीगणेश पनि आफ्नी आमा भएको ठाउँबाट टाढा भाग्नुभयो ।।४-५।। पार्वतीका औंलाबाट रगत बग्नाले भुइँ रातो भयो । कसैले बेस्सरी प्रहार गर्दा आँकको रूखबाट दूध बगेर भुइँमा लतपतिएझैं त्यहाँ चारैतिर रगत लतपतिएको थियो ।।६।। त्यसपछि पार्वतीले हातमा लौरो लिएर छोरालाई पिट्ने इच्छाले दौडेर गई हातले समाउनुभयो । हातले समाउँदासमाउँदै श्रीगणेश शिवजीको रूपमा देखिनुभयो ।।७।। त्यस बेला श्रीगणेशको शरीरमा पाँच मुख, दश हात र तीन आँखा थिए भने निधारमा शेषनाग थिए। उहाँले आफ्ना हातमा त्रिशूल एवं डमरु लिनुभएको थियो र शरीरमा पनि खरानी लेपन गर्नुभएको थियो । उहाँको घाँटीमा नरमुण्डको माला झुण्डिएको थियो ।।८।। उहाँले हात्ती र बाघका छालालाई वस्त्रको रूपमा धारण गर्नुभएको थियो। उहाँको निधारमा चन्द्रमा टल्किएका थिए। पार्वतीले आफ्ना छोरा श्रीगणेशलाई यसरी आफ्ना पति शिवजीको रूपमा बदलिएको देखेर लाज मानी आँखाले भुइँमा हेर्दै लौरो फ्याँकिदिनुभयो ।।९।। त्यस बेला पार्वती अगाडि बढ्न र घरतर्फ फर्कन पनि सक्नुभएन। पार्वतीको चिन्ता थाहा पाएर शिवजीको रूपमा परिणत हुनुभएका श्रीगणेश तत्काल बालकरूपमा देखिनुभयो । त्यस

क्रीडते मुनिपुत्रेषु मुनिबालस्वरूपवान् ।
अन्वयाद् गिरिजा बालं नापश्यत् तेषु तं सुतम् ।।११।।

पप्रच्छ तान् मुनिसुतान् मम बालः कुतो गतः ।
दष्ट्वाङ्गुलीं मदीयान्तु पपाल चपलोऽर्भकः ।।१२।।

त ऊचुर्मुनिपुत्रास्तामितो यातोऽर्भकस्तव ।
ततो जगाम गिरिजा पुरतः पुरतोऽपि च ।।१३।।

विशीर्णकबरीभारा श्रमघर्मसमन्विता ।
इतस्ततो धावमाना स्रस्तवस्त्राञ्चला शिवा ।
तस्याः श्रमं स विज्ञाय ययौ पूर्वस्वरूपवान् ।।१४।।

तदन्तिकं दधारैनं हस्ताभ्यां गिरिजा दृढम् ।
स्वीयाञ्चलेन तं बद्ध्वा ययौ हृष्टा स्वमन्दिरम् ।।१५।।

उवाच रोषात् सम्यक् त्वं मम हस्ते समागतः ।
अपस्मारातिचपल ! मारयिष्येऽधुना भृशम् ।।१६।।

शम्भवे वा निवेदिष्ये स त्वां वा ताडयिष्यति ।
श्रुत्वेत्थं वचनं मातुर्लुलुण्ठ धरणीतले ।।१७।।

निःसृतं बन्धनं ज्ञात्वा पपाल त्वरया पुनः ।
पुनर्धावति सा पृष्ठे दुःखिता भृशविह्वला ।।१८।।

एतस्मिन्नन्तरे दुष्टो दानवः कर्दमासुरः ।
द्विजरूपधरो मालां दधानो दक्षिणे करे ।।१९।।

कमण्डलुं वारिपूर्णं भस्मोद्धूलितविग्रहः ।
अरुणार्कनिभे वस्त्रे वसानो मायिको भृशम् ।।२०।।

स ऊचे वचनं बालं किमर्थं त्वं पलायसे ।
त्वद्भीतेर्वारणं सद्यः करिष्येऽहं न संशयः ।।२१।।

नेष्ये त्वां यत्र ते माता न जानीयात् कथञ्चन ।
न च कालभयं तत्र न चान्यद् भयमणवपि ।।२२।।

बेला उहाँ मुनिबालकको रूप लिएर आफ्ना चारैतिर बालकहरू राखी खेलिरहनुभएको थियो। बालकहरूको बीचमा रहेका श्रीगणेशलाई पार्वतीले चिन्न सक्नुभएन ।।१०-११।। उहाँले मुनिबालकहरूलाई डाकेर सोध्नुभयो - 'हे मुनिबालकहरू! मेरो छोरा कहाँ गयो ? त्यो चञ्चल बालक मेरो औंलामा टोकेर भागेको थियो ।' तिनीहरूले भने - 'हे आमा ! तपाईंका छोरा भर्खरै यहाँबाट हिंडेका हुन्, यतै कतै होलान्।' त्यसपछि पार्वती अगाडि हेर्दै बढ्नुभयो । आत्तिएर हिंड्दा पार्वतीको चुल्ठो फुक्यो र केशराशि फैलिए । थकाइका कारण शरीर पसिनै पसिनाले भरियो। यताउति दौडदा शरीरका लुगाहरू पनि अस्त-व्यस्त भए। आमा पार्वतीको परिश्रम देखेर श्रीगणेश पार्वतीकै सामु पहिलेकै स्वरूपमा प्रकट हुनुभयो । पार्वतीले खुसी हुँदै आफ्ना दुबै हातले राम्ररी आलिङ्गन गरेर श्रीगणेशलाई काखमा राख्नुभयो । त्यसपछि आफ्नै कपडाले बाँधेर खुसी हुँदै घरतर्फ लाग्नुभयो ।।१२-१५।। घरमा पुगेपछि पार्वतीले श्रीगणेशलाई रीस देखाउँदै भन्नुभयो- 'तिमी भागेर कहाँ गएका थियौ ? अहिले त मेरै हातमा आइपुग्यौ नि ! मिर्गी रोग लागेका मानिसझैं चञ्चल स्वभावका हे बाबु ! अब फेरि पनि भाग्यौ भने म तिमीलाई राम्ररी पिट्नेछु ।।१६।। अथवा तिम्रा पिता भगवान् शङ्करलाई सबै कुरा बताउनेछु । त्यसपछि उहाँले तिमीलाई पिट्नुहुनेछ ।' आमाका यी कुरा सुनेर श्रीगणेश भुईँमा लडिबुडी गर्नुभयो ।।१७।। त्यसरी भुईँमा लडिबुडी गर्दा उहाँलाई बाँधेको कपडा फुस्किएछ । त्यो थाहा पाएर श्रीगणेश तुरुन्तै भाग्नुभयो । आमा समाउन पछाडिबाट दौडिनु हुँदा उहाँ थाकेर अत्यन्त दुःखी र व्याकुल हुनुभएको थियो । यसै बीचमा ब्राह्मणरूप धारण गर्ने कर्दमासुर नामक दैत्य आइपुग्यो । त्यसको दायाँ हातमा रुद्राक्षको माला र बायाँ हातमा पानीले भरिएको कमण्डलु थियो । त्यसले सम्पूर्ण शरीरमा खरानी घसेको थियो । बिहानीपखका सूर्यका किरणझैं दुई राता वस्त्र धारण गर्ने त्यो दानव अत्यन्त मायावी थियो ।।१८-२०।। त्यसले श्रीगणेशको नजिक आएर भन्यो - 'हे बालक ! तिमी किन भागिरहेका छौ ? तिम्रो भयको हेतु के हो भन, म त्यस हेतुलाई तुरुन्तै हटाउनेछु, यसमा शङ्का गर्नु पर्दैन । म तिमीलाई त्यस ठाउँमा लैजान सक्छु, जुन ठाउँमा तिम्री आमा पुग्न सक्ने छैनन् । त्यहाँ मृत्यु र अन्य विषयको लेशमात्र पनि भय छैन' ।।२१-२२।।

क उवाच

इत्युवाचार्भको भीतस्तथा कुरु यथा मम ।
न पश्येज्जननी तात! शरणं त्वामुपागतः ।।२३।।

एवं वदति यावत् तु ययौ बालस्वभावतः ।
निगील तावदेवासौ तं दुष्टः कर्दमासुरः ।।२४।।

रम्भाफलस्य पक्वस्य खण्डं कोमलमर्भकम् ।
तत्पादपद्मचिह्नानि भूमौ दृष्ट्वा ययौ शिवा ।।२५।।

द्विजं ददर्श पुरतोऽपृच्छत् तञ्च ततोऽर्भकम् ।
स्वामिन् ! त्वया मम सुत इतो गच्छन्निरीक्षितः ।।२६।।

इमानि पदपद्मानि चिह्नयुक्तानि पश्य भोः ।
इदानीं धावमानः स कुत्र गुप्तोऽभवद् द्विज ।।२७।।

ततस्तामब्रवीद् विप्रो दुःखितां तद्वियोगतः ।

द्विज उवाच

किं नः प्रयोजनं मातस्तनयेन तवानघे ।।२८।।

उदासीनतया मातस्तिष्ठतामीशचेतसाम् ।
तथापि नैव दृष्टस्ते तनयः क्वापि शैलजे ।।२९।।

तनयः किं त्वया देवि ! मदधीनः कृतोऽभवत् ।

क उवाच

एवं वदति तस्मिँस्तु दुःखितां वीक्ष्य शैलजाम् ।।३०।।

आविरासीन्निर्विकारस्तन्मुखात् स गुणेश्वरः ।
मा प्राह तनयं दृष्ट्वा कथं मिथ्या ब्रवीषि रे ।।३१।।

तवैव निकटे पुत्रो दृष्टोऽयं गोपितस्त्वया ।
सन्तः प्राणात्यये प्राप्ते न भाषन्तेऽनृतं क्वचित् ।।३२।।

**ब्रह्माजीले भन्नुभयो** - आमासँग भयभीत हुनुभएका बालक श्रीगणेशले आफूलाई ललाइफकाई गर्ने ब्राह्मणरूपधारी दैत्यका सामु भन्नुभयो- 'हे ब्राह्मण ! मलाई तपाईंले भनेझैं त्यो गुप्त ठाउँमा लुकाउनुहोस् जहाँ गएर मेरा माता-पिताले देख्न सक्नुहुन्न । म तपाईंको शरणमा आएको छु' ।।२३-२४।। यसरी श्रीगणेशले बालक स्वभावअनुसार कुरा गरिरहनु भएको समयमा पाकेको केराको टुक्रा निलेझैं त्यस कर्दमासुर दानवले कोमल शरीरका बालक श्रीगणेशलाई अकस्मात् निलिदियो। त्यसै बेला बालक श्रीगणेशलाई खोज्दै माता पार्वती पनि त्यहाँ आइपुग्नुभयो। उहाँ जमिनमा श्रीगणेशका पैतालाको चिह्न देखेर अगाडि बढ्नुभयो। त्यस ठाउँमा एउटा ब्राह्मणलाई उभिएको देखी ती ब्राह्मणसँग आफ्ना बालकको विषयमा सोध्नुभयो- 'हे ब्राह्मण ! के तपाईंले यता हिंडिरहेको मेरो छोरा श्रीगणेशलाई देख्नुभयो ?।।२५-२६।। मैले यहाँ भुइँमा त्यस बालकका पैतालाका चिह्नहरू देखिरहेकी छु । त्यो बालक दौडेर कहाँ गयो ? कता लुक्यो ?' यो प्रश्न सुनेर आफ्ना छोराको वियोगबाट दुःखित हुनुभएकी पार्वतीलाई ब्राह्मणरूप कर्दमासुरले उत्तर दियो।

**कर्दमासुरले भन्यो** - 'हे माता ! तपाईंको छोरासँग हाम्रो के प्रयोजन छ ?।।२७-२८।। हामी आफ्नो काममा आफ्नै तरिकाले हिंडेका छौं । हामी भगवान्मा चित्त लगाउने मानिसलाई दुनियाँका बालबच्चासँग चासो राख्नुपर्ने कुरा के हुन्छ र ? हामी उदासीन छौं तैपनि देखेको भए देखेका थियौं भन्ने थियौं तर देखेनौं ।।२९।। हे पार्वती ! के तपाईंले आफ्नो छोरालाई मेरो जिम्मा लगाउनुभएको थियो ?'

**ब्रह्माजीले भन्नुभयो** - यसरी कर्दमासुरले उपेक्षा भावले उत्तर दिएपछि माता पार्वतीलाई दुःखी भएको जानेर कर्दमासुरको मुखभित्रबाट गुणहरूका स्वामी भगवान् श्रीगणेश निर्विकार रूपमा प्रकट हुनुभयो। त्यसपछि पार्वतीले आफ्नो छोरालाई कर्दमासुरको मुखबाट प्रकट भएको देखेर कर्दमासुरलाई भन्नुभयो- 'हे कर्दमासुर ! तिमी त अरूअरू नै कुरा गरिरहेका थियौ, किन मलाई ढाँट्यौ ? ।।३०-३१।। ब्राह्मणरूप लिएर पनि ढाँट्न हुन्छ? तिम्रै नजिकमा यो पुत्र रहेछ, तिमीले नै लुकाएका रहेछौ, आफैले लुकाउँदा लुकाउँदै पनि ढाँट्यौ । सज्जन महात्माहरू प्राण जाने बेलामा पनि अथवा प्राणको सङ्कट आइलाग्दा पनि मिथ्याभाषण गर्दैनन्' ।।३२।।

क उवाच

इति तस्या वचः श्रुत्वा स दैत्यो दीर्घदेहवान् ।
व्योमस्पृङ्मस्तको बालमादाय निर्ययौ ततः ।।३३।।

ततः सा पृष्ठतो लग्ना क्रन्दन्ती तनयं शिवा ।
गुणेशोऽपि ततो दध्रे तस्माद् दीर्घतरं वपुः ।।३४।।

दृष्ट्वा दुःखं जनन्यास्तु प्रशोचन्त्या मुहुर्मुहुः ।
तद्देहं शतधा कृत्वा चुचूर्णाङ्घ्रिविघाततः ।।३५।।

पतमानोऽपि तद्देहश्चूर्णयामास शाखिनः ।
जनन्या अग्रतस्तस्थौ संहृत्यैवं तु दानवम् ।।३६।।

गुणेशो मुनयो देवास्तत्पत्न्योऽथ समागताः ।
ऊचुस्तां पार्वतीं विघ्नाः कियन्तोऽस्य भवन्ति हि ।।३७।।

त एव नाशमायान्ति तव पुण्यात् सुरेश्वरि !
सर्वैस्तैः पूजितं बालं गृहीत्वा स्वकटौ शिवा ।।३८।।

गृहं जगाम तैस्ताभिर्हर्षनिर्भरमानसा ।
पुरामरगणाञ्जित्वा गरुत्मानमृतं यथा ।।३९।।

उत्ततार शिवा बालं स्वाङ्गणे कटिदेशतः ।
स तु मूर्च्छाङ्गतो लुण्ठन्धरण्याञ्च पुनः पुनः ।।४०।।

वारं वारं ददौ जृम्भां प्रसार्य मुखपङ्कजम् ।
किं जातमधुनैवास्य धावयित्वा ययौ शिवा ।।४१।।

मुखमध्ये ददर्शास्य विश्वं विश्वस्वरूपिणः ।
सप्तद्वीपां वसुमतीं पुरग्रामवनाकरान् ।।४२।।

ब्रह्माणं भास्करं शेषं विष्णुं पर्वतसागरान् ।
गन्धर्वान् यक्षरक्षांसि मुनीन् पक्षिगणानपि ।
नदीवापीतडागानि मनूनष्टौ वसूनपि ।।४३।।

**ब्रह्माजीले भन्नुभयो –** पार्वतीका कुरा सुनेर कर्दमासुर दैत्यले ब्राह्मणको रूप छाडी विशाल दैत्यको रूप धारण गऱ्यो। त्यस दैत्यको शिरले आकाश छोइरहेको थियो । आफ्नो विशाल स्वरूप देखाएपछि त्यो दैत्य पार्वतीकै समीपमा रहेका श्रीगणेशलाई समातेर भाग्यो । त्यसपछि पार्वती पनि त्यस दानवका पछिपछि लाग्नुभयो । उहाँले चिच्याउँदै छोरा श्रीगणेशलाई बाबु आऊ! बाबु आऊ! भनी बोलाइरहनु भएको थियो । श्रीगणेशले पनि राक्षसको कपट बुझेर त्यस राक्षसको भन्दा पनि विशाल शरीर धारण गर्नुभयो ।।३३-३४।। धेरै शोक गरिरहेकी आफ्नी आमा पार्वतीको दुःख देखेर विशाल रूपमा देखिनुभएका भगवान् श्रीगणेशले आफ्ना खुट्टाले प्रहार गरेर दानवको शरीरलाई सय टुक्रा गरी धूलोधूलो बनाउनुभयो ।।३५।। श्रीगणेशको प्रहारबाट भुइँमा ढलेको त्यस राक्षसको शरीर ढल्दा अनेकौं रूखलाई ढाल्दै भुइँमा फैलियो । यसरी दानवको संहार गरेपछि भगवान् श्रीगणेश आफ्नी आमा पार्वतीका सामु आएर उभिनुभयो । गुणेश भगवान् श्रीगणेशले दानवको संहार गर्नुभएपछि देवता, देवपत्नी, ऋषि र ऋषिपत्नी सबै त्यहाँ भेला भए । तिनले पार्वतीलाई भने– 'हे सुरेश्वरी! यस बालकको जीवनमा कति विघ्न आइलागे तर तपाईंका पुण्यका प्रभावले ती सबै विघ्न नष्ट भए ।' पार्वती पनि ऋषि र देवताहरूद्वारा पूजा गरिएका बालक श्रीगणेशलाई काखमा राखी आफ्नो घर जानुभयो । पार्वती जानुहुँदा ती सबै ऋषि, ऋषिपत्नी, देवता र देवपत्नीहरू पनि उहाँका पछिपछि गएका थिए । पार्वती आनन्दमा डुब्नुभएको थियो । प्राचीन समयमा जसरी गरुडले देवताहरूलाई जितेर अमृत प्राप्त गरेका थिए, त्यसैगरी पार्वतीले पनि सङ्कटमुक्त आफ्ना पुत्र श्रीगणेशलाई प्राप्त गर्नुभएको थियो । पार्वतीले आफ्नो काखबाट श्रीगणेशलाई भुइँमा राख्नुभयो । भुइँमा राख्नासाथ लडिबुडी गरिरहेका श्रीगणेश अचानक मूर्च्छित हुनुभयो र बारम्बार मुख फैलाएर हाई हाई गर्नुभयो । पार्वती पनि मेरो बालकलाई के भयो भन्दै श्रीगणेशका सामु जानुभयो ।।३६-४१।। त्यस बेला बालगणेशको मुख फैलिएको थियो र उहाँ मूर्च्छित हुनुहुन्थ्यो। पार्वतीले श्रीगणेशको खुलेको मुखभित्र विश्वब्रह्माण्डको दर्शन गर्नुभयो । श्रीगणेशको मुखभित्र सात द्वीप, पृथिवी, नगर, गाउँ, वन, खजाना, ब्रह्मा, सूर्यनारायण, शेषनाग, विष्णु, पर्वत,

शशिसूर्यानलोडूनि सचेतनमचेतनम् ।
पातालान्यपि सप्तानि स्वर्गानप्येकविंशतिम् ।।४४।।

एवं त्रिभुवनं दृष्ट्वा मुमूर्च्छ गिरिजा तदा ।
निमील्य नयने भ्रान्ता मुहूर्तद्वयमास्थिता ।।४५।।

शिवं संस्मार मनसा सावधाना ततोऽभवत् ।
यथा पूर्वस्थितं बालं पश्यति स्म पुरःस्थितम् ।।४६।।

ततस्तं परितुष्टाव तत्प्रसादप्रसन्नधीः ।

पार्वत्युवाच

परमात्मा त्वमेवासि चराचरगुरुर्भवान् ।।४७।।

चिदानन्दघनो नित्यो नित्यानित्यस्वरूपवान् ।
त्वत्कुक्षौ परिदृष्टानि भुवनानि चतुर्दश ।।४८।।

देवा यक्षाश्च रक्षांसि सरितो वृक्षसञ्चयाः ।
सर्वं चराचरं दृष्टं मया वक्तुं न शक्यते ।।४९।।

भ्रान्ताऽहं पतिता भूमौ सावधाना शिवस्मृतेः ।
जाताऽहं बालरूपेणापश्यं त्वां प्राकृतं शिशुम् ।।५०।।

क उवाच

एवं स्तुवत्यां तस्यान्तु मायामाविश्चकार सः ।
लालयित्वा कटौ गृह्य स्तनपानं ददौ शिवा ।।५१।।

गृहं प्रविष्टा गिरिजा गृहकार्यरताऽभवत् ।
मुनयो मुनिपत्न्यश्च ययुः स्वं स्वं निवेशनम् ।।५२।।

इदमाख्यानकं श्रुत्वा सर्वपापैः प्रमुच्यते ।।५३।।

सागर, गन्धर्व, यक्ष, राक्षस, मुनि, पक्षिगण, नदी, तलाउ, कुवा, आठ मनु, आठ वसु, चन्द्रमा, अग्नि, तारा, जड, चेतन, सात पाताल, एक्काइस स्वर्गलगायत स्वर्ग, मर्त्य, पाताल सबैको दर्शन गरेर पार्वती मूर्च्छित हुनुभयो । उहाँ आँखा चिम्लेर दुई घडीसम्म निश्चेष्ट भई भुइँमा लडिरहनु भएको थियो ।।४२-४५।। भगवती पार्वतीले सामान्य चेतना प्राप्त गरेपछि भगवान् शिवजीको संझना गर्दै सावधान हुनुभयो । उहाँले आफ्ना सामु पहिलेकै रूपमा आफ्ना पुत्र श्रीगणेशलाई अगाडि बसिरहेका देखेर प्रसन्न भई श्रीगणेशको प्रार्थना गर्नुभयो।

**पार्वतीले भन्नुभयो -** हे श्रीगणेश ! हजुर जड र चेतन सबैका गुरु र परमात्मा हुनुहुन्छ ।।४६-४७।। हजुर चैतन्य र आनन्दका मूर्ति हुनुहुन्छ । हजुर नित्य, अनित्य र नित्यानित्य पनि हुनुहुन्छ । मैले हजुरको मुखभित्र चौधै भुवन देखें । देवता, यक्ष, राक्षस, नदी, वृक्षलगायत सम्पूर्ण चराचर पनि देखें । मैले त्यहाँ कति देखें र के के देखें, ती सबै कुरा बताउने मेरो सामर्थ्य छैन।।४८-४९।। म भ्रान्त भएर भुइँमा लडेकी थिएँ। भगवान् शङ्करको ध्यान गरेपछि शान्त र सावधान भएँ । अहिले हजुरलाई मेरै पुत्र बालगणेशका रूपमा देखिरहेकी छु ।

**ब्रह्माजीले भन्नुभयो -** यसरी पार्वतीले प्रार्थना गरेपछि श्रीगणेशले मायाको आविष्कार गर्नुभयो । संसारिक मायाद्वारा मोहित पार्वतीले पनि बालक श्रीगणेशलाई काखमा राखेर स्तनपान गराउनुभयो । त्यसपछि पार्वती आफ्नो घरभित्र पसेर कामकाजमा लाग्नुभयो । मुनि, मुनिपत्नी, देवता एवं देवपत्नीहरू आ-आफ्नो धामतर्फ लागे । यो श्रीगणेशको पवित्र कथा मैले तिमीलाई सुनाएँ । यस कथाको श्रवण गर्नाले मानिसहरू सबै प्रकारबाट पापबाट मुक्त हुन्छन् ।।५०-५३।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे विश्वरूपदर्शनं नाम द्विनवतितमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'श्रीगणेशद्वारा पार्वतीलाई विश्वरूप प्रदर्शन' शीर्षकान्वित बयानब्बेऔं अध्याय पूर्ण भयो ।।९२।।

ॐ

## त्रिनवतितमोऽध्यायः        { ९३ अध्याय }

क उवाच

ततस्तु पञ्चमे वर्षे प्रवृत्ते मुनिबालकाः ।
उषःकाले गुणेशस्य समागम्य गृहं प्रति ।।१।।

प्रातःकाले कथं शेषे प्रोत्तिष्ठोत्तिष्ठ हे सखे !
उत्थापय निजं बालमित्यूचुस्ते शिवामपि ।।२।।

तानुवाच शिवा वाक्यं निद्रा वो न समागता ।
क्रीडायामेव सक्तानां चपलानां दिवानिशम् ।।३।।

कथं याहीत्यनुदिते निर्लज्जा मूढभावतः ।

त ऊचुः

मातर्न तव वाक्येन कोपो नो जायते क्वचित् ।।४।।

वयं ते बालकाः किं न त्वं वा नो जननी न किम् ।
अस्मिँस्तव शिशौ सक्तं सर्वेषां मानसं सदा ।।५।।

एनं पश्यामः पुरतो दिवानक्तं निरन्तरम् ।
विनैनञ्च समाधानं न नश्चेतसि जायते ।।६।।

श्रुत्वा वाक्यानि तेषां तु प्रोदतिष्ठत् तदा शिशुः ।
लिलिङ्ग बहिरागत्य गुणेशस्तैः परस्परम् ।।७।।

ययुर्बहिर्मुदा युक्ता धृत्वा हस्तान् परस्परम् ।
द्विभागीभूय चिक्रीडुर्नानायुद्धविचेष्टितैः ।।८।।

मस्तकं मस्तकेनैव वक्षसा वक्ष एव च ।
बाहुभ्याञ्चैव बाहू च निजघ्नुस्ते परस्परम् ।।९।।

जलेन रजसा चैव कन्दुकैर्मुष्टिभिस्तथा ।
कर्दमैर्गोमयैः केचिदान्दोलनविकर्षणैः ।।१०।।

कोलाहलं प्रकुर्वन्तः शृङ्गवंशरवानपि ।
दैत्यभूता जयं प्रापुर्देवभूताः पराजयम् ।।११।।

**ब्रह्माजीले भन्नुभयो** – भगवान् श्रीगणेश पाँचौं वर्षमा लाग्नु भएपछि एक दिन बिहानै मुनिबालकहरूले घरमा आएर श्रीगणेशलाई सम्बोधन गर्दै – 'हे मित्र ! प्रातःकालमा किन सुतिरहेका छौ ? उठ ! उठ !' भने । तिनीहरूले पार्वतीसँग पनि आफ्नो छोरालाई जगाउन अनुरोध गरे । पार्वतीले ती बालकहरूलाई भन्नुभयो – 'निरन्तर क्रीडामा मात्र लागिरहने चञ्चल स्वभावका तिमीहरूलाई नींद लागेन? सूर्य नउदाउँदै खेल्ने इच्छाले लाजै नमानीकन मूर्खतापूर्वक तिमीहरू मेरो छोरासँग खेल्न भन्दै आएका छौ ?'

**बालकहरूले भने** - 'आमा पार्वती ! हजुरका कुराले हामीलाई पटक्कै रीस उठ्दैन ।।१-४।। हे पार्वती ! हजुर श्रीगणेशकी आमा हुनुहुन्छ । त्यसो भएर हामी सहन्छौं । के हामी हजुरका छोरा होइनौं ? के हजुर हाम्री आमा होइन ? हजुरका छोरामा हाम्रो मन निरन्तर लागिरहन्छ । हामी रातदिन श्रीगणेशलाई आफ्नै सामु हेरिरहन्छौं, चिन्तन गरिरहन्छौं र सपनामा पनि देख्छौं। श्रीगणेशविना हाम्रो मनमा शान्ति नै हुँदैन ।।५-६।।' यसरी आफ्ना साथीहरूले माता पार्वतीसँग गरेका कुरा सुनेर बालक श्रीगणेश पनि जाग्नुभयो । बाहिर आएर आफ्ना साथीहरूलाई प्रेमपूर्वक आलिङ्गन गर्नुभयो । त्यसपछि ती बालकहरू श्रीगणेशका साथ हातेमालो गर्दै र खुसी हुँदै खेल्ने उद्देश्यले खेलमैदानतर्फ गए । मैदानमा गएका सबै बालक दुई समूहमा बाँडिएर अनेक युद्धचेष्टा गर्दै खेल्न थाले ।।७-८।। ती बालकहरूले खेलखेलमा प्रेमपूर्वक टाउकाले टाउकामा, छातीले छातीमा, हातले हातमा प्रहार गर्दै पानी, धूलो, भकुण्डो, हिलो, गोबरले पनि आपसमा छ्यापाछ्याप गरिरहेका थिए । त्यसपछि मुड्कीले प्रहार गर्दै युद्ध गरे । तिनीहरूले एकले अर्कालाई तान्ने र पछार्नेजस्ता खेल खेले । केहीले बाँसुरी र केहीले सिङ बजाएर हल्लिखल्ली गरे । बालक्रीडा गर्दा एउटा समूह दैत्यसमूहको रूपमा र अर्को समूह देवसमूहको रूपमा नाटकीय युद्ध गरिरहेको थियो । युद्धक्रीडामा देवसमूहले जित्यो र दैत्यसमूह पराजित भयो ।।९-११।। यसरी

एवं युध्यत्सु तेष्वेवं खड्गनामा महासुरः ।
आययौ वृषरूपेण विशालेन नभस्पृशा ।।१२।।

पुच्छवातेन महता पतिता वृक्षसञ्चयाः ।
शूलदन्तो ललज्जिह्वः पादेनामर्दयन् दिशः ।।१३।।

स महान्तं रवं कृत्वा तमधावद् गुणेश्वरम् ।
प्रतिशब्देन सहसा नादयन् विदिशो दिशः ।।१४।।

तं दृष्ट्वा विद्रुताः सर्वे मुनिपुत्रा भयातुराः ।
धाव धावेति तं बालं चुक्रुशुः केचिदर्भकाः ।।१५।।

तेषामाक्रन्दितं श्रुत्वा सहसा स गुणेश्वरः ।
कृत्वा महत्तरं रूपमुड्डीय तं जघान ह ।।१६।।

मुष्टिघातेन शिरसि वज्रेणेव महाचलम् ।
स भिन्नहृदयो दुष्टो वमन् रक्तं मुखाद् बहु ।।१७।।

कृत्वा घोरं महाशब्दं पतितो धरणीतले ।
विचाल्य चरणग्रीवामाक्रन्द्य च पुनः पुनः ।।१८।।

स्वीयं देहं समास्थाय तत्याज जीवितं क्षणात् ।
दशाष्टयोजनायामः पातयन् वृक्षसञ्चयान् ।।१९।।

उद्दुधूल रजो भौमं गगनं प्रावृतं क्षणात् ।
तद्देहपातात् पतिता जन्तवोऽथ पतत्रिणः ।।२०।।

तं तथा पतितं दृष्ट्वा सर्व एव कुमारकाः ।
साधु साधु शिवापुत्र ! महादैत्यो निपातितः ।।२१।।

दृष्ट्वा महान्तं तं दैत्यं वयं भीत्या पलायिताः ।
कथं त्वया महादैत्यः पौरुषेण कनीयसा ।।२२।।

हतोऽयं विस्मिताः सर्वे पुनस्ते समुपागताः ।
इत्युक्त्वा ते पुनः क्रीडां चक्रुः सर्वे यथा पुरा ।।२३।।

कर्षयन्तोऽङ्घ्रिकमले धृत्वा केचित् परस्परम् ।
ततस्तस्य सखा प्रायान्मृतप्रतिकृतीच्छया ।।२४।।

बालकहरूले नाटकीय युद्ध गरिरहँदा खड्गनामक महादैत्य विशाल एवं गगनस्पर्शी गोरुको रूप लिएर आयो । त्यसले पुच्छर रिंगाउँदा उत्पन्न भएको वेगबाट ठूला ठूला वृक्षहरू भुइँमा ढले)।(त्यसैको दाँतहरू त्रिशूलजस्ता तीखा थिए र जिब्रो लपलपाइरहेको थियो । त्यसले आफ्ना खुट्टाहरूले प्रहार गरेर चारैतिरको भूभागलाई धूलोधूलो बनाइरहेको थियो ।।१२-१३।। गोरुको रूपमा रहेका दैत्यको गर्जनको प्रतिध्वनिबाट दिशा र विदिशा प्रतिध्वनित भए। मुनिबालकहरू खड्गनामक असुरलाई देखेर डराई भाग्न थाले । ती भागिरहेका बालकहरू श्रीगणेशलाई हे गणेश! तिमी पनि भाग भनेर चिच्याए।।१४-१५।। आफ्ना साथी बालकहरूको क्रन्दन सुनेर अकस्मात् भगवान् श्रीगणेश आफूलाई विशालकाय बनाई आकाशमा उड्नुभयो । आकाशमा उड्दा वज्रले पर्वतमा प्रहार गरेझैं आफ्नो बलियो मुड्कीबाट दैत्यमाथि प्रहार गर्दै युद्ध गर्न लाग्नुभयो । भगवान् श्रीगणेशको प्रहारबाट त्यसको छाती फुटी रगत बग्यो र त्यसले मुखबाट पनि रगत बान्ता गर्‍यो ।।१६-१७।। त्यसपछि भयङ्कर गर्जन गर्दै भुइँमा पछारियो। खुट्टा चलाइरहेको र घाँटी घुमाइरहेको त्यस दैत्यले मर्ने बेलामा गोरुको रूप छाडी आफ्नै दानवरूप धारण गर्‍यो । त्यसपछि प्राण परित्याग गर्‍यो । बहत्तर कोशसम्म फैलिएको त्यसको शरीर भुइँमा खस्दा हजारौं वृक्ष ढलेका थिए । आकाश एवं धर्तीमा धूलो फैलिएको थियो र धेरै पशु-पक्षीहरू त्यसका शरीरको आघातबाट भुइँमा खसेका थिए । विशाल आकारको भयङ्कर दैत्यलाई त्यसरी मरेर फैलिएको देखी श्रीगणेशका बालसखा ती सबै कुमारहरूले भने - 'धन्य धन्य श्रीगणेश ! तिम्रो जय होस्! किनकि तिमीले आज विशाल दैत्यलाई मारेका छौ ।' त्यसपछि आफ्ना कुरा सुनाउँदै केही बालकहरूले भने- ' हे श्रीगणेश! हामी त गोरुको रूप लिएर आएको विचित्र आकारको त्यस दैत्यलाई देख्नासाथ डराएर भागेका थियौं, यति सानो शरीरका तिमीले सानो प्रयासबाट विशाल दैत्यलाई कसरी माऱ्यौ ? हामी त चकित छौं ।' त्यसपछि सबै बालकहरू श्रीगणेशका वरिपरि आइपुगे र पहिलेजस्तै श्रीगणेशसँग क्रीडा गर्न लागे ।।१८-२३।। केही बालकहरू आफ्ना साथीहरूका खुट्टा तानेर तिनलाई घिसारिरहेका थिए । केहीले जसरी भगवान्ले खड्गासुरलाई भुइँमा पछार्नुभयो त्यसरी नै आफ्ना साथीहरूलाई घिसारिरहेका

छायारूपं समास्थाय महाबलपराक्रमः ।
पादाघातेन तस्याशु चकम्पे शेषविग्रहः ।।२५।।

व्योमस्पृङ्मस्तको दुष्टो गुणेशपृष्ठतो ययौ ।
छायां तदीयामाविश्य पातयामास तं तदा ।।२६।।

इतरेषामदृश्योऽसौ मायावी बलवत्तरः ।
यथा यथा नृत्यते स तथा दैत्योऽपि नृत्यति ।।२७।।

तं पतन्तं गुणेशं ते निरीक्ष्य मुनिबालकाः ।
ऊचुस्तं धाविताः केचित् केचिच्च दुःखिता भृशम्।।२८।।

कथं वा पतसे नाथ ! क्व सामर्थ्यं गतं तव ।
वारं वारं स्खलसि किं प्रियेषु च सखिष्वपि ।।२९।।

ततो बालो ददर्शाशु दशदिक्षु समन्ततः ।
सामर्थ्यादग्रतो यातुमियेष नाशकच्च सः ।।३०।।

पुनश्च प्रणिधानेन समन्तादवलोकयन् ।
छायाप्रविष्टं तं दैत्यं ज्ञातवान् स गुणेश्वरः ।।३१।।

गण्डशैलं समादाय प्राक्षिपच्चोदरेऽस्य ह ।
उपरिष्टान्ननर्तासौ स मृतश्चूर्णतां गतः ।।३२।।

अन्तकाले महद्रूपं समास्थाय निजं खलः ।
चूर्णयामास वृक्षान् सपर्वतान् प्राणिसञ्चयान् ।।३३।।

तन्मेदसा च रक्तेन धरणी च गुणेश्वरः ।
रक्ततां समनुप्राप्तौ वसन्ते किंशुकाविव ।।३४।।

एवं तं विनिहत्याशु गुणेशो लीलयाऽरमत् ।
तत एको वृषस्कन्धः सूकरास्यो गजोदरः ।।३५।।

थिए। त्यसै बेला खड्गासुरको मित्र अत्यन्त बलवान् छायासुर नामक दानव आफ्ना मरेका साथीको प्रतिशोध लिने इच्छाले छायाको रूप लिएर त्यहाँ आइपुग्यो । त्यसले खुट्टाले भुइँमा टेक्दा पातालवासी शेषनाग पनि काँप्न थाले ।।२४-२५।। आफ्नो शिरले आकाशलाई स्पर्श गर्ने त्यो दुष्ट दानवले श्रीगणेशको पछाडि आएर उहाँको छायामा टेकी उहाँलाई भुइँमा पछार्‍यो। त्यो मायावी दैत्य अरू बालकहरूको नजरमा भने देखिएन । श्रीगणेश उठेर नाच्न थाल्नुभयो र उहाँको नक्कल गर्दै छायासुर पनि नाच्न थाल्यो ।।२६-२७।। नाच्दानाच्दै श्रीगणेशलाई ढलेको देखेर मुनिबालकहरूले नजिकै गएर भने- 'हाम्रा मित्र श्रीगणेशलाई के भयो ? केही मित्रले अत्यन्त दुःखी भएर श्रीगणेशलाई पुकार्दै भने – हे महापराक्रमी श्रीगणेश ! किन लडेका छौ ? तिमी यतिविधि कमजोर त होइनौ ? तिम्रो त्यो विशाल शक्ति कहाँ गयो ? किन पटक–पटक तिमी भुइँमा लडिरहन्छौ ? हामीजस्ता प्यारा मित्रहरू हुँदाहुँदै पनि तिमीले आफ्नो दुःख हामीलाई किन बताउँदैनौ ?' आफ्ना मित्रहरूका कुरा सुनेपछि बालक श्रीगणेशले चारैतिर हेर्नुभयो । उहाँले पाइला चाल्न निकै प्रयास गर्नुभयो, तर उभिएको ठाउँबाट एक पाइला पनि अगाडि सर्न सक्नुभएन ।।२८-३०।। श्रीगणेशले आफैंलाई अचम्म लागेर म यति कमजोर होइन, आज के भयो भन्ने विचार गर्नुभयो । त्यसपछि ध्यानदृष्टिले हेर्दा भगवान् श्रीगुणेशले आफ्नो छायामा छायासुर दैत्यले टेकिरहेको देख्नुभयो र आफू चल्न नसकेको कारण पनि थाहा पाउनुभयो । कारण थाहा पाएपछि उहाँले पर्वतबाट खसेका ठूला–ठूला ढुङ्गा ल्याएर त्यस दैत्यको छातीमा प्रहार गरी त्यसको ज्यानमा टेकेर नाच्न थाल्नुभयो । श्रीगणेशको चरण-प्रहारबाट धूलोपीठो भएको त्यो दैत्य तत्काल मर्‍यो ।।३१-३२।। मर्ने बेलामा त्यसले धारण गरेको दैत्य शरीर ढल्दा पर्वत र प्राणीहरू समेत टुक्राटुक्रा भएका थिए ।।३३।। त्यस राक्षसको बोसो र रगतले पृथिवी र श्रीगणेश दुबै रक्ताम्य भए । वसन्त ऋतुमा रातै देखिने पलाशको रूखझैं श्रीगणेश र पृथिवी पनि रातै वर्णका देखिए ।।३४।। यसरी छायासुर दैत्यको वध गरेपछि भगवान् श्रीगणेश आफ्ना साथीहरूसँग प्रसन्नतापूर्वक विहार गर्न लाग्नुभयो । केही बेरपछि गोरुको

गण्डशैला रज इव श्वासादस्य चलन्ति च ।
चञ्चलाख्यो महादैत्यो बालरूपधरोऽविशत् ।।३६।।

तेषु नानाविधाः क्रीडा दर्शयामास लाघवात् ।
महाबलो महामायः पोथयामास कांश्चन ।।३७।।

चरणं कस्यचिद् धृत्वा चकर्ष मुनिबालकम् ।
उभौ करौ विधृत्वैव कस्यचिन्मस्तकेऽहनत् ।।३८।।

यस्य नृत्ये धरा सर्वा कम्पते स्म सपर्वता ।
ते घर्मे मृत्तिकां सर्वे चर्चयन्ति स्वविग्रहे ।।३९।।

सोऽपि चर्चयते स्वाङ्गं चन्दनेनेव भाग्यवान् ।
ततस्ते कन्दुकं कृत्वा तेन क्रीडामथारभन् ।।४०।।

कन्दुको व्योममार्गस्थो बालत्यक्तोऽस्पृशत् करम् ।
कृत्वाश्ववच्च तं बालमारोहत् स सकन्दुकः ।।४१।।

आरोहको बलाद् भूमौ निक्षिपेत् तञ्च कन्दुकम् ।
अपरो धारयेदूर्ध्वमागतं सोऽपि वा पुनः ।।४२।।

यद्धस्ते कन्दुकः सोऽथ बालमारुह्य तं त्यजेत् ।
भूमौ निपतितं बालमादाय तेन ताडयेत् ।।४३।।

तेषु मध्ये पलायत्सु यस्य लग्नः स कन्दुकः ।
तेनापि व्योममार्गस्थः कार्यो यस्य करं स्पृशेत् ।।४४।।

हस्ते नायाति चेत् सोऽपि व्योमगं तत्तु कारयेत् ।
येन हस्ते धृतः सोऽमुमारुह्य पूर्ववत् क्षिपेत् ।।४५।।

कदाचित् कन्दुकः क्षिप्तो गुणेशेन च व्योमनि ।
चञ्चलेन धृतो हस्ते तमारूढस्तदाऽसुरः ।।४६।।

जस्तो काँध, सुँगुरको जस्तो मुख र हात्तीको जस्तो पेट भएको, श्वासप्रश्वासको वेगबाट पर्वतबाट खसेका ठूला-ठूला ढुङ्गाहरूलाई पनि धूलो झैं उडाउन सक्ने चञ्चलनामक महादैत्य त्यहाँ बालकरूप लिएर आइपुग्यो । त्यसले बालकहरूसामु आएर तीव्र गतिमा अनेक थरि लीला र क्रीडा देखायो । दैत्यविद्यामा सिपालु र बलवान् त्यस दानवले केही बालकहरूलाई उचालेर भुइँमा पछाऱ्यो । कुनै मुनिबालकलाई खुट्टामा समातेर घिसाऱ्यो । कुनै बालकका दुई हात समातेर टाउकामा हिर्कायो । त्यसपछि त्यसले नृत्य देखाउँदा पर्वत र सागरसहित सम्पूर्ण पृथिवी काँप्न थालिन् । बालकहरूले क्रीडा गर्दा घाम भएर आफ्नो शरीरभरि माटो दलेका थिए । त्यो देखेर बालकरूपमा आएको त्यस भयानक दैत्यले पनि भाग्यवान् मानिसले झैं आफ्नो शरीरभरि चन्दन दल्यो । बालकहरू पनि भकुण्डो हातमा लिएर त्यस दैत्यसँग भकुण्डो खेल्न थाले ।।३५-४०।। एउटा बालकले आफ्नो हातमा रहेको भकुण्डो फ्याँकेर आकाशमा पुऱ्यायो । बालकले फ्याँकेको भकुण्डो त्यस दैत्यको हातमा पऱ्यो । त्यसपछि भकुण्डो फ्याँक्ने बालकसँग रिसाएर त्यसले तिनलाई दुई हात र दुई खुट्टा टेकाएर घोडा बन्न लगायो ।।४१।। आफ्नो हातमा भकुण्डो लिएर बालकको पिठ्यूँमा घोडामाझैं सवार भई भकुण्डो खेल्न थाल्यो । त्यसले फ्याँकेको भकुण्डोलाई कुनै बालकले समातेर खेल्न थालेपछि त्यसलाई रीस उठ्यो । जुन बालकले भकुण्डो समातेको थियो त्यसलाई घोडा बनाएर त्यसको पिठ्यूँमा सवार भयो । जुन बालकले त्यसको विरोध गर्दथ्यो त्यसलाई त्यसले मुड्कीले हानेर भुइँमा लडाइदिन्थ्यो । दैत्यको यस्तो व्यवहारबाट डराएर ती बालकहरू भाग्न थाले । त्यस दैत्यले बालकहरूका साथ भकुण्डो खेलिरहेकै समयमा भगवान् श्रीगणेशले त्यसको भकुण्डो समातेर आकाशमा फ्याँकिदिनुभयो । त्यस दानवले रिसाएर भगवान् श्रीगणेशका हात समात्यो र भगवान्को शरीरमाथि सवार भयो । आफ्नो शरीरको सम्पूर्ण भारले भगवान्लाई च्यापिर त्यसले भन्यो- हे बालक श्रीगणेश ! म कति बलियो र कति गह्रौं छु ? मेरो भार सहन गर् । तैं त बालकहरूको बीचमा नाइके भएर खेलिरहेको थिइस् । अब तँलाई यसरी नै च्यापिर तँसँग भकुण्डो

भारेणाक्रम्य तं देवमुवाच दुष्टदानवः ।
सहस्व भारं मे दुष्ट ! वल्गसेऽर्भकसञ्चये ।।४७।।

त्यक्तं त्यक्तं कन्दुकं स गृह्णाति स्वकरे पुनः ।
मुहूर्तद्वयमेवं हि चिक्रीडे दुष्टदानवः ।।४८।।

प्राहसन् मुनिबालास्ते गुणेशं तं तथागतम् ।
ततो गुणेशो दैत्यं तमारूढो दृढविक्रमः ।।४९।।

चञ्चलश्चञ्चलो जातो नेतुं दूरे मुदान्वितः ।
व्योममार्गेण सहसा बाला भूमिगता ययुः ।।५०।।

विमानवत् पक्षिवच्च स जगाम त्वरान्वितः ।
ततो निवृत्तास्ते बालाः शोचमाना ययुर्गृहान् ।।५१।।

स्थितास्तत्रैव केचिच्च प्रतीक्षन्तो गुणेश्वरम् ।
ततो गुणेशस्तं ज्ञात्वा मनसा दुष्टदानवम् ।।५२।।

हिमवत्सदृशं भारं चकार सहसा विभुः ।
भारेण पतितो दैत्यः प्रावदत् तं गुणेश्वरम् ।।५३।।

उत्तरस्व महाभारं गमिष्यन्ति ममासवः ।
दयां कुरुष्व दीने त्वं प्रपन्ने शरणं तव ।।५४।।

एवं वदन् मुमूर्च्छाऽसौ ततो बालो दधार तम् ।
भ्रामयामास बहुशो भुजङ्गं गरुडो यथा ।।५५।।

तत्याज दूरदेशे तं चञ्चलं दुष्टदानवम् ।।५६।।

खेल्छु । त्यसले भगवान्लाई भकुण्डो दियो र भगवान्ले भकुण्डो आकाशमा फ्याँक्नुभयो । त्यसले भकुण्डो समात्यो। यस किसिमबाट धेरै समयसम्म श्रीगणेश र चञ्चल दैत्यका बीच कन्दूक क्रीडा भएको थियो । भगवान्लाई आफ्नो शरीरले च्यापिरहेको दुष्ट राक्षसले दुई घण्टासम्म भगवान्लाई भकुण्डो खेल्न बाध्य गरायो । भगवान् श्रीगणेशलाई त्यसरी दयनीय अवस्थामा देखेर केही बालकहरू हाँस्न थाले । त्यसपछि आफ्नो महत्त्वबोध गर्नुभएका श्रीगणेश पनि आफ्नो पराक्रम प्रदर्शन गर्दै दैत्यमाथि चढ्नुभयो ।।४२-४९।। भगवान् श्रीगणेशद्वारा च्याँपिएको चञ्चलनामक दैत्य चञ्चल भयो । त्यसले आकाशमार्गबाट उड्ने प्रयास गर्दा भुइँका बालकहरू पनि त्यसको वेगका कारण चरा र विमानझैं आकाशमा उड्न थाले ।।५०।। विमान र चराझैं तीव्र गतिमा आकाशमा उडिरहेको त्यो दानव वेगपूर्वक कतै गयो । त्यसपछि भुइँमा खसेका ती बालकहरू चिन्ता गर्दै आ-आफ्ना घरतर्फ लागे ।।५१।। केही बालकहरू भने भगवान् गणेशको प्रतीक्षा गर्दै त्यहीं रहे । भगवान् श्रीगणेशले पनि मनबाट दुष्ट दानवको चर्तिकला जानेर आफ्नो शरीरलाई हिमालयसमान विशाल तुल्याएर त्यसलाई थिच्नुभयो । गणेशद्वारा थिचिएको दैत्यले आत्तिएर प्रार्थनाको स्वरमा भन्यो – 'हे श्रीगणेश! तिमी उत्र । तिम्रो गह्रौंपनलाई हटाऊ, थिचिएर मेरा प्राण जान लागिरहेका छन्, म तिम्रो शरणमा आएको छु, दुःखी छु, दया गर ।।५१-५४।। यसरी श्रीगणेशसँग प्रार्थना गर्दागर्दै त्यो दानव अचेत भयो । भगवान् श्रीगणेशले त्यसलाई समाउनुभयो र आकाशमा धेरै पटकसम्म रिंगाउनुभयो । जसरी गरुडले सर्पलाई घुमाउँछ त्यसैगरी गणेशले त्यसलाई समाएर धेरै बेरसम्म आकाशमा रिंगाउनुभयो । लामो समयपछि उहाँले निष्प्राण त्यस दैत्यलाई आकाशबाट भुइँमा फ्याँकिदिनुभयो ।।५५-५६।।

ॐ

**इति श्रीगणेशपुराणे क्रीडाखण्डे खड्ग-चञ्चलवधो नाम त्रिनवतितमोऽध्यायः**

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'खड्गासुर र चञ्चलासुरको वध' शीर्षकान्वित त्रियानब्बेऔं अध्याय पूर्ण भयो ।।९३।।

ॐ

# चतुर्नवतितमोऽध्याय:　　{ ९४ अध्याय }

क उवाच

ततो मुनिसुता याता: प्रतीक्षन्त: स्थिताश्च ये ।
तेषां जयरवैर्व्योम गर्जितञ्च दिगन्तरम् ।।१।।

चिक्रीडुस्ते पुनस्तत्र नानानृत्यैश्च गायनै: ।
एवं रमत्सु बालेषु सार्द्धयामे दिवाकरे ।।२।।

पितरौ तानदृष्ट्वैव ग्राममध्ये क्वचिद् गृहे ।
प्रत्येकं यष्टिमादाय ययु: सर्वे शिशून् प्रति ।।३।।

रमन्तो विविधा: क्रीडा मध्ये कृत्वा गुणेश्वरम् ।
नृत्यन्तं नर्तयन्तञ्च तञ्च ते निरभर्त्सयन् ।।४।।

पितर ऊचु:

त्वया विना नो बालाश्च नाचरन् स्नानभोजने ।
आचाराध्ययने चापि ब्राह्मण्यं विनयं तथा ।।५।।

तत: परस्परं प्राहुर्गतक्रोधा निरीक्ष्य तम् ।
एतस्य ताडने बुद्धिर्गतैनं वीक्ष्य न: कुत: ।।६।।

कथयामो यदि शिवौ तावस्य किं करिष्यत: ।
अनेके निहता दैत्या बालेनैव महाबला: ।।७।।

वयं देशान्तरं यामो भीत्या तव गुणेश्वर !

क उवाच

एवं वदत्सु लोकेषु पिदधे स गुणेश्वर: ।
आविरासीद् दूरदेशे ततो बाला व्यलोकयन् ।।८।।

धावयित्वा पितॄँस्त्यक्त्वा गुणेशं ते ययु: पुन: ।
क्रीडन्तस्ते ययु: शीघ्रं गौतमाश्रममुत्तमम् ।।९।।

**ब्रह्माजीले भन्नुभयो -** चञ्चलाशुरको वधपछि श्रीगणेशको प्रतिक्षा गरिरहेका मुनिपुत्रहरू त्यहाँ आइपुगे । तिनीहरूले गरेको जयजयकारबाट आकाश र दिशाहरू शब्दायमान भए ।।१।। त्यसपछि ती बालकहरू अनेक थरि नाचगान गरी क्रीडा गर्न लागे । यसरी सूर्य मध्याकाशमा आइपुग्दासम्म बालकहरू खेलिरहँदा आफ्ना बालकहरूलाई घरमा नआएको देखेर गाउँको बीचमा जम्मा भएका र घरमा रहेका समेत बालकहरूका आमाबाबुहरू धेरै रिसाए । ती सबै बाबुआमा हातमा लौरो लिएर बालकहरू खेलिरहेको ठाउँमा गए ।।२-३।। त्यहाँ भगवान् गुणेश्वर श्रीगणेशलाई माझमा राखेर अनेक थरि क्रीडा गर्दै नाचिरहेका र नचाइरहेका आफ्ना बालकहरूलाई देखेर ती बाबुआमाले नराम्रोसँग गाली गरे ।।४।।

**बाबुआमाहरूले भने -** 'हे श्रीगणेश ! तिमीविना हाम्रा छोराहरू स्नान र भोजन पनि गर्दैनन् । आचारपालनमा र अध्ययनमा पनि यिनीहरूको रुचि छैन । न त यिनीहरूसँग ब्रह्मकर्म छ न त बाबुआमाले भनेको मात्रै आज्ञाकारिता र अनुशासन छ ।।५।।' यसरी भनेपछि बालकहरू र श्रीगणेशहरूलाई केही नबोलेको देखेर ती सबै बाबुआमाले आपसमा भने - 'किन श्रीगणेशलाई हेर्नासाथ हाम्रो रीस पनि मर्छ ? पिटौं भनेर जोशपूर्वक आउँदा त्यो बुद्धि कता हराउँछ कता ! ।।६।। अब श्रीगणेशको विषयमा पार्वती र शिवजीलाई भन्नुपर्‍यो । उहाँले यिनलाई केही सिकाउनु हुनेछ ।' यस्तो विचार गरेर फेरि गणेशलाई भने– 'हे श्रीगणेश ! तिमीले सानो भएर पनि बलवान् ठूलाठूला दैत्यहरूलाई मार्‍यौ ।।७।। तिमीसँग डर लाग्छ । यहाँ बस्दा यस्ता घटना भइरहन्छन् । हाम्रा छोरा पनि बिग्रिसके। अब हामी अरू देशमा बस्न जान्छौं ।'

**ब्रह्माजीले भन्नुभयो-** यसरी बालकहरूका बाबुआमाहरूले आएर आपसमा विचार गर्ने र सम्बोधन गर्ने काम गरिरहेको समयमा गुणेश्वर परमात्मा श्रीगणेशले आफूलाई अन्तर्धान गराउनुभयो ।।८।। धेरै बेरपछि टाढा गएर प्रकट हुनुभयो। ती बालकहरूले श्रीगणेशलाई देखे । त्यसपछि आफ्ना बाबुआमालाई छाडेर ती सबै आफूदेखि धेरै टाढा

ध्यानस्थं तं मुनिं वीक्ष्य पचन्तीं तत्स्त्रियञ्च ते ।
गुणेशोऽगान्मध्यदेशं जग्राहौदनपात्रकम् ।।१०।।

ददौ तेभ्यो विभज्यान्नं प्रार्थयामास सादरम् ।।११।।

मत्सङ्गेन चिरं कालं यूयं सर्वे बुभुक्षिताः ।
सावकाशं प्रभुञ्जध्वं ततः क्रीडामहे पुनः ।।१२।।

अहल्या तं चुकोपाशु ममान्नं स्पृष्टवान् कथम् ।
न कृतो वैश्वदेवो वा नैवेद्यं चपलार्भकाः ।।१३।।

विसृज्य ध्यानं किं कुर्याद् गौतमो मुनिसत्तमः ।
उत्थापयामास तदा ध्यानस्थं मुनिसत्तमम् ।।१४।।

स उत्थाय ददर्शाऽथ गौतमः सकलार्भकान् ।
जक्षतोऽन्नं क्षुधा युक्तान् बभाषे च गुणेश्वरम् ।।१५।।

गौतम उवाच

महतोः पुत्रतां प्राप्य कथमन्यायकृद् भवान् ।
अत्यद्भुतानि कर्माणि श्रुत्वा ते त्वां वयं पुरा ।।१६।।

परात्परतरं देवं परब्रह्मस्वरूपिणम् ।
मन्यामहे बालभावं कुरुषे त्वं गुणेश्वर ।।१७।।

क उवाच

धृत्वा करं स च मुनिः पार्वत्या गृहमागमत् ।
करे धृत्वाऽन्नसहितं तत्पात्रं निजमन्दिरात् ।।१८।।

उवाच मातस्ते बालो नित्यमन्यायकृन्मम ।
अद्य त्वां कथितुं यातः किं कार्यं गौर्यतः परम् ।।१९।।

इतो वा गमनं दूरे मन्यसे यदि तद्वद ।

प्रकट हुनुभएका भगवान् श्रीगणेश रहनुभएको ठाउँतर्फ लागे। श्रीगणेशसँग भेट गरेपछि आपसमा खेल्न थाले । खेल्दै ती सबै गौतम ऋषिको उत्तम आश्रमतर्फ गए। त्यहाँ ध्यान गरिरहेका गौतम ऋषि र भोजन बनाइरहेकी ऋषि पत्नीलाई देखेर श्रीगणेश भान्साको बीचमा जानुभयो । भात पकाएको भाँडोबाट भात झिकेर उहाँले आफूसँग आएका बालकहरूलाई आदरपूर्वक बाँड्दै भन्नुभयो - 'हे मेरा बालमित्रहरू! धेरै बेरसम्म मेरा साथमा रहेका तिमीहरू अवश्य पनि भोकाएका छौ । अब आनन्दपूर्वक भोजन गर । भोजनपछि हामी फेरि खेल्नेछौं'।।९-१२।। त्यस बेला गौतम ऋषिकी पत्नी अहल्याले रिसाउँदै श्रीगणेशलाई भनिन् - 'हे बालक ! तिमीले किन मैले पकाएको अन्न स्पर्श गर्‍यौ ? हे चञ्चल बालकहरू! पकाएको अन्नलाई नैवेद्य बनाएर गरिने वैश्वदेव कर्म पनि हामीले गरेका छैनौं । भगवान्‌को पूजा गरेर नैवेद्य पनि लगाएका छैनौं । तिमीहरूले ठूलो अपराध गर्‍यौ । महामुनि गौतम ध्यानबाट जाग्नुभएपछि के गर्नु हुन्छ हेर त ?' त्यसपछि तिनले ध्यानमा रहेका आफ्ना पति गौतम ऋषिलाई जगाइन् । ध्यानबाट जागेका गौतम ऋषिले भोकाएर आफ्नो भान्सामा पाकेको भोजन खाइरहेका बालकहरूलाई देखे । त्यसपछि उनले श्रीगणेशलाई भने ।।१३-१५।।

**गौतमले भन्नुभयो**- 'हे श्रीगणेश! जगत्‌का पिता-माता पार्वती र शङ्करका छोरा भएर पनि किन तपाईंले यस्तो अन्याय गर्नुभयो ? हामीले त तपाईंका अद्‌भुत लीला सुनेका थियौं । त्यसपछि हामीले तपाईंलाई परात्पर, देवताका पनि देवता परब्रह्म नै मानेका थियौं । त्यस्ता परब्रह्मले पनि केटा-केटीको जस्तो चञ्चलता देखाइरहनु भएको छ, यस्तो किन?'।।१६-१७।।

**ब्रह्माजीले भन्नुभयो** - त्यसपछि गौतम ऋषिले श्रीगणेशको हात समातेर पार्वतीका घरमा पुर्‍याए । त्यस बेला श्रीगणेशको हातमा गौतम ऋषिको भान्सामा पाकेको अन्नको भाँडो थियो । गौतम ऋषिले पार्वतीलाई भने - 'हे आमा पार्वती! तपाईंका छोराले दिनदिनै मेरो घरमा आएर उपद्रव मचाउँछन् र अन्याय गर्छन् । हे गौरी ! आज त सहनै नसकेर साथै लिई भन्न आइपुगें । के गर्नुपर्छ तपाईं आफै गर्नुहोस् ।।१८-१९।। अब त बस्न नै नसकिने भयो । यो आश्रम छाडेर टाढा कतै जानुपर्छ भने भन्नुहोस्, हामी जान तयार छौं ।'

क उवाच

ततो रुषा समायुक्ता श्रुत्वा वाक्यं मुनीरितम् ।।२०।।

ताडयामास यष्ट्या तं वमन्ती नेत्रतोऽनलम् ।
उवाच च मुनिं गौरी प्रणता क्रोधसंयुता ।।२१।।

ममापि च मुने ! त्रासो जायते जन्मतोऽस्य ह ।
द्रष्टव्या राक्षसकृताः कियन्तो विघ्नसञ्चयाः ।।२२।।

स्त्रियः प्रवक्तुं कुत्रापि नायान्ति मुनिपुङ्गवाः ।
अयं तु सर्वतो दुष्टो मुनिपुत्रविभेदकः ।।२३।।

ममात्मज इति जनो नैनं शापं प्रयच्छति ।
बद्ध्वैनं हस्तपादेषु तत्समक्षं शिवा सुतम् ।।२४।।

गृहमध्ये तु संस्थाप्य तद्गृहं पिदधे दृढम् ।
मैवं मैवं वदन् यातो गौतमः स्वाश्रमं प्रति ।।२५।।

ततस्ते बालकाः सर्वे शोचस्तन्तं गुणेश्वरम् ।
कथं नो दर्शनञ्चास्य भविष्यति कदा नु वा ।।२६।।

द्वारं दत्त्वा दृढं मध्ये स्थापितो गिरिकन्यया ।
एवं तेषु वदत्स्वेव तन्मध्ये स ययौ क्षणात् ।।२७।।

जनन्याः कटिदेशेऽपि दृश्यते तद्गृहेऽपि च ।
ऊचुस्तां गौरि ! पुत्रस्ते निःसृतो गृहमध्यतः ।।२८।।

पश्यति स्म गेहमध्ये बद्धमेव गुणेश्वरम् ।
बहिस्तान् मुनिपुत्रान् सा तत्स्वरूपानपश्यत ।।२९।।

यं कञ्चित्स्तनपानाय जुहाव विह्वला शिवा ।
निषिद्धा सा सुतैस्तैस्तु गृहमध्ये शिवे ! स्थितः ।।३०।।

**ब्रह्माजीले भन्नुभयो** - गौतम ऋषिले भनेका कुरा सुनेर आफ्ना छोरा श्रीगणेशसँग असाध्यै रिसाएकी माता पार्वतीले आँखाबाट रीसको अग्निज्वाला प्रकट गर्दै श्रीगणेशलाई लौराले पिट्नुभयो । रिसाएर पनि नम्र देखिएकी गौरीले गौतम ऋषिलाई भन्नुभयो - 'हे ऋषि ! के गरौं यसको बानी यस्तै छ, यो साह्रै चञ्चल छ । यो जन्मेदेखि अहिलेसम्म यसले के गर्ने हो र के सुन्नुपर्ने हो भन्ने त्रासमात्रै लागिरहन्छ । यता राक्षसहरूको बस्तीमा बसेका छौं । सधैं विघ्न भइरहन्छन् ।।२०-२२।। कहिले के हुने हो र के आइलाग्ने हो भन्ने पनि मनमा लागिरहन्छ। अर्कोतर्फ छोराको यस्तो बानीबेहोरा छ । कति ऋषिमुनिहरूका घरमा गएर यसले उपद्रव मच्चाएको छ तर ऋषि र तिनका पत्नीहरू हाम्रो ख्याल राखेर भन्न आएका छैनन् । यो मेरा छोरा त असाध्यै दुष्ट छ । यसले मुनिका छोराहरूलाई पनि नचाई नचाई बिगारेको छ। पार्वतीको छोरा हो गाली गर्न भएन, सराप पनि के दिने भनेर मानिसहरूले केही प्रतिकार गरेका छैनन् ।' यस्तो मनका कुरा खोलेपछि पार्वतीले गौतम ऋषिकै सामु आफ्ना छोराको हातखुट्टा बाँध्नुभयो । गणेशलाई घरको बीचमा राखेर ढोका लगाउनुभयो । यस्तो दृश्य देखेर गौतम ऋषि पनि हे आमा पार्वती ! तपाईंले यति कडा दण्ड नदिनुहोस् भन्दै आफ्नो आश्रमतर्फ फर्के ।।२३-२५।। त्यसपछि ती अरू मुनिबालकहरू भगवान् श्रीगणेश कहिले आउनुहुन्छ, कहाँ पुग्नुभएको छ, के गरिरहनुभएको छ, किन दर्शन पाइएन, कतिबेला दर्शन पाइनेछ जस्ता तर्क गर्दै श्रीगणेशको प्रतीक्षा गरिरहेका थिए । आमा पार्वतीले आफ्नो घरभित्र हुलेर ढोका लगाई थुन्नुभएको छ रे भन्ने कुरा गरिरहेका बालकहरूको माझमा पुगेका श्रीगणेश आमाको काखमा देखिनुभयो र घरमा थुनिनु भएको पनि देखिनुभयो । सँगिनीहरूले भने- 'हे पार्वती ! तपाईंका छोरा त घरबाट निस्लेर मैदानमा गएछन् ।' त्यो सुनेर पार्वतीले घरभित्र हेर्दा आफ्ना छोरालाई त्यहीं बाँधिएको अवस्थामा देख्नुभयो । फेरि बाहिर हेर्दा मुनिका छोराहरूलाई थपक्कै श्रीगणेशकै अनुहारमा खेलिरहेका पनि देख्नुभयो ।।२६-२९।। भावले विह्वल भएकी पार्वतीले श्रीगणेशको आकारका बालकहरूमध्ये कुनै एक बालकलाई मेरो स्तनपान गर्न आऊ भनेर बोलाउनुभयो । तर ती मुनिपुत्रहरूले - 'हे पार्वती आमा ! हामी श्रीगणेश होइनौं, स्वयं श्रीगणेश पनि यहाँ आउनुभएको

उद्घाट्य द्वारं सा बालं मुक्त्वा स्तन्यं ददौ मुदा ।

गौतमः स्वाश्रमं यातो देवतार्चनमारभत् ।।३१।।

गुणेशरूपान् सोऽपश्यत् तृप्तान् देवाँस्तथाऽखिलान्।

पुरः प्रकीर्णमन्नञ्च ततो विस्मितमानसः ।।३२।।

चिन्तयामास मनसि दुर्बुद्धिस्तु कृता मया ।

उमायै कथितं सर्वमन्नपात्रं प्रदर्शितम् ।।३३।।

तया स ताडितो बद्धोऽव्यक्तो व्यक्तस्य कारणम् ।

परात्परतरो देवो यस्मिँस्तृप्ते महाफलम् ।।३४।।

आगत्य बुभुजे बालैः सार्द्धं तु मुनिसम्भवैः ।

मोहितो मायया चास्य पूर्वमज्ञासिषं न तम् ।।३५।।

क उवाच

अहल्यापि पुनः पाकञ्चकाराद्भुतमानसा ।

सोऽपि ध्यानस्थितो भूत्वा नित्यकर्म समापयत् ।।३६।।

छैन, उहाँ त घरभित्रै थुनिनुभएको छ ।' भनें त्यसपछि पार्वतीले आफ्नो घरको ढोका खोलेर बालकका हातखुट्टाका बन्धन काटी काखमा राखेर आनन्दपूर्वक दूध चुसाउनुभयो । उता गौतम ऋषि पार्वतीसँग कुराकानी गरेपछि आफ्नो आश्रममा पुगिसकेका थिए । त्यहाँ गएर तिनले देवताको पूजा आरम्भ गरे । आफूले पूजा गरेका सम्पूर्ण देवताहरूलाई श्रीगणेशकै अनुहारमा देखे । श्रीगणेशको रूपमा देखिएका ती सबै देवताहरू प्रसन्न, तृप्त र सन्तुष्ट थिए। तिनका अगाडि भान्साका सम्पूर्ण पकवान, भोजन र व्यञ्जन राखिएका थिए । त्यस बेला गौतम ऋषिले मनमनै भने – 'मैले भगवान् श्रीगणेशलाई नचिनेर दुर्बुद्धिको काम गरेछु । भाँडा हातमा लिनुभएका श्रीगणेशलाई समातेर पार्वतीको आश्रममा गई श्रीगणेशको कुरा लगाएँ । अन्न पकाएको भाँडो समेत लगेर देखाएँ । पार्वतीले पनि मेरा कुरा सुनेर आफ्ना छोरालाई पिट्ने र बाँध्ने काम गर्नुभयो । वास्तवमा श्रीगणेश त अनन्त संसारका स्वामी र उत्पत्तिका कारण हुनुहुन्छ । परभन्दा पर रहनुभएका देवता हुनुहुन्छ । परब्रह्म परमात्मा हुनुहुन्छ । उहाँ प्रसन्न र तृप्त हुनुभएपछि ठूलो फल प्राप्त हुन्छ। उहाँले ममाथि कृपा गरी मेरो भान्सामा आएर आफ्ना बालसखाहरूका साथ भोजन गर्नुभयो । कति भाग्यको कुरा थियो । मैले त्यो कुरा बुझ्न सकिनँ । मलाई मायाले छोप्यो र रीस उठ्यो । अपूर्व प्रभाव र शक्तिले सुहाउनुभएका भगवान् श्रीगणेशलाई मैले चिन्न सकिनँ।।३०-३५।।

**ब्रह्माजीले भन्नुभयो** – अहल्याले श्रीगणेशको अद्भुत चरित्रको विषयमा थाहा पाएर आफ्नो परिवारका लागि भोजन तयार गरिन् । उता गौतम ऋषिले पनि पूजाकोठामा धेरै बेरसम्म रही भगवान् श्रीगणेशको ध्यान गरेर पूजन आदि नित्यकर्म समाप्त गरे ।।३६।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे गौतमभोजनहरणं नाम चतुर्नवतितमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'गौतम ऋषिको भोजनहरण' शीर्षकान्वित चौरानब्बेऔँ अध्याय पूर्ण भयो ।।९४।।

ॐ

## पञ्चनवतितमोध्यायः { ९५ अध्याय }

क उवाच

षष्ठे वर्षे प्रवृत्ते तु क्वचिद् यातो बहिः शिशुः ।
...या बालकैः सार्द्धं चिक्रीडानेकधा पुनः ॥१॥

तं दिदृक्षुर्विश्वकर्मा ययावन्तर्गृहं प्रति ।
पार्वती बहिरागत्य मानयामास तं बहु ॥२॥

चित्रासने समावेश्य पूजयामास सादरम् ।
प्रक्षाल्य चरणौ प्रादाद् गन्धं ताम्बूलमेव च ॥३॥

तस्मादादरं दृष्ट्वा विश्वकर्मा तुतोष ह ।
तुष्टाव परया भक्त्या प्रणिपत्य शिवां मुदा ॥४॥

विश्वकर्मा उवाच

नमामि विश्वेश्वरि ! विश्वरूपे !
ब्रह्मेन्द्ररुद्रार्यमविष्णुरूपे !
त्वया ततं विश्वमनन्तशक्ते !
ब्रह्मादिदेवैरभिनन्द्यरूपे !॥५॥

त्वमेव विश्वं रजसा विधत्से
सत्त्वेन मातः परिपासि तच्च ।
त्वमेव सर्वं तमसाऽथ हंसि
त्रैगुण्यमेतत् तव नित्यरूपम् ॥६॥

त्वया हता दैत्यगणा विमुक्तिं
ब्रह्मर्षयो ज्ञानबलात् प्रपन्नाः ।
त्वमेव विष्णोरतुलाऽसि शक्तिः
सर्वस्य हेतुः परमाऽसि माया ॥७॥

सतोऽसतो याऽपि परासि शक्ति-
श्चराचरं त्वं विदधासि विश्वम् ।
सम्मोह्य लोकान् सकलान् सुरेशान्
काष्ठाकलाभिश्च ददासि भोगम् ॥८॥

ये त्वां प्रपन्ना न भयन्तु तेषाम् ।
मृत्योस्तथा दैत्यकृतं कदाचित् ॥९॥

**ब्रह्माजीले भन्नुभयो** – पार्वतीनन्दन श्रीगणेश ६ वर्षमा लाग्नु भएपछि कुनै दिन आफ्ना बालमित्रहरूका साथ घरदेखि बाहिर गई धेरै बेरसम्म क्रीडा गर्नुभयो ॥१॥ श्रीगणेशको लीला हेर्ने इच्छाले विश्वकर्मा पार्वतीको घरमा आइपुगे । पार्वतीले कोठाबाट बाहिर आई विश्वकर्माको सम्मान गर्नुभयो। उत्तम आसनमा राखेर आदरपूर्वक पूजा गर्नुभयो । चरण पखालीकन चन्दन र पान टक्र्याउनुभयो। पार्वतीले गरेको त्यस्तो आदरलाई देखेर विश्वकर्मा अत्यन्त प्रसन्न भए। त्यसपछि भक्तिपूर्वक नुहेर तिनले पार्वतीको स्तुति गरे।।२-४॥

**विश्वकर्माले भने**- हे विश्वकी स्वामिनी! विश्वब्रह्माण्डमा व्याप्त हुनुभएकी हे महाशक्ति ! ब्रह्मा, इन्द्र, रुद्र, अर्यमा र विष्णुको रूपमा प्रकाशित भएकी हे देवी ! हजुरले यस विश्वब्रह्माण्डको विस्तार गर्नुभएको छ । हे अनन्त शक्तिसम्पन्न आमा पार्वती ! ब्रह्मा आदि देवताहरूबाट पूजा गरिएकी र अत्यन्त महनीय स्वरूपले सम्पन्न हे जगदम्बा ! हजुरले नै रजोगुणको आश्रय लिएर संसारको रचना गर्नुहुन्छ। हे जगन्माता! हजुरले आफूद्वारा रचिएका संसारको सत्त्वगुणका आधारमा पालन गर्नुहुन्छ । फेरि हजुरले नै तमोगुणको आश्रय लिएर आफूले सृष्टि गरी पालनसमेत गरेका संसारको संहार गर्नुहुन्छ । हे देवी! हजुरको नित्य स्वरूप त्रिगुणमय छ।।५-६॥ हजुरद्वारा अनेक दैत्यगणहरू मारिए र हजुरकै कृपाबाट ज्ञान प्राप्त गरेका ब्रह्मर्षिहरूले मुक्ति प्राप्त गरे । हजुर नै भगवान् विष्णुको अतुलनीय शक्ति लक्ष्मी हुनुहुन्छ । हजुर सारा संसारको कारण हुनुहुन्छ । हजुर परम मायाका रूपमा विराजमान हुनुहुन्छ ॥७॥ हजुर सत्य र असत्यदेखि पर रहेकी शक्ति हुनुहुन्छ । जड र चेतनले युक्त विश्व हजुरको इच्छाबाट रचिएको छ । हजुरले संसारमा रहेका सम्पूर्ण प्राणीहरूलाई आनन्दित बनाएर सबै देवताहरूलाई पला, घडी, बार, पक्ष, महिना, अयन, वर्ष, युग र कल्प आदि कालका अनेक भेदहरूबाट अत्यन्त आनन्ददायक भोग पनि प्रदान गर्नुहुन्छ ॥८॥ हे जगन्माता ! हजुरका चरणमा जो शरणागत हुन्छन् तिनलाई मृत्यु र दैत्यहरूबाट कहिल्यै पनि भय हुँदैन ॥९॥ हजुर पुण्यवान्हरूका

त्वमेव लक्ष्मीः सुकृतामलक्ष्मी-
दुष्टात्मनां त्वं प्रमदास्वरूपा ।
विद्यास्वरूपासि जगत्त्रये त्वं
प्रभास्वरूपा शशिसूर्ययोस्त्वम् ।।१०।।
य आश्रितास्ते जगदाश्रयास्ते
विपत्तिलेशो न च तेषु मातः !
त्वमेव विश्वेश्वरि ! विश्वमेत-
द्धरस्यथाप्यायसि वारिरूपा ।।११।।
अनादिमध्याऽनिधनाप्यगम्या
हरीशलोकेशसुरेश्वराणाम् ।
तेऽनुग्रहात् त्वां प्रभजन्ति भक्ता
आनन्दरूपा निवसन्ति नाके ।।१२।।
अभक्तिकामान् विनिहंसि रुष्टा
त्वामेव मातः ! शरणं प्रपन्नः ।
धन्ये ममैते नयनेऽथ विद्या
जनुश्च माता पितृवंश एव ।।१३।।
कुलञ्च धन्यं चरणौ त्वदीयौ
दृष्टौ यतस्ते जगदम्बिके ! मया ।।

क उवाच

एवं स्तुता जगन्माता वरमस्मै न्यवेदयत् ।।१४।।
स वव्रे परमां भक्तिं सा तथेति तमब्रवीत् ।
इदं स्तोत्रं पठेद् यस्तु सर्वान् कामाँल्लभेच्च सः ।।१५।।
सर्वत्र विजयं पुष्टिं विद्यामायुः सुखं शिवम् ।

शिवोवाच

विश्वकर्मन् ! महाबुद्धे ! ज्ञानवानसि सर्वतः ।।१६।।
यच्छ्रुतं शिववाक्येन दृष्टं तत् सकलं त्वयि ।
सिन्धुना पीडिता देवाः सर्वे कारागृहे स्थिताः ।।१७।।

निमित्त लक्ष्मीका रूपमा विराजमान हुनुहुन्छ। हजुर दुष्टहरूका निमित्त दरिद्रा बनेर रहनुहुन्छ । हजुर प्रत्येक घरमा गृहलक्ष्मी बनेर विराजमान हुनुहुन्छ हजुर स्वर्ग, मर्त्य र पातालमा विद्याका रूपमा चम्किनुहुन्छ । हजुर सूर्य र चन्द्रमामा कान्ति बनेर विराजमान हुनुहुन्छ ।।१०।। जसले हजुरका चरणकमलको आश्रय लिन्छन् ती सबै प्राणीहरूका आश्रयदाता बन्दछन्। त्यस्ता प्राणीहरूमाथि लेशमात्र पनि विपत्ति आइलाग्दैन। हे विश्वकी स्वामिनी ! हजुरले नै जल बनेर सम्पूर्ण संसारलाई रक्षा र तृप्ति प्रदान गर्नुहुन्छ ।।११।। हे भगवती ! हजुरको आदि, अन्त्य र मध्य केही पनि छैन । नारायण, शङ्कर, ब्रह्मा र अरू देवताहरूद्वारा पनि हजुर अगम्य हुनुहुन्छ । हजुरकै कृपा पाएर भक्तका रूपमा रही ती सबै देवताहरू आनन्द भोग गर्दै स्वर्गमा विराजमान हुन्छन् ।।१२।। भक्ति नगर्ने र नास्तिकता अँगालेर पाप गर्ने प्राणीहरूलाई हजुरले रिसाएर मारिदिनुहुन्छ । हे भगवती ! आज म हजुरको शरणमा आएको छु । हजुरको दर्शन पाएर आज मेरा दुबै आँखा धन्य भएका छन् । मैले अध्ययन गरेको विद्या, मेरो जन्म, मेरी माता, मेरा पिता, मेरा कुलकुटुम्बका मानिसहरू सबै धन्य भएका छन् किनकि आज मैले हजुरका चरणकमलको दर्शन पाएको छु ।\

**ब्रह्माजीले भन्नुभयो-** विश्वकर्माद्वारा यसरी स्तुति गरिएकी भगवती पार्वतीले भन्नुभयो - 'हे विश्वकर्मा ! वर माग्नुहोस्।।१३-१४।।' विश्वकर्माले भने - 'हे आमा पार्वती ! मलाई हजुरको परम भक्ति प्रदान गर्नुहोस् ।' पार्वतीले तथास्तु भन्नुभयो। जसले विश्वकर्माद्वारा पढिएको यो स्तोत्रको पाठ गर्छ, त्यसले सबै कामनाका फल प्राप्त गर्छ सर्वत्र विजयलाभ गर्छ, पुष्टि, तुष्टि, विद्या, आयु, सुख र कल्याण पनि प्राप्त गर्दछ ।।१५।।

**पार्वतीले भन्नुभयो-** 'अत्यन्त उत्तम बुद्धि भएका हे विश्वकर्मा ! तपाईं अत्यन्त ज्ञानी हुनुहुन्छ ।।१६।। मेरासामु शिवजीले तपाईंको प्रशंसा गर्नुभएको थियो । जस्तो उहाँले तपाईंको विषयमा भन्नुभएको थियो, ती सबै कुरा तपाईंमा पाएँ। दैत्यराज सिन्धुद्वारा पीडित भएका देवताहरू अहिले कारागारमा थुनिएका छन् । दैत्यराज सिन्धुले कैलासमा आफ्नो अधिकार

शिवश्चात्र समायात: कैलासे तु हृते सति ।
दण्डकारण्यदेशेऽत्र कोऽप्याप्तो न हि दृश्यते ।।१८।।

त्वं तु सम्यक् समायातो बहुकालेन दर्शनम् ।

विश्वकर्मा उवाच

किमाश्चर्यं जगन्मातर्बालो मातरमाव्रजेत् ।।१९।।
द्रष्टुं देवं महाभक्तो विद्याकामो गुरुं शिवे !

पुत्रस्य ते श्रुतो मातर्महिमा परमाद्भुत: ।।२०।।
तमहं द्रष्टुमायातो युवयोर्दर्शनोत्सुक: ।

क उवाच

एवं तयोस्तु वदतोरागतोऽसौ विनायक: ।।२१।।

असङ्ख्यशशिसङ्काशो रजसाऽरुणविग्रह: ।
प्रसन्नवदनो बालसमूहपरिवारित: ।।२२।।

तन्मध्ये शोभते स्मासौ मरुन्मध्ये यथा हरि: ।
तं दृष्ट्वा प्रणिपत्यासौ कृताञ्जलिपुट: स्थित: ।।२३।।

तुष्टाव परमात्मानं ज्ञात्वा तं गिरिजासुतम् ।

विश्वकर्मा उवाच

नमामि परमात्मानं सच्चिदानन्दविग्रहम् ।।२४।।

चराचरगुरुं सर्वकारणानाञ्च कारणम् ।
गुणेशञ्च गुणातीतं सृष्टिस्थित्यन्तकारिणम् ।।२५।।

सर्वव्यापिनमीशानं व्यक्ताव्यक्तस्वरूपिणम् ।
अगम्यं सर्वदेवानां मुनिहृत्पद्मवासिनम् ।।२६।।

सिद्धिबुद्धिपतिं नानाभक्तसिद्धिप्रदं विभुम् ।
अभक्तकामदहनं सहस्त्ररविसन्निभम् ।।२७।।

अनेकशक्तिसंयुक्तं दैत्यदानवमर्दनम् ।
अनादिमव्ययं शान्तं जरामरणवर्जितम् ।।२८।।

त्रितनुञ्च त्रयीमूलं ब्रह्मविष्णुशिवात्मकम् ।

क उवाच

एवं स्तुतिं समाकर्ण्य सन्तुष्ट: स गुणेश्वर: ।।२९।।

जमाएपछि शिवजी पनि भागेर यसै दण्डकारण्य क्षेत्रमा आउनुभएको छ । यस क्षेत्रमा कुनै पनि गतिला प्राणीहरू छैनन्। धेरै दिनपछि तपाईंमात्र हामीलाई दर्शन दिन आउनुभयो ।'

**विश्वकर्माले भने** - 'हे जगदम्बा ! एउटा बालक आमाका सामु आउँदा के आश्चर्य ! ।।१८-१९।। भगवान् शिवजीको महाभक्त म विद्याको चाहना लिएर उहाँको दर्शन गर्न आएको छु । हे जगदम्बा ! हजुरका छोरा श्रीगणेशको अद्भुत महिमा सुनेको छु । उहाँका साथै हजुरहरू दुवैको दर्शन गर्न म अत्यन्त उत्सुक छु ।'

**ब्रह्माजीले भन्नुभयो** - यसरी विश्वकर्मा र पार्वतीको संवाद चलिरहेको समयमा असंख्य चन्द्रमाझैं प्रकाशमान, धूलैधूलाले ढाकिनुभएका, प्रसन्न अनुहारले सुहाउनु भएका र बालकहरूले घेरिनुभएका भगवान् श्रीगणेश त्यहाँ आइपुग्नुभयो ।।२०-२२।। उनन्चास वायुहरूका बीचमा देवराज इन्द्र सुहाएझैं बालकहरूको बीचमा भगवान् श्रीगणेश सुहाउनु भएको थियो । विश्वकर्मा भगवान् श्रीगणेशको दर्शन पाएपछि प्रणाम गरी हात जोडेर उभिए ।।२३।। त्यसपछि तिनले पार्वतीका पुत्र श्रीगणेशको परमात्मभावले स्तुति गरे ।

**विश्वकर्माले भने**- सत्, चित् र आनन्दस्वरूप, चराचरका गुरु, सबै कारणका पनि कारण, गुणहरूका स्वामी एवं गुणातीत, संसारका सृष्टि, पालन एवं संहारका कारण, सर्वव्यापक, व्यक्त एवं अव्यक्त स्वरूपले सम्पन्न, परमेश्वर, सबै देवताहरुद्वारा अगम्य, मुनिहरूका हृदयरूपी कमलमा रमाउनुहुने, सिद्धि एवं बुद्धिका स्वामी, अनेकौं भक्तहरूलाई सिद्धि प्रदान गर्नुहुने, अन्तर्यामी, दुष्टहरूका कामनाहरूका संहारक, सूर्यझैं तेजस्वी, अनेक शक्तिले सम्पन्न, दैत्य एवं दानवका संहारक, अनादि, अव्यय, शान्त, जरा एवं मृत्युदेखि पर रहनुभएका परमात्मा श्रीगणेशलाई नमस्कार गर्दछु ।।२४-२८।। सत्त्व, रज एवं तमोगुणको आश्रय लिएर रहनुहुने, ब्रह्मा, विष्णु एवं महेश्वरको स्वरूप धारण गर्नुहुने र वेदका मूलतत्त्व परमात्मा श्रीगणेशलाई प्रणाम गर्दछु ।

**ब्रह्माजीले भन्नुभयो** - विश्वकर्माका यस्ता स्तुतिवचन सुनेर परमात्मा श्रीगणेश प्रसन्न हुनुभयो ।।२९।। उहाँले तिनलाई

स्वासने तमुपावेश्य पूजयामास सादरम् ।
प्रक्षाल्य चरणौ गन्धमक्षतान् पुष्पमेव च ।।३०।।

धूपं दीपञ्च नैवेद्यं निवेद्य तमथाब्रवीत् ।

गुणेश उवाच

विश्वकर्मन्नागतोऽसि मम दर्शनकाङ्क्षया ।।३१।।
किमानीतं मम मुदे ह्युपायनमनुत्तमम् ।

विश्वकर्मा उवाच

निजस्वानन्दपूर्णानां परवाञ्छाविधायिनाम् ।।३२।।

निःस्पृहाणां सर्वकृतां सर्वशक्तिमतामपि ।
समलोष्टाश्महेम्नाञ्च कल्पवृक्षाधरीकृताम् ।
कर्तुमकर्तुं शक्तानामन्यथाकर्तुमेव च ।।३३।।

स्वाधीनानाञ्च तुष्टानां स्वसत्तावर्तिनामपि ।
पराधीनैरशक्तैश्चाकिञ्चनैर्मर्त्यधर्मभिः ।।३४।।

किं देयं परितोषाय स्वशक्त्या किञ्चिदाहृतम् ।

क उवाच

एवमुक्त्वा विश्वकर्माऽस्थापयत्पुरतः सृणिम् ।।३५।।

पद्मञ्च परशुं पाशं सहस्रादित्यसन्निभम् ।
सर्वशत्रुहरं तीक्ष्णं दधार स गुणेश्वरः ।।३६।।

उवाच विश्वकर्माणं कुत एतानि विश्वकृत् !
आनीतानि मम प्रीत्यै तद्वदस्वाधुनाऽनघ ।।३७।।

विश्वकर्मा उवाच

संज्ञा नामेति नाम्ना मे कन्या चारुस्वरूपिणी ।।३८।।

लज्जितो यन्मुखं वीक्ष्य सहसा शशलाञ्छनः ।
रमा शची च सावित्री शारदाऽरुन्धती रतिः ।।३९।।

आफ्नै आसनमा बसालेर सत्कार गर्नुभयो । श्रीगणेशले विश्वकर्माको पाउ धोएर गन्ध, अक्षता, पुष्प, धूप, दीप एवं नैवेद्य टक्र्याएपछि नम्र स्वरले प्रश्न गर्दै भन्नुभयो ।

**श्रीगणेशले भन्नुभयो** – हे विश्वकर्मा ! मेरो दर्शन गर्ने इच्छाले तपाइँ आउनुभएको छ ।।३०।। त्यसो हो भने तपाईंले मेरा निमित्त के उपहार ल्याउनुभएको छ ? त्यो उत्तम उपहार हेर्न पाऊँ ।

**विश्वकर्माले भने** – आफ्नै आनन्दले परिपूर्ण भई अरूका इच्छा र कामनालाई परिपूर्ण तुल्याउनु हुने, कुनै पनि सांसारिक पदार्थमा आसक्ति नलिनुहुने, सबै कार्य एक्लै गर्न समर्थ, सर्वशक्तिमान्, माटाको ढेला, ढुङ्गा एवं सुवर्णभारमा पनि समान दृष्टि राख्नुहुने, दानको अतिशयताले कल्पवृक्षलाई पनि लज्जित तुल्याउनुहुने, जस्तो काम पनि गर्न, नगर्न र विपरीत गर्न पनि समर्थ, स्वाधीन रूपमा विराजमान, सदा सन्तुष्ट स्वभावमा रहनुहुने र आफ्नै ज्योतिर्मय सत्तामा विराजमान हजुरजस्ता प्रभुलाई मजस्तो पराधीन, असमर्थ, अकिञ्चन, मानिसमा हुने गुण–दोषले जेलिएको पुरुषले के अर्पण गरेर तृप्त गराउन सक्छ ? तैपनि मेरो सामर्थ्यअनुसार केही वस्तु टक्र्याउँदै छु ।

**ब्रह्माजीले भन्नुभयो** – यसरी आफ्ना भावहरू निवेदन गरेपछि विश्वकर्माले भगवान् श्रीगणेशका सामु कमल, पाश, सृणि (अङ्कुश) र एक हजार सूर्यझैं तेजस्वी एवं सम्पूर्ण शत्रुहरूको संहार गर्नसक्ने तीखो धार भएको बञ्चरोसमेत टक्र्याए । भगवान् श्रीगणेशले पनि खुसी भएर ती सबै उपहार ग्रहण गर्नुभयो ।।३१–३६।। त्यसपछि विश्वकर्मालाई सम्बोधन गर्दै श्रीगणेशले भन्नुभयो – 'हे विश्वकर्मा ! तपाइँ त विश्वका कर्ता हुनुहुन्छ । मेरो खुसियालीका लागि यी सबै उपहार कहाँबाट ल्याउनुभयो ? मलाई बताउनुहोस्' ।।३७।।

**विश्वकर्माले भने**– हे श्रीगणेश प्रभु! अत्यन्त सुन्दर रूप भएकी संज्ञानामक मेरी एउटी कन्या छन् । मेरी सुन्दरी कन्या संज्ञाको मुखमण्डल देखेर चन्द्रमा पनि लजाएका थिए। भगवान् विष्णुकी धर्मपत्नी लक्ष्मी, इन्द्रकी धर्मपत्नी इन्द्राणी, सावित्री, सरस्वती, अरुन्धती र रतिको सौन्दर्य पनि मेरी छोरीको सौन्दर्यसामु निस्तेज भएको थियो ।।३८–३९।। हे

त्रिलोक्यां न समा कापि परा यस्या गुणेश्वर ।
सा मया रवये दत्ता त्रिवेदाय त्रिरूपिणे ।।४०।।

आगतेषु त्रिलोकेषु साङ्गोपाङ्गेषु सर्वशः ।
महोत्सवो महानासीद् दिनाष्टकमहर्निशम् ।।४१।।

यां दृष्ट्वा स्खलिता देवा लज्जयाऽधोमुखा गताः ।
सविता तामथादाय ययौ स्वस्थानमुत्तमम् ।।४२।।

तेजसा तस्य तप्ता मे कन्यका कृशतामगात् ।
सा ततो निर्ममे छायां संज्ञान्तु स्वप्रभावतः ।।४३।।

सर्वं तस्यै निवेद्यैव सद्यो मम गृहं गता ।
गते कियति काले सा छाया ज्ञाता तु भानुना ।।४४।।

नेयं संज्ञेति स प्रायाद् गृहं सद्यो ममार्यमा ।
ततो भीता पुनः संज्ञा मामुवाच न मां पितः ।।४५।।

निवेदय रवेर्हस्ते तेजोऽहं न क्षमेऽस्य च ।
ततः पित्रा धिक्कृता सा बहिरेव ययौ किल ।।४६।।

अश्विनीरूपमास्थाय गुप्तरूपा वनेऽवसत् ।
ततस्तु विश्वकर्मा तामनवेक्ष्य क्वचिद् गृहे ।।४७।।

प्रोवाचार्यमणं सोऽथ तेजस्ते सोढुमक्षमा ।
क्व गता न च जाने तामुपायन्ते ब्रवीमि च ।।४८।।

यदि ते तेजसो भागो न्यूनः किञ्चिद् भविष्यति ।
तदा सा प्रकटीभूयाद् विहरस्व ततस्तया ।।४९।।

रविरुवाच

यथा तव भवेच्चेतस्तथा कर्तुं त्वमर्हसि ।

क उवाच

विश्वकर्मा ततश्चैनं यन्त्रे स्थाप्योल्लिलेख ह ।।५०।।

श्रीगणेश ! स्वर्ग, मर्त्य र पातालमा मेरी छोरीभन्दा राम्री कुनै सुन्दरी छैन । ती छोरीलाई मैले एक दिन विधिपूर्वक तीन रूप भएका र तीन प्रकारका वेदहरूले सम्पन्न सूर्यनारायणलाई दिएँ । त्यस बेला तीनै लोकका साङ्गोपाङ्ग देवता, मुनि र अन्य प्राणीहरू मेरो घरमा आएका थिए। आठ दिनसम्म मेरो घरमा विवाहको उत्सव भयो।।४०-४१।। मेरी छोरीको सौन्दर्य देखेर मुग्ध भएका देवताहरूको वीर्य स्खलित भयो र लजाएर तिनीहरू आ-आफ्ना घरतर्फ लागे । सूर्य पनि मेरी छोरीलाई पत्नीको रूपमा बाया भागमा राखी आफ्नो उत्तम धामतर्फ गए । आफ्ना पति सूर्यको प्रचण्ड तेजबाट सन्तप्त भएकी मेरी छोरी संज्ञा दुब्लाउँदै गइन् । सूर्यको तेज सहन नसकेर संज्ञाले एक दिन आफ्नो प्रभावबाट आफूजस्तै राम्री छाया नाम गरेकी कन्या प्रकट गरिन् ।।४२-४३।। सूर्यनारायणको सेवा र सबै घरका काम छायालाई सिकाएर मेरी छोरी संज्ञा मेरो घर आइन् । धेरै समयपछि सूर्यनारायण छायालाई यी सन्ध्या होइनन् अपितु कुनै नक्कली नारी हुन् भन्ने विचार गरेर मेरो घरमा आए। सूर्यनारायण मेरो घरमा आउँदा संज्ञा अत्यन्त भयभीत भइन् र तिनले मलाई भनिन् - हे पिताजी ! मलाई सूर्यनारायणको हातमा अब नदिनुहोस्, म उहाँको तेज खप्न सक्दिनँ । त्यसपछि मैले छोरी भएर माइत बसेर आफ्ना पतिको तेज खप्न सक्दिनँ भन्नु यो उत्तम नारीको स्वभाव होइन भनी गाली गरें । त्यसपछि संज्ञा कसैलाई थाहा नदिईकन मेरो घरबाट बाहिर कतै गइन् ।।४४-४६।। ती वनमा घोडीको रूप लिएर लुकेर रहन थालिन् । त्यसपछि मैले चारैतिर खोजें कहीं देखिनँ । नदेखेपछि सूर्यलाई गएर भने - हे ज्वाइँ सूर्य ! तपाइँको तेज सहन नसकेर मेरी छोरी कहाँ गइन् केही पत्तो भएन। हे सूर्यनारायण ! संज्ञालाई पत्ता लगाउने केही उपाय मलाई थाहा छ र म त्यो उपाय तपाईँलाई बताउँछु । तपाइँको प्रचण्ड तेज कम भई तपाइँ मन्द हुनुभयो भने ती प्रकट हुनेछन् र तपाईँले तिनीसँग विहार गर्न पाउनु हुनेछ ।।४७-४९।।

**सूर्यले भने-** तपाइँले भनेको कुरा राम्रो छ । तपाइँले पनि मेरो तेज मन्द गराउन आफ्नो चित्तअनुसार साधना गर्नुहोस्।

**ब्रह्माजीले भन्नुभयो** - सूर्यनारायण फर्केर गएपछि विश्वकर्माले सूर्ययन्त्र तयार गरे। सूर्यको प्रतिमा लेखेर सूर्यको

तेजोह्रासं चकाराशु किञ्चित्सौम्योऽभवच्च सः ।
यत्र गुप्ताऽभवत्संज्ञा तत्र यातोऽर्यमा विभुः ।।५१।।

अश्वो भूत्वा तया रेमे सा नासत्यावसूत च ।
तामादायार्यमा लोकं निजं हर्षयुतोऽगमत् ।।५२।।

विश्वकर्मा उवाच

तेजःशेषेण तस्याथ प्रबलेन गुणेश्वर !
निर्मितान्यायुधान्याशु त्वदर्थे जगदीश्वर ।।५३।।

अतितीक्ष्णानि कालस्य सदा जयकराण्यपि ।
चत्वारि ते प्रदत्तानि दत्ते चक्रगदे हरेः ।।५४।।

त्रिशूलं शम्भवे दत्तं सर्वशत्रुनिवर्हणम् ।

गुणेश उवाच

सम्यक् कृतं विश्वकर्मन्नायुधानि शुभानि मे ।।५५।।
दत्तानि दैत्यनाशाय परोपकृतये सताम् ।

क उवाच

एवमुक्त्वायुधान्याशु दधार च दुधाव च ।।५६।।

तदा चकम्पे पृथिवी पर्वताश्च वनानि च ।
शुशुभे सोऽपि तैः शस्त्रैः कोटिसूर्यनिभैर्विभुः ।।५७।।

विश्वकर्मा नमस्कृत्य ययौ स्वस्थानमाज्ञया ।
उमात्मजोऽपि चिक्रीड मुनिबालैर्वृतः पुनः ।।५८।।

तत्राययौ वृको नाम महान् दुष्टतमोऽसुरः ।
भयङ्कराननो मत्तो ग्रसन्निव महाबली ।।५९।।

पुच्छाघातेन च भुवं कम्पयन् हलदन्तवान् ।
दृष्ट्वा भयङ्करं दैत्यं मुनिपुत्राः पलायिताः ।।६०।।

तेज कम गराउन मन्त्रानुष्ठान गरे । त्यस अनुष्ठानबाट सूर्यको तेज मन्द भयो । संज्ञा जुन वनमा घोडीको रूप लिएर लुकेकी थिइन् त्यसै वनमा सूर्यनारायण पुगे । सूर्यले पनि घोडाको रूप लिए । धेरै दिनसम्म घोडा र घोडीको आनन्दमय विहार भयो । त्यसपछि घोडीका रूपमा रहेकी संज्ञाले गर्भधारण गरिन्। समय आएपछि तिनले दुई बालक पैदा गरिन् । ती बालकहरूको नाम अश्विनीकुमार राखियो । त्यसपछि खुसी भएका सूर्यले आफ्नी पत्नी संज्ञालाई आफ्नो साथमा लिएर गए ।।५०-५२।।

**विश्वकर्माले भने** - हे श्रीगणेश ! सूर्यले घटाएर फ्याँकिदिएको तेजबाट तपाईँका लागि यी आयुध तयार गरिएका हुन्।।५३।। यी आयुधहरू अत्यन्त तीखा, प्रभावकारी र कालजयी छन् । निर्माण गरिएका आयुधमध्ये चारवटा मैले तपाईँलाई टक्र्याएँ। भगवान् नारायणलाई चक्र र गदा अर्पण गरें ।।५४।। सम्पूर्ण शत्रुहरूको संहार गर्न समर्थ त्रिशूलनामक अस्त्र भगवान् शङ्करलाई टक्र्याएँ ।

**श्रीगणेशले भन्नुभयो**- हे विश्वकर्मा! तपाईँले राम्रो काम गर्नुभयो। मेरा लागि यी आयुध मङ्गलमय हुनेछन्।।५५।। तपाईँले दैत्यहरूको नाश गर्न र सज्जनहरूको उपकार गर्न टक्र्याएका यी आयुधहरूबाट मैले दैत्यहरूको नाश र सज्जनहरूको रक्षा गर्नेछु ।

**ब्रह्माजीले भन्नुभयो** - विश्वकर्मालाई आफ्ना कुरा सुनाएर भगवान् श्रीगणेशले उनले दिएका अस्त्र धारण गरेपछि हातमा बञ्चरो लिएर दगुर्नुभयो ।।५६।। उहाँ बञ्चरो हातमा लिएर दगुर्नु हुँदा पृथिवी, पर्वत र वनहरू काँप्न थाले । करोडौं सूर्यका तेजले सुहाएका ती शस्त्रहरूबाट भगवान् श्रीगणेश पनि अत्यन्त शोभायमान हुनुभयो ।।५७।। त्यसपछि विश्वकर्मा श्रीगणेलाई नमस्कार गरी उहाँसँग आज्ञा लिएर आफ्नो धामतर्फ लागे । श्रीगणेश पनि आफ्ना बालसखाहरूका साथ फेरि क्रीडा गर्न लाग्नुभयो ।।५८।। त्यस बेला त्यहाँ अत्यन्त दुष्ट स्वभावको वृकासुरनामक दैत्य आइपुग्यो । त्यसको अनुहार डरलाग्दो थियो । त्यो राक्षसी वैभवले उन्मत्त र अत्यन्त बलवान् पनि थियो । हलोका आकारका दाँतहरूले युक्त भएको त्यो दैत्य सम्पूर्ण संसारलाई नै खाने किसिमले आफ्नो पुच्छर हल्लाएर तीनै लोकलाई कपाउँदै आयो । डरलाग्दो त्यस दैत्यलाई देखेर मुनिपुत्रहरू भाग्न थाले ।।५९-६०।।

स आयुधानि गृह्याशु तं वृकं समताडयत् ।
अङ्कुशाघातमात्रेण पतितो भुवि सोऽसुरः ।।६१।।

वमन् रक्तं निजं रूपमास्थितश्चूर्णयन् द्रुमान् ।
संहरञ्जीवसङ्घातान् दशयोजनविस्तृतः ।।६२।।

स ततोऽस्तमिते सूर्ये ययौ बालयुतो गृहम् ।
बालाः प्राहुरुमायै तेऽनेनाद्य निहतोऽसुरः ।।६३।।

वृको नामाङ्कुशाघाताद् दशयोजनमायतः ।
तानुवाचाद्रिजा रोषाद् व्रजन्तु निजमन्दिरम् ।।६४।।

ततस्तद्वाक्यमाकर्ण्य ते बालाः स्वालयान् ययुः ।।६५।।

भगवान् श्रीगणेशले आफ्ना शस्त्र-अस्त्र हातमा लिई त्यस दैत्यराज वृकासुरमाथि प्रहार गर्नुभयो । अङ्कुशमात्रको प्रहार गर्दा त्यो असुर भुइँमा ढल्यो ।।६१।। त्यसले आफ्नो विशाल शरीर धारण गरी मुखबाट रगत बान्ता गर्दै र रूखबिरुवालाई धूलोपीठो बनाउँदै प्राणत्याग गऱ्यो । चालीस कोश फैलिएको त्यसको शरीर भुइँमा खस्दा अनेकौं जीवहरू मरेका थिए । त्यसपछि भगवान् श्रीगणेश सूर्यास्त समयमा मुनिबालकहरूलाई साथ लिएर आफ्नो घर जानुभयो । त्यहाँ गएपछि मुनिपुत्रहरूले आमा पार्वतीलाई भने- हे आमा ! आज श्रीगणेशले वृकासुरनामक डरलाग्दो दैत्यलाई मारिदिनुभएको छ ।।६२-६३।। उहाँको अङ्कुशको प्रहारबाट मात्रै चालीस कोश फैलिएको त्यसको शरीर भुइँमा ढलेको थियो । त्यसपछि पार्वतीले ती मुनिबालकहरूलाई तिमीहरू आ-आफ्ना घरतर्फ लाग भन्नुभयो। पार्वतीका कुरा सुनेर ती बालकहरू पनि आ-आफ्ना घरतर्फ गए ।।६४-६५।।

ॐ

**इति श्रीगणेशपुराणे क्रीडाखण्डे वृकासुरवधो नाम पञ्चनवतितमोऽध्यायः**

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'श्रीगणेशद्वारा वृकासुरको वध' शीर्षकान्वित पन्चानब्बेऔं अध्याय पूर्ण भयो ।।९५।।

ॐ

## षण्णवतितमोध्यायः  { ९६ अध्याय }

क उवाच
ततः कदाचिद् गिरिजा प्रसन्नं प्राह शङ्करम् ।
पार्वत्युवाच
देवेश ! सप्तमं वर्षं प्रवृत्तं साम्प्रतं शिशोः ।।१।।
क्रियतां व्रतबन्धोऽस्य सुमुहूर्ते महोत्सवात् ।
शिव उवाच
सम्यगुक्तं त्वया भद्रे ! ज्ञात्वा चेतोगतं मम ।।२।।
सम्पादयिष्ये साध्वस्य व्रतबन्धं यथाविधि ।
क उवाच
इत्युक्त्वा गिरिजां देवः समाकार्य च गौतमम् ।।३।।
विचार्य सुदिने लग्नं सामग्रीः समपादयत् ।
मण्डपञ्च सुविस्तीर्णं सर्वानृषिगणान् मुनीन् ।।४।।
आकार्य परिपूज्यैतांस्तदाज्ञावशगो हरः ।
यथाविधि चकारास्य व्रतबन्धं मुदा तदा ।।५।।
उपायनानि सर्वे ते शिवयोर्बालकस्य च ।
अष्टाशीतिसहस्रेभ्यो नमस्कृत्य हरोऽपि च ।।६।।
सम्पूज्य विधिवत् प्रादान्नानोपायनसञ्चयान् ।
त्रिंशत्त्रिकोटिदेवेभ्यो यक्षेभ्योऽपि तथैव च ।
किन्नरेभ्यश्चारणेभ्यो वाद्यघोषे नदत्यपि ।।७।।
गायत्सु किन्नरेष्वाशु नर्तकीनां गणेषु च ।
नृत्यत्सु सर्वलोकेषु पश्यत्सु सुमहोत्सवम् ।।८।।
उपायनानि दानानि ददौ हर्षात् सदाशिवः ।
देवतास्थापनं कृत्वा भोजयामास चाखिलान् ।।९।।
प्रातःकाले वटुं स्नाप्य चौलकर्म समाप्य च ।
चतुर्भिर्ब्राह्मणैः सार्धं भोज्य संस्नाप्य वै पुनः ।।१०।।
वेदिकायामन्तरा तु धृत्वा पटमनुत्तमम् ।
मुहूर्तं साधयामास मुनिभिर्मन्त्रवादिभिः ।।११।।
एतस्मिन्नन्तरे दैत्यौ कृतान्तकालसंज्ञकौ ।
गजरूपधरौ मत्तौ मदोदस्राविणौ दृढौ ।।१२।।

**ब्रह्माजीले भन्नुभयो** - कुनै दिन पार्वतीले प्रसन्नमुद्रामा रहनु भएका भगवान् शङ्करसँग कुराकानी गर्दै भन्नुभयो ।

**पार्वतीले भन्नुभयो** - हे महादेव ! अहिले हाम्रा प्यारा पुत्र गणेशले सात वर्षमा टेकेका छन् ।।१।। राम्रो मुहूर्त हेरी ठूलो उत्सव गरेर यिनको व्रतबन्ध गर्ने प्रबन्ध मिलाउनुहोस्।

**शिवजीले भन्नुभयो**- हे कल्याणी ! तिमीले मेरो मनको कुरा बुझेर राम्रो विषयमा मसँग कुरा गर्‍यौ ।।२।। अब म विधिपूर्वक पुत्र श्रीगणेशको व्रतबन्ध संस्कार सम्पन्न गर्नेछु ।

**ब्रह्माजीले भन्नुभयो** - शिवजीले आफ्नी प्रिया पार्वतीसँग यसरी कुरा गरेपछि गौतम ऋषिलाई बोलाई राम्ररी विचार गरेर उत्तम दिनमा लग्न हेरी सामग्रीको व्यवस्था मिलाउनु भयो । त्यसपछि शिवजीले सबै ऋषिगणलाई बोलाएर तिनीहरूको सम्मान गरी ती ऋषिमुनिले बताएबमोजिम विधिपूर्वक विशाल मण्डप तयार गरी श्रीगणेशको व्रतबन्ध गर्नुभयो ।।३-५।। व्रतबन्ध सकिएपछि त्यस उपलक्ष्यमा अठासी हजार ऋषिमुनिहरूले पार्वती, शङ्कर र गणेशलाई उपहार टक्र्याए । शङ्करले पनि ती सबैलाई नमस्कार गरेर विधिपूर्वक पूजा गरी अनेक थरि उपहार टक्र्याउनुभयो । तेत्तीसकोटि देवता, यक्ष, किन्नर र चारणहरूलाई पनि उपहारहरू दिनुभयो । त्यहाँ वाद्यघोष भइरहेको थियो, किन्नर गाइरहेका थिए, अप्सराका गणहरू नाचिरहेका थिए र संसारका उत्तम प्राणीहरूले शिवजीको धाममा यो गणेशको उत्सव मनाए ।।६-८।। सदाशिवले आगन्तुक सबैलाई हर्षपूर्वक दान र उपहार टक्र्याउनुभयो । व्रतबन्ध कार्यको आरम्भमा शिवजीले देवताको प्राणप्रतिष्ठा गरेर सबैलाई खुवाउनु भयो। प्रातःकालमा गणेशलाई नुहाइदिएर चौलकर्म समाप्त गरी चार ब्राह्मणहरूसँगै श्रीगणेशलाई खुवाएपछि पुनः स्नान गर्न लगाएर उत्तम वस्त्र धारण गराई मण्डपमा राख्नुभयो र मन्त्र पढ्ने मुनिहरूद्वारा एक मुहूर्तसम्म यज्ञको कार्य गराउनुभयो।।९-११।। यसरी व्रतबन्धको महोत्सव चलिरहेको बेला हात्तीको रूप धारण गर्ने, मदले मातेका, गालाबाट मदको धारा चुहाइरहेका, अत्यन्त बलवान्, तीखा दाँत भएका, लामा सुँढ भएका, सुँढद्वारा

तीक्ष्णदन्तौ दीर्घशुण्डौ गगनस्पर्धिपुष्करौ ।
चीत्कारभीषितजनौ सिन्दूरारुणमस्तकौ ।।१३।।

कम्पते पादघातेन ययोराशु वसुन्धरा ।
दन्ताघातेन युध्यन्तौ रजसाच्छाद्य रोदसी ।।१४।।

सभाद्वारगतं शक्रकरिणं समुपागतौ ।
दन्तप्रहारैस्तद्गण्डं भिन्दन्तौ बलवत्तरम् ।।१५।।

स्रवद्रक्तः पपातोर्व्यां मूर्च्छितो गजराट् क्षणात् ।
ऐरावतः पपालाशु मुहूर्तात् प्राप्य चेतनाम् ।।१६।।

करिणौ पृष्ठलग्नौ तौ दन्ताघातैर्निजघ्नतुः ।
ततस्तौ मत्तमातङ्गौ सभामध्यं समीयतुः ।।१७।।

शुण्डाभ्यां मण्डपं तौ तु ताडयामासतुस्तदा ।
उत्तस्थुः सर्वलोकास्ते श्रुत्वा कोलाहलं तयोः ।।१८।।

यतो यतो गच्छतः स्म ततो देवाः पलायिताः ।
मुनयश्च तयोर्भीत्या दशदिक्षु पलायिताः ।।१९।।

शिवं तत्र समाचख्युर्विघ्नमेतदुपस्थितम् ।

गणा ऊचुः

सेन्द्रा सभा मुनियुता विध्वस्ता गजभीतितः ।।२०।।

ततः पलायिता गौरी सखीभिर्गृहमागता ।
बालस्ततो निरीक्ष्यैतौ दन्तिनौ बलवत्तरौ ।।२१।।

जगर्ज घनवच्छीघ्रं तयोः शुण्डे दधार ह ।
उभाभ्यामपि हस्ताभ्यां चीत्कारं तौ प्रचक्रतुः ।।२२।।

भ्रामयित्वाऽस्फालयत् स एकस्मिन्नपरं गजम् ।
उभौ तौ शतधा जातौ पतितौ धरणीतले ।।२३।।

धरा चकम्पे वृक्षाश्च निपेतुश्चूर्णिता भुवि ।
ततः खण्डानि तान्याशु दूरतश्चिक्षिपुर्गणाः ।।२४।।

आकाश छुनसक्ने, चीत्कारबाट सबै मानिसलाई भयभीत तुल्याउने, सिन्दूरझैं राता टाउका भएका कृतान्त र कालनामक दैत्यहरू त्यहाँ आए ।।१२-१३।। तिनीहरूले खुट्टाले टेक्दा पृथिवी काँपिरहेकी थिइन् । ती दुवै दैत्य आपसमा दाँतले प्रहार गरेर लडिरहेका थिए र आफ्ना खुट्टाबाट उडाएको धूलोले पृथिवी एवं आकाशलाई ढाकेका थिए ।।१४।। ती दुवै दैत्य देवसभाको ढोकामा रहेको इन्द्रको वाहन ऐरावत हात्तीसँग लड्न भनी नजिकै पुगे । दाँतले प्रहार गरेर ऐरावतको गण्डस्थलमा भेदन गरे । ऐरावत पनि मूर्च्छित भएर रगत बगाउँदै भुइँमा पछारियो । एक छिनपछि होशमा आएको गजराज ऐरावत त्यहाँबाट भाग्यो ।।१५-१६।। ऐरावत भाग्दा ती दुवै दैत्यहरू त्यसका पछि लागे र त्यसको पिठ्यूँमा दाँतले प्रहार गरे । यसरी ऐरावतलाई भगाएपछि ती दुवै राक्षस सभाको माझमा आए । मण्डपमा आएर तिनले आफ्ना सूँढद्वारा मण्डपका सामग्रीलाई लथालिङ्ग पार्न थाले । तिनीहरूले आएर उपद्रव मच्चाउँदै कोलाहल गरेको देखेर मण्डपमा बसिरहेका सबै प्राणीहरू उठे । ती दुई राक्षस जहाँजहाँ जान्थे त्यहाँत्यहाँबाट देवताहरू भाग्न थाले । मुनिहरू पनि ती राक्षससँग डराएर दश दिशातर्फ लागे ।।१७-१९।। त्यसपछि शिवगणले भगवान् शिवजीसमक्ष अचानक आइलागेका विघ्नको विषयमा निवेदन गरे ।

**शिवगणले भने** - 'हे शिवजी ! ठूलो विघ्न आइलाग्यो। इन्द्रसहित शोभायमान देवसभामा मुनिहरू पनि विराजमान थिए। अहिले देवता र मुनिहरू हात्तीहरूसँग डराएर यताउति भागे र देवसभा भङ्ग भयो'।।२०।। त्यसै बेला पार्वती पनि आफ्ना सँगिनीहरूका साथ दगुर्दै घरमा जानुभयो। बालक गणेशले ठूला-ठूला दाँत भएका बलवान् दुई दैत्यलाई देखेर वर्षाकालको बादलझैं गर्जन गर्नुभयो र ती दुवैका सूँढमा आफ्ना दुई हातले समाउनुभयो । दैत्यहरू घोर चीत्कार गर्न थाले । बालक श्रीगणेशले दुवैलाई उचालेर एउटामाथि अर्को पर्ने गरी भुइँमा पछार्नुभयो । श्रीगणेशद्वारा पछारिएका ती दुवै दैत्य पृथिवीमा निश्चेष्ट भएर रहे ।।२१-२३।। त्यसबाट पृथिवीमा कम्पन भयो। कयौं रूखहरू टुक्राटुक्रा भएर भुइँमा फैलिए । मरेका ती दुवै दैत्यका शरीरका टुक्राहरूलाई शिवगणले टाढा लगेर फ्याँकिदिए ।।२४।। दैत्यहरूको वध भएपछि आत्तिदै

वटुं जग्राह जननी शीघ्रमागत्य स्वे कटौ ।
सर्वे पलायिता देवा मुनयोऽनेन दानवौ ।।२५।।

बालेन निहतौ शीघ्रमित्युवाच शिवां सखी ।
ततस्ते मीलिता देवा इन्द्राद्या मुनयोऽपि च ।।२६।।

ऊचुर्गुणेशं ते सर्वे स्वामिन् ! सर्वगुणाकर !
सर्वप्राणहरौ दैत्यौ कापट्याद् गजरूपिणौ ।।२७।।

निहतौ लीलया देव ! मायिनौ बलवत्तरौ ।
इत्युक्त्वा शक्रमुनयो देवाश्च विविशुः सभाम् ।।२८।।

उपविष्टेषु सर्वेषु ननृतुश्चाप्सरोगणाः ।
ततो वाद्यान्यवाद्यन्त ब्रह्मा रुद्रसमीपगः ।।२९।।

दत्त्वा परस्परं प्रैषं बबन्ध मेखलां शिशोः ।
यज्ञोपवीतमजिनं होमञ्च समिधामपि ।।३०।।

कारयामास विधिवत् सावित्रीवाचनं ततः ।
ततो माता ददौ भिक्षामंशुके भूषणानि च ।।३१।।

उत्तरीयञ्च रत्नानि मुक्ताफलयुतानि च ।
लड्डूकान् भक्ष्यखाद्यानि त्रिशूलं शशिनं शिवः ।।३२।।

ददौ नाम चकारास्य भालचन्द्र इति स्फुटम् ।
शूलपाणिरिति परं ततश्चक्रं हरिर्ददौ ।।३३।।

शोचिष्केशेति नामास्य चक्रे सम्यङ् महात्मनः ।
ततः पुरन्दरः पूज्य कण्ठे चिन्तामणिं ददौ ।।३४।।

नाम चिन्तामणिरिति चक्रे सर्वार्थदं शुभम् ।
ददौ तदैव कमलमभ्यर्च्य कमलासनः ।।३५।।

विधातेति च नामास्य स्थापयामास संसदि ।
ततः सर्वे सुरगणाः समभ्यर्च्य गुणेश्वरम् ।।३६।।

नानाविधानि नामानि चक्रुः स्वस्वेच्छया सुराः ।
अदितिः कश्यपश्चाथ तं पुपूजतुरादरात् ।।३७।।

आएकी आमा पार्वतीले आफ्ना बालक श्रीगणेशलाई काखमा राख्नुभयो । पार्वतीलाई उहाँकी सँगिनीले बताइन् - 'उत्सव भइरहेको बेला दानवहरूबाट भयभीत भएर देवता र मुनिहरू भागे तर हजुरका बालकले ती घोर दानवलाई अति छिटो मारिदिए ।' दैत्यहरूको वध भएपछि इन्द्र आदि देवता र मुनिहरू फेरि भेला भए ।।२५-२६।। ती सबैले भगवान् श्रीगणेशलाई भने - 'सबै गुणका खजाना हे स्वामी श्रीगणेश ! सबैको प्राण हर्ने र कपट गरेर हात्तीको रूप धारण गर्ने भयङ्कर मायावी र पराक्रमी दैत्यहरूलाई हजुरले मारिदिनुभएको छ । हजुरको जयजयकार गर्दछौं ।' यसरी प्रार्थना गर्दै देवता, मुनि र देवराज इन्द्रले पनि सभामा प्रवेश गरे । तिनीहरूले प्रवेश गरी बसेपछि प्रसन्न मुद्रामा रहेका अप्सराहरू नाच्न थाले र बाजाहरू बज्न थाले । शिवजी र उहाँको समीपमा जानुभएका ब्रह्माजीले परस्पर सल्लाह गरेपछि बालक श्रीगणेशको शरीरमा मेखला बाँध्नुभयो । यज्ञोपवीत र मृगको छाला टक्र्याएर होम र समिधाको व्यवस्था पनि मिलाउनुभयो ।।२७-३०।। त्यसपछि ब्रह्माजीले विधिपूर्वक श्रीगणेशलाई गायत्री मन्त्र सुनाएपछि सर्वप्रथम माता पार्वतीले श्रीगणेशको भिक्षापात्रमा कपडा, गहना, दोसल्ला, रत्न, मोतीको हार, लड्डू र भोज्य पदार्थ राखिदिनुभयो। शिवजीले चन्द्रमा र त्रिशूललाई भिक्षाको रूपमा प्रदान गर्दै 'अबदेखि तिम्रो नाम भालचन्द्र हुनेछ भनेर नामकरण पनि गर्नुभयो । पुनश्च मैले त्रिशूल पनि दिएकाले तिम्रो नाम शूलपाणि पनि हुनेछ भन्नुभयो।' त्यसपछि भगवान् नारायणले श्रीगणेशको भिक्षापात्रमा सुदर्शन चक्र राखिदिनुभयो ।।३१-३३।। उत्तम आत्मा भएका श्रीहरिले बालक श्रीगणेशको शोचिष्केश भनी नामकरण गर्नुभयो। त्यसपछि इन्द्रले श्रीगणेशको पूजा गरी उहाँलाई चिन्तामणिको माला पहिऱ्याए। चिन्तामणिलाई भिक्षाको रूपमा प्रदान गरेका कारण सबै भक्तले चिताएको कामना पूर्ण गराउने भन्ने अर्थमा श्रीगणेशको नाम चिन्तामणि पनि राखियो । त्यसपछि ब्रह्माजीले श्रीगणेशको पूजा गरी कमल टक्र्याउनुभयो र त्यस देवसभाको सान्निध्यमा उहाँले श्रीगणेशको विधाता भनी नामकरण पनि गर्नुभयो। यसरी ठूला-ठूला देवताहरूले भिक्षामा विशिष्ट वस्तु टक्र्याउने काम सम्पन्न गरेपछि अरू सबै देवताले गुणहरूका स्वामी श्रीगणेशको पूजा गरेर आ-आफ्नो इच्छाअनुसार अनेक थरि नामकरण गरे । त्यसपछि अदिति र कश्यप आएर आदरपूर्वक श्रीगणेशको पूजा गरे।।३४-३७।। भगवान् श्रीगणेशले पनि

दर्शयामास देवोऽपि पूर्वरूपं तयोश्शुभम् ।
भालचन्द्रं दशभुजं मुकुटेन विराजितम् ।।३८।।

दिव्याम्बरं दिव्यगन्धं दिव्याभरणभूषितम् ।
सिंहारूढं विराजन्तमुरगोदरबन्धनम् ।।३९।।

दृष्ट्वेत्थमदितिर्हृष्टाऽऽलिलिङ्ग स्नेहनिर्भरा ।
रोमाञ्चितशरीरा सा प्रेमगद्गदनिःस्वना ।।४०।।

विस्मयं परमं प्राप्ता स्त्रवदश्रुजलाविला ।
परमानन्दमग्नाऽभूत् स्नेहस्नुतपयोधरा ।।४१।।

तथैव कश्यपो देहभावं तत्याज तत्क्षणात् ।
ऊचतुस्तौ सुतस्नेहाद् वत्सावां ते वियोगतः ।।४२।।

कृशतां गमितौ तेऽद्य दर्शनात् पुष्टतां गतौ ।
नावां त्यज सुतेदानीं जनौ त्वच्चरणे रतौ ।।४३।।

गजानन उवाच

प्रतिश्रुतं मया मातर्दास्ये दर्शनमेकदा ।
तदिदानीं मया दत्तं न शोकं कर्तुमर्हसि ।।४४।।
सर्वान्तर्यामिणो मे वै वियोगो न कदाचन ।

क उवाच

एवं तु वदतोरेव पार्वती समुपागता ।।४५।।

उवाच परमप्रीता दृष्ट्वा स्नेहं तयोः शिशौ ।
अदिते ! देहि मे पुत्रं गृहीतं चिरकालतः ।।४६।।

नायं तव सुतः सुभ्रु ! सम्यक् पश्य शुचिस्मिते !
माऽपश्यत् पुनरेवैनं स्वस्यैव तनयं विभुम् ।।४७।।

अदितिरुवाच

त्वमेव गौरि ! पश्याशु तनयं मे पुरःस्थितम् ।
माऽपश्यत् पुनरेवैनं गुणेशं तनयं स्वकम् ।।४८।।

अदितिस्तां ममेत्याह पार्वती तां ममेति च ।
एवं विवदमाने तु प्राहुर्देवाः सुविस्मिताः ।।४९।।

अदिति र कश्यपका छोराका रूपमा अवतार लिएको पूर्व प्रसङ्गलाई याद गराउन ती दुबै दम्पतीका सामु आफ्नो अत्यन्त मनोहर बालरूप देखाउनुभयो । बालरूपी श्रीगणेशका निधारमा चन्द्रमा सुहाएका थिए, शरीरमा दश भुजाहरू सुसज्जित थिए र मस्तकमा मुकुट चम्किरहेको थियो। दिव्य वस्त्र, गन्ध र अलङ्कारद्वारा उहाँ अलङ्कृत हुनुहुन्थ्यो। त्यतिमात्र नभई उहाँ सिंहमा सवार हुनुहुन्थ्यो र उहाँको पेटमा शेषनाग कन्धनी बनेर बेरिएका थिए । आफूले धेरै पटक अनुभव गरेको त्यस सुन्दर रूपलाई देखेर प्रेमले विह्वल भएकी अदितिले श्रीगणेशलाई आलिङ्गन गरिन् र रोमाञ्चित पनि भइन् । तिनले वात्सल्यभावले पग्लिएर गद्गद स्वरमा मीठो ध्वनि निकालिरहेकी थिइन् ।।३८-४०।। तिनका आँखाबाट आँसुका धारा बगिरहेका थिए । नचिताएको वस्तु पाउँदा अत्यन्त द्रवित भएकी ती आनन्दमा डुबेकी थिइन्। तिनका स्तनहरूबाट दूधको धारा बगिरहेको थियो । त्यसपछि कश्यप ऋषि पनि चिन्तक तपस्वीको भाव छोडेर पिताको भावमा आए । दुबै दम्पतीले पुत्रस्नेह देखाउँदै भने - 'हे प्यारा पुत्र ! तिम्रो वियोग भएपछि हामी त अत्यन्त दुब्लाएका छौं । अहिले यो नचिताएको दर्शन पाउँदा हामी साह्रै खुसी भएका छौं। हे बाबु ! तिमीले हामीलाई नछोड । हामी दीन र शरणागत छौं ।।४१-४३।।

**गजाननले भन्नुभयो-** 'हे आमा अदिति ! मैले तपाईंलाई एक दिन दर्शन दिनेछु भनेर प्रतिज्ञा गरेको थिएँ। अहिले वचन पूरा गरें । अब तपाईं शोक नगर्नुहोस्। म सबैको घट-घटमा निवास गर्ने अन्तर्यामी पुरुष हुँ, तपाईंहरूसँग मेरो कहिल्यै पनि वियोग हुँदैन ।'

**ब्रह्माजीले भन्नुभयो-** यसरी अदिति र कश्यपले कुरा गरिरहेको समयमा पार्वती आइपुग्नुभयो।।४४-४५।। ती दुबै दम्पतीको आफ्ना पुत्रप्रति गहिरो स्नेह भएको जानेर खुसी भएकी पार्वतीले भन्नुभयो- 'हे अदिति ! अब मेरो छोरा मलाई दिनुहोस्, तपाईंहरूले धेरै बेरसम्म कुराकानी गर्नुभयो ! यो तपाईंको छोरा होइन, राम्ररी हेर्नुहोस् ।' पार्वतीले त्यसो भने तापनि अदितिले श्रीगणेशलाई आफ्नै पुत्रका रूपमा दर्शन गरिरहेकी थिइन् ।।४६-४७।।

**अदितिले भनिन्** - 'हे गौरी ! तपाईं नै हेर्नुहोस् न यो तपाईंको छोरा हो कि मेरो छोरा ?' तर पार्वतीले भने बालकलाई मेरै पुत्र हो भन्ने दृष्टिकोण लिएर हेरिरहनु भएको थियो । अदितिले पार्वतीसँग र पार्वतीले अदितिसँग यो मेरो छोरा हो भनिरहेका थिए। यसरी दुई विशिष्ट नारीहरूको विवाद चलेको देखेर देवताहरू

अनादिनिधनो देवः सृष्टिस्थित्यन्तकारकः ।
अनन्तरूपोऽनन्तश्रीरनेकशक्तिसंयुतः ।।५०।।

कस्या अयं भवेत् पुत्र उभे भ्रान्तेऽस्य मायया ।

ते ऊचतुः

यस्या अयं भवेत् पुत्रस्तस्या हस्ते प्रदीयताम् ।।५१।।

क उवाच

ततो देवा निरीक्ष्यैनं नानारूपिणमीश्वरम् ।
कश्चिदाह विधाताऽयं कश्चिद्विष्णुं चतुर्भुजम् ।।५२।।

कश्चित्त्रिलोचनं प्राह वरुणं विस्मिताः सुराः ।
ऊचुस्ते निश्चयोऽस्माभिर्विधातुं नैव शक्यते ।।५३।।

भवतीभ्यां विवेकेन ग्राह्योऽयं परमः पुमान् ।
ततो गौर्यगृह्णादाशु तं विभुं तनयं स्वकम् ।।५४।।

स्तनपानं ददौ स्नेहाददितिर्नीरसाऽभवत् ।
मम चेद् बालकोऽयं स्यात् कथं यायात् परां प्रति ।।५५।।

अहं भ्रान्त्याऽभवं सक्ता परस्य तनये वृथा ।
मुनयः कश्यपश्चैनं पुपूजुस्ते गुणेश्वरम् ।।५६।।

नमस्कृत्याऽभ्यनुज्ञाप्य ययुः स्वं स्वं निवेशनम् ।
भवानी च गृहं याता पुत्रमादाय हर्षिता ।।५७।।

ततः समागताः सर्वे प्रागमन्निलयान् स्वकान् ।।५८।।

चकित भए ।।४८-४९।। अनादि, अनन्त, अमर, सृष्टि, स्थिति एवं संहारका कर्ता, अनन्तरूप, अनन्तशोभा-सम्पन्न र अनन्तशक्तिसम्पन्न भगवान् श्रीगणेश कसका छोरा हुनुहुन्छ र ? तर ती दुवै माताहरू श्रीगणेशको मायाका कारण आपसमा विवाद गरिरहनु भएको छ भन्ने कुरा देवताहरू सोचिरहेका थिए।

**देवताहरूले भने** - उहाँ जुन आमाका छोरा हुनुहुन्छ ती आमाको हातमा श्रीगणेशलाई अविलम्ब सुम्पनुपर्छ । यस विषयमा विवाद गर्नु राम्रो हुँदैन ।।५०-५१।।

**ब्रह्माजीले भन्नुभयो** - यसरी परस्पर संवाद गरिरहेका देवताहरूले भगवान् श्रीगणेशलाई अनन्तरूपमा देख्न थाले। कुनै देवताले यी त ब्रह्माजी हुन् भनिरहेका थिए भने कसैले होइन होइन यी त विष्णु हुन् भने । कुनै देवताले यी त शङ्करका रूप हुन् भने । चकित भएका अनेक देवताहरूले श्रीगणेशलाई वरुणको रूपमा पनि देखे । अन्तमा ती देवताहरूले 'हामी यो बालक कुन आमाका छोरा हुन् र को हुन् भनी ठम्याउन सक्तैनौं भन्ने निष्कर्ष निकालेपछि भने - 'तपाईंहरू दुईवटी आमामध्ये जसको छोरा हो उहाँले विवेकको प्रयोग गरेर आफ्नो बालक ग्रहण गर्नुहोस् ।' त्यसपछि पार्वतीले दगुर्दै गई आफ्ना पुत्र श्रीगणेशलाई काखमा राखेर प्रेमपूर्वक दूध चुसाउन थाल्नुभयो। यो दृश्य देखेपछि अदिति मलिन र नीरस पनि भइन् । तिनले मनमनै भनिन्- 'यदि यो बालक मेरा छोरा हुन्थे भने किन अरूकी आमाको काखमा जान्थे?।।५२-५५।। मलाई भ्रान्ति र अज्ञान भएछ, अरूको छोरामा व्यर्थ माया गरें ।' त्यसपछि मुनिहरूका साथै कश्यप ऋषिले गुणेश्वर श्रीगणेशको पूजा गरे । उहाँलाई नमस्कार गरेपछि आज्ञा लिएर ती सबै आ-आफ्नो आश्रमतर्फ लागे । पार्वती पनि पुत्र प्राप्त गरी हर्षित हुँदै घरतर्फ लाग्नुभयो । त्यसपछि त्यहाँ उत्सव मनाउन आएका सबै आ-आफ्नो घरतर्फ लागे ।।५६-५८।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे गौर्यदितिविवादो नाम षण्णवतितमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'अदिति र पार्वतीको विवाद' शीर्षकान्वित छयानब्बेऔं अध्याय पूर्ण भयो ।।९६।।

ॐ

# सप्तनवतितमोऽध्यायः { ९७ अध्याय }

मुनिरुवाच

त्वया विनायको देवो मयूरेश्वरसंज्ञितः ।
ततो गुणेशनाम्ना मे महिमाऽयं निरूपितः ।।१।।

स कथं प्राप तन्नाम किञ्च तेन कृतं महत् ।
कर्म तन्मे समाचक्ष्व साम्प्रतं विश्वसृग् विभो ।।२।।

क उवाच

यथा तेन कृतं कर्म मयूरेश्वरनाम च ।
प्रापद् विनायको देवो निरूपिष्येऽखिलं तव ।।३।।

पातालभवने शेषः सभामध्यगतोऽभवत् ।
वासुकिप्रमुखैः सर्वैः समन्तात् परिवारितः ।।४।।

ततः कद्रूः समायाता तेजोरूपा सुरूपिणी ।
मुक्तामणियुतं चारु बिभ्रती कञ्चुकं शुभम् ।।५।।

विम्बोष्ठी चन्द्रवदना दिव्यभूषाम्बरावृता ।
तां दृष्ट्वा जननीं शेषो वासुकिप्रमुखाश्च ये ।।६।।

नेमुर्मातर्बहुदिनैरभवद् दर्शनं तव ।
काङ्क्षन्ते दर्शनं सर्वे त्वं तु निष्ठुरतां गता ।।७।।

इत्यूचुस्तां करे धृत्वाऽस्थापयन् पैत्र्य आसने ।
पुपूजुः परया भक्त्या ततः शेषोऽब्रवीत् तु ताम् ।।८।।

शेष उवाच

त्वं मातः ! कश्यपस्यापि पत्नी चारुतरा सती ।
सर्वविद्यानिधानस्य सृष्टिस्थित्यन्तकारिणः ।।९।।

ब्रह्मादयो देवगणास्तत्त्वं यस्य न वै विदुः ।
त्वञ्चापि सहसा शापानुग्रहे च क्षमा ह्यसि ।।१०।।

**व्यासले भन्नुभयो** - हे विधाता ! पहिले तपाईंले श्रीगणेशलाई मयूरेश्वर भनेर चिनाउनुभयो । त्यसपछि गुणेशको नामबाट मलाई श्रीगणेशको महिमा सुनाउनुभयो । श्रीगणेशले गुणेश भन्ने नाम कसरी पाउनुभयो ? श्रीगणेशले के काम गर्नुभएको थियो र उहाँको नाम गुणेश रहन गयो ? हे विश्वका स्रष्टा अन्तर्यामी ब्रह्माजी! गुणेश्वरका रूपमा रहनुभएका भगवान् श्रीगणेशका लीला, कर्म र चरित्रका विषयमा आज्ञा गर्नुहोस् ।।१-२।।

**ब्रह्माजीले भन्नुभयो-** हे व्यास! श्रीगणेशले जुन काम गरेर मयूरेश्वर नाम पाउनुभयो, त्यस विषयमा म तपाईंलाई राम्ररी बताउनेछु । एक दिनको कुरा हो, शेषनाग पातालको राजभवनमा स्थित सभामा गई बसेका थिए । तिनका वरिपरि वासुकि आदि प्रमुख नागहरू थिए ।।३-४।। त्यसै बेला अत्यन्त सुन्दरी र तेजस्विनी नागमाता कद्रू त्यहाँ आइपुगिन् । तिनले मोती र मणिद्वारा आकर्षक देखिने चोलो लगाएकी थिइन् ।।५।। ती आफैमा अत्यन्त सुन्दरी थिइन् र तिनका ओंठहरू गोलकाँक्रीजस्ता राता थिए । तिनको अनुहार चन्द्रमाको मण्डलजस्तै आकर्षक थियो । ती दिव्य वेषभूषाले सजिएकी थिइन् । शेषनाग र वासुकि आदि प्रमुख नागहरूले नागमाता कद्रूलाई देखेर प्रणाम गर्दै भने - 'हे नागमाता ! धेरै दिनपछि आज हजुरको दर्शन पायौं। हामी सधैं हजुरको दर्शन गर्न चाहन्छौं। हजुर भने किन हो कुन्नि निष्ठुर हुनुभएको छ ।' यसरी सबै नागहरूले कद्रूसँग आफ्नो भाव बताए र उहाँलाई उत्तम आसनमा राखे। त्यसपछि सबै नागहरूले मिलेर परम भक्तिका साथ नागमाता कद्रूको पूजा गरे । त्यस बेला शेषनागले निवेदन गरे।।६-८।।

**शेषनागले भने** - 'हे माता ! तपाईं नागमाता हुनुहुन्छ। तपाईं सबै विद्याकी खानी, सृष्टि, स्थिति एवं संहारकर्मका नायक कश्यप ऋषिकी पतिव्रता तथा सुन्दरी पत्नी पनि हुनुहुन्छ। ब्रह्मा आदि देवताहरूले पनि कश्यप ऋषिको महत्त्व र तत्त्व बुझ्दैनन्। आमा ! तपाईं पनि त कश्यप ऋषिकी पतिव्रता पत्नी भएका कारण सराप र वरदान दिन समर्थ हुनुहुन्छ(१०) तपाईंका छोरा हामी

तव पुत्रा वयं मातस्त्रैलोक्यग्राससाहसाः ।
सा कथं त्वमिहायाता किमुद्दिश्य प्रयोजनम् ।।११।।

नागहरू तपाईंको कृपाबाट तीनै लोकलाई एकै पटक निल्ने साहसले युक्त छौं । आमा! आज के कति कारणले यहाँ आउनुभयो? हामीलाई त्यो प्रयोजन बताउनुहोस् ?' ।।९-११।।

कद्रूरुवाच

विना प्रयोजनं पुत्र ! कोऽपि नायाति किञ्चन ।
तच्च ते कथयिष्येऽहं शृणु सादरमात्मज ।।१२।।
विनता मे सपत्नी या जननी पुत्र ! पक्षिणाम् ।
तस्या दर्शनकाङ्क्षा मे कदाचित् सम्बभूव ह ।।१३।।
अनादृता तयाऽहन्तु तद्गृहं सहसा गता ।
नासनं न च सत्कारं स्वागतं न च साऽकरोत् ।।१४।।
पूर्ववैरं स्मरन्ती सा जटायुं पुत्रमादिशत् ।
तेन चाकर्षिता वेणी विवस्त्राऽहं कृता क्षणात् ।
मामुवाच महादुष्टे ! नावलोक्यं मुखं तव ।।१५।।
मम मातुस्तु दासी त्वं पूर्वमासीः कृतं त्वया ।
तदा न करुणालेशो धृतो मनसि कर्हिचित् ।।१६।।
इतो गच्छ न चेत् प्राणान् ग्रहीष्यामि महाखले !
श्रुत्वा तदीयवाक्यानि दुःखिताऽहं फणीश्वर ।।१७।।
आक्रन्दं परमं प्राप्ता प्राणत्यागे तु निश्चिता ।
आगताऽहं ततो युष्मद्दर्शनार्थं सुदुःखिताः ।।१८।।
यदि वो मयि भक्तिः स्यात् साहाय्यं क्रियतां मम ।
सत्पुत्रा यदि मान्याऽहं तदा तस्या विनाशनम् ।।१९।।
कर्तव्यञ्च सपत्न्या मे ततो हृदि सुखं भवेत् ।

**कद्रूले भनिन्** - हे बाबु ! विना प्रयोजन कोही कहीं पनि जाँदैन । हे छोरा ! म आदरपूर्वक यहाँ आउनाको कारण बताउँछु, तिमीले सुन । हे छोरा ! पक्षीहरूकी माता विनता मेरी सौता हुन् । एक दिन मलाई आफ्नी सौतासित भेटघाट गर्ने इच्छा लाग्यो र म विनताको घर पुगें ।।१२-१३।। विनताले मलाई अचानक आएकी देखेर अपमान गरिन् । न बस्न आसन दिइन्, न मीठो बोलेर सत्कार गरिन् र न त स्वागत नै गरिन् । सौता-सौताको पूर्वद्वेषलाई याद गरेकी ती विनताले आफ्नो छोरा जटायुलाई भनिन् - 'यो तेरी सौतेनी आमा हो, यसलाई नङ्ग्याउने काम गर । आफ्नी आमाद्वारा आज्ञा पाएर जटायुले मेरो चुल्ठो समात्यो, कपडा तान्यो र मलाई विवस्त्र बनायो । त्यसपछि त्यसले मलाई भन्यो- हे दुष्ट सौतेनी आमा! म तिम्रो मुख हेर्न चाहन्नँ।।१४-१५।। तिमी पहिले मेरी आमाकी दासी थियौ । पछि मेरा बुबालाई मोहनी लगाई मेरी आमालाई दासी बनायौ । त्यस कारण तिमीप्रति मेरो एक थोपा पनि माया छैन ।।१६।। हे दुष्ट कद्रू ! तिमी यहाँबाट छिटो फर्क, नत्र म तिम्रा प्राण लिइदिनेछु ।' हे शेषनाग ! सौताको छोराले भनेका यस्ता तीता कुरा सुनेर म साह्रै दुःखी भएँ ।।१७।। त्यस बेला म क्रन्दन गर्न थालें, मलाई बाँच्न पनि मन लागेन । अब प्राण त्याग गर्छु भन्ने अठोट गरें । त्यसै बेला तिमीहरूको संझना आयो अनि भेटघाट गरूँ भनेर म दुःखिनी यहाँ आएकी छु । तिमीहरूको मप्रति आमा भनेर श्रद्धा एवं भक्ति छ भने मलाई दुःख परेको जानी सहयोग गर । हे मेरा असल पुत्र हो ! यदि मलाई आमा भनेर मान्छौ भने मेरी सौताको नाश गर।।१८-१९।। अनिमात्र मेरो मनमा केही शान्ति र सुख हुनेछ ।

क उवाच

एवमाकर्ण्य तद्वाक्यं शेषो रोषसमन्वितः ।।२०।।
जज्वाल सहसा वह्निर्घृतेनेव प्रदीपितः ।
मम मातुः कृता पीडा विनतातनयैर्यदि ।।२१।।
तदाऽहं तत्प्रतीकारं करिष्यामि न संशयः ।
एवमुक्त्वा स शेषोऽथ वासुकिप्रमुखैर्युतः ।।२२।।
तत्र गन्तुं मनश्चक्रे यत्र सा विनताऽभवत् ।

**ब्रह्माजीले भन्नुभयो** - आफ्नी आमाका यस्ता कुरा सुनेर शेषनाग अत्यन्त क्रुद्ध भए । उनको क्रोध घिउ थप्दा दन्किएको आगोजस्तो भयो । यदि विनताका छोराले मेरी आमालाई सताएका छन् भने मैले प्रतिकार गर्नैपर्छ । यसमा कुनै सन्देह छैन । यसो भनेर शेषनागले वासुकि आदि नागहरूलाई साथ लिई विनताको आश्रममा जाने विचार गरे ।

वासुकिरुवाच

अहमेव गमिष्यामि कोटिनागैर्युतोऽनघ ।।२३।।
विनतामानयिष्यामि तिष्ठ त्वं भुजगाधिप !

क उवाच

एवमुक्त्वा ययौ शीघ्रं वासुकिर्विनताश्रमम् ।।२४।।

असङ्ख्यानुरगान् दृष्ट्वा बिभाय विनता तदा ।
तदैव वेष्टिता सर्पैः क्रूरैर्दुष्टस्वभावकैः ।।२५।।

निन्युस्ते शेषनिकटं सा च तानब्रवीत् तदा ।

विनतोवाच

किमर्थं बन्धनं कृत्वा मम नेतुं समुद्यताः ।।२६।।

अपराधविहीनायाः पापिष्ठा गदताशु मे ।
मम पुत्रस्यानुभवो ज्ञातोऽस्ति सर्वपन्नगैः ।।२७।।

अतो मुञ्चन्तु मां नो चेत् स संहारं करिष्यति ।

क उवाच

धाष्ट्र्यं तेषां समीक्ष्यैव सस्मार गरुडन्तु सा ।।२८।।

सोऽपि ज्ञात्वा स्मृतिं तस्या आगतः पक्षिभिः सह ।
श्येनः सम्पातिरथ च जटायुः पक्षिपुङ्गवः ।।२९।।

येषां पक्षसमीरेण चकम्पे भुवनत्रयम् ।
भुजगास्ते तु सर्वेऽपि वमद्विषकणा बभुः ।।३०।।

युद्धमासीन् महाघोरं भुजगेन्द्रपतत्त्रिणाम् ।
ततो जटायुं सम्पातिं श्येनं बद्ध्वानयँस्तु ते ।।३१।।

मातुः स्मृतेस्तु सम्प्राप्तो गरुडः पक्षघाततः ।
कम्पयञ्जगतीं सर्वां पातयन् द्रुमपर्वतान् ।।३२।।

तद्गन्धं भुजगा घ्रात्वा पलायनपरा ययुः ।
पक्षाघातेन गगने बभ्रमुर्भुजगाः परे ।।३३।।

मुक्ता तु विनता बन्धात् स्वस्थानं गन्तुमुद्यता ।
तां दृष्ट्वा वासुकिः क्रुद्धो दहन् व्योम वमन् विषम् ।।३४।।

**वासुकिले भने** – हे सर्पराज शेषनाग ! हजुर किन जाने ? म करोडौं नागहरूलाई साथ लिएर विनताको घर जान्छु र त्यसलाई यहाँ लिएर आउँछु ।

**ब्रह्माजीले भन्नुभयो** – यसरी शेषनागसँग कुरा गरेर वासुकि नागहरूका साथ विनताको आश्रममा गए ।।२०-२४।। विनता पनि आफ्नो आश्रममा असङ्ख्य सर्पहरू आइरहेको देखेर डराइन् । ती उग्र सर्पहरू आश्रममा गएपछि सर्वप्रथम विनताका शरीरमा बेरिए। त्यसपछि ती सबैले मिलेर विनतालाई शेषनागको नजिकमा पुऱ्याए । त्यहाँ गएपछि विनताले निवेदन गरिन् ।

**विनताले भनिन्** – हे सर्पहरू ! किन मलाई बाँधेर यहाँ ल्यायौ ? तिमीहरू पापिष्ठ हौ । मैले के अपराध गरेकी छु र ! मेरो छोरा गरुड कति बलवान् छ भन्नेकुरा सबै सर्पले बुझेकै हौला ? त्यस कारण बाँच्ने इच्छा छ भने तिमीहरूले मलाई मुक्त गर, अन्यथा मेरो छोराले तिमी सबैको संहार गरिदिनेछ।

**ब्रह्माजीले भन्नुभयो**- नागहरूले गरेको धृष्टतालाई देखेर आत्तिएकी विनताले त्यस बेला आफ्ना छोरा गरुडलाई संझिइन् ।।२५-२८।। गरुड पनि आफ्नी आमाले सम्झेपछि आफ्ना मित्र श्येन, सम्पाति र जटायुजस्ता पक्षिराजहरूलाई साथमा लिएर त्यहाँ आए ।।२९।। जसका प्वाँखको हावाले मात्र तीनै लोक काँप्ने गर्दथे, त्यस्ता पक्षिराजहरूलाई देखेर सबै सर्पहरूले आ-आफ्ना मुखबाट विषका धारा बगाउन थाले । त्यस बेला सर्पराज र पक्षिराजहरूको बीचमा घनघोर युद्ध भयो । नागहरूले जटायु, सम्पाति र श्येनलाई बाँधी लिएर गए ।।३०-३१।। त्यस बेला गरुडले आफ्नी आमाको संझना गरे । आमाको ध्यानबाट शक्ति प्राप्त गरेका गरुडले आफ्नो प्वाँखको हावाद्वारा धर्ती र आकाशलाई कम्पायमान गराई रूख एवं पर्वतहरू ढाल्दै भयानक युद्ध गरे ।।३२।। पक्षिराज गरुडको गन्ध सुँघेर ती सर्पराजहरू भाग्न थाले । केही सर्पहरू त गरुडका प्वाँखको हावाले आकाशमा पर-परसम्म चक्कर काटिरहेका थिए । सर्पहरूद्वारा बाँधिएकी विनता आफ्नो घर जान तयार भइन् । तिनलाई हिंड्न लागेको देखेर रिसाएका वासुकि सबैलाई आगाको ज्वालाले सन्तप्त तुल्याउँदै र मुखबाट विषका धाराहरू बमन

पक्षाघातेन गरुडोऽपातयद् भूतले च तम् ।
विनता तु गता वेगात् स्वस्था स्वस्थानमुत्तमम् ।।३५।।

प्रतापं वासुकेर्दृष्ट्वा गरुडः सूक्ष्मरूपधृक् ।
विनतां रक्षितुं यातो याते तस्मिँश्चुकोप ह ।।३६।।

वासुकिर्विषमत्यन्तमसृजज्जगतीं दहन् ।
नागलोकं निनायाशु बद्ध्वा तान् विवरेऽक्षिपत् ।।३७।।

पिधाय द्वारं शिलया ततो मातरमभ्यगात् ।
उदन्तं सर्वमाचख्यौ मात्रे शेषाय चारुधीः ।।३८।।

शुशोच विनता श्रुत्वा बद्ध्वा नीतान् सुताँस्तु तान् ।
प्रययौ कश्यपं शीघ्रं नमस्कृत्याब्रवीदिदम् ।।३९।।

विपरीतमिदं जातं प्रत्यक्सूर्योदयो यथा ।
गृहे स्थितां मामनयत् सहसा वासुकी रिपुः ।।४०।।

पृष्ठतोऽनुययौ श्येनो जटायुर्मोचितुञ्च माम् ।
सम्पातिः सर्पसङ्घाँस्ते मारयामासुरोजसा ।।४१।।

पराजितेषु तेष्वाशु भुजगैर्बहुभिर्मुने ।
गरुडं चास्मरं तेन जित्वा सर्पगणाँस्तु तान् ।।४२।।

मोचिता चाणुरूपेण तेनाप्यागमनं कृतम् ।
जटायुस्तेन सम्पातिः श्येनो वासुकिना बलात् ।।४३।।

नीताः पातालविवरे पिधाय स्थापिता दृढम् ।
गमिष्यन्ति मम प्राणास्तान् विना निश्चितं मुने ।।४४।।

एतावद्दुःखतप्ताऽहं त्वयि नाथे सति प्रभो ।

क उवाच

इति श्रुत्वा प्रियावाक्यं प्राह तां कश्यपो मुनिः ।।४५।।

गर्दै युद्ध गर्न तम्सिए । गरुडले पनि आफ्नो प्वाँखको झटारो हानेर वासुकिलाई भुइँमा लडाइदिए । त्यो देखेर प्रसन्न भएकी विनता आफ्नो आश्रमतर्फ लागिन् ।।३३-३५।। विनता गएपछि गरुडले 'यो वासुकि नाग साह्रै बलवान् छ । म नभएको बेलामा आश्रममा गएर मेरी आमालाई दुःख दिन सक्छ' भन्ने विचार गरी आफ्नी आमाको रक्षा गर्न सूक्ष्म रूप लिएर आमाको आश्रममा गए । गरुड गएपछि रिसाएका वासुकिले संसारलाई नै डढाउन सक्ने भयङ्कर विषको धारा बगाए र त्यहाँ लड्न भनेर आएका श्येन, सम्पाति र जटायुलाई बाँधे । त्यसपछि तिनीहरूलाई नागलोकमा पुऱ्याई एउटा गुफाभित्र लुकाएर गुफाको ढोका ठूलो ढुङ्गाले छेकिदिए । गुफा बन्द गरेपछि ती सबै नागहरू आफ्नी माता कद्रूका समीपमा गए । तिनले आफ्नी माता र शेषनागलाई समेत भएको सम्पूर्ण घटना सुनाए। उता आश्रममा पुगेकी विनता आफ्ना छोराहरूलाई नागहरूले बाँधेर लगेको थाहा पाएपछि चिन्तित भइन् । समस्याको समाधानका लागि अत्यन्त तीव्र वेगले आफ्ना पति कश्यपको दर्शन गर्न गइन् र उहाँलाई प्रणाम गरेर यसरी निवेदन गरिन् - 'हे प्राणनाथ! पश्चिमबाट सूर्य उदाएझैं विचित्र घटना भयो। आफ्नो घरमा बसिरहेकी मलाई मेरी सौताको छोरा वासुकिले बाँधेर नागलोक पुऱ्यायो । मलाई छुटाउन भनी मेरा पछिपछि श्येन, जटायु र सम्पाति गएका थिए । तिनीहरूमाथि ती नागहरूले कठोर प्रहार गरे। सबै सर्पहरूले मिलेर मेरा छोराहरूलाई सङ्ग्राममा परास्त गरे। पुत्रहरूको त्यो अवस्था देखेर मैले आफ्ना पराक्रमी पुत्र गरुडको संझना गरें । गरुडले त्यहाँ आएर ती सर्पहरूलाई परास्त गरेर बन्धनमा परेकी म आमालाई मुक्त पनि गराए । ती पनि फर्के। त्यसपछि वासुकि र अरू नागहरू मिलेर श्येन, जटायु र सम्पातिनामक मेरा छोराहरूलाई बाँधेर पातालको गुफामा पुऱ्याई ठूलो ढुङ्गाले गुफा बन्द गरी थुनेका छन् । हे पतिदेव ! मेरा छोरा यसरी थुनिएको सम्झेर म कसरी बसूँ ? मेरा अब प्राण जाने भए ।।३८-४४।। हजुरजस्ता पराक्रमी र शक्तिशाली पतिकी पत्नी भएर मैले यो दुःख कसरी सहूँ ?'

**ब्रह्माजीले भन्नुभयो** - आफ्नी प्रिया विनताका यस्ता कुरा सुनेर कश्यप ऋषिले उत्तर दिए ।।४५।।

मुनिरुवाच

मा चिन्तां कुरु भद्रे ! त्वं व्येतु ते मानसो ज्वर: ।
ऋतुं तेऽहं प्रदास्यामि पुत्रस्तेऽन्यो भविष्यति ।।४६।।

अभेद्यमण्डं वज्रेण पार्वत्या यदि बालक: ।
क्रीडन् भेत्स्यति पादाभ्यां तत: पुत्रो भवेत् तव ।।४७।।

स नीलकण्ठो बलवान् नीलकण्ठ इवापर: ।
श्रवणात् तस्य शब्दस्य भुजगास्ते पराभवम् ।।४८।।

यास्यन्ति च गुणेशोऽपि तमारुह्य भुवो भरम् ।
हरिष्यति तदा पुत्रा मोक्ष्यन्ते नागबन्धनात् ।।४९।।

एवमुक्त्वा मुनिस्तस्यै रहो नीत्वा ऋतुं ददौ ।
विनताथ ययौ हर्षात् काननं जन्तुवर्जितम् ।।५०।।

कालेन सुषुवे चाण्डमभेद्यं वज्रपर्वतै: ।
मृद्भाण्डे वल्कलैर्वेष्ट्य निक्षिप्याण्डं स्थिराऽभवत्।।५१।।

यथा भूमिगतं द्रव्यं भुजगो बलवत्तर: ।।५२।।

कश्यपले भन्नुभयो - हे कल्याणी विनता ! तिमी चिन्ता नगर । आफ्ना मनको कष्ट हटाऊ । अहिले म तिमीलाई एकान्तमा लगेर ऋतुदान गर्दछु । त्यसबाट तिमीलाई पराक्रमी पुत्र पैदा हुनेछ । तिमी पक्षीहरूकी माता भएकीले मेरो ऋतुदानबाट अण्डा तयार हुनेछ । त्यो अण्डा वज्रभन्दा पनि बलियो हुनेछ । कुनै दिन पार्वतीका छोरा बालक श्रीगणेश खेल्दै-खेल्दै त्यो अण्डा भएको ठाउँमा आउनेछन् । त्यहाँ खेलिरहेको अवस्थामा तिनले आफ्ना दुई खुट्टाले त्यस अण्डामाथि प्रहार गर्नेछन् । अण्डा फुटेपछि तिमीलाई पुत्र पैदा हुनेछ। त्यस पुत्रको घाँटी नीलो हुनेछ र बल अद्वितीय हुनेछ । त्यो बालक शिवजीसमान पराक्रमी हुनेछ । त्यस बालकको शब्द सुन्नासाथ सर्पहरू त्यसै भाग्नेछन्, तिनीसँग युद्ध नै गर्नुपर्ने छैन । त्यसपछि पार्वतीका छोरा श्रीगणेशले त्यसलाई आफ्नो वाहन बनाउनेछन् । त्यसमा आरोहण गरी संसारमा भ्रमण गरेर तिनले पृथिवीको भार हरण गर्नेछन् । त्यस बेला मात्र तिम्रा छोराहरू नागहरूको बन्धनबाट मुक्त हुनेछन् । त्यसपछि कश्यप ऋषिले विनतालाई एकान्त कोठामा पुऱ्याएर ऋतुदान गरे । ऋतुदानबाट खुसी भएकी विनता कुनै प्राणी नभएको जङ्गलमा गएर बसिन् ।।४६-५०।। समय आएपछि तिनले वज्र र पर्वतहरूले प्रहार गर्दा पनि नफुट्ने अण्डा पैदा गरिन् । त्यस अण्डालाई माटाको भाँडामा पातले ढाकेर आफू त्यहीं स्थिर भएर रहिन् । जसरी बलवान् नागले भुइँमा लुकाएका धनको रक्षा गरिरहेको हुन्छ त्यसैगरी विनताले पनि आफ्नो अण्डाको रक्षा गरिरहेकी थिइन् ।।५१-५२।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे कद्रूविनताकलहप्रसङ्गे कश्यपद्वारा विनतायां गर्भाधानं नाम सप्तनवतितमोऽध्याय:

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'कद्रू र विनताको सौतेनी विवादको प्रसङ्गमा नागहरूको शेखी झार्न कश्यपद्वारा विनतामा गर्भाधान' शीर्षकान्वित सन्तानब्बेऔं अध्याय पूर्ण भयो ।।९७।।

ॐ

## अष्टनवतितमोऽध्यायः { ९८ अध्याय }

क उवाच

एवं गते सप्तमेऽब्दे त्वष्टमे स गुणेश्वरः ।
उषः स्नात्वा स्थितो ब्रह्म जपन् वेदचतुष्टयम् ।।१।।

कस्तूरीतिलको नानाभूषणैः सुविराजितः ।
दिव्याम्बरधरो दिव्यगन्धमालाविभूषितः ।।२।।

ततस्ते तापससुता आगतास्तं गुणेश्वरम् ।
तद्दीप्त्या भासिताः सर्वेऽरुणदीप्त्या यथा घनाः ।।३।।

तान् दृष्ट्वाऽध्ययने बुद्धिर्जाता तस्यार्भकैः सह ।
सर्वेषां मस्तके हस्तं न्यधात् तत्समये विभुः ।।४।।

त्रिचतुःपञ्चवर्षाणां वेदस्फूर्तिस्ततोऽभवत् ।
विना तु चेतनां शब्दो नभोवाण्या हि श्रूयते ।।५।।

चतुर्णामपि वेदानां सर्वे पारायणं व्यधुः ।
नाभक्षयन् पशुगणा ग्रासं मुखगतं तदा ।।६।।

श्रवणे तत्परा जाताः शब्दानां वेदचारिणाम् ।
समाप्ते वेदद्वितये सामगानमथारभन् ।।७।।

हरिणाः सिंहशार्दूला भुजगाः पक्षिजातयः ।
गानस्य श्रवणे सक्ता अश्रुपातान् प्रसुस्रुवुः ।।८।।

अष्टाशीतिसहस्राणि मुनयः श्रवणे रताः ।
आनन्दह्रदसम्मग्नाः शेरते स्म यथा निशि ।।९।।

प्रमथाद्या गणाः सर्वे शिवाया हर्षनिर्भराः ।
अस्रवच्चामृतं चन्द्रः शिवभालस्थितस्तदा ।।१०।।

**ब्रह्माजीले भन्नुभयो-** श्रीगणेश सात वर्ष पूरा गरी आठ वर्षमा लाग्नुभएपछि प्रातःकालमा स्नान गरेर गायत्रीको जप गरी चारै वेदको अध्ययन गर्दै विराजमान हुनुभयो ।।१।। उहाँ कस्तूरीको तिलक धारण गरी अत्यन्त मूल्यवान् अलङ्कारहरूद्वारा सुहाउनुभएको थियो । उहाँले शरीरमा दिव्य वस्त्र, गन्ध र मालाहरू धारण गर्नुभएको थियो।।२।। त्यस बेला केही तपस्वीका पुत्रहरू भगवान् श्रीगणेशको दर्शन गर्न आइपुगे। श्रीगणेशको नजिकमा आएका ती बालकहरू प्रातःकालमा सूर्यको उदय हुँदा सूर्यको कान्तिले बादल शोभायमान भएजस्तै श्रीगणेशका शरीरको आभाबाट प्रकाशित भए । तिनीहरूलाई देख्नासाथ भगवान् श्रीगणेशको मनमा ती आफ्ना मित्र बालकहरूका साथ अध्ययन गर्ने इच्छा जागृत भयो । त्यसपछि श्रीगणेशले आफ्ना सबै बालसाथीहरूको शिरमा हात राख्नुभयो ।।३-४।। तीन, चार र पाँच वर्षको उमेरका ती साना-साना बालकहरूको मनमा पनि श्रीगणेशले शिरमा हात राख्नुभएको कारणबाट चारै वेदको स्फुरण भयो । तिनीहरूलाई चेतना नहुँदा पनि आकाशवाणीबाट सम्पूर्ण वेदको ज्ञान गराइयो ।।५।। ती सबै बालकहरूले सारस्वरसहित चारै वेदको पारायण गरे । तिनका मुखबाट वेदका मन्त्र चन्किएको सुनेर पशुहरू खाँदाखाँदै गास मुखमा राखेर टोलाई हेर्न थाले र वैदिक मन्त्र अन्तर्गतका शब्दहरूको श्रवणमा एकाग्र भए । यसरी ऋग्वेद र यजुर्वेदको पाठ सकिएपछि तिनीहरूले सामगान शुरु गरे ।।६-७।। बालकहरूको सामगान सुनेर मृग, सिंह, बाघ, सर्प र अरू पक्षिजातिका प्राणीहरू आँखाबाट हर्षका आँसु बगाउन थाले ।।८।। त्यस बेला भगवान् श्रीगणेशलगायत ती बालकहरूद्वारा गरिएको सामगानलाई अठासी हजार मुनिहरूले एकाग्र भएर सुनिरहेका थिए। ती मुनिहरू आनन्दको तलाउमा मग्न भएर रातमा गहिरो निद्रामा जस्तो आनन्दप्राप्त हुन्छ त्यो भन्दा बढी आनन्दमा प्राप्त भए ।।९।। पार्वतीका प्रमथ आदि गणहरू अत्यन्त हर्षित भए । शिवजीको निधारमा रहेका चन्द्रमाले पनि अमृत प्रवाहित गर्न थाले ।।१०।। चन्द्रखण्डबाट अमृत प्रवाहित

तत्संसर्गाद्रुण्डमालारुण्डानि पुरुषा बभुः ।
लज्जिताः किन्नराः सर्वे गन्धर्वाश्चास्य गानतः ।।११।।

स्मरतप्ताः स्त्रियः शान्ता आरार्तिक्यं व्यधुस्तदा ।
तत्राजगाम सहसा दैत्यश्चाभिनवाकृतिः ।।१२।।

यस्य शब्देन दीर्णास्ता मन्दराद्रिगुहास्तदा ।
हलदन्तो वापीनासस्तडागनयनोऽरिहा ।।१३।।

स तु श्वापदरूपेण बभ्राम तत्र तत्र ह ।
पञ्चनेत्रश्चतुःशृङ्गो वसुपादश्चतुःश्रुतिः ।।१४।।

त्रिमुखश्च द्विपुच्छोऽसौ जहासोच्चैर्निरीक्ष्य तम् ।
पश्यन्तु कौतुकं बालाः प्रोवाचेति शिशून् विभुः ।।१५।।

अत्यद्भुतं दृष्टमिदमित्यूचुस्ते गुणेश्वरम् ।
ततो दैत्यो ननर्तोच्चैरुड्डीय न्यपतद् भुवि ।।१६।।

क्षणं लीनः क्षणं तिष्ठन् दृश्यादृश्यस्वरूपधृक् ।
ध्रियतां ध्रियतामेष इत्युवाच शिशून् विभुः ।।१७।।

इत्युक्त्वा दैत्यमगमद् वेगेन च गुणेश्वरः ।
पलायति महादैत्यो याति पृष्ठे स बालकैः ।।१८।।

महारण्यं गताः सर्वे यत्र वायुर्न सर्पति ।
गर्जन्ति सिंहशार्दूला गजसूकरवानराः ।।१९।।

हुँदा शिवजीको घाँटीमा सुहाएको मुण्डमालामा रहेका नरमुण्डहरू आनन्दित भए । किन्नर जातिका जनहरू आफ्नोभन्दा मीठो स्वर सुनेर लजाए । गन्धर्वहरू पनि श्रीगणेश आदि बालकहरूको गायन एवं नृत्यसमेत देखेर लज्जित भए ।।११।। गणेश र तिनका सखाहरूको सात्त्विक सौन्दर्य देखेर कामसन्तप्त भएका सुन्दर युवतीहरूको सन्ताप पनि सामगानबाट शान्त भयो । त्यसपछि ती सुन्दरीहरूले सबै बालकहरूको आरती गरे । त्यसै बेला कुनै दैत्य नयाँ आकार लिएर त्यहाँ आइपुग्यो ।।१२।। दैत्यले गर्जन गर्दा मन्दराचलका गुफाहरू पनि धुजाधुजा भई फाटेका थिए । दैत्यका दाँतहरू हलोको आकारका थिए । दैत्यको नाक तलाउझैं विशाल थियो। त्यसका आँखा सरोवरसमान विशाल थिए । त्यो दैत्य शत्रुहरूलाई मार्न अत्यन्त सक्षम थियो।।१३।। यस बेला त्यो श्रीगणेशका सामु कुकुरको रूप लिएर घुमिरहेको थियो । त्यसका अनुहारमा पाँचवटा आँखा देखिन्थे । त्यसका शिरमा चारवटा सिङ निस्किएका थिए । त्यो दैत्य चार कान र आठ खुट्टाले युक्त थियो । त्यसका तीनवटा मुख र दुईवटा पुच्छर थिए । बालकहरूका नायक श्रीगणेशलाई सामगानमा व्यस्त हुनुभएको देखेर त्यस दैत्यले अट्टहास गऱ्यो । त्यसपछि श्रीगणेशले भन्नुभयो- 'हे बालकहरू! तिमीहरूले चमत्कार हेर।' ती बालकहरूले पनि त्यो दानवलाई देखेर श्रीगणेशसँग भने - 'आज ज्यादै आश्चर्यदायक दृश्य देखियो।' त्यसपछि त्यो दैत्य घरि आकाशमा उड्दै र घरि भुइँमा ओर्लंदै नृत्य गर्न लाग्यो ।।१४-१६।। त्यो दैत्य केही बेर अन्तर्धान भई फेरि प्रकट हुन्थ्यो र फेरि अन्तर्धान हुन्थ्यो । यस क्रमबाट कहिले देखिने र कहिले नदेखिने भएर पनि त्यसले बालकहरूलाई आश्चर्यमा डुबायो। भगवान् श्रीगणेशले बालकहरूलाई भन्नुभयो- 'हे बालकहरू! यसलाई समात।' भगवान् श्रीगणेश पनि बालकहरूका साथ त्यसलाई पछ्याइरहनु भएको थियो । केही बेरपछि भगवान् श्रीगणेश वेगपूर्वक दैत्यमाथि आक्रमण गर्न दगुर्नु भयो । त्यस बेला त्यो दानव दौडिरहेको थियो। त्यसले श्रीगणेशका बाल-सखाहरूको पिठ्यूँमा आरोहण गर्न खोजिरहेको थियो । त्यो देखेर श्रीगणेशसहित सबै बालकहरू घना जङ्गलतर्फ लागे। त्यस जङ्गलमा बाघ, सिंह, हात्ती, सुँगुर र बाँदरहरू गर्जन गरिरहेका थिए । भगवान् गणेशलाई समात्न भनी त्यो दैत्य पनि

तं धर्तुं तत्र यातोऽसावुड्डीय दैत्यपुङ्गवः ।
क्वापि यातो दूरदेशं ततः खिन्नो गजाननः ।।२०।।

क्रोधसंरक्तनयनो मुमोच पाशमुल्बणम् ।
चकम्पे धरणी व्योम भ्रमन्मेघमभूत्तदा ।।२१।।

न्यपतन् भानि खात् पृथ्वीं ककुभो व्यनदन् स्वनात् ।
स पाशो दैत्यमाक्रम्य क्षणेनायाद् गुणेश्वरम् ।।२२।।

श्वासरोधात् पपातोर्व्यां लुण्ठन् पादौ भुजौ मुखम् ।
नेत्रद्वारा गताः प्राणाः पश्यत्सु बालकेष्वपि ।।२३।।

पतितो रूपमास्थाय चतुर्विंशतियोजनम् ।
सपाशकण्ठं तं केचिद् विचकर्षुरितस्ततः ।।२४।।

गुदे काष्ठं मुखे धूलिं प्राक्षिपन्नपरेऽर्भकाः ।
केचिन्मूत्रं पुरीषञ्च चक्रुस्तन्मस्तकेऽर्भकाः ।।२५।।

गुणेशनिकटे याताः सर्वे बालाः क्षुधातुराः ।
रसालानि बभक्षुस्ते केचित् तन्मस्तके गताः ।।२६।।

आजघ्नुः फलघातेन भूमिस्था उपरि स्थितान् ।
पतितान्यपरे खादन् ददृशुर्विनतां ततः ।।२७।।

अण्डमाच्छाद्य तिष्ठन्ती साऽधावद् बालकान् प्रति ।
पलायमानांस्तान् दृष्ट्वा विनता पृष्ठतो ययौ ।।२८।।

त्यहीं पुग्यो। केही बेर घना जङ्गलमा गणेश आदि बालकहरूको प्रतीक्षा गर्दै त्यो लुकेर रह्यो । भगवान् श्रीगणेश पनि दैत्यलाई लुकेको देखेर खिन्न हुनुभयो ।।१७-२०।। श्रीगणेशले क्रोधले आफ्ना आँखा राता-राता गराउँदै आफ्नो पाशनामक अत्यन्त चम्किलो अस्त्र दैत्यमाथि प्रहार गर्नुभयो । भगवान्ले आयुध प्रहार गर्दा पृथिवी काँपिन्, आकाश घुम्न थाल्यो र मेघ भयङ्कर स्वरले गर्जन गर्न लागे । त्यस बेला नक्षत्रहरू आकाशबाट धर्तीमा खस्न थाले र दसै दिशामा धनघोर आवाज सुनियो । भगवान्द्वारा प्रहार गरिएको पाश वनमा लुकिरहेको दैत्यमाथि आक्रमण गरेर भगवान्कै समीपमा आइपुग्यो ।।२१-२२।। त्यो दैत्य भगवान्ले गर्नुभएको पाशको प्रहारबाट घाँटीमा ठूलो घाउ हुन जाँदा सास रोकिएर भुइँमा ढल्यो । भुइँमा ढल्दा त्यसका हातखुट्टा फट्फटाइरहेका थिए र त्यसले आफ्नो मुख खोलेको थियो । श्रीगणेशका मित्र बालकहरूले हेर्दाहेर्दै त्यस दैत्यका प्राणहरू आँखाको मार्गबाट निस्किए ।।२३।। त्यो दैत्य छयानब्बे कोशको विशाल शरीर फैलाउँदै भुइँमा लडेको थियो । भगवान्ले प्रहार गर्नुभएको पाशबाट हुन गएको घाउ हेर्दै उहाँका बालसखाहरूले त्यसको लाशलाई यताउति ताने ।।२४।। ती बालकहरूले त्यसको गुदा-इन्द्रियमा काठ कोचेका थिए । केही बालकहरूले त्यसको मुखमा धूलो भरेका थिए । कुनै बालकहरूले त्यसको शरीरमा बसेर दिशा-पिशाब पनि गरे । यसरी दैत्यका लाशको अपमान गरेपछि ती सबै बालकहरू भोकाउँदै भगवान् श्रीगणेशको नजिकमा आइपुगे । त्यहाँ आएर तिनीहरूले भगवान्ले प्रदान गर्नुभएका आँपका फलहरू खाए। केही बालकहरूले रूखमा चढेर आँप टिपे र तल बसेका साथीहरूलाई दिए । केहीले ठट्टा गर्दै तलका आँपका फलहरूले रूखमा रहेका साथीहरूमाथि प्रहार गरे । केही बालकहरूले तल खसेका आँपहरू जम्मा गरेर आनन्दपूर्वक खाए । त्यस बेला त्यहाँ चराहरूकी माता विनता देखिइन् ।।२५-२७।। पक्षीहरूकी माता विनता त्यहाँ आफ्ना अण्डाहरूलाई प्वाँखले छोपेर बसिरहेकी थिइन् । बालकहरूले आँपको प्रहार गर्दै चञ्चलता देखाएका दृश्य हृदयङ्गम गरेर विनता 'कतै यिनले आएर मेरा यी अण्डा पनि फुटाउँछन् कि' भन्ने भयले बालकहरूमाथि आक्रमण गर्न तम्सिइन्। त्यो देखेर ती बालकहरू भाग्न थाले । विनता पनि

निघ्नती पक्षवातेन श्वापदानि द्रुमानपि ।
गुणेशस्तत्समालोक्य लीनो वृक्षस्य कोटरे ।।२९।।

ददर्शाण्डं श्वेततरं मण्डलं शशिनो यथा ।
दधार हस्ते सहसा गुणेशो बलवत्तरम् ।।३०।।

अस्फुटत् तत्र ददृशे पतत्त्री नीलकण्ठवान् ।
दीर्घपक्षो विशालाक्षो वमज्ज्वालाकणान् मुखात् ।।३१।।

व्याधूनयदुभौ पक्षौ कम्पयञ्जगतीतलम् ।
चेलुर्वेलामतिक्रम्य समुद्रास्तस्य शब्दतः ।।३२।।

चचाल मण्डलं भानोरर्भकास्ते पलायिताः ।
पृष्ठतोऽनुययौ सोऽथ पक्षाघातेन ताडयन् ।।३३।।

तद् दृष्ट्वा कदनं तेषां योद्धुकामो गुणेश्वरः ।
जग्राह पक्षे तं क्रूरं ततो युद्धमवर्तत ।।३४।।

पक्षाघातैश्चञ्चुपुटैर्जघान पक्षिपुङ्गवः ।
आरक्तनयनः सोऽपि तं जघ्ने मुष्टिघाततः ।।३५।।

अतिदार्ढ्यं तस्य दृष्ट्वा चतुर्भिरप्यथायुधैः ।
गुणेशस्तं जघानाशु तानि पेतुर्धरातले ।।३६।।

उड्डीय स पपालाशु बालानादाय सत्वरः ।
गुणेशस्तान् समुन्मुच्य समारूढोऽण्डजे ततः ।।३७।।

वशे तमण्डजं कृत्वा चारुरोह गुणेश्वरः ।
ततस्तमाययुर्बाला विनतापि समाययौ ।।३८।।

तुष्टाव परमात्मानं गुणेशं तं धिया स्वया ।
त्वं सृष्टिकर्ता रजसा ब्रह्मा सत्त्वेन पालकः ।।३९।।

तिनका पछिपछि लागिन् ।।२८।। विनताले आफ्ना प्वाँखको हावा जोडले फैलाएर जङ्गली जनावरलाई मार्दै रूखहरूलाई लडाइरहेकी थिइन् । विनताको क्रोधपूर्ण कृत्य देखेर भगवान् श्रीगणेश एउटा रूखको प्वालमा लुक्नुभयो । त्यहाँ श्रीगणेशले चन्द्रमण्डलझैं उज्ज्वल एउटा अण्डा देख्नुभयो र अत्यन्त साह्रो र गह्रौं त्यो अण्डालाई हातमा लिएर खेलाउनुभयो ।।२९-३०।। भगवान् श्रीगणेशले खेलाउँदा-खेलाउँदै त्यो अण्डा फुट्यो । त्यसबाट एउटा नीलो घाँटी भएको चरा उत्पन्न भयो। त्यसका लामा-लामा प्वाँख थिए, आँखा विशाल थिए र त्यसले मुखबाट अग्निज्वाला प्रकट गरिरहेको थियो ।।३१।। त्यसले आफ्ना दुइटै प्वाँख कँपाउँदा संसारै काँप्न लागेको भान हुन्थ्यो । त्यसका प्वाँखको शब्दवेगका कारण समुद्र पनि सीमा नाघेर छाल उठाइरहेको देखिन्थ्यो।।३२।। नीलो घाँटी भएको चराको वेगबाट सूर्यको मण्डल घुम्न थाल्यो। यस्तो डरलाग्दो वातावरण देखेर भगवान्का बालसाथीहरू भागिरहेका थिए र त्यो चराले तिनीमाथि आफ्ना प्वाँखहरूले प्रहार गर्दै पछ्याइरहेको थियो ।।३३।। त्यो चराले गरेको उपद्रव देखेर त्यससँग युद्ध गर्ने इच्छा हुँदा भगवान् श्रीगणेशले त्यसका प्वाँख समाउनुभयो । त्यसपछि नीलकण्ठ चरा र भगवान्को बीचमा युद्ध भयो । त्यसले प्वाँख र मुखको चुच्चोले प्रहार गरेर भगवान्लाई घाइते बनायो। रिसाउनुभएका भगवान्ले पनि त्यस चरालाई मुड्कीले हान्नुभयो। भगवान् श्रीगणेशले त्यस चराको शरीरमा अपरिमित बल र दृढता देखेर आफ्ना चार प्रकारका अस्त्रबाट त्यसमाथि प्रहार गर्नुभयो । तर ती आयुधहरू त्यसलाई नलागेर भुइँमा खसे ।।३४-३६।। त्यो चरा श्रीगणेशका बालसाथीहरूलाई आफ्नो साथमा उडाउँदै उड्न थाल्यो। त्यसबाट रिसाउनुभएका श्रीगणेश बालकहरूलाई छुटाएर त्यसमाथि सवार हुनुभयो। भगवान्को भार सहन नसकी त्यो चरा उहाँको वशमा पर्‍यो। त्यसलाई वाहन बनाएर भगवान् फेरि सवार हुनुभयो। त्यस बेला सबै बालकहरू भगवान्को नजिकमा आइपुगे । तिनका साथै पक्षीहरूकी माता विनता पनि त्यहाँ आइपुगिन्।।३७-३८।। भगवान् श्रीगणेशको महिमा बुझेकी तिनले आफ्नो उत्तम बुद्धिद्वारा प्रार्थना गर्दै भनिन्- 'हे ईश्वर! हजुर रजोगुणद्वारा सृष्टि गर्ने ब्रह्मा, सत्त्वगुणद्वारा जगत्को पालन गर्ने विष्णु र तमोगुणद्वारा संसारको संहार गर्ने शङ्करका रूपमा विराजमान

विष्णुस्त्वमसि तमसा संहरन् शङ्करोऽपि च ।
न देवा नर्षयस्तत्त्वं विदुस्ते सगुणस्य ह ।।४०।।

निर्गुणस्य तु को वेद चराचरगुरोरपि ।
एवं स्तुत्वाऽवदत् सा तं प्रणता भक्तितत्परा ।।४१।।

कश्यपस्य मुनेर्भार्यां विनतां विद्धि मामिह ।
तस्य पुत्रः शिखण्डी च सेवकस्ते भविष्यति ।।४२।।

मुनिना पूर्वमुक्तं मे योऽण्डमेतद् भिनत्ति च ।
सोऽस्य स्वामी न सन्देहो मोचयिष्यति ते सुतान् ।।४३।।

प्रतीक्षन्त्या मया दृष्टं पादपद्मं चिरं तव ।
जटायुः श्येनसम्पाती नीता कद्रूसुतैस्त्रयः ।।४४।।

तान् मोचय जगन्नाथ ! शीघ्रं दर्शय मे सुतान् ।

गणेश उवाच

मा चिन्तां कुरु मातस्त्वं दर्शयिष्ये सुतांस्तव ।।४५।।

क उवाच

एवमुक्त्वा तु विनतां बहुहर्षसमन्वितः ।
शिखिनञ्च ततः प्राह वरं मत्तो वृणीष्व ह ।।४६।।

मयूर उवाच

यदि मे त्वं प्रसन्नोऽसि यदि देयो वरो मम ।
तदा मन्नामपूर्वं ते नामाख्यातं भवेद् भुवि ।।४७।।

एतन्मे देहि सर्वेश ! तव भक्तिं दृढां तथा ।

देव उवाच

साधु साधु त्वया प्रोक्तं निर्लोभेनान्तरात्मना ।।४८।।

हुनुहुन्छ । हे भगवन् ! हजुर साकार एवं सगुण पनि हुनुहुन्छ र निराकार एवं निर्गुण पनि हुनुहुन्छ । हजुर सगुण हुँदाका रहस्य, लीला र चरित्रको विषयमा देवता र ऋषिले पनि यथार्थ बुझ्न सक्दैनन् ।।३९-४०।। चराचरका स्वामी र निर्गुण परब्रह्मका रूपमा रहनु हुने हजुरको महिमा कसले बुझ्नसक्छ?' यसरी स्तुति गरेर विनताले नम्र भएर अपूर्व भक्ति देखाउँदै प्रार्थना गरिन् – 'हे श्रीगणेश ! मलाई हजुरले कश्यप ऋषिकी पत्नी विनता भनेर चिन्नुहोस् । मेरो गर्भबाट पैदा भएका कश्यपकै छोरा यी मयूर तपाईंका सेवक हुनेछन्' ।।४१-४२।। मलाई एक दिन कश्यप ऋषिले भन्नुभएको थियो – 'जसले तिम्रो अण्डालाई भेदन गर्दछ त्यो व्यक्ति नै तिम्रा अण्डज छोराको स्वामी हुनेछ र तिनले नै तिम्रा अरू छोराहरूका शत्रुबाट रक्षा गर्नेछन्' ।।४३।। मैले धेरै दिनसम्म हजुरको प्रतीक्षा गरें। आजमात्र हजुरका चरणकमलको दर्शन गर्ने मौका पाएँ । नागमाता कद्रूका छोराहरूले सौतेनी रीस गरेर मेरा छोरा जटायु, श्येन र सम्पातिलाई लगेर बाँधेका छन् । हे जगन्नाथ श्रीगणेश! मेरा ती छोराहरूलाई नागहरूबाट मुक्त गराउनुहोस् र मलाई छोराको अनुहार हेर्ने अवसर प्रदान गर्नुहोस् ।

**श्रीगणेशले भन्नुभयो**- 'हे विनता माता! तपाईं कुनै चिन्ता नगर्नुहोस् अब म तपाईंका छोराहरू ल्याएर देखाइदिनेछु' ।।४४-४५।।

**ब्रह्माजीले भन्नुभयो** - यसरी विनतालाई आफ्ना मीठा वचनहरूले सान्त्वना प्रदान गर्नुहुने र अत्यन्त हर्षित हुनुभएका भगवान् श्रीगणेशले अण्डा फुटेर पैदा भएका नीलकण्ठ मयूरनामक चरालाई भन्नुभयो- हे मयूर ! तिमीले मबाट वरदान लेऊ ।।४६।।

**मयूरले भने**- 'हे भगवन्! यदि हजुर मसँग प्रसन्न हुनुहुन्छ र मलाई वरदान दिन चाहनुहुन्छ भने अब उप्रान्त हजुरका नामको अक्षरभन्दा पहिले मेरा नामको अक्षर जोडेर मानिसले हजुरको स्तुति गरून् र त्यो मयूरेश्वर नाम संसारमा प्रख्यात होस् । म यो कुरा माग्न चाहन्छु र हजुरमा कहिल्यै पनि नमेटिने मेरो दृढभक्ति रहोस् भन्न पनि चाहन्छु ।'

**श्रीगणेशले भन्नुभयो**- 'हे सुन्दर पक्षी! तिमीले राम्रो कुरा गर्यौ र अन्तरात्मादेखि नै कुनै लोभ पनि देखाएनौ । म तिमीसँग प्रसन्न छु । तिम्रो नाम मयूर हो, त्यसपछि मेरो नाम

त्वन्नामपूर्वं मन्नाम मयूरेश्वर इत्यथ ।

विख्यातं त्रिषु लोकेषु भक्तिर्मयि दृढा भवेत् ।।४९।।

क उवाच

एवमाकर्ण्य सा सर्वं विनता स्वाश्रमं ययौ ।

शिखण्डिनं समारूढो मयूरेशो निजं गृहम् ।।५०।।

मयूरेश मयूरेश मयूरेशेति चासकृत् ।

गृह्णद्भिर्मुनिबालैस्तैरन्वितः शोभयन् दिशः ।।५१।।

मातरं प्रणिपत्याह वृत्तान्तं सर्वमञ्जसा ।

वर्णयन्तो मयूरेशं मुनिपुत्रा गृहान् ययुः ।।५२।।

इत्थं मयूरेशनाम प्राप चासौ गुणेश्वरः ।।५३।।

आउनेछ अर्थात् मयूरपछि ईश्वर लाग्नेछ र मेरो नाम तिम्रो नामसँग जोडिएर मयूरेश्वरका रूपमा संसारमा प्रख्यात हुनेछ । जसले मयूरेश्वर नामको जप गर्नेछन् ती मानिसहरूको ममा भक्ति हुनेछ। तिमीले पनि अविचल रूपमा मेरो भक्ति गर्नेछौ' ।।४७-४९।।

**ब्रह्माजीले भन्नुभयो-** भगवान्‌ले आफ्ना छोराका लागि भन्नुभएका कुरा सुनेर विनता खुसी भइन् र आफ्नो आश्रमतर्फ लागिन् । भगवान् पनि मयूरलाई वाहन बनाएर त्यसमा सवार भई धामतर्फ जानुभयो। यी कुरालाई प्रत्यक्ष सुनिरहेका बालकहरूले मयूरको इच्छाअनुसार पटक-पटक मयूरेश भगवान्‌को जय ! मयूरेश भगवान्‌को जय !! मयूरेश भगवान्‌को जय !!! भनेर पुकार गरे । बालकहरूद्वारा जयकार गरिएका भगवान् श्रीगणेश तिनलाई साथ लिएर आफ्ना चहकले संसारलाई प्रकाशमय तुल्याउँदै आफ्नी आमा पार्वतीका समीपमा जानुभयो र सम्पूर्ण वृत्तान्त बताउनुभयो । त्यसपछि मुनिका बालकहरू पनि मयूरेश श्रीगणेश भगवान्‌का गुणहरूको व्याख्या गर्दै आ-आफ्ना घरतर्फ लागे । त्यस बेलादेखि गुणहरूका स्वामी भगवान् श्रीगणेश मयूरेश्वर नामबाट प्रसिद्ध हुनुभयो ।।५०-५३।।

ॐ

**इति श्रीगणेशपुराणे क्रीडाखण्डे शिखण्डिवरप्रदानं नामाष्टनवतितमोऽध्यायः**

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'श्रीगणेशद्वारा विनताका पुत्र मयूरलाई वर प्रदान' शीर्षकान्वित अन्ठान्नब्बेऔँ अध्याय पूर्ण भयो ।।९८।।

ॐ

## नवनवतितमोऽध्यायः { ९९ अध्याय }

क उवाच

अद्‌भुतं कृतवान् वर्षे नवमेऽसौ गुणेश्वरः ।
शिखण्डिनं समारुह्य चतुरायुधभूषितः ।।१।।

नानालङ्कारसंयुक्तो मृगनाभिजशोभितः ।
दिव्याम्बरधरो बालः क्रीडितुं समुपाययौ ।।२।।

पूर्णचन्द्रनिभः श्रीमाञ्जयशब्दैरभिष्टुतः ।
केचिन्नमन्ति तं बालाः केचिच्छत्रं ध्वजं परे ।।३।।

दधुः केचिद् वीजयन्तस्तद्दर्शनमहोत्सवाः ।
क्रीडन्तः सरसीं याताः पञ्चयोजनविस्तृताम् ।।४।।

अगाधोदां नक्रझषकूर्ममण्डूकसंयुताम् ।
लतातरुपरीवारां नानापक्षिगणैर्युताम् ।।५।।

उड्डीय पतिताः केचित् तस्यां केचिच्छनैर्ययुः ।
चूतं तत्तीरगं दृष्ट्वा विशालं फलसंयुतम् ।।६।।

आरुरोह मयूरेशो बालाः फलजिघत्सया ।
रसालैस्ते निजघ्नुस्तानभिन्नाङ्गान् पलायिताः ।।७।।

बालाः स्कन्धान् दारयन्तो निपेतुः केऽपि तज्जले ।
एवं क्रीडत्सु बालेषु दैत्योऽगादश्वरूपवान् ।।८।।

यस्य पादप्रहारेण चूर्णतां यान्ति पर्वताः ।
यस्य हेषितशब्देन कम्पते भुवनत्रयम् ।।९।।

पुच्छचाञ्चल्यतो जीवान् हन्ति स्कन्धं जघर्ष ह ।
यस्मिँश्रुतेऽस्य शब्देन कम्पिते पतितेऽर्भके ।।१०।।

**ब्रह्माजीले भन्नुभयो** - भगवान् गुणेश्वर श्रीगणेशले आफू नौ वर्षमा लाग्नुभएपछि आफ्नो वाहन मयूरमा सवार भई चारै प्रकारका आयुधहरूले अलङ्कृत भएर अद्‌भुत कर्म गर्नुभयो।।१।। अनेक थरि अलङ्कारले सुहाउनुभएका, निधारमा कस्तूरीको टीका लगाउनुभएका र दिव्यवस्त्र धारण गर्नुहुने बालक श्रीगणेश एक दिन मैदानमा खेल्न जानुभयो।।२।। उहाँ त्यस बेला पूर्णिमाका रातको पूर्ण चन्द्रमाझैं सुहाउनुभएको थियो र वरिपरि रहेका बालकहरूले उहाँको जय जयकार गर्दै स्तुति गरिरहेका थिए । केही बालकहरूले भगवान्‌को पाउमा प्रणाम गरे, कसैले छाता चढाए, कसैले ध्वजा चढाए, केही उहाँको दर्शन पाएर उत्सव मनाउँदै हातमा चमर लिएर हम्कन थाले । यसरी भगवान्‌का साथमा खेलिरहेका ती बालकहरू खेल्दाखेल्दै पाँच योजन फैलिएको तलाउको नजिकमा पुगे ।।३-४।। तलाउको पानी अगाध थियो। त्यहाँ माछा, कछुवा, भ्यागुता र गोहीहरू भरिएका थिए । त्यसका चारैतिर लहरा र चराचुरुङ्गीले भरिभराउ रूखहरू थिए । त्यहाँ श्रीगणेश र उहाँका साथीहरू पुगेपछि केही चराहरू उड्न लाग्दा आत्तिएर तलाउमा खसे । केही सुस्तरी उडेर गए। बालकहरूसहित श्रीगणेशले तलाउको तीरमा रहेको फलले परिपूर्ण विशाल आँपको रूख देख्नुभयो । बालकवृन्दसहित भगवान् मयूरेश श्रीगणेश रूखबाट फल टिप्ने इच्छाले त्यसमा सवार हुनुभयो । ती सबै बालकहरूले आँपका फल टिपेर आफ्ना साथीहरूलाई खेल खेलमा प्रहार गर्न थाले । जसमाथि प्रहार गरियो, ती भाग्न थाले, केही बालकहरू रूखका हाँगा भाँच्न थाले भने केही रूखको हाँगामा झुण्डिएर खेल्दाखेल्दै तलाउमा खसे । यसरी अनेक थरि खेल खेल्दै बालकहरू रमाइरहेको समयमा एउटा दैत्य घोडाको रूप लिएर त्यहाँ आयो ।।५-८।। अत्यन्त बलवान् त्यस दैत्यले खुट्टाको प्रहार गर्दा पर्वत पनि चूर्ण-चूर्ण हुन्थे । त्यसले चीत्कार गर्दा स्वर्ग, मर्त्य र पाताल तीनै लोक काँप्दथे । त्यसले पुच्छर हल्लाएर प्राणीहरूको वध गर्दथ्यो । त्यति बेला त्यसले आँपको रूखमा आफ्नो काँध कन्यायो । त्यसबाट रूखमा कम्पन भयो र त्यहाँ

केचित् पलायिता बाला: केचिद् भग्नाश्च मस्तके ।
केचिन्निपतिताश्चाशु गुणेशो पतितो जले ।।११।।

निमग्ने द्विमुहूर्तेऽस्मिन् प्रारुदन् मुनिबालका: ।
किं वक्तव्यमुमायै च दर्शनीयं मुखं कथम् ।।१२।।

शङ्करोऽपि रुषाविष्टो भस्मसान्नः करिष्यति ।
अगाधेऽस्मिञ्जले मग्नं प्रवेष्टुं च न शक्नुम: ।।१३।।

माता पिता पालयिता भ्राता त्राता सखा च न: ।

क उवाच

एवं शोचत्सु बालेषु मयूरेशो दधार तम् ।।१४।।

कर्णयोर्जलमध्ये तु चकर्ष बलवान् विभु: ।
आरुरोह बलाद् दैत्यं भारेणामज्जयन् मुहु: ।।१५।।

स दैत्यो निर्वमन्नेत्रान्मुखाद् बहु जलं मुहु: ।
जलपूर्णश्रुतिश्वासोऽत्यजत् प्राणान् महारव: ।।१६।।

एकहस्तेन धृत्वा तं दोलयित्वा जलाद् बहि: ।
मयूरेशस्ततो बाला जहर्षुर्ननृतुर्भृशम् ।।१७।।

भुवि ते शतधा जातं ददृशुर्दैत्यपुङ्गवम् ।
प्रशशंसुर्मयूरेशं महाबलपराक्रमम् ।।१८।।

त ऊचुस्तं तदा देवं मृतं मत्वा रुदामहे ।
तावदेव हि दृष्टोऽसि हतदैत्यो बहिर्गत: ।।१९।।

पुनस्ते जलमाविश्य प्रासिञ्चन्नञ्जलीन्मिथ: ।
एकमत्या च सर्वे ते प्रासिञ्चन् गणनायकम् ।।२०।।

रहेका बालकहरू भुइँमा खस्न थाले । केही बालकहरू भागे, कसैको टाउकामा चोट लाग्यो, केही भुइँमा लडे र भगवान् श्रीगणेश पनि पानीमा खस्नुभयो ।।९-११।। दुई घण्टासम्म भगवान् पानीमा डुब्नुभएपछि बालकहरू रुँदै भन्न थाले - 'अब भगवती पार्वतीलाई के भनेर चित्त बुझाउने हो ? हामीले आफ्नो मुख कसरी देखाउने हो ? भगवान् शङ्करले पनि रिसाएर हामीलाई मार्न सक्नु हुन्छ । गहिरो पानीमा श्रीगणेश डुब्नुभएको छ । हामी जलमा जान सक्दैनौं । उहाँ त हाम्रा माता-पिता, पालक, दाइ, भाइ, रक्षक र मित्र पनि हुनुहुन्थ्यो ।' यसरी ती बालकहरूले विलाप गरे ।

**ब्रह्माजीले भन्नुभयो** - बालकहरूले विलापपूर्वक चिन्ता गरिरहेकै बेलामा जलमा डुब्नुभएका मयूरेश श्रीगणेशले उठेर त्यस दैत्यलाई समात्नुभयो ।।१२-१४।। त्यसको कानमा समातेर पानीमा डुबाउनुभयो र बल प्रयोग गरी पानीभित्र नै त्यसको पिठ्यूँमा सवार हुनुभयो । त्यो दैत्य पनि आफूमाथि श्रीगणेश सवार हुनुभएका कारण आँखाबाट आँसु झार्दै मुखबाट पानी बान्ता गरिरहेको थियो । त्यसका कानहरू पानीले भरिएका थिए। जतासुकै पानी भरिएकाले सास रोकिएर ठूलो गर्जन गर्दै त्यसले प्राण त्याग गर्‍यो ।।१५-१६।। मयूरेश श्रीगणेशले एउटा हातले त्यसको लाश समातेर हल्लाउँदै पानी बाहिर फ्याँकिदिनुभयो । त्यसपछि खुसी भएका बालकहरू नाच्न थाले । भगवान्‌द्वारा बाहिर फ्याँकिंदा सय टुक्रामा परिणत भएको दैत्यको लाशलाई बालकहरूले आश्चर्यचकित भएर हेरे। महाबल र अद्‌भुत पराक्रमले सुहाउनुभएका भगवान् श्रीगणेशको प्रशंसा पनि गरे ।।१७-१८।। बालकहरूले भने- 'हे श्रीगणेश! तपाईँलाई पानीमा डुबेर मरेजस्तो ठानी हामी विलाप गरिरहेका थियौं । विलापकै बेलामा अचानक पराक्रम गरिरहेका तपाईँलाई देख्यौं र त्यसै बेला तपाईँले दैत्यलाई मारी पानीबाट बाहिर फ्याँकिदिनुभयो। धन्य भगवान् श्रीगणेश।' यसरी आफ्ना कुरा राखेपछि फेरि ती बालकहरू भगवान् श्रीगणेशका साथ जलक्रीडा गर्न पानीभित्र पसे । ती सबै अञ्जुलीमा पानी भर्दै छ्यापाछ्याप गरी खेल्न थाले । ती सबैले मिलेर एकैचोटि अञ्जुलीको पानीले छ्यापी भगवान् श्रीगणेशलाई नुहाइदिए ।।१९-२०।। वर्षाकालमा

वर्षाकाले यथा मेघा धरणीं पर्वतानपि ।
षड्भुजैः परिषिञ्चिन् सन्नपर्याप्तोऽभवद् यदा ।।२१।।

तदाऽसङ्ख्यभुजैर्वारि चिक्षेप बालकेषु सः ।
तदाश्चर्यं तु ते दृष्ट्वा परस्परमथाब्रुवन् ।।२२।।

षड्भुजोऽयं कथमभूदनन्तभुजमण्डितः ।
मन्दीभूता मुनिसुताः क्व द्विहस्ता वयं विभो ।।२३।।

असङ्ख्यभुजवीर्यौजाः क्व च त्वं भुवनेश्वर !
पुनः सर्वे सिषिञ्चुस्ते मयूरेशं रुषान्विताः ।।२४।।

सोऽनन्तरूपस्तान् सर्वान् सिषेचे गणनायकः ।
एकैकस्याग्रतो भूत्वा षड्भुजो निजतेजसा ।।२५।।

तावच्छिखण्डिनिष्ठोऽसौ चतुरायुधभूषितः ।
प्रणेमुस्तेऽञ्जलिपुटं बद्ध्वा देवं गुणेश्वरम् ।।२६।।

पश्यन्तस्तन्मुखे विश्वं सर्वस्वर्गान्वितं तु ते ।
गन्धर्वयक्षरक्षांसि सरिदब्धिद्रुमानपि ।।२७।।

सर्वं चराचरं विश्वं सदेवासुरमानुषम् ।
प्रार्थयामासुरथ ते दृष्ट्वेत्थं ते भयातुराः ।।२८।।

बाला ऊचुः

न विदामः स्वमात्मानं परं वा नापि किञ्चन ।
एकरूपो भव विभो ! कृपां कृत्वाऽखिलेश्वर ।।२९।।

जसरी बादलले पृथिवी र पर्वतहरूलाई जलमय तुल्याउँछ त्यसैगरी बालकहरूले पनि भगवान्लाई जलमय तुल्याएका थिए । त्यस बेला भगवान् श्रीगणेशले शरीरमा ६ हात धारण गरी षड्भुज बनेर बालकहरूमाथि पानी छ्याप्नुभयो। ६ हातद्वारा पानीले छ्याप्दा पनि बालकहरूलाई नुहाइदिन नसकेकाले हजारौं हात धारण गरी सहस्रभुज बनेर जलक्रीडा गर्न लाग्नुभयो र बालकहरूमाथि पानी छ्याप्ने काम गर्नुभयो । भगवान्लाई अनन्त हातले सम्पन्न देखेर चकित भएका बालकहरूले आपसमा कुरा गर्न थाले ।।२१-२२।। 'श्रीगणेश पहिले ६ वटा हातले सम्पन्न थिए, भर्खरै अनन्त हातले सुहाएका छन् । यो कुरा कसरी हुन गयो ?' यसरी विचार गरिरहेका ती बालकहरू केही सोच्नै नसक्ने अवस्थामा पुगे। त्यसपछि भन्न लागे- 'हे अन्तर्यामी श्रीगणेश! हजुर अनन्त शक्तिसम्पन्न हुनुहुन्छ । हाम्रा त दुइटामात्र हात छन् । हामी हजुरको बराबरी कसरी गर्न सक्छौं ? असङ्ख्य बाहुबलले सम्पन्न हजुर कहाँ ? दुई हातमात्र धारण गरी काम गर्ने हामी कहाँ ?' त्यसपछि ती बालकहरूले भगवान् श्रीगणेशमाथि फेरि पानी छ्याप्न थाले । अनन्तरूप धारण गर्नुहुने श्रीगणेशले ती सबैलाई निरन्तर पानीले छ्यापेर नुहाइदिनुभयो । अनन्तबाहु बनेर देखिनु भएका श्रीगणेशले फेरि प्रत्येक बालकका सामु छुट्टाछुट्टै रूप लिनुभयो। ती रूपहरू ६ हातले सुहाएका थिए । त्यसपछि उहाँ चतुर्बाहु बन्नुभयो र हातहरूमा चारथरिका आयुध धारण गर्नुभयो। चतुर्बाहु श्रीगणेश आफ्ना हातहरूमा चार प्रकारका आयुध धारण गरी मयूरमा सवार हुनुभयो । भगवान्लाई यस रूपमा देखेर ती बालकहरूले हात जोडी प्रणाम गरे ।।२३-२६।। श्रीगणेशको मुखमा २१ प्रकारका स्वर्गहरूले सम्पन्न ब्रह्माण्ड, गन्धर्व, यक्ष, राक्षस, नदी, सागर, वृक्ष आदि सम्पूर्ण चराचर विश्व देखेर ती सबै भयभीत र चकित हुँदै प्रार्थना गर्न लागे ।।२७-२८।।

बालकहरूले भने- 'हे भगवन् श्रीगणेश ! हामीले आफ्नो आत्मा चिनेका छैनौं । आत्माभन्दा पर रहेको तत्त्वलाई पनि हामी जान्दैनौं । हजुरको मायाबाट हामी अपरिचित छौं । हामीलाई अनन्तरूप नदेखाई एउटैमात्र रूप देखाउनुहोस् । हे सकलका स्वामी श्रीगणेश! हजुरले हामीमाथि कृपा गर्नुहोस् ।।२९।।

क उवाच
इति तत्प्रार्थनां श्रुत्वा जातोऽसौ पूर्ववद् विभुः ।
एतस्मिन्नन्तरे तत्र चिक्रीडुर्नागकन्यकाः ।।३०।।

या निरीक्ष्याभवच्चाष्टनायिकानां त्रपा भृशम् ।
नेत्रे निरीक्ष्य ह्रीमन्त्यः प्रापलन् हरिणस्त्रियः ।।३१।।

अतिसुन्दरगात्रास्ताः सर्वालङ्कारभूषिताः ।
ता निरीक्ष्य मयूरेशं विह्वला मदनाग्निना ।।३२।।

ता ऊचुश्च मिथः सर्वा अयं भर्ता भवेद् यदि ।
सफलं नस्तदा जन्म जीवितञ्च वयोऽपि च ।।३३।।

धैर्यात् तमूचुस्ताः सर्वाः कुत आगमनं तव ।
दृष्ट्वा ते वदनं चेतो विह्वलं नोऽभिजायते ।।३४।।

विश्रान्तं कुरु चेतो नः स्वाङ्गसङ्गान्नृपूत्तम ।

देव उवाच
अहं शिवसुतो नाम्ना मयूरेश इति स्फुटम् ।।३५।।

विख्यातो मुनिपुत्रैस्तु मज्जितो बलवत्तरैः ।
दृष्टवान् पादकमलं भवतीनां प्रसङ्गतः ।।३६।।

ता ऊचुः
अस्मद्गृहे क्षणं स्थित्वा विश्रामं कर्तुमर्हसि ।

देव उवाच
पार्वती मद्वियोगेन परितप्येद् भृशं यतः ।।३७।।
अतो नायामि वः स्थानं गच्छन्तु नागकन्यकाः ।

क उवाच
एवं वदति तस्मिँस्तु धृत्वा निन्युर्गृहं तु ताः ।।३८।।
तमदृष्ट्वा पुनः शोकं व्यधुर्मुनिसुतास्तदा ।

बाला ऊचुः
कथं कठिनतां यातो दयालुः स गुणेश्वरः ।।३९।।

**ब्रह्माजीले भन्नुभयो** – बालकहरूको प्रार्थना सुनेर भगवान् आफ्नो पूर्व रूपमा फर्किनुभयो । त्यस बेला त्यस तलाउमा नागकन्याहरू आएर क्रीडा गर्न थाले । तिनलाई नुहाइरहेका देखेर संसारका सबभन्दा राम्रा मानिएका अष्टनायिकाहरूले पनि लाज माने । ती नागकन्याका आँखाहरू देखेर लाज मानेका मृगीहरू पनि भाग्न थाले । अतिसुन्दर शरीरले सुहाएका र अत्यन्त उत्तम अलङ्कारले अलङ्कृत ती नागकन्याहरूले भगवान् श्रीगणेशको सौन्दर्यपान गरे । त्यसबाट ती नागकन्याहरू कामपीडाले सन्तप्त भए ।।३०-३२।। तिनले आपसमा भने – 'यदि यो पुरुष हाम्रो स्वामी बन्दछ भने हाम्रो जन्म, जीवन र यौवन पनि सफल हुनेछ ।' यति भनेर धैर्यपूर्वक श्रीगणेशका सामु गई ती नागकन्याहरूले भने– 'हे महाशय ! तपाइँ कहाँबाट आउनुभएको हो ? तपाइँको अत्यन्त सुन्दर अनुहार देखेर हामी कामतप्त र व्याकुल भएका छौं । तपाइँले हाम्रा चित्तलाई आनन्दित तुल्याउनुहोस्। हामी तपाइँसँग कामक्रीडा गर्न चाहन्छौं।'

**श्रीगणेशले भन्नुभयो** – 'मेरो नाम मयूरेश हो । म भगवान् शिवजीको छोरा हुँ र श्रीगणेशका नामबाट संसारमा प्रख्यात छु ।।३३-३५।। म आफ्ना साथीहरूका साथमा क्रीडा गर्दै यहाँ आएको थिएँ । सुन्दर तलाउ देखेर हामी सबैले नुहाउने काम गऱ्यौं । यसै प्रसङ्गले आज तपाइँहरूजस्ता सुन्दर युवतीका चरणकमलको दर्शन गर्ने सौभाग्य पनि पायौं ।'

**नागकन्याहरूले भने** – 'हे श्रीगणेश ! हाम्रा घरमा केहीबेर बसेर आराम गर्नुहोस् ।'

**श्रीगणेशले भन्नुभयो** – 'मेरी आमा पार्वती मेरा विरहले गर्दा अहिले सन्तप्त हुनुभएको छ। मलाई आमाको दर्शन गर्न जानुछ। तसर्थ हे नागकन्याहरू! म तपाइँहरूका घरमा जान असमर्थ छु ।'

**ब्रह्माजीले भन्नुभयो** – यसरी श्रीगणेशले आफ्नो असमर्थ्यता देखाएपछि ती नागकन्याहरूले श्रीगणेशलाई जबर्जस्ती समातेर आफ्ना घर लिएर गए । उता मुनिपुत्र बालकहरू आफ्ना माझमा श्रीगणेशलाई नदेखेर शोक गर्न लागे ।

**बालकहरूले भने** – 'दयालु श्रीगणेश हामीसँग किन कठोर हुनुभएको छ ? ।।३६-३९।। आफ्ना किरणहरूबाट

अमृतस्त्राविकिरणो न चन्द्र उष्णतां व्रजेत् ।
न पिता त्यजते बालानपराधयुते सति ।।४०।।

क्व गतोऽसि विना त्वां हि गमिष्यन्ति हि नोऽसवः ।

क उवाच

केचिन्निपतिता भूमौ केचिद् भालं निजघ्निरे ।।४१।।

केचिद् ययुः स्वाश्रमं ते पथि तस्य पदाम्बुजे ।
दृष्ट्वा नेमू रुदन्तस्ते ददृशुस्ते भगासुरम् ।।४२।।

मूर्धजाघाततो यस्य भानि भूमौ निपेतिरे ।
शतयोजनपादाब्जो भूमावास्यं प्रसार्य सः ।।४३।।

तेषां मार्गे प्रसुष्वाप ततस्ते शिशवो ययुः ।
ध्यायन्तस्तं मयूरेशं शोचन्तः पथि विह्वलाः ।।४४।।

उदरे तस्य ते याता आपगा जलधीनिव ।
भ्रान्ताः परस्परं चक्रुर्वार्ता नानाविधास्ततः ।।४५।।

मयूरेशो गतः क्वापि वयं कुत्र व्रजामहे ।
न जानीमो दिशं सर्वे न दृश्यन्ते गृहाणि च ।।४६।।

इन्द्रियाणामधिपतिर्मनो नीतं तु तेन नः ।
विना नो मनसा ज्ञानं कथमुत्पत्स्यतेऽर्भकाः ।।४७।।

क्व मातरो भ्रातरो वा पितरः क्व गुणेश्वरः ।
एवं वदत्सु बालेषु मयूरेशोऽखिलार्थकृत् ।।४८।।

आविरासीत् पुरस्तेषां चतुरायुधभूषितः ।

गुणेश उवाच

मा शोचन्तु भवद्दुःखं ज्ञात्वाऽहं शीघ्रमागतः ।।४९।।
भगासुरोदरगता नात्मानं विदुरर्भकाः ।

अमृतको धारा बगाउने चन्द्रमा कहिले पनि ताता हुँदैनन् । बालकहरूले धेरै अपराध गर्दा पनि तिनका पिताले बालकहरूको परित्याग गर्दैनन् । तपाईं हाम्रा पितासमान हुनुहुन्छ, हामीबाट के अपराध भयो ? तपाईं कहाँ जानुभयो ? तपाईंविना हामी एक छिन पनि बाँच्न सक्दैनौं । तपाईं अलिबेर आउनुभएन भने हाम्रा प्राण जानेछन् ।'

**ब्रह्माजीले भन्नुभयो** - यसरी विलाप गरिरहेका बालकहरू-मध्ये केही खप्न नसकेर भुइँमा लडे । केही बालकले आफ्ना हातले निधारमा प्रहार गर्न थाले ।।४०-४१।। केही बालकहरू निराश भई आफ्ना आश्रमतर्फ लागे । आश्रमतर्फ जाँदा बीच बाटामा तिनीहरूले भगवान् श्रीगणेशका दुवै पैतालाको डाम देखे र हर्षका आँसु बगाउन थाले । त्यसै बेला ती बालकहरूले आफ्नो नजिकमा भगासुरनामक दानवलाई पनि देखे ।।४२।। भगासुर दानवको शिरको स्पर्श हुँदा आकाशका ताराहरू भुइँमा खस्ने गर्दथे । त्यसका चरणहरू चार सय कोश भू-भागमा फैलिएका थिए । त्यस बेला त्यो दानव भुइँमा मुख फैलाएर बालकहरूको बाटो छेकेर सुत्यो । त्यसपछि भयभीत बालकहरू विह्वल हुँदै भगवान् श्रीगणेशको ध्यान र नामजप गर्न लागे । जसरी नदीहरू सागरभित्र समाहित हुन्छन् त्यसैगरी त्यस दानवले हेर्दाहेर्दै बालकहरूलाई आफ्नो पेटमा समाहित गरायो । पेटभित्र पुगेर पनि भ्रान्तिमा परेका ती बालकहरू आपसमा अनेक थरि कुराकानी गरिरहेका थिए ।।४३-४५।। तिनीहरूले भने - 'भगवान् मयूरेश कहाँ जानुभयो ? हामी कहाँ गइरहेका छौं ? हामीलाई दिशा पनि थाहा छैन । जहाँसुकै अन्धकार छ र हाम्रा घर देखिंदैनन् । हाम्रा इन्द्रियहरूको स्वामी मन हो । मनलाई त श्रीगणेशले नै लिएर जानुभयो । विना मन हामी के कुरा थाहा पाउन सक्छौं? हाम्रा माता-पिता कहाँ हुनुहुन्छ ? हाम्रा स्वामी श्रीगणेश कहाँ हुनुहुन्छ ?' बालकहरूले यसरी चिन्ता गरिरहेको समयमा सबैका मनका कुरा जान्नुहुने अन्तर्यामी मयूरेश भगवान् श्रीगणेश आफ्ना चार बाहुमा चार प्रकारका आयुध धारण गरेर ती बालकहरूका सामु प्रकट हुनुभयो ।

**श्रीगणेशले भन्नुभयो**- 'ए बालकहरू! तिमीहरू चिन्ता नगर । तिमीहरूको दुःख देखेर म तीव्र गतिमा यहाँ आइपुगेको छु' ।।४६-४९।। ती बालकहरूले भगासुर दानवको पेटमा बसेर कुरा हामी गरिरहेका छौं भन्ने समेत थाहा पाएका थिएनन् ।

क उवाच

निद्रया मोहयामास मुनिपुत्रान् गुणेश्वरः ।।५०।।

दैत्यदेहान्तरगतो ववृधे वामनो यथा ।

विपाट्य देहं तस्याशु शकले द्वे व्यधाद् विभुः ।।५१।।

ततोऽस्तमित आदित्ये नागतेष्वर्भकेषु च ।

मातरः पितरश्चैव चिन्तामापुः शुचान्विताः ।।५२।।

ऊचुः परस्परं ते तु शिवापुत्रो महाबलः ।

बालान् नीत्वा गतः कुत्र मृतो वा शिशुभिः सह ।।५३।।

जीवँश्चेदागतः स स्यात् सायंकाले बुभुक्षितः ।

केचित् प्राणान् विना तैस्तु तत्यजुर्मातरोऽपि च ।।५४।।

केचिदूचुरुमायै तद् वृत्तं सर्वं निवेद्य ताम् ।

केचित् तेषु वनं याता बभ्रमुर्वनपर्वतान् ।।५५।।

नापुस्तञ्च स्वकान् बालान् खिन्नाः प्रापुर्गृहान् पुनः ।

नानाकोलाहलं चक्रुर्जनन्यः पितृसोदराः ।।५६।।

नेषामाक्रन्दितं श्रुत्वा कृपालुः स मयूरराट् ।

तत्तद्रूपं स्वमात्मानं तत्तद्भूषासमन्वितम् ।।५७।।

तत्तद्वासःपरीधानं तत्तच्छीलगुणान्वितम् ।

तत्तदङ्गं चकाराशु विवेशासौ गृहे ततः ।।५८।।

**ब्रह्माजीले भन्नुभयो** - भगवान् श्रीगणेशले ती मुनिपुत्रहरू आत्तिएलान् भनेर तिनलाई भगासुरको पेटभित्र नै निद्रामा पारी मोहित बनाउनुभयो ।।५०।। त्यसपछि दैत्यको शरीरभित्र रहेर भगवान् श्रीगणेश अघि आफ्नो शरीर विस्तार गरेर जसरी वामन भगवान्‌ले सम्पूर्ण पृथिवी र अन्तरिक्षलाई दुई पाइलाभित्र नाप्नुभएको थियो त्यसैगरी बढ्न थाल्नुभयो। त्यस दानवको शरीरलाई च्याती दुई टुक्रा बनाएर त्यहाँबाट बाहिर आउनुभयो। भगवान् बाहिर आउनुहुँदा सूर्य अस्ताउन लागिरहेका थिए । उता बालकहरूका पिता हाम्रा बालकहरू घर आएनन् भनेर शोकले सन्तप्त भए। ती माता-पिताहरूले आपसमा भने- 'पार्वतीका पुत्र महाबली श्रीगणेशले हाम्रा बालकहरूलाई कहाँ पुऱ्याए? ती बालकहरू कहीं गएर खेल्दाखेल्दै मृत्युको मुखमा परे कि ?।।५१-५३।। यदि बाँचेका रहेछन् भने भोकले सताएपछि मात्र राति घरमा आउनेछन्।' यस्तै कुरा गरिरहेका माता-पिताहरूमध्ये केहीले सूर्य अस्त हुने बेलासम्म आफ्ना बालकलाई नआएको देखेर शोकसन्तप्त भई पुत्र ! पुत्र ! भन्दै प्राणत्याग गरे । केही माता-पिताहरूले भगवती पार्वतीलाई आफ्ना छोराहरू हराएको जानकारी गराए। केही माता-पिताहरू वन र पर्वतमा बालकहरू खोज्न भनी आफै गए, तर कहीं पनि आफ्ना बालकहरू नदेखेर खिन्न भई घरतर्फ फर्के । अनेक माता, अनेक पिता र अनेक दाजुभाइ ती बालकहरू घर नआएको कष्ट र चिन्ताले ठूलो कोलाहल गर्न थाले ।।५४-५६।। ती सबै बाबु-आमाका क्रन्दनपूर्ण विलाप सुनेर दयालु भगवान् श्रीगणेशले घर-घरमा आफ्नो आत्मा फैलाइदिनुभयो । प्रत्येक घरका हराएका बच्चाका रूपमा आफू प्रकट हुनुभयो । सबैले हाम्रा बालक आए भन्ने ठाने, तर त्यहाँ भगवान्‌ले आफ्नो मायाको शक्तिबाट नयाँ बालकहरूको निर्माण गर्नुभएको थियो । ती बालकहरू जस्तो लुगा लगाउँथे त्यस्तै लुगा भगवान्‌ले निर्माण गर्नुभएका बालकहरूले पनि लगाएका थिए । हराएका बालकहरूको जस्तो पहिरन थियो त्यस्तै पहिरन भगवान्‌को मायाबाट प्रकट भएका बालकहरूको पनि थियो। हराएका बालकको जस्तो शीलस्वभाव थियो त्यस्तै प्रकट भएका बालकहरूको पनि शीलस्वभाव थियो । ती ती उमेर, अवस्था, ती ती वेषभूषा र ती ती मान एवं स्वाभिमानले सम्पन्न नयाँ बालकहरूको निर्माण गरेर भगवान् श्रीगणेश

कृत्वा तत्तद्वयोवेषं तत्तन्मानयुतं शुभम् ।
जनन्यस्ताः समुत्थाय बालानादाय सत्वराः ।।५९।।

स्तनपानं ददुः प्रीत्या परमानन्दनिर्भराः ।
ततो ददृशिरे बालाः पितृभिर्मातृभिस्तदा ।।६०।।

ता ऊचुः क्व स्थिता रोषादुषःकाले गताः कुतः ।
न स्नानं न च भुक्तं वा न चान्यद् वापि भक्षितम् ।।६१।।

मयूरेश्वरसङ्गेन नेदानीं गन्तुमर्हथ ।

क उवाच

एवं शिक्षाप्य तान् बालानालिङ्ग्य बुभुजुः सुखम् ।।६२।।

शिवाऽपि पुरतोऽपश्यन्मयूरेशं समागतम् ।
आलिङ्ग्य परिपप्रच्छ किं भुक्तं वनगोचरे ।।६३।।

त्वद्वियोगजदुःखेन मया किञ्चिन्न भक्षितम् ।
स्तनौ पिब पयोवृद्धौ भोजनञ्च समाचर ।
ततः सर्वं चकाराऽसौ मातृवाक्यं गुणेश्वरः ।।६४।।

आफ्नो धामतर्फ लाग्नुभयो ।।५७-५८।। आफ्ना हराएका बालकजस्तै बालकहरूको उपस्थितिका कारण कुनै पनि माता-पिताले यी बालक हाम्रा होइनन् भनी सन्देह गरेनन् । प्रत्येक माता र प्रत्येक पिता प्रसन्न भएका थिए । आमाहरूले आ-आफ्ना बालकलाई काखमा राखी दूध चुसाएर आनन्दको समुद्रमा डुबुल्की मार्न थाले । त्यस बेला बालकहरूलाई सम्बोधन गर्दै आमाबाबुहरूले भने - 'कहाँ गएका थियौ ? किन रिसाएका थियौ? बिहान गएर किन यति बेला आएका छौ ? तिमीले नुहाएका छैनौ र खाजा पनि खाएका छैनौ ? ।।५९-६१।। पार्वतीका छोरा गणेशको सङ्गतमा लागेर तिमीहरू पनि बिग्रियौ । अब तिनका साथ लागेर जान हुँदैन ।'

**ब्रह्माजीले भन्नुभयो-** यसरी उपदेश दिएपछि माता-पिताहरूले बालकहरूलाई आलिङ्गन गरी आनन्दपूर्वक भोजन गर्ने र गराउने काम गरे । पार्वतीले पनि आफ्नासामु आएका श्रीगणेशलाई देखेर आलिङ्गन गरी सोध्नुभयो - 'हे बाबु श्रीगणेश ! वनमा के खायौ? तिमी घरबाट गएर यति बेलासम्म नआउँदा म पीरमा परेकी थिएँ। आज मैले पनि केही खाएकी छैन । अब मेरा दूधले परिपूर्ण भएका स्तनहरू चुस्ने काम गर र त्यसपछि भोजन गर्नेछौं।' यसरी आमा पार्वतीबाट आज्ञा प्राप्त गर्नुभएका भगवान् श्रीगणेशले आफ्नी आमाले उपदेश दिएअनुसार सबै काम सम्पन्न गर्नुभयो।।६२-६४।।

ॐ

**इति श्रीगणेशपुराणे क्रीडाखण्डे मयूरेशपातालप्रयाणं नाम नवनवतितमोऽध्यायः**

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'नागकन्याहरूका साथ मयूरेश श्रीगणेशको पातालयात्रा' शीर्षकान्वित उनान्सयौं अध्याय पूर्ण भयो ।।९९।।

ॐ

## शततमोऽध्याय:

क उवाच

अनेकरूपवान् देवो मयूरेशोऽखिलेश्वर: ।
अतिसुन्दरदेह: सन्नागकन्याभिराहृत: ।।१।।

गृहं स्वकीयं क्रीडार्थं पूजितो बहुविस्तरात् ।
सुगन्धतैलोद्वर्तनै: स्नाप्योष्णैरपि तं जलै: ।।२।।

दिव्यवस्त्रैरलङ्कारैश्चन्दनैरपि पूज्य च ।
धूपदीपैश्च नैवेद्यै: फलताम्बूलकाञ्चनै: ।।३।।

ऊचु: करपुटं बद्ध्वा वयं धन्यतमा विभो !
यद् दृष्टन्ते पदं देव ! ब्रह्माद्यैरपि काङ्क्षितम् ।।४।।

नागलोको धन्यतमो जीवितं न: सुजीवितम् ।
आनन्दहृदमग्नं नो मानसं तापमप्यजत् ।।५।।

यद्यत्ते ईप्सितं देव ! तत्तदत्रापि गृह्यताम् ।
अत्र स्थित्वा कति दिनं पश्चात् त्वं गन्तुमर्हसि ।।६।।

मयूरेश उवाच

वाञ्छितं वो विधास्येऽहं गिरिजा मां प्रतीक्षते ।
मद्वियोगेन तप्ता सा न भक्षयति किञ्चन ।।७।।

यूयं कस्यात्मजास्तस्य दर्शनं चेद् भवेन्मम ।

क उवाच

तत ऊचुर्नागकन्या वासुके: पुत्रिका वयम् ।।८।।

ब्रह्माद्या मुनयो देवा यान्ति यस्य गृहं सदा ।
यस्य विषभवा ज्वाला दहेत् त्रिभुवनं विभो ।।९।।

## { १०० अध्याय }

**ब्रह्माजीले भन्नुभयो** - अनेकरूपधारी र जगत्का स्वामी भगवान् मयूरेश अत्यन्त सुन्दर हुनुहुन्थ्यो। त्यस कारण नाग-कन्याहरूले उहाँलाई आफ्नो घरमा पुऱ्याएका थिए ।।१।। ती नागकन्याहरूले आफ्नो घरमा विहार गर्न भनेर श्रीगणेशलाई अनेक चेष्टाहरूद्वारा आकर्षण गर्दै भोजन र पानद्वारा सम्मान गरी ठूलो आदर गरे । उहाँलाई सुगन्धित तेल लगाइदिएर शरीरभरि चन्दनलेपन गरे । त्यसपछि तिनले तताएको पानीले उहाँलाई नुहाइदिए ।।२।। नागकन्याहरूले दिव्य वस्त्र, अलङ्कार र चन्दन चढाएर पूजा गरे । फल, पान, सुवर्ण, धूप, दीप र नैवेद्य टक्र्याएर सम्मान गरेपछि हात जोडेर भने - 'हामी आज धन्य भएका छौं । हे अन्तर्यामी श्रीगणेश ! हामीले ब्रह्मा आदि देवताहरूबाट पनि सदा दर्शन गर्न इच्छा गरिने हजुरका चरणकमलको दर्शन पाएका छौं।।३-४।। आज हजुर यहाँ आउनाले यो नागलोक धन्य भएको छ, हाम्रो जीवन सफल भएको छ र हामी आनन्दको तलाउमा डुबुल्की मारिरहेका छौं । हजुरको दर्शन पाएर हाम्रा मनका सन्ताप मेटिएका छन् ।।५।। हे श्रीगणेश! हजुरलाई जे चाहिन्छ त्यो सबै कुरा यहाँ छ । हजुरले खुसीसँग लिनुहोस् । यहाँ केही दिन बसेर फेरि हजुर जानुहुनेछ' ।।६।।

**मयूरेशले भन्नुभयो**- 'तपाईँहरूका मनका कुरा म पुऱ्याउनेछु । अहिले मेरी आमा पार्वतीले मेरो प्रतीक्षा गरिरहनुभएको छ । मेरो वियोगका कारण उहाँले केही पनि खानुभएको छैन।।७।। हे नागकन्याहरू! तपाईँहरू कसका छोरीहरू हुनुहुन्छ? के मैले तपाईँहरूका बुबाहरूको दर्शन पाउन सक्छु?'

**ब्रह्माजीले भन्नुभयो**- श्रीगणेशको प्रश्न सुनेर ती नाग-कन्याहरूले भने - 'हामी वासुकि नागका छोरीहरू हौं ।।८।। हाम्रा पिता वासुकिका घरमा ब्रह्मा आदि देवता र मुनिहरू पनि दर्शन गर्न आउँछन् । हे अन्तर्यामी ! वासुकिको विषज्वालाबाट स्वर्ग, मर्त्य र पाताल पनि डढ्न सक्छन् । हाम्रा पिता वासुकि प्रतापशाली हुनुहुन्छ ।।९।।'

क उवाच

इत्युक्त्वा तं पुरस्कृत्य पितरं प्रापुरङ्गनाः ।
रत्नसिंहासने दीप्ते तिष्ठन्तं पन्नगैर्युतम् ।।१०।।

सूर्यकोटिनिभं रत्नमालया शोभितं तदा ।
मूर्धस्थरत्नकिरणैर्भासयन्तं दिशोऽखिलाः ।
तं दृष्ट्वा वासुकिं देवो गर्वितं बलवत्तरम् ।।११।।

उड्डीय तत्फणासंस्थं मणिं जग्राह सत्वरम् ।
येन पातालविवरे नान्धकारोऽभवत् किल ।।१२।।

आन्दोलयामास शिरः कम्पयन् सप्त पर्वतान् ।
उदधीन् सप्त स्वर्गांश्च पातालानि रसातलम् ।।१३।।

हस्तेनैकेन तं गृह्य मयूरेशः स्वलीलया ।
वासुकिं निजकण्ठे तं बबन्ध सर्पभूषणः ।।१४।।

विख्यातः स्वर्गलोकेऽभूज्जगर्जानन्दतो विभुः ।
तद् गर्जितं समाकर्ण्य चुक्षुभे भुवनत्रयम् ।।१५।।

ततः सर्पगणाः शेषं नीतं वासुकिमब्रुवन् ।
स च क्रोधसमाविष्टो विस्तार्य निखिलान् फणान् ।।१६।।

विषाग्निमुत्सृजन् दग्धुं त्रैलोक्यमुपचक्रमे ।
उवाच कः क्षमो जेतुं मम बन्धुं तु वासुकिम् ।।१७।।

आवेशेन ययौ रोषाद् दावानल इव ज्वलन् ।
शीघ्रं यातो मयूरेशं तिष्ठ तिष्ठेति चाब्रवीत् ।।१८।।

ततो नागकुलान्याशु तं शेषमन्वयुस्तदा ।
ततः पन्नगवृन्दं तं दृष्ट्वा देवो व्यतिष्ठत ।।१९।।

**ब्रह्माजीले भन्नुभयो-** त्यसपछि ती नागकन्याहरूले श्रीगणेशलाई अगाडि लगाएर आफ्ना पिता वासुकिसमक्ष पुऱ्याए । त्यस बेला वासुकि नाग रत्नको सिंहासनमा नागहरूले घेरिएर बसेका थिए।।१०।। वासुकिको अनुहार करोडौं सूर्यभन्दा पनि चहकिलो थियो। ती रत्नको माला लगाएर सुहाएका थिए। वासुकिको टाउकामा राखिएका रत्नहरूको किरणहरूबाट सम्पूर्ण दिशाहरू प्रकाशमान थिए । भगवान् श्रीगणेशले आफ्नो बलबाट गर्वित र ऐश्वर्यका कारण अत्यन्त उन्मत्त बनेका वासुकिलाई देख्नुभयो।।११।। त्यसपछि भगवान् श्रीगणेश वेगपूर्वक वासुकिको शरीर स्पर्श गर्न जानुभयो र तिनको फणामा टल्किएको मणिलाई तान्नुभयो। वासुकिको फणामा रहेको मणिको प्रकाशले सम्पूर्ण पाताललोक प्रकाशित हुने गर्छ र त्यहाँ कहिल्यै पनि अन्धकार हुँदैन ।।१२।। यसरी भगवान्ले वासुकिको मणि तानेपछि त्यहाँ अन्धकार फैलियो। वासुकि रीसले काँप्न थाले । उनले शिर कपाउँदा सप्त कुलाचलहरू थर्कमान भए। सातै सागर आफ्नो ठाउँमा रहेनन् । सातै स्वर्गमा भूकम्प गयो। पाताल, रसातल आदि सबै लोकहरू क्षुब्ध भए। मयूरेश श्रीगणेशले आफ्नो मायाबाट एउटा हातले वासुकिलाई समाएर आफ्नो घाँटीमा बेरी सर्पभूषण बनेर सुहाउनुभयो।।१३-१४।। स्वर्गमा पनि विख्यात भएका वासुकिलाई आफ्नो घाँटीमा बेर्न पाउँदा भगवान् श्रीगणेश आनन्दले गर्जन गर्न थाल्नुभयो। भगवान्को गर्जन सुनेर स्वर्ग, मर्त्य र पाताल कम्पायमान भए । भगवान् श्रीगणेश पनि वासुकिलाई लिएर प्रस्थान गर्नुभयो । त्यसपछि पातालमा रहेका सर्पहरूले शेषनागसँग गएर श्रीगणेशले आई वासुकिलाई जबर्जस्ती आफ्नो घाँटीमा बेरेर लगेको घटना सुनाए । त्यो कुरा सुनेर शेषनागले अत्यन्त क्रुद्ध भई आफ्ना हजारौं फणा फैलाए ।।१५-१६।। शेषनागले फणाहरूबाट विषको आगो ओकल्दै स्वर्ग, मर्त्य र पाताललाई डढाउन थाले । शेषनागले भने – 'म हुँदाहुँदै मेरा बन्धु वासुकिलाई कसले जित्न सक्छ ?' यसरी आवेशमा आएका ती शेषनाग क्रोधले वनको डढेलोझैं ज्वालामय हुँदै छिट्टै भगवान् श्रीगणेश भएको ठाउँमा पुगे । शेषनागले भने – 'हे श्रीगणेश ! तिमी पर्ख, पर्ख ।' शेषनाग दौडिरहेका थिए र तिनका पछि हजारौं नागहरू रहेका थिए। आफ्ना पछिपछि आएका शेषनाग र तिनका अनुयायी सर्पहरूलाई देखेर भगवान् केही बेर उभिनुभयो ।।१७-१९।।

शिखण्डिमस्तके हस्तं न्यधाद् युद्धाय पन्नगैः ।
स ययौ तं नमस्कृत्य ग्रसन्निव महाद्भुतः ।।२०।।

दुधाव पक्षौ तद्वाताद् भ्रामयन् भुजगोत्तमान् ।
काँश्चित् स भक्षयामास चुचूर्ण चापरानपि ।।२१।।

मारयामास काँश्चित् स भुजगान् बलवत्तरान् ।
निरीक्ष्य तं मृताः केचित् पन्नगा भयविह्वलाः ।।२२।।

दृष्ट्वा पराक्रमं तस्य शेषः श्वासमपासृजत् ।
शिखण्डी पतितस्तेन मूर्च्छितो धरणीतले ।।२३।।

मयूरेशं ततः शेषो ययौ क्रोधाद् दहन्निव ।
त्रैलोक्यं विषवह्निस्थं समालोक्य गुणेश्वरः ।।२४।।

विराड्रूपं समास्थाय रुरोह तत्फणोपरि ।
उड्डीय बालभावेन गर्जन् मेघ इवापरः ।।२५।।

ननर्त करतालेन पादाघातेन मर्दयन् ।
अनन्तकोटिब्रह्माण्डभारेण परिपीडितः ।।२६।।

एकब्रह्माण्डवाही स कथं तद्भारमावहेत् ।
बबन्ध शेषं हि कटौ रज्जुं बालो यथा रमन् ।।२७।।

ततस्ते भुजगाः सर्वे योद्धुकामास्तमन्वयुः ।

शेष उवाच

हुङ्कारेणैव तान् सर्वान् पातयामास विघ्नराट् ।।२८।।

अवध्नान्मस्तके काँश्चित् काँश्चिच्च कर्णयोर्विभुः ।
परिश्रान्तस्तदा शेषस्तं नुनाव गुणेश्वरम् ।।२९।।

श्रीगणेश मयूरको शिरमा हात राखेर सर्पहरूसँग युद्ध गर्नका लागि तयार हुनुभयो । मयूरले श्रीगणेशसँग म युद्ध गर्न जान्छु भनेपछि भगवान्ले आज्ञा दिनुभयो र मयूर पनि संसारै निल्ने किसिमको रीस देखाउँदै अद्भुत पराक्रमका साथ दौडिए । मयूरका प्वाँखहरूको तीव्र हावा चल्दा सारा सर्पहरू आकाशमा नाच्न थाले । केही सर्पहरूलाई मयूरले खाइदिए । केही सर्पहरूलाई तिनले टुक्रा-टुक्रा पारेर फ्याँकिदिए । केही बलवान् भनाउँदा सर्पहरूलाई तिनले आफ्नो अद्भुत शक्तिको प्रयोग गरेर मारिदिए। केही सर्प त मयूरलाई देख्नेबित्तिकै मरे । केही सर्पहरू अत्यन्त व्याकुल भए । मयूरको पराक्रम देखेर शेषनागले पनि पीरले लामो सास फेर्न थाले । शेषनागको लामो सासको वेगमा परेका मयूर भुईँमा लडेर मूर्च्छित भए ।।२०-२३।। त्यसपछि शेषनाग क्रोधको ज्वाला दन्काउँदै भगवान् श्रीगणेशका सामु आइपुगे । श्रीगणेशले पनि तीनै लोकलाई सर्पको विषको आगोले डढाउन थालेको देखेर विराट् रूप लिनुभयो र बादलझैं गर्जदै बालक स्वभावले शेषको फणामा टेकी आकाशमा उफ्रिदै आफ्ना पाउको आघातले शेषनागका फणामा प्रहार गरेर हातले ताली बजाउँदै नाच्न थाल्नुभयो। अनन्तकोटि ब्रह्माण्डका धर्ता भगवान् श्रीगणेशको भारका कारण शेषनाग अत्यन्त पीडित भए ।।२४-२६।। कहाँ एउटा ब्रह्माण्डलाई धारण गर्ने शेषनाग ? कहाँ अनन्तब्रह्माण्डलाई धारण गर्ने भगवान् श्रीगणेश ? यी दुईको तुलना हुन सक्दैन। श्रीगणेशको भार धारण गर्न नसकी शेषनाग आत्तिए । कुनै बालकले भुईंको डोरी समातेर आफ्नो शरीरमा बेरेझैं भगवान् श्रीगणेशले पनि शेषनागलाई तानेर कन्धनी बनाई कम्मरमा बाँध्नुभयो ।।२७।। त्यसपछि युद्ध गर्न चाहने सर्पहरू पनि भगवान् श्रीगणेशका पछि लागे।

**शेषनागले भने** - भगवान्ले एउटा हुङ्कार गर्नासाथ ती सबै डढेर खरानी भए।।२८।। श्रीगणेशले केही सर्पहरूलाई समातेर टाउकामा बाँध्नुभयो र केही सर्पहरूलाई कानमा झुण्ड्याउनुभयो । भगवान्को भारले च्यापिएका शेषनाग आत्तिएर अपराधबोध गरी उहाँको स्तुति गर्न लागे ।।२९।।

न स्वरूपं विदुर्देवा ब्रह्माद्या मुनयोऽपि च ।
त्वमेव सृजसे विश्वं पासि हंसि त्वमेव हि ।।३०।।

नानावतारकर्ता त्वं नानादैत्यविमर्दनः ।
त्वमेव साक्षी सर्वस्य सर्वान्तर्यामितां दधत् ।।३१।।

सर्वत्र कारणं त्वं हि कारणानाञ्च कारणम् ।
अज्ञानादभिमानाच्च योद्धुकामान् क्षमस्व नः ।।३२।।

क उवाच

सम्पातिश्च जटायुश्च श्येनमानीय सर्पराट् ।
निवेद्य च नमस्कृत्य शेषस्तूष्णीं बभूव ह ।।३३।।

तेऽपि तं प्रणिपत्याहुर्दीननाथप्रसादतः ।
बन्धान्मुक्ताः सर्पकृतान्नमस्ते परमेश्वर ।।३४।।

क उवाच

एवमुक्त्वा मयूरेशं बन्धुन्तं शिखिनं त्रयः ।
आलिलिङ्गुर्मुदा युक्तास्तदा गद्गदभाषिणः ।।३५।।

पप्रच्छुः कुशलं मात्रे ते च क्षेममथाब्रुवन् ।
ततः शिखण्डिनं सोऽथ रुरोह गणनायकः ।।३६।।

पातालाद् धरणीं प्रायात् स्त्रीभिश्च संयुतो वशी ।
भगासुरं ददर्शार्द्धमार्गे शिशुहरञ्च तम् ।।३७।।

उद्यम्य परशुं दीप्तं शशिसूर्यनिभं विभुः ।
तत्याज कण्ठे तं तस्य पशुमारममारयत् ।।३८।।

तच्छिरः परिबभ्राम शृङ्गं वज्राहतं यथा ।
ततस्तदुत्थिता बाला योगमायाविमोहिताः ।।३९।।

'हे भगवन् श्रीगणेश ! ब्रह्मा आदि देवता र मुनिहरूले पनि हजुरको महिमा बुझेका छैनन् । हजुरले नै विश्वको सृष्टि, पालन र संहार गर्नुहुन्छ ।।३०।। हजुर नै दैत्यहरूका नाशक हुनुहुन्छ र अनेक प्रकारका अवतार धारण गर्ने, अनेक दैत्यहरूको संहार गर्ने अनन्त शक्तिका स्वामी पनि हुनुहुन्छ । हजुर सबैका साक्षी हुनुहुन्छ र अन्तर्यामी परमात्मा पनि हुनुहुन्छ। हजुर प्रत्येक कार्यका कारण हुनुहुन्छ र कारणहरूका पनि कारण हुनुहुन्छ। अज्ञान र अभिमानले गर्दा हामी लड्न आयौं। हामीबाट ठूलो अपराध भएको छ । हे प्रभु ! हाम्रा अपराधलाई ख्याल नगरी क्षमा प्रदान गर्नुहोस्' ।।३१-३२।।

**ब्रह्माजीले भन्नुभयो** – त्यस बेला सर्पराज शेषनागले आफूले थुनेका सम्पाति, जटायु र श्येननामक सर्पराजहरूलाई भगवान् श्रीगणेशका सामु टक्र्याए, नमस्कार गरे अनि मौन भएर उभिए । ती पक्षिराजहरूले पनि भगवान्लाई प्रणाम गर्दै भने – 'हे दीनबन्धु भगवन् ! हजुर परमेश्वर हुनुहुन्छ । हजुरले हामीलाई सर्पको बन्धनबाट मुक्त गराउनुभएको छ । हजुरलाई बारबार प्रणाम गर्दछौं' ।।३३-३४।।

**ब्रह्माजीले भन्नुभयो** – यसरी भगवान्लाई आफ्ना भावहरू सुनाएपछि ती पक्षिराजहरूले आफ्ना बन्धु मयूरलाई आलिङ्गन गरे अनि खुसीले गद्गद वाणीबाट आफ्नी आमा विनताको सञ्चो-बिसञ्चो पनि सोधे । कुशल समाचारको आदान-प्रदानपछि भगवान् श्रीगणेश मयूरमा सवार हुनुभयो र पातालबाट अनेक सुन्दरीहरूका साथ पृथिवीका लागि प्रस्थान गर्नुभयो । बाटामा उहाँले बालकहरूको अपहरण गर्ने भगासुरनामक दैत्यलाई देख्नुभयो ।।३५-३७।। भगासुरलाई देखेपछि उहाँले सूर्य र चन्द्रमाझैं चम्किलो बञ्चरो उठाएर त्यसको घाँटीमा प्रहार गर्नुभयो । बञ्चराको प्रहारबाट भगासुरले पशुसमान मृत्युवरण गर्‍यो । देवराज इन्द्रको वज्रबाट प्रहार गरिंदा पर्वतका चुचुराहरू चारैतिर घुमेझैं भगासुरको शिर पनि काटिएर चारैतिर घुम्न थाल्यो । यसरी भगासुरको मृत्युपछि त्यसको पेटमा थुनिएका र योगमायाबाट मोहित भएका बालकहरू हाम्रा प्राणनाथ मयूरेश प्रभु कहाँ हुनुहुन्छ भन्दै चिच्याउन थाले । तिनले त्यहाँ बस्दा, खाँदा, खेल्दा, निदाउँदा र जाग्दा पनि

मयूरेशः क्व चास्तीति प्राक्रोशन् सर्व एव ते ।
आसने क्रीडने स्वापे जागृतौ भोजनेऽपि च ।।४०।।

तमेव ध्यायमानास्ते तन्मुखाद् बहिराययुः ।
गर्भवासादिवोत्तीर्णा ददृशुस्तं गुणेश्वरम् ।।४१।।

दृष्ट्वा ते रुरुदुः स्नेहादालिलिङ्गुर्मुदाऽखिलाः ।

ते ऊचु

त्यक्त्वाऽस्मान् दैत्यजठरे मृतान् क्वास्ति गतो भवान्।।४२।।
त्वत्स्मृतेस्तस्य जठरे जीविता निर्गतास्ततः ।

मयूरेश उवाच

सर्वव्यापी सर्वगतः सर्ववेत्ताऽखिलेश्वरः ।।४३।।
न त्यक्तवान् कदाचिद् वो मा चिन्तां कर्तुमर्हथ ।

क उवाच

ततो ययौ मयूरेशो बालकैः परिवेष्टितः ।।४४।।

केचिद् धावन्ति पुरतो नानाशब्दकरा भृशम् ।
केचिच्छत्रधराः केचिद् दण्डचामरधारिणः ।।४५।।

धूलिध्वजं समालोक्य ययुर्मुनिगणा बहिः ।
शिख्यारूढं मयूरेशं बालकैः परिवेष्टितम् ।।४६।।

ऊचुः परस्परं सर्वे मुनयो विस्मयान्विताः ।
गृहेऽस्मिन् शिशवश्चामी कुतोऽन्येऽस्य समीपतः ।।४७।।

ताँश्च तान् मीलिताः सर्वेऽपश्यन् ते देवरूपिणः ।
विचारेण च तान् सर्वे परब्रह्मस्वरूपिणः ।।४८।।

आनन्दह्रदमग्नास्तो न विदुः स्वपरं पुनः ।
नापश्यँस्ते पुनस्ताँस्तान् भ्रान्ता इव व्यलोकयन् ।।४९।।

श्रीगणेशकै ध्यान गरेका थिए। अहिले भगवान् गणेशको कृपाले ती सबै भगासुरको मुखबाट बाहिर आए, जसरी कुनै बालकले आमाको गर्भबाट बाहिर आएर चराचरमय दृश्य देख्दछ त्यसैगरी तिनीहरूले पनि भगवान् श्रीगणेशको दर्शन पाए ।।३८-४१।। भगवान्को दर्शन प्राप्त भएपछि प्रेमले व्याकुल भएका ती बालकले रुँदै भगवान् श्रीगणेशलाई आलिङ्गन गरे ।

**बालकहरूले भने** – 'हामीलाई भगासुर दैत्यको पेटभित्र छाडेर मरेजस्तो गराई हजुर कहाँ जानुभएको थियो ? ।।४२।। हामीले त्यहाँ रहँदा हजुरकै ध्यान गर्‍यौं र बाँच्न सक्यौं । अहिले हामी भगासुरको पेटबाट बाहिर आएका छौं ।'

**श्रीगणेशले भन्नुभयो** – 'सर्वव्यापी, सर्वत्र जान सक्ने, सबै कुरा जान्ने र सकल संसारको स्वामी मैले तिमीहरूलाई कहिले पनि छाडेको छैन र छाड्ने पनि छैन । तसर्थ तिमीहरूले चिन्ता नगर ।'

**ब्रह्माजीले भन्नुभयो** – यसरी बालकहरूलाई संझाएपछि भगवान् श्रीगणेशले तिनीहरूका साथ घर जानका लागि प्रस्थान गर्नुभयो ।।४३-४४।। प्रसन्न भएका ती बालकहरूमध्ये केही दौडिरहेका थिए र मुखबाट अनेक आनन्दव्यञ्जक शब्दहरू निकालिरहेका थिए । केही बालकहरूले छाता लिएका थिए भने केही बालकले आफ्ना हातमा दण्ड र चामर धारण गरेका थिए । मयूरमा सवार भई धूलैधूलोले ढाकिनुभएका र बालकहरूले घेरिनुभएका भगवान्लाई देखेर मुनिहरू आ-आफ्नो आश्रमबाट बाहिर आए । भगवान्को स्वरूप देखेर चकित भएका ती मुनिहरूले आपसमा कुरा गरे – 'हाम्रा बालकहरू घरमा छन्, फेरि श्रीगणेशका साथमा पनि हाम्रा बालकजस्तै बालकहरू आइरहेका छन्, यो कसरी भयो ?' त्यसपछि सबैले आफ्ना बालकहरूलाई र श्रीगणेशका साथमा आएका बालकहरूलाई नियालेर हेरे । तिनीहरूमा कत्ति पनि अन्तर देखेनन् । त्यसपछि आँखा चिम्लिएर चिन्तन गरे । चिन्तन गर्दा ती ऋषिहरूले आ-आफ्ना घरमा रहेका बालकहरू परमात्मा श्रीगणेशकै स्वरूप हुन् भन्ने कुरा निधो गरे ।।४५-४८।। आनन्दको तलाउमा डुबेका ती सबैले परब्रह्मको रूपमा रहेका श्रीगणेशको माया जानेर आँखा खोलेर हेर्दा आफ्ना बालकहरूलाई

मायया मोहिताः सर्वे स्वान् स्वान् बालान् व्यलोकयन्।
कश्चित् पितरमासाद्य पठति स्म यथा पुरा ।।५०।।

कश्चिन्मातरमासाद्य पिबति स्म स्तनं मुदा ।
आलिलिङ्गाथ जननीं पितरं वापि कश्चन ।।५१।।

भ्रातरं ताडयित्वाऽन्यो रुरोद ताडनादिव ।
उमापि तनयं दृष्ट्वाऽऽलिङ्ग्य प्रादात् स्तनं मुदा ।।५२।।

कथञ्चिरतरं यात इति क्रोधादभाषत ।
आदाय हस्ते गिरिजा मयूरेशं गृहं ययौ ।।५३।।

सर्वे ते मुनयो जग्मुः शिशुभिः स्वं स्वमाश्रमम् ।।५४।।

मात्र देखे, अरू केही पनि देखेनन्। भ्रान्तिमा परी चारैतिर हेरे। वास्तवमा ती सबै ऋषिहरू श्रीगणेशको मायाले मोहित भइसकेका थिए । कुनै बालकले आफ्ना बाबुलाई भेटेर पहिलेजस्तै पढ्न थाले । कुनै बालकले आफ्नी आमालाई भेटेर पहिलेजस्तै स्तनपान गर्न थाले । कुनै बालकले बाबु-आमा दुबैलाई आलिङ्गन गर्न थाले । कुनै बालकले आफ्ना भाइबहिनीलाई पिट्न थाले। कुनै बालक अरूले पिटेको कुरा आफ्ना माता-पितालाई सुनाई रुन थाले । उता श्रीगणेश पनि आफ्नो धाममा पुग्नुभयो । पार्वतीले आफ्नो छोरालाई आएको देखेर आलिङ्गन गर्दै स्तनपान गराउनुभयो र ढिलो आएकोमा रीसले गाली पनि गर्नुभयो । केही बेरपछि छोरालाई हातमा समातेर घरभित्र पस्नुभयो । सबै मुनिहरू पनि आ-आफ्ना बालकहरूका साथ आश्रमतर्फ लागे।।४९-५४।।

ॐ

**इति श्रीगणेशपुराणे क्रीडाखण्डे भगासुरवधो नाम शततमोऽध्यायः**

सतीशिरोमणि माताश्री दिव्यलक्ष्मी र सज्जनमुकुटमणि पिताश्री चूडामणि ढकालका सुपुत्र पाल्पा पोरकनी निवासी प्रा.डा. वेणीमाधव ढकालद्वारा परमकरुणामयी भगवती त्रिशक्तिको ऊर्जस्वल अभिप्रेरणा र अमोघ आशीर्वादबाट नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'श्रीगणेशद्वारा भगासुरवध' शीर्षकान्वित सयौं अध्याय पूर्ण भयो ।।१००।।

ॐ

# एकोत्तरशततमोऽध्याय: { १०१ अध्याय }

क उवाच

ततस्तु दशमे वर्षे सुखासीनं महेश्वरम् ।
गिरिजासहितं वामे सप्तकोटिगणान्वितम् ।।१।।
नृत्यन्तं तं मयूरेशं पश्यन्तं स्वाङ्गणे शिशुम् ।
आययुर्मुनय: सर्वे गौतमाद्या: प्रणम्य तम् ।।२।।
ऊचु: प्रवुद्धमतयो महादेवं महौजसम् ।
यावत्कालं शिवात्र त्वं मयूरेशसमन्वित: ।।३।।
स्थितोऽसि तावद् दैत्यानामनन्तानां समागम: ।
वयं तेन प्रपीड्यामोऽन्यत्र याहि शिवाधुना ।।४।।
वयं वाऽन्यत्र गच्छामो यद्याज्ञा ते भवेद्धर !

शिव उवाच

भवत्सङ्गेन च मया नववर्षाणि सौख्यत: ।।५।।
अतिक्रान्तानि विघ्नानि मयूरेशेन तानि च ।
भवतां गमनेऽस्माकं स्थित्वा किन्नु प्रयोजनम् ।।६।।
अहमेव प्रयास्यामि स्थलमन्यन्निराकुलम् ।

क उवाच

इति शम्भुवच: श्रुत्वा मुनयस्तं प्रणम्य ते ।।७।।
जय देव मयूरेशेत्युक्त्वा स्वस्थानमाययु: ।
शिवोऽपि गणसंयुक्तो वृषारूढोऽम्बिकायुत: ।।८।।
बर्हारूढं मयूरेशं पुरस्कृत्य मुदाऽन्वित: ।
नानावादित्रनिर्घोषैर्नादयन् विष्टपं तत: ।।९।।
अन्वयुर्मुनय: सर्वे मयूरेशं शिवान्वितम् ।
अन्योऽपि बालकै: सार्द्धं स्नेहगद्गदभाषिभि: ।।१०।।
रजसा व्योमनि तते न प्राज्ञायत किञ्चन ।
न्यावृत्य शिव: सर्वान् दक्षिणाभिमुखो ययौ ।।११।।
ददर्श मार्गमध्ये तं द्वादशाक्षौहिणीयुतम् ।
कमलासुरमायान्तं धूलिधूसरिताम्बरम् ।।१२।।

**ब्रह्माजीले भन्नुभयो** - मयूरेश गणपति दश वर्षको उमेरमा लाग्नुभएपछि बायाँ भागमा पार्वतीलाई लिएर सुखपूर्वक विराजमान हुनुभएका, सात करोड शिवगणले घेरिनुभएका र आँगनमा नाचिरहेका बालक श्रीगणेशलाई हेरिरहनुभएका भगवान् शिवजीका समीपमा गौतम आदि बुद्धिमान् मुनिहरू आई प्रणाम गरेर ओजपूर्वक भने - हे भगवन् ! जबसम्म तपाइँ यहाँ श्रीगणेशलाई लिएर बस्नुहुन्छ तबसम्म यहाँ असङ्ख्य दैत्यहरूको आवागमन र बिगबिगी भई नै रहन्छ । दैत्यहरूको यस्तो बिगबिगीबाट हामी तपस्वी ऋषिमुनिहरू साह्रै पीडित र खिन्न भएका छौं। हे शिवजी ! हजुर अन्यत्र जानुहोस् ।।१-४।। अथवा हजुरको आज्ञा हुन्छ भने हामी आफै अन्यत्र बसाइँ सर्छौं ।

**शिवजीले भन्नुभयो** - हे ऋषिगण ! तपाइँहरूको साथमा मैले नौ वर्ष सुखपूर्वक बिताएँ । आएका विघ्नजतिलाई मयूरेश श्रीगणेशले हटाइदिए । तपाइँहरू नै यस ठाउँबाट बाहिर जानुहुन्छ भने हामी बसेको कुनै सार हुँदैन ।।५-६।। बरु म आफै कुनै विघ्नरहित शान्त ठाउँमा जानेछु ।

**ब्रह्माजीले भन्नुभयो** - गौतम आदि ऋषिहरू भगवान् शिवजीका वचन सुनेर उहाँलाई प्रणाम गरी जय मयूरेश ! भन्दै आ-आफ्नो आश्रममा गए । भगवान् शिवजी पनि पार्वतीका साथ साँढेमा सवार भई आफ्ना गणहरूलाई लिएर मयूरमा सवार श्रीगणेशलाई अगाडि लगाई हर्षपूर्वक अनेक वाद्यघोषका साथ स्वर्गलाई पनि वाद्यध्वनिले ध्वनिमय तुल्याउँदै प्रस्थान गर्नुभयो। अनेक मुनिगण शिवजीद्वारा शोभायमान श्रीगणेशका पछि लागे । तिनका पत्नीहरू पनि प्रेमले गद्गद उच्चारण गर्ने आफ्ना बालबालिकालाई साथमा लिएर हिंडे । पृथिवीको धूलो आकाशमा फैलियो र कतै पनि केही देखिएन । भगवान् शिवजीले हिंडिरहेका सबैलाई उत्तरको बाटोबाट फर्काई दक्षिणाभिमुख भई प्रस्थान गर्नुभयो ।।७-११।। त्यस बेला शिवजीका साथमा रहेका सबै ऋषि-मुनिहरूले बाटोमा बाह्र अक्षौहिणीसेना लिएर आएको र सैनिकहरूको पदचापबाट निस्केको धूलाले ढाकिएको कमलासुरलाई देखे । त्यसका अगाडि-अगाडि

गजाश्च पुरतो यान्ति रथाश्वपादचारिणः ।
न ज्ञायते रवेस्तेजः शस्त्रदीप्त्याथ किञ्चन ।।१३।।
कोलाहलो महानासीद् गजाश्वरथपत्तिजः ।
नानाविधानां शस्त्राणां सङ्घट्टस्वनमिश्रितः ।।१४।।
ददृशुस्तं महादैत्यं शिवचाराः पुरो गताः ।
शङ्खासुरस्य तं बन्धुं नानाभूषाविराजितम् ।।१५।।
नानायुधधरं प्रोचुरागत्य तु शिवं गणाः ।
पादाघातेन तस्याशु कम्पन्ते कमठादयः ।।१६।।
मुनयोऽग्रेचराः पेतुर्भयभीतास्तमब्रुवन् ।
मयूरेश ! महाभाग ! कथं रक्षसि नोऽखिलान् ।।१७।।

क उवाच

इति तद्वचनं श्रुत्वा प्रावदत् स गुणेश्वरः ।
विद्यमाने शिवे चिन्ता न कार्या मुनिपुङ्गवाः ।।१८।।
मयूरेशो हरं प्राह नमस्कृत्य ततः पुनः ।

देव उवाच

महासेनायुतो दैत्यो नाम्नाऽसौ कमलासुरः ।।१९।।
यदि तेऽनुग्रहो मे स्याद् युद्धायाशु व्रजाम्यहम् ।

शिव उवाच

सम्यगुक्तं त्वया पुत्र ! हृदयानन्दनं वचः ।।२०।।
द्वादशाक्षौहिणीसेनायुतोऽसौ दैत्यपुङ्गवः ।
एकाकी कथमायासि सप्तकोटिगणैर्युतः ।।२१।।
व्रजाप्नुहि जयं शीघ्रं जहि शत्रुं महाबलम् ।

देव उवाच

तव प्रसादात् त्रैलोक्यं दहेयमिति मे मतिः ।।२२।।
कियन्तो न हता दैत्या न ज्ञातास्ते त्वया नु किम् ।
अस्य का गणना स्वामिन्नायास्ये जयवानहम् ।।२३।।

क उवाच

एवमाकर्ण्य तद्वाक्यं शम्भुरालिङ्ग्य तं ददौ ।
त्रिशूलं पुत्रहस्ते तन्मूर्ध्नि न्यस्य करं शुभम् ।।२४।।

हात्ती हिंडिरहेका थिए, हात्तीपछि रथ, रथपछि अश्वारोहीसेना र त्यसपछि पैदलसेना थिए। शस्त्रको कान्तिले गर्दा सूर्यको तेज पनि मन्द देखिन्थ्यो ।।१२-१३।। चतुरङ्गिणीसेनाको पादचारबाट त्यस क्षेत्रमा ठूलो कोलाहल मच्चियो । अगाडि गएका शिवजीका दूतहरूले अलङ्कारद्वारा अलङ्कृत र शस्त्र-अस्त्रले सुसज्जित शङ्खासुरको बन्धु कमलासुरलाई देखेको कुरा शिवजीलाई आएर बताए । त्यस बेला तिनले कमलासुरले पाउले टेक्दा पृथिवी धारण गर्ने कछुवा पनि कम्पायमान भइरहेका छन् भनी बताएका थिए ।।१४-१६।। यसरी भयभीत भएका ती देवताहरू भुइँमा लम्पसार परी श्रीगणेशको पाउ समातेर भन्न लागे – हे महाभाग मयूरेश ! हाम्रो रक्षा कसरी हुनसक्छ? जसरी भए पनि हजुरले हाम्रो रक्षा गर्नुहोस् । किनभने हजुरबाहेक हाम्रो अरू कुनै रक्षक छैन ।।१७।।

**ब्रह्माजीले भन्नुभयो** – मुनिहरूका वचन सुनेर भगवान् श्रीगणेशले भन्नुभयो – 'हे मुनिगण ! भगवान् शिवजी विराजमान हुनुभएसम्म तपाईंहरूले कुनै चिन्ता गर्नुपर्दैन ।' त्यसपछि भगवान् श्रीगणेशले शिवजीलाई प्रणाम गरेर निवेदन गर्नुभयो ।

**श्रीगणेशले भन्नुभयो** – हे भगवन् ! ठूलो सेनाद्वारा सुसज्जित कमलासुर दैत्य हाम्रा सामु आइरहेको छ । तपाईंको अनुग्रह हुन्छ भने म त्यो दैत्यसँग छिट्टै युद्ध गर्न जान्छु ।

**शिवजीले भन्नुभयो** – 'हे पुत्र श्रीगणेश ! तिमीले मेरो हृदयलाई आनन्दित गराउने कुरा गर्‍यौ । तर त्यो दैत्य बाह्र अक्षौहिणीसेनाले सम्पन्न छ, तिमी एक्लै गएर के गर्छौ ? ।।१८-२१।। सात कोटि शिवगण लिएर युद्ध गर्न जाऊ र त्यस महाबली दैत्यको छिटो वध गर ।'

**श्रीगणेशले भन्नुभयो** – 'हे प्रभु ! हजुरको कृपाबाट म तीनलोकलाई नै खरानी बनाउन सक्छु भन्ने मेरो अठोट छ । हजुरलाई थाहा नै छ, मैले कति दैत्यलाई मारें । यस कमलासुरलाई पनि म किन गन्छु ? हे प्रभु ! हजुरको कृपाले म युद्धमा विजयी भएर हजुरको दर्शन गर्न आउनेछु' ।।२२-२३।।

**ब्रह्माजीले भन्नुभयो** – श्रीगणेशका वचन सुनेर प्रसन्न हुनुभएका शिवजीले आलिङ्गन गरी उहाँका हातमा आफ्नो त्रिशूल राखिदिनुभयो । त्यसपछि शिरमा आफ्नो वरदहस्त

आज्ञां ददौ स्वपुत्राय गणयुक्ताय शङ्करः ।
क्ष्वेडितैर्जयशब्दैश्च नादयन् स दिशो दश ।।२५।।

प्रययौ प्रमथैर्युक्तो विघ्नहा युद्धलालसः ।
वृषारूढः शिवायुक्तो हरोऽपि द्रष्टुमन्वगात् ।।२६।।

दृष्ट्वाऽपारां दैत्यसेनां मयूरेशः शरीरतः ।
निर्ममे बहुलां सेनां ततो युद्धमवर्तत ।।२७।।

कालानुरूपास्ते वीरा ब्रह्माण्डाशनतत्पराः ।
मेरोरधिकमानास्ते शब्दतः शृङ्गपातिनः ।।२८।।

परस्परं निजघ्नुस्ते तुमुले संयुगे ततः ।
अन्धकारो महानासीद् रजसाच्छादिता दिशः ।।२९।।

विस्मयं चक्रिरे दैत्या इदानीमयमेकलः ।
अनेकतां कथं यातस्तस्मादेव परः पुमान् ।।३०।।

भूभारं हर्तुकामोऽयमवतीर्णः शिवालये ।
सोऽपि दीर्घतरं रूपं दधार सहसा विभुः ।।३१।।

दृष्ट्वा दीर्घं दैत्यरूपं योगमायासमावृतः ।
दशायुधधरो देवो दशहस्तो महाबलः ।।३२।।

मयूरेशश्च दैत्यश्च युध्यमानौ विरेजतुः ।
नानाशस्त्रप्रहरणैर्नानायुद्धविशारदैः ।।३३।।

व्यस्ताव्यस्तमयुध्यन्त गणाः सेनाचराश्च ते ।
मुष्टिप्रहारैर्दन्तैश्च शस्त्रास्त्रैरितरेतरम् ।।३४।।

केषाञ्चिन् मस्तका भग्ना अपरेषां मुखानि च ।
जानुजङ्घाविरहिता निपेतुरपरे रणे ।।३५।।

गर्जयन्तो दश दिशः शस्त्रास्त्रघातनिस्वनैः ।
स्वामिस्वनामतो जघ्नुरन्धकारे रजस्कृते ।।३६।।

राखेर गणसहित आफ्ना पुत्रलाई युद्ध गर्न आज्ञा दिनुभयो। कमलासुरसँग युद्ध गर्न चाहनुहुने भगवान् श्रीगणेश सिंहनाद र जय-जयकारद्वारा दसै दिशा घन्काउँदै आफ्ना वीर प्रमथगणका साथ युद्धमैदानतर्फ लाग्नुभयो । अब युद्ध हुनेछ, युद्धको दृश्य हेरौं ? भनी भगवान् शङ्कर पनि साँढेमा सवार भई पार्वतीलाई साथमा राखी त्यसतर्फ जानुभयो ।।२४-२६।। मयूरेश श्रीगणेशले अपार दैत्यसेना देखेर आफ्नो सङ्कल्पबाट असंख्य देवसेना निर्माण गर्नुभयो । त्यसपछि भयङ्कर सङ्ग्राम शुरु भयो ।।२७।। समयानुरूप शरीर भएका ती वीरहरू ब्रह्माण्डलाई खान तम्सिरहेका देखिन्थे । सुमेरुपर्वतभन्दा पनि विशाल आकार भएका ती श्रीगणेशका वीरहरूले शब्द गर्दा पर्वतका चुचुराहरू पनि थर्किएर भुइँमा खसिरहेका थिए।।२८।। त्यस घोर सङ्ग्राममा दुबै तर्फका वीरहरूले तुमुल युद्ध गरे । पृथिवीबाट उडेको धूलाले दसै दिशा ढाक्यो र अन्धकारको साम्राज्य भयो । दैत्यहरूले आश्चर्य मान्दै भने - 'यी श्रीगणेश त पहिले एक्लै देखिन्थे, अहिले अनेकरूपका भएका छन् । वास्तवमा यी परमपुरुष हुन् ।।२९-३०।। पृथिवीको भारहरण गर्न यी शिवजीको घरमा पैदा भएका छन् ।' त्यो शक्तिमान् कमलासुर दैत्यले पनि श्रीगणेशको अनन्त सेना देखेर अकस्मात् विशाल स्वरूप धारण गर्‍यो । त्यसको विशालता देखेर अन्तर्यामी भगवान् श्रीगणेश पनि महाबली र दशभुजाले सम्पन्न हुनुभयो र आफ्ना हातमा दश किसिमका आयुध धारण गर्नुभयो ।।३१-३२।। त्यसपछि मयूरेश श्रीगणेश र कमलासुर दैत्य परस्पर युद्ध गर्दै वीरभावले शोभायमान भए । श्रीगणेशका गण र दैत्यको सेना युद्धविशारद, वीर र तिनीहरूबाट भएको शस्त्रप्रहारलाई विचार गरी परस्परमा युद्ध गरिरहेका देखिए । त्यहाँ दुबै पक्षका वीरहरू मुड्की बजारेर, दन्तप्रहार गरेर र शस्त्र-अस्त्रको वर्षा गरेर भयङ्कर युद्ध गरिरहेका देखिन्थे । यस युद्धमा कुनै वीरका टाउका फुटे, कसैका अनुहार विकृत भए, कसैका घुँडा र जाँघ टुक्रिए, कुनै निष्प्राण भएर युद्ध मैदानमा लडे । धेरै वीरहरू अस्त्रास्त्र प्रहारको ध्वनिबाट दसै दिशा घन्काउँदै म फलाना हुँ, म फलाना पक्षको सैनिक अथवा वीर हुँ भन्दै अन्धकारमय युद्धको मैदानमा एकले अर्कोमाथि प्रहार गरिरहेका थिए । त्यस युद्धमा शिर काटिएका

**कबन्धा मारयँस्तत्र परान् स्वानपि सम्मुखम् ।**
**दैत्यसेनाचरा भग्ना दैत्यमेवान्वयुस्तदा ।।३७।।**

**असङ्ख्यातान् मृतान् प्रोहुर्नद्यस्तु रक्तसम्भवाः ।**

**दैत्य उवाच**

**इन्द्रादयो लोकपाला ब्रह्माद्या देवतागणाः ।।३८।।**

**निर्जिता येन तेनेह को युद्धं कर्तुमुत्सहेत् ।**
**भूगोलं न्युब्जतां नेतुं कोऽन्यः शक्तो भविष्यति ।।३९।।**

**क उवाच**

**इत्युक्त्वान्दोलयामास शस्त्रान्दोलनतो जगत् ।**
**क्रोधसंरक्तनयनो मारयामास दैत्यराट् ।।४०।।**

**मयूरेशगणान् सर्वान् नानावाहनहेतिकान् ।**
**शिरःपादकृत्तिहस्तान् भित्त्वाऽपातयदाहवे ।।४१।।**

**उत्कर्षं तस्य तं दृष्ट्वा मयूरेशो ययौ पुरः ।**
**स्वर्गञ्च गर्जयन् व्योम दशशस्त्रैर्द्विषोऽहनत् ।।४२।।**

**असङ्ख्याता हता दैत्या मुक्तिं प्रापुः सुदुर्लभाम् ।।४३।।**

तर प्राण बाँकी रहेका शरीरहरू पनि उफ्री उफ्री सम्मुखमा आएका शत्रु सैनिकलाई र आफ्नै पक्षका सैनिकहरूलाई पनि मारिरहेका थिए । दैत्यसेनाका सिपाहीहरू घायल भएर दैत्यहरूकै पछि लागिरहेका थिए । त्यहाँ बगेका रगतका नदीले असङ्ख्य वीरहरूका लाश बगाइरहेका थिए ।

**कमलासुरले भन्यो** – 'ब्रह्मा आदि देवता र इन्द्र आदि लोकपालहरूलाई पनि युद्धमा परास्त गर्ने मसँग को युद्ध गर्न सक्छ ? सम्पूर्ण भूमण्डललाई रगतले नुहाइदिन मबाहेक अरू कुन वीर समर्थ हुनसक्छ ?' ।।३३-३९।।

**ब्रह्माजीले भन्नुभयो** – यसरी आफ्नो शक्तिको वर्णन गर्दै कमलासुरले शस्त्र र अस्त्रको वर्षा गरेर संसारलाई आन्दोलित बनायो । रीसले राता-राता आँखा बनाउँदै दैत्यराज कमलासुरले युद्धमा मयूरेश श्रीगणेशका अनेक शस्त्र, अस्त्र र बाणधारण गर्ने शिवगणलाई हात, खुट्टा र शिरमा भेदन गरी सोत्तर बनायो ।।४०-४१।। कमलासुरको यो उत्कर्ष देखेर भगवान् श्रीगणेश आफै अगाडि सर्नुभयो । उहाँले आफ्नो भयङ्कर गर्जनबाट आकाश र स्वर्गलाई शब्दायमान बनाउँदै आफ्ना दश भुजाबाट निरन्तर शस्त्रप्रहार गरी शत्रुसेनाको संहार गर्नुभयो । भगवान्द्वारा युद्धमा मारिएका असङ्ख्य दैत्यवीरहरूले दुर्लभ वीरगति र मुक्तिसुख प्राप्त गरे ।।४२-४३।।

ॐ

**इति श्रीगणेशपुराणे क्रीडाखण्डे दैत्यसेनावधो नामैकोत्तरशततमोऽध्यायः**

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'श्रीगणेशद्वारा कमलासुर सेनाको वध' शीर्षकान्वित एकसय एकौं अध्याय पूर्ण भयो ।।१०१।।

ॐ

## द्व्युत्तरशततमोऽध्यायः { १०२ अध्याय }

क उवाच

विनष्टे बहुधा सैन्ये रुरोहाश्वं स दैत्यराट् ।
खड्गपाणिर्ययौ योद्धुं मयूरेशं रुषान्वितः ।।१।।

तं दृष्ट्वा तु मयूरेशो रुरोह स्वं शिखण्डिनम् ।
तं दृष्ट्वा शीघ्रमायान्तं पन्नगास्त्रं स दैत्यराट् ।।२।।

जप्त्वा मन्त्रञ्च शतधा भार्गवादिष्टमादरात् ।
ससर्ज पन्नगास्त्रं तत्तेजसा जज्वलुर्दिशः ।।३।।

सर्पसैन्यैरवेष्ट्यन्त देवसेनाचरा नराः ।
मृताः केचिद् गताः केचित् पातिताश्चापरेऽवनौ ।।४।।

ननन्द देवस्तं दैत्यमतिवीर्यपराक्रमम् ।
साधु युध्यसि दैत्येन्द्र नेदृशः कोऽपि वीक्षितः ।।५।।

एवमुक्त्वा रिपुं देवो गरुडास्त्रमवासृजत् ।
ततः पलायिताः सर्पाः प्रोत्तिष्ठंश्च चमूचराः ।।६।।

चक्रास्त्रमसृजद्देवो दैत्यसेनानिबर्हणम् ।
तेन केचिन्मृता दैत्याः केचिच्छिन्नाङ्घ्रिमस्तकाः ।।७।।

विभिन्नजानुजङ्घाश्च छिन्नगुल्फाः परेऽपतन् ।
गर्जन्ति धाव धावेति पितर्मातः सुतेति च ।।८।।

मुक्तिं याता मयूरेशं दृष्ट्वा प्राणाञ्जहुश्च ये ।
एवं सेना निरस्ताऽस्य ततो दैत्यो रुषाऽद्रवत् ।।९।।

खड्गपाणी रुषा गर्जन् वेगेनायाद् गजाननम् ।
तथाविधं रिपुं दृष्ट्वा परशुं जगृहे विभुः ।।१०।।

**ब्रह्माजीले भन्नुभयो** - अनेक रूपमा आफ्ना सैनिकहरूको संहार भएपछि दैत्यराज कमलासुर घोडामा सवार भई हातमा तलबार लिएर प्रचण्ड क्रोध प्रदर्शन गर्दै श्रीगणेशसँग युद्ध गर्न युद्धमैदानमा पुग्यो ।।१।। दैत्यराज कमलासुरलाई युद्ध गर्न आफूतर्फ आइरहेको देखेर भगवान् श्रीगणेश पनि आफ्नो वाहन मयूरमा सवार हुनुभयो । श्रीगणेशलाई तीव्रगतिमा आफूतर्फ आइरहेको देखेर दैत्यराज कमलासुरले भगवान् श्रीगणेशमाथि शुक्राचार्यद्वारा गरिएको उपदेशअनुसार सय पटक मन्त्र जपेर पन्नगास्त्रको प्रयोग गऱ्यो । त्यसका अस्त्रहरूको तेजबाट दिशाहरू चम्कन थाले र अनेक सर्पहरू पैदा भए । देवसेनामा रहेका वीरहरू र मानिसहरू सर्पै सर्पले घेरिए । केही सैनिकहरू मरे र केही भागे। केही सैनिकहरू मूर्च्छित भएर धर्तीमा लडे।।२-४।। भगवान् श्रीगणेशले कमलासुरको पराक्रम देखेर त्यसको प्रशंसा गर्दै भन्नुभयो- 'हे दैत्यराज ! तिमी राम्रो लडाइँ गरिरहेका छौ। तिमीजस्तो पराक्रमी दैत्यराज मैले अर्को कोही पनि देखेको छैन ।' यसरी प्रशंसा गरेर भगवान् श्रीगणेशले कमलासुरमाथि गरुडास्त्र प्रहार गर्नुभयो । त्यसको प्रहारपछि सर्पहरू समाप्त भए र देवसेनाका वीरहरू जागे । भगवान् श्रीगणेशले फेरि दैत्यसेनालाई सखाप पार्न चक्रास्त्रको प्रयोग गर्नुभयो । त्यसबाट असङ्ख्य दैत्यहरू मरे । कुनै दैत्यका खुट्टा र टाउका काटिए, कुनै दैत्यका घुँडा एवं जङ्घा टुक्रिए र केही दैत्यहरूका गोलिगाँठाहरू पनि फुक्लिए । यसरी घाइते भएका दैत्यहरू लडाइँको मैदानमा निरुपाय भएर पछारिए । कतिपय भयभीत दैत्यहरू अरूलाई पनि दौड, दौड र ज्यान जोगाऊ भनिरहेका थिए । केही दैत्यहरूले हे पिता ! हे माता ! हे छोरा! हे छोरी! हामी मर्न लाग्यौं भनेर विलाप गरिरहेका थिए ।।५-८।। केही दैत्यले घाइते भई श्रीगणेशको दर्शन गरेर प्राणत्याग गरे । मर्ने बेलामा श्रीगणेशको दर्शन पाएका कारण ती मुक्त पनि भए । यसरी भगवान् श्रीगणेशले आफ्नो प्रहारबाट दैत्यसेनालाई छिन्न-भिन्न तुल्याएपछि कमलासुर दैत्य रीसले मुर्मुरिँदै भगवान् श्रीगणेशमाथि जाइलाग्यो ।।९।। त्यसले तलबार नचाउँदै गर्जनपूर्वक भगवान् श्रीगणेशमाथि आक्रमण गऱ्यो । भगवान्ले पनि त्यस रूपमा आएको शत्रुलाई देखेर हातमा बञ्चरो धारण

ययौ दैत्यं महावेगमसृजत् परशुञ्च तम् ।
स दहँस्तेजसा व्योम दिशः पक्षिगणानपि ।।११।।

अच्छिनद् दैत्यहस्तञ्च खड्गञ्च शतधा जवात् ।
स चापं सहसा गृह्य सज्यं कृत्वा शरान् बहून् ।।१२।।

असङ्ख्यातान् बलाद् विध्यँश्छादयामास सैनिकान् ।
गगनञ्च दिशः सर्वा जगर्ज घननिस्वनः ।।१३।।

शराघातेन बलवान्निवार्य शरपञ्जरम् ।
अन्धकारे बाणमये नाज्ञासीत्कोऽपि कञ्चन ।।१४।।

मयूरेशोऽथ शीघ्रं तदश्वं भूमावपातयत् ।
ततोऽन्तरिक्षे तिष्ठन् स प्रोचे च गणनायकम् ।।१५।।

अश्वो निपातितस्तस्य पश्य मे कौतुकं महत् ।
शिखण्डिनं हनिष्यामि पश्यतस्ते गुणेश्वर ।।१६।।

उभयत्र निषङ्गस्थान् शरान् भूमौ व्यचिक्षिपत् ।
चापमाकृष्य कर्णान्तं चिक्षेप शरसञ्चयान् ।।१७।।

मयूरेशस्य सेनायां मारयन् सर्वसैनिकान् ।
ववर्ष शरजालानि वर्षाकाले घना यथा ।।१८।।

कियन्तो भिन्नसर्वाङ्गाः केचित्प्राणाञ्जहुः सुराः ।
एवं नश्यत्सु वीरेषु मयूरेशो रुषान्वितः ।।१९।।

कमलासुरबाणैस्तु विद्धं त्यक्त्वा शिखण्डिनम् ।
पाशं करेण जग्राह तोलयित्वा स सादरम् ।।२०।।

जगर्ज नादयन् व्योम तत्याज महसा युतम् ।
स पातयन् दैत्यगणान् ददाह रिपुसैनिकान् ।।२१।।

कण्ठे च न्यपतत्तस्य दैत्यसेनाधिपस्य ह ।
रुरोध श्वासमस्यासौ दैत्यो रूपान्तरं श्रितः ।।२२।।

गर्नुभयो । भगवान्ले बञ्चरो प्रहार गर्नुहुँदा त्यो बञ्चरो वेगपूर्वक दैत्यमाथि जाइलाग्यो। त्यस बञ्चराले आफ्नो तेजबाट आकाश, दिशा–विदिशा, पशु, पक्षी र रूख–बिरुवा सबैलाई डढाउँदै वेगपूर्वक गएर कमलासुरको हात काटिदियो र त्यसको तरबारलाई सय टुक्रा बनाइदियो । रिसाएको कमलासुरले पनि हातमा धनु धारण गरी त्यसलाई अनेक बाणहरूले सजाएर प्रहार गर्न थाल्यो ।।१०–१२।। त्यस धनुले श्रीगणेशसेनाका असङ्ख्य वीरहरूलाई घायल बनाउँदै सम्पूर्ण आकाश र दिशालाई अन्धकारमा डुबाइदियो। त्यसपछि कमलासुर दैत्य बादल गर्जेझैं गर्जन लाग्यो।।१३।। बलवान् दैत्यले असङ्ख्य बाणहरूको प्रयोगबाट भगवान् श्रीगणेशद्वारा प्रहार गरिएका बाणहरूलाई छिन्न–भिन्न बनायो । त्यस युद्धमा बाणैबाणको वर्षाका कारण अभेद्य कालो अन्धकार चारैतिर छाएको थियो । कसैले कसैलाई चिन्न सकेका थिएनन् । त्यो देखेर भगवान् श्रीगणेशले कमलासुरको घोडामाथि प्रहार गरी त्यसलाई भुइँमा लडाउनुभयो। आफ्नो घोडा घाइते भएपछि त्यस दैत्यले अन्तरिक्षमा पुगेर श्रीगणेशलाई सम्बोधन गर्दै भन्यो ।।१४–१५।। 'हे श्रीगणेश! तिमीले मेरो घोडालाई लडाएका छौ, अब मेरो आश्चर्यजनक पराक्रम देख । तिमीले हेर्दाहेर्दै म तिम्रो वाहन मयूरलाई मारिदिनेछु ।' यसो भनेर त्यसले मयूरमाथि बाणवर्षा गऱ्यो । त्यसले बाण वर्षा गर्दा ताँदो तानेर कानसम्म पुऱ्याएको थियो। त्यसबाट प्रहार गरिएका बाणले श्रीगणेशसेनाका अनेक वीरहरूलाई घाइते बनाएका थिए। त्यसले वर्षाकालमा बादलले जलवर्षा गरेझैं अनवरत बाणवर्षा गरेको थियो ।।१६–१८।। त्यसबाट श्रीगणेशसेनाका धेरै वीरहरू सर्वाङ्गमा घाइते भएर भुइँमा लडे । केही देववीरहरूले प्राणत्याग पनि गरे। यो देखेर भगवान् श्रीगणेश साह्रै रिसाउनुभयो ।।१९।। दैत्यराजको बाणप्रहारबाट घाइते भएका आफ्ना वाहन मयूरलाई छाडेर श्रीगणेशले आफ्नो हातमा पाश लिनुभयो । त्यसपछि गर्जनबाट आकाशलाई थर्काउँदै उहाँले पाशको प्रहार गर्नुभयो। त्यस प्रहारबाट शत्रुसेनाका ठूला–ठूला वीरहरू डढ्न थाले।।२०–२१।। त्यो पाश दैत्यसेनापति कमलासुरको घाँटीमा गएर लाग्यो । त्यसबाट दैत्यको श्वास रोकियो । त्यस स्वरूपबाट आफूले केही गर्न नसक्ने भएपछि त्यसले अर्कै रूप धारण गऱ्यो ।।२२।।

मूर्ध्ना संछादयामास तत्क्षणाद्रविमण्डलम् ।
अन्धकारे घोरतमे न प्राज्ञायत किञ्चन ।।२३।।

उवाच सम्मुखो भूत्वा मयूरेशं रुषान्वितः ।
मया किं युध्यसे बाल गच्छ मातुः स्तनं पिब ।।२४।।

रमस्व बालकैर्नो चेन्मरिष्यसि ममाग्रतः ।
मम चाक्रन्दनेनैव कम्पते भुवनत्रयम् ।।२५।।

पादे भूमौ स्थाप्यमाने शेषोऽपि चलते ह्यधः ।
मम मुष्टिप्रहारेण चूर्णीभूता महाचलाः ।।२६।।

नखाग्रेण शिरस्तेऽहं गमयिष्ये रसातलम् ।

क उवाच

एवमाकर्ण्य दुर्बुद्धेर्वाक्यं प्रोचे गजाननः ।
पिशाचवन्मद्यपवत् किं वल्गसि ममाग्रतः ।।२७।।

न जयं प्राप्नुते क्वापि देवद्विजविनिन्दकः ।
मम चेद् भविता क्रोधो ज्वालयेद् भुवनत्रयम् ।।२८।।

यशस्ते ख्यापितुं लोके युद्ध्यामि हर्षनिर्भरः ।
नो चेद् हुङ्कारमात्रेण नीतः स्याद् यमसादनम् ।।२९।।

क उवाच

एवमाकर्ण्य तद्वाक्यं दैत्यः क्रोधानलाकुलः ।
क्ष्वेडितं प्रतिशद्बेन नादयन् विदिशो दिशः ।।३०।।

तदा गर्भा निपतितास्तस्य शव्देन तत्क्षणात् ।
प्रमथाद्या गणाः केचिन्मूर्च्छिता धरणीं गताः ।।३१।।

आकर्णं धनुराकृष्य मुमोच कमलासुरः ।
शरवृष्टिं पुना रौद्रां मयूरेशे बलेऽपि च ।।३२।।

आफ्नो शिरबाट त्यसले सूर्यमण्डललाई ढाक्यो । त्यसपछि घोर अन्धकार उत्पन्न भयो । कुनै पनि वीरले केही पनि देख्न सकेनन् ।।२३।। त्यस अवस्थामा दैत्यराज कमलासुर अत्यन्त क्रुद्ध भई श्रीगणेशका सामु आएर भन्न थाल्यो – 'हे बच्चा ! तँ मसँग के युद्ध गरिरहेको छस् ? तँ यहाँबाट भाग् अथवा घर गएर आमाको स्तनपान गर् । केटाकेटीहरूसँग गएर क्रीडा गर् अन्यथा तँ मेरै सामु मर्नेछस् । मैले गर्जन गर्दा त्रिलोकी नै काँप्दछ । मैले आफ्ना चरणबाट राम्ररी टेक्दा शेषनाग पनि काँप्छन् र तल–तल धसिन्छन् । मैले मुड्कीले प्रहार गर्दा महापर्वतहरू टुक्रा–टुक्रा हुन्छन् ।।२४–२६।। हे बालक श्रीगणेश ! मेरा नङ्का टुप्पाले प्रहार गरेर तेरो टाउकालाई टुक्र्याई तँलाई भर्खर पाताल पुऱ्याइदिनेछु ।'

**ब्रह्माजीले भन्नुभयो** – दुर्बुद्धिले घेरिएको कमलासुरको कुरा सुनेर श्रीगणेशले जवाफ दिनुभयो – 'हे दैत्य ! तँ पिशाच र जड्याहाझैं मेरा सामु किन बकबक गरिरहेको छस् ? जसले देवता र ब्राह्मणको निन्दा गर्दछ त्यसले कहीं गएर पनि विजय प्राप्त गर्दैन । मलाई रीस उठ्यो भने त्यसले सम्पूर्ण ब्रह्माण्डलाई खरानी बनाउने छ ।।२७–२८।। म त यहाँ तेरो नाम चलाउन आफ्नो इच्छाले युद्ध गरिरहेको छु, अन्यथा मैले हुङ्कार गर्दा तँ नरकमा पुगिसक्नेथिइस् ।।२९।।

**ब्रह्माजीले भन्नुभयो** – श्रीगणेशका यी कुरा सुनेर दैत्यराज कमलासुरको क्रोधको आगो दन्कियो र त्यसले सिंहनाद गऱ्यो। त्यसबाट दिशा र विदिशा प्रतिध्वनित भए । दैत्यराजको गर्जनबाट तत्कालै अनेक नारीहरूको गर्भपात भयो । प्रमथ आदि गणहरू मूर्च्छित भएर भुइँमा लडे । त्यसपछि कमलासुरले आफ्नो धनुको ताँदो कानसम्म तानेर श्रीगणेश र श्रीगणेशको सेनामा भयङ्कर बाणवर्षा गर्न थाल्यो ।।३०–३२।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे कमलासुरसङ्ग्रामो नाम द्व्युत्तरशततमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'मयूरेश्वर श्रीगणेश र कमलासुरको संग्राम' शीर्षकान्वित एक सय दुइऔं अध्याय पूर्ण भयो ।।१०२।।

ॐ

## त्र्युत्तरशततमोऽध्यायः { १०३ अध्याय }

क उवाच

उत्कर्षं तस्य दैत्यस्य दृष्ट्वा देवस्त्वरान्वितः ।
आययौ पुरतो दैत्यं जघान शरवृष्टिभिः ।।१।।

न्यवारयत दैत्योऽपि स्वशरैरतिवेगितैः ।
ततस्तुतोष भगवान् मयूरेशो गुणाग्रणीः ।।२।।

दर्शयामास तस्मै स विश्वरूपमनन्तकम् ।
दश दिक्षु मयूरेशं ददर्श कमलासुरः ।।३।।

विस्मितश्छाद्य नयने हृदि तं परिदृष्टवान् ।
ततः पलायनपरो यावद् गच्छति दैत्यराट् ।।४।।

शिखामाक्रम्य देवोऽपि धृत्वा प्रोवाच तं पुनः ।
तिष्ठ युध्यस्व दैत्येन्द्र ! स्मर वाक्यानि तानि च ।।५।।

पुनर्ददर्श दैत्यस्तमेकमेव पुरःस्थितम् ।
अधावत् सहसा योद्धुं जगर्ज च महाबली ।।६।।

दशायुधधरो देवो बोधयामास तं तदा ।
विभेदास्य शरीरं स विघ्नराट् शस्त्रघाततः ।।७।।

यत्रास्य न्यपतद् रक्तबिन्दुस्तत्रासुरोऽभवत् ।
तद्रूपस्तद्बलश्चैवमसङ्ख्यातास्तदाऽसुराः ।।८।।

नानाशस्त्रैरथास्त्रैस्ते तं जघ्नुः शरवृष्टिभिः ।
ततः परावृतो देवो मयूरेशो रुषा ज्वलन् ।।९।।

सार्द्धकोटित्रयमितैः सिद्धिबुद्धी तदा बलैः ।
ईयतुः परमक्रुद्धे ततो युद्धमवर्तत ।।१०।।

ऊचतुर्गणराजं ते देहि भक्ष्यं क्षुधापहम् ।
ते ऊचे भक्षतं देवो दैत्यासृग्जनितान् बहून् ।।११।।

इत्युक्ते ते तदा तेन मयूरेशेन सत्वरम् ।
बभक्षतुर्भूतगणैस्तान् दैत्यानखिलानपि ।।१२।।

२९७ (**ब्रह्माजीले भन्नुभयो**- दैत्यराज कमलासुरको उत्कर्ष देखेर भगवान् श्रीगणेश शीघ्रतापूर्वक दैत्यका सामु आउनुभयो र बाणवर्षा गरी दैत्यमाथि प्रहार गर्नुभयो ।।१।। त्यसले पनि आफ्ना अत्यन्त वेगशाली बाणहरूद्वारा श्रीगणेशले प्रहार गर्नुभएका बाणलाई छेक्ने र काट्ने काम गर्‍यो । कमलासुरको पराक्रम देखेर प्रसन्न हुनुभएका श्रीगणेशले त्यसलाई अनन्तज्योतिर्मय विराट् रूपको दर्शन गराउनुभयो। विश्वरूपको दर्शन गर्दा त्यसले दसै दिशामा मयूरवाहन भगवान् श्रीगणेशको दर्शन पायो।।२-३।। चकित भएर आँखा चिम्लिँदा पनि त्यसले आफ्नै मुटुमा भगवान् मयूरेशको दर्शन गर्‍यो । डराएर भागिरहेको कमलासुर बाहिर जानलाग्दा भगवान् श्रीगणेशले त्यसको टुप्पीमा समाएर भन्नुभयो - 'ए दैत्य! यहीं बस्, मसँग युद्ध गर् । आफूले भनेका कुरा याद गर् ।' यी कुरा सुनेपछि हेर्दा त्यसले अनन्तरूपका श्रीगणेशलाई एउटै श्रीगणेशका रूपमा देख्यो । त्यसपछि उत्साहित भएर त्यस बलवान् दैत्यले युद्ध गर्ने आशयबाट ठूलो गर्जन गर्‍यो ।।४-६।। दश प्रकारका आयुध धारण गर्ने श्रीगणेशले त्यसलाई विभिन्न रूपबाट युद्ध गर्न उद्बोध नगर्नुभयो । श्रीगणेशले त्यस युद्धमा शस्त्रप्रहार गरेर कमलासुरको शरीरलाई छिन्न-भिन्न तुल्याउनुभयो ।।७।। जहाँसुकै त्यस दैत्यको रगत बग्न थाल्यो। तर ती रगतका प्रत्येक थोपाहरूबाट अनेक दैत्यहरू उत्पन्न हुन थाले। ती दैत्यहरू सबै कमलासुरजस्तै अनुहार र पराक्रमले सम्पन्न थिए ।।८।। तिनले नाना शस्त्र र अस्त्रबाट श्रीगणेशलाई घाइते बनाइरहेका थिए। त्यसपछि रिसाउनुभएका श्रीगणेशले पछाडि फर्केर हेर्नुभयो ।।९।। उहाँले साढे तीन करोड सेना लिएर आइरहेका र क्रोधले तम्तमाएका सिद्धि एवं बुद्धिलाई देख्नुभयो । सिद्धि र बुद्धिको आगमन सँगसँगै त्यहाँ भयङ्कर युद्ध आरम्भ भयो ।।१०।। सिद्धि एवं बुद्धिले श्रीगणेशसँग भने- 'हे प्रभो ! हामीलाई भोक मेटाउने भोजन दिनुहोस् ।' श्रीगणेशले भन्नुभयो - 'कमलासुरको रगतबाट जन्मेका यी दैत्यहरूलाई भोजनको रूपमा स्वीकार गर ।' श्रीगणेशको आज्ञा पाएपछि सिद्धि र बुद्धिले कमलासुरका शरीरबाट निस्किएका रक्तबिन्दुबाट उत्पन्न ती सबै दैत्यलाई खान थाले ।।११-१२।। त्यस बेला

देवो जघान खड्गेन तं दैत्यं कमलासुरम् ।
तच्छ्च्छ शतशो जाता दैत्यास्तद्रक्तसम्भवा: ।।१३।।

अभक्ष्स्तानपि ततो पिबन्तो रक्तमुल्बणम् ।
ततः खिन्नो मयूरेशः शूलमुद्यम्य वेगवान् ।।१४।।

तत्याज सहसा दैत्ये ययौ स प्रदहन् दिशः ।
चूर्णयन् पर्वतान् व्योम नादयन् भानि पातयन् ।।१५।।

वेगेन पतितो दैत्यदेहं भित्त्वा द्विधाऽकरोत् ।
मस्तकस्तस्य पतितो भीमाया दक्षिणे तटे ।।१६।।

कृष्णाया उत्तरे तीरे तस्थौ तत्र गुणेश्वरः ।
सर्वे सन्तुष्टमनसो जयशब्दैस्तमब्रुवन् ।।१७।।

जय देव ! मयूरेश ! कुरु दुष्टविनाशनम् ।
ततस्तत्रायययौ गौरीपतिर्गणपरीवृतः ।।१८।।

गौतमाद्यैश्च मुनिभिः पार्वत्या च समायुतः ।
वाद्यत्सु सर्ववाद्येषु पुष्पवृष्टिः पपात खात् ।।१९।।

आलिङ्ग्य पार्वती प्रादात् स्तनपानं मुदा तदा ।
मुनयस्तुष्टुवुश्चैनं मयूरेशं सुरेश्वरम् ।।२०।।

कमलाकान्तहृदय ! हृदयानन्दवर्धन ।!
कमलाकान्तनमित ! कमलासुरनाशन ।।!।२१।।

कमलासेवितपद ! जय त्वं कमलाप्रद ।!
कमलासनवन्द्येश ! कमलाकरशीतल ।।!।२२।।

कमलाङ्कसुपादाब्ज ! कमलाङ्कितसत्कर ।!
कमलाबन्धुतिलक ! भक्तानां कमलाप्रद !।।२३।।

कमलासूनुरिपुज ! कमलासूनुसुन्दर !।
कमलापितृरत्नानां मालया जय शोभित !।।२४।।

कमलासुरबाणानां कमलेन निवारक !।
कमलाक्रान्तकमलकोशजित्करपङ्कज !।।२५।।

श्रीगणेशले कमलासुरमाथि प्रहार गर्नुभयो । प्रहारको समयमा पनि त्यसका रक्तबिन्दुबाट सैकडौं दैत्य जन्मे। रक्तपान गर्दै सिद्धि र बुद्धिले तिनीहरूलाई पनि खाइदिए । त्यसपछि श्रीगणेशले वेगपूर्वक शूल उठाई कमलासुरमाथि प्रहार गर्नुभयो। त्यस शूलले दिशाहरू डढाउँदै, पर्वतहरूलाई चूर्ण बनाउँदै, आकाशलाई गुञ्जायमान गराउँदै र नक्षत्रपुञ्जलाई धर्तीमा खसाउँदै गई दैत्यको शरीरमा लागेर त्यसलाई टुक्रा-टुक्रा बनाइदियो। त्यसपछि कमलासुरको टाउको भीमा नदीको दायाँ तटमा खस्यो।।१३-१६।। त्यस बेला भगवान् श्रीगणेश कृष्णा नदीको उत्तर तटमा विराजमान हुनुहुन्थ्यो। दैत्यको वधपछि प्रसन्न भएका नर-नारीले भगवान् श्रीगणेशको जय जयकार गर्दै भने - 'हे परमेश्वर ! हजुरको जय होस् ।।१७।। हजुरले दुष्टहरूको संहार गर्नुहोस् ।' त्यस बेला गणहरूसहित भगवान् गौरीपति शङ्कर पनि त्यहाँ आउनुभयो । उहाँका साथमा पार्वती र गौतम आदि मुनिहरू हुनुहुन्थ्यो। विजयको वाद्यघोष चलिरहेको त्यस समयमा आकाशबाट पुष्पवर्षा भयो।।१८-१९।। पार्वतीले श्रीगणेशलाई आलिङ्गन गरी काखमा राखेर दूध चुसाउनुभयो। गौतम आदि ऋषिहरूले मयूरेश, सुरेश भगवान् श्रीगणेशको स्तुति गरे।।२०।। तिनीहरूले भने - 'विष्णुका हृदयमा आनन्दवर्षा गर्ने विष्णुका हृदयस्वरूप हे प्रभु !, विष्णुद्वारा आराधित हे सर्वेश्वर !, हे कमलासुरका नाशक !, लक्ष्मीद्वारा पाउमा सेवा गरिएका हे प्रभु !, हे लक्ष्मीदाता महादानी श्रीगणेश ! हजुरको जय होस् । हे ब्रह्माजीद्वारा वन्दित परमेश्वर !, कमलसरोवरसमान शीतल हृदयका हे प्रभु !, कमलचिह्नद्वारा चिह्नित चरणकमलले सुहाउनुभएका हे ईश्वर !, कमलचिह्नद्वारा अङ्कित करकमलले सुहाउनुभएका हे देवताका पनि देवता !, लक्ष्मीका बान्धवहरूमध्ये हे उत्तम बान्धव !, भक्तहरूका लागि लक्ष्मीप्रदान गर्ने हे उदार दाता !, हे **कमलासूनुरिपुज** = कमला-रुक्मिणीका पुत्र एवं कामदेवका अवतार प्रद्युम्न, प्रद्युम्नरूप कामदेवका नाशक हुनुभएकाले शत्रु मानिनुभएका सदाशिवबाट उत्पन्न हुनुभएका हे देव !, हे कामदेवसमान सुन्दर पुरुष !, समुद्रमा उत्पन्न हुने चौध रत्नहरूको माला धारण गरेर शोभायमान हुनुभएका हे श्रीगणेश प्रभु ! हजुरको जय होस् । कमलासुरद्वारा प्रहार गरिएका बाणलाई करकमलबाट निवारण गर्नुहुने हे शक्तिशाली परमेश्वर !, लक्ष्मीको आसनका रूपमा रहेका कमलकोशलाई पराजित गर्ने करकमलद्वारा सुहाउनुभएका हे प्रभु !, भगवान् नारायणका हातमा रहेको कमलको कोशसँग

कमलापतिहस्तस्थपद्मकोशनिभेक्षण !।
सर्वहृत्कमलानन्द ! जय सर्वाघनाशन !।।२६।।

कमलाङ्कुशहस्ताब्ज ! जय विघ्नहराव्यय !।
त्वया विनिहतः पापः शक्रादिभयदो रिपुः ।।२७।।

वज्रचक्राद्यभेद्यो यो मुनीनामपि भीतिदः ।
एवं स्तुत्वा पुपूजुस्ते गौतमाद्या महर्षयः ।।२८।।

दशभिर्दोर्भिरालिङ्ग्य पुपूज गिरिशोऽपि तम् ।
ततस्ते मुनयः प्रोचुर्मयूरेशञ्च शङ्करम् ।।२९।।

अत्र त्वं सर्वदा तिष्ठ सर्वदेवगणैर्युतः ।
पूरयन् भक्तकार्याणि वारयन् विघ्नसञ्चयान् ।।३०।।

क उवाच

एवं तैः प्रार्थितौ देवौ सर्वदेवगणैर्युतौ ।
पूरयन्तौ भक्तकामान् हरन्तौ विघ्नसञ्चयान् ।।३१।।

स्थितौ तत्र मयूरेशशङ्करौ लोकशङ्करौ ।
विश्वकर्मा व्यधात् तत्र मन्दिरं सुन्दरं ततः ।।३२।।

असङ्ख्यशिखरद्वारमसङ्ख्याश्चर्यसंयुतम् ।
तत्राभून्नगरं चारु सर्वलोकसमन्वितम् ।।३३।।

मयूरेशपुरं तस्य नाम चक्रुर्महर्षयः ।
तपस्तेपुर्मुनिगणा नानाभरणसंश्रिताः ।।३४।।

हरोऽपि स तपस्तेपे गिरिजागणसंयुतः ।
तस्य ध्यानं पूजनञ्च स्मरणन्ते व्यधुर्द्विजाः ।।३५।।

मयूरेशः पुनर्बालैः क्रीडति स्म यथा पुरा ।।३६।।

समानता गर्ने सुन्दर आँखाहरूद्वारा सुहाउनुभएका हे परमेश्वर!, सबैका हृदयकमलमा आनन्दको वृष्टि गर्ने हे पापनाशक प्रभु ! हजुरको जय होस् ।।२१-२६।। कमल र अंकुशद्वारा शोभायमान करकमल धारण गर्नुहुने हे विश्वव्यापक प्रभु ! हे अव्यय ! हे विघ्नहर्ता ! हजुरको जय होस् । आज हजुरले इन्द्र आदि देवताहरूलाई पनि तर्साउने पापी शत्रुको विनाश गर्नुभएको छ।।२७।। वज्र र चक्र आदि आयुधद्वारा पनि जो अभेद्य थियो, जसले मुनिहरूलाई पद-पदमा भयभीत गराउँथ्यो त्यस दैत्यको हजुरले वध गरिदिनुभएको छ।' यसरी स्तुति गरेर गौतम आदि ऋषिहरूले भगवान् श्रीगणेशको पूजा गरे ।।२७-२८।। भगवान् शङ्करले पनि आफ्ना दश भुजा फैलाएर श्रीगणेशलाई आलिङ्गन गरी सम्मान गर्नुभयो। त्यसपछि मुनिहरूले मयूरेश श्रीगणेश र भगवान् शङ्करलाई भने - 'भक्तहरूको कामना पूर्ति र र विघ्नहरूको नाश गर्दै यो ठाउँमा हजुरहरू दुवै सबै देवताहरूका साथ सधैं विराजमान हुनुहोस्' ।।२९-३०।।

**ब्रह्माजीले भन्नुभयो** - यसरी मुनिहरूद्वारा प्रार्थना गरिएका मयूरेश श्रीगणेश र लोकशङ्कर शङ्कर भगवान् देवगणसहित भक्तहरूको कामनापूर्ति र विघ्नपुञ्जको नाश गर्दै त्यहीं विराजमान हुनुभयो।।३१।। विश्वकर्माले त्यस ठाउँमा आई भगवान् श्रीगणेशका लागि सुन्दर एवं भव्य मन्दिर बनाए। त्यस मन्दिरमा असङ्ख्य गजुर र द्वारहरू थिए । त्यहाँ असङ्ख्य आश्चर्यदायक वस्तुहरूको सङ्ग्रह पनि थियो । मन्दिर तयार भएपछि त्यसका नजिकमा अनेक थरि प्राणीहरूले शोभायमान भएको नगर बसाइयो । महर्षिहरूले त्यस नगरलाई मयूरेशनगर भनी नामकरण गरे । त्यहीं नै अनेक थरि विभूषणद्वारा विभूषित मुनिहरूले भगवान् श्रीगणेशलाई प्रसन्न गराउन तपस्या गरे ।।३२-३४।। भगवती पार्वती र गणहरूका साथ भगवान् शङ्करले पनि त्यस पवित्र क्षेत्रमा तपस्या गर्नुभयो । तिनीहरूले भगवान् श्रीगणेशको स्मरण, ध्यान र पूजन गरे । त्यसपछि बालक मयूरेश पनि आफ्ना बालसखाहरूका साथ पहिलेजस्तै बालक्रीडामा मग्न हुनुभयो ।।३५-३६।।

ॐ

**इति श्रीगणेशपुराणे क्रीडाखण्डे कमलासुरवधो नाम त्र्युत्तरशततमोऽध्यायः**

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'मयूरेश्वरद्वारा कमलासुरको वध' शीर्षकान्वित एक सय तीनौं अध्याय पूर्ण भयो ।।१०३।।

ॐ

## चतुरुत्तरशततमोऽध्यायः { १०४ अध्याय }

क उवाच

अहं प्रयातस्तं द्रष्टुं गुप्तरूपो द्विजोत्तम ।!
अदर्शं तत्र तं देवमुमया सहितं प्रभुम् ।।१।।

स्नात्वासीनं जपन्तञ्च परं ब्रह्म सनातनम् ।
अहं तमस्तुवं देवं मयूरेश्वरसंज्ञकम् ।।२।।

पुराणपुरुषं देवं नानाक्रीडाकरं मुदा ।
मायाविनं दुर्विभाव्यं मयूरेशं नमाम्यहम् ।।३।।

परात्परं चिदानन्दं निर्विकारं हृदि स्थितम् ।
गुणातीतं गुणमयं मयूरेशं नमाम्यहम् ।।४।।

सृजन्तं पालयन्तञ्च संहरन्तं निजेच्छया ।
सर्वविघ्नहरं देवं मयूरेशं नमाम्यहम् ।।५।।

इन्द्रादिदेवतावृन्दैरभिष्टुतमहर्निशम् ।
सदसद्व्यक्तमव्यक्तं मयूरेशं नमाम्यहम् ।।६।।

नानादैत्यनिहन्तारं नानारूपाणि बिभ्रतम् ।
नानायुधधरं भक्त्या मयूरेशं नमाम्यहम् ।।७।।

सर्वशक्तिमयं देवं सर्वरूपधरं विभुम् ।
सर्वविद्याप्रवक्तारं मयूरेशं नमाम्यहम् ।।८।।

पार्वतीनन्दनं शम्भोरानन्दपरिवर्धनम् ।
भक्तानन्दकरं नित्यं मयूरेशं नमाम्यहम् ।।९।।

मुनिध्येयं मुनिनुतं मुनिकामप्रपूरकम् ।
समष्टिव्यष्टिरूपं त्वां मयूरेशं नमाम्यहम् ।।१०।।

सर्वाऽज्ञाननिहन्तारं सर्वज्ञानकरं शुचिम् ।
सत्यज्ञानमयं सत्यं मयूरेशं नमाम्यहम् ।।११।।

अनेककोटिब्रह्माण्डनायकं जगदीश्वरम् ।
अनन्तविभवं विष्णुं मयूरेशं नमाम्यहम् ।।१२।।

**ब्रह्माजीले भन्नुभयो**- हे वेदव्यास! म भगवान् श्री शङ्कर र मयूरेशको दर्शन गर्न गुप्तरूपमा त्यहाँ पुगेको थिएँ। पुग्दा मैले उमाका साथ विराजमान र स्नान गरी सनातन परब्रह्मको ध्यान गरिरहनुभएका सदाशिवको दर्शनका साथै श्रीगणेशको पनि दर्शन गरें । त्यस बेला मैले भक्तिपूर्वक भगवान् मयूरेश्वर श्रीगणेशको स्तुति गरें ।।१-२।।

**मैले भनें** - 'हे श्रीगणेश! हजुर पुराणपुरुष, अनेक क्रीडा र मायाका स्वामी, महामायावी, सामान्य व्यक्तिहरूद्वारा अज्ञेय हुनुहुन्छ । हजुरलाई नमस्कार गर्दछु । परात्पर स्वरूप, सच्चिदानन्दमय, निर्विकार, अन्तर्यामी, गुणातीत र गुणमय हजुरलाई नमस्कार गर्दछु ।।३-४।। आफ्नो इच्छाअनुसार संसारको सृष्टि, सुरक्षा र संहार गर्नुहुने र सबै प्रकारका विघ्नहरूको विनाश गर्नुहुने भगवान् मयूरेशलाई नमस्कार गर्दछु ।।५।। इन्द्र आदि देवताहरूद्वारा अहोरात्र स्तुति गरिनुहुने, सत्यस्वरूप, असत्यस्वरूप, सत्यासत्यस्वरूप, व्यक्तस्वरूप, अव्यक्तस्वरूप र व्यक्ताव्यक्तस्वरूप मयूरेश प्रभुलाई भक्तिपूर्वक नमस्कार गर्दछु ।।६।। अनेक दैत्यहरूको विनाश गर्नुहुने, अनेक रूप धारण गर्नुहुने र अनेक आयुध धारण गर्नुहुने भगवान् मयूरेशलाई भक्तिपूर्वक नमस्कार गर्दछु ।।७।। सर्वशक्तिमान्, सबै रूपका अवतार लिन कुशल, सर्वव्यापक र सबै विद्याका प्रवक्ता मयूरेश भगवान् श्रीगणेशलाई नमस्कार गर्दछु ।।८।। पार्वतीका पुत्र, उत्तम पुत्रका रूपमा रहेर भगवान् शङ्करलाई आनन्द प्रदान गर्नुहुने र भक्तहरूका कामना पूर्ण गरी तिनलाई हर्षित तुल्याउनुहुने भगवान् मयूरेशलाई नमस्कार गर्दछु ।।९।। मुनिहरूद्वारा ध्यान गरिनुहुने, मुनिहरूका कामना परिपूर्ण तुल्याउनु हुने र समष्टि र व्यष्टिरूपमा प्रकाशमान मयूरेश प्रभुलाई नमस्कार गर्दछु ।।१०।। सबै भक्तहरूका अज्ञान नाश गर्नुहुने, शिष्यभावले शरणमा आएका भक्तहरूलाई ज्ञान प्रदान गर्नुहुने, पवित्र स्वरूप, परमज्ञानका आश्रय भगवान् मयूरेशलाई नमस्कार गर्दछु ।।११।। कोटि-कोटि ब्रह्माण्डका नायक, जगत्का अधिपति र अनन्त ऐश्वर्यसम्पन्न विष्णुरूप मयूरेश प्रभुलाई नमस्कार गर्दछु ।।१२।। हे भगवन् श्रीगणेश!)

त्वद्दर्शनेन पूतोऽहं परमानन्दनिर्भरः ।
आश्चर्यं परमं प्राप्तस्तस्य दैत्यस्य मारणात् ।।१३।।

येन शक्रोऽन्तको देवा लोकपाला जिता बलात् ।
सहस्रशतयोधी योऽसङ्ख्यदेहो रणे हतः ।।१४।।

त्रिधा भूतस्त्रिस्थलेषु पतितः कमलासुरः ।
तं समापूजयमहं सर्वतीर्थजलैः शुभैः ।।१५।।

कमण्डलुगतैरेनोनाशकैरभिषेचयम् ।
दिव्यवस्त्रे दिव्यगन्धं दिव्यपुष्पमयीं शुभाम् ।।१६।।

वनमालामस्य कण्ठे दत्त्वा नाम व्यधामहम् ।
वनमालीति लोकेषु विख्यातं सर्वमङ्गलम् ।।१७।।

पूजाविधिं समाप्यैनं प्रदक्षिणामथो व्यधाम् ।
पादाघातेन मे तत्र न्युब्जतां गमितः क्षणात् ।।१८।।

नानातीर्थजलैर्युक्तः स्थापितो मे कमण्डलुः ।
यत्तोऽहं तज्जलं भर्तुं ततो मामब्रवीद्विभुः ।।१९।।

मयूरेश उवाच

इदं ब्रह्मकृतं स्तोत्रं सर्वपापप्रणाशनम् ।
सर्वकामप्रदं नृणां सर्वोपद्रवनाशनम् ।।२०।।

कारागृहगतानाञ्च मोचनं दिनसप्तकात् ।
आधिव्याधिहरं चैव भुक्तिमुक्तिप्रदं विधे ।।२१।।

स्थिरो भव विरिञ्चे ! त्वं नदीयं सर्वपावनी ।
कमण्डलुभवा नाम्ना ख्याता लोके भविष्यति ।।२२।।

दर्शनाद् वाचिकं पापं स्पर्शनाच्च मनोमयम् ।
स्नानाच्च कायिकं चैव नाशयिष्यति निम्नगा ।।२३।।

निरन्तरं सेवनाच्च मोक्षमेषा प्रदास्यति ।

म हजुरको दर्शन पाएर परमपवित्र भएको छु र परमआनन्दमा मग्न भएको छु । हजुरले कमलासुरको वध गर्नुभएका कारण म आनन्दित र परम चकित पनि छु । इन्द्र, यम, देवगण र लोकपालहरूलाई आफ्नो बलप्रयोगबाट परास्त गर्ने, लाखौं योद्धाहरूलाई साथ लिने र असङ्ख्य शरीर धारण गर्न सक्ने त्यस मायावी महादैत्य कमलासुरलाई पनि हजुरले युद्धमा मारिदिनुभयो ।।१३-१४।। हजुरले कमलासुरको वध गर्दा हजुरका वीर्य र प्रतापबाट त्यसको शरीर तीन टुक्रामा विभक्त भई तीन ठाउँमा खस्यो । आज मैले कमलासुरलाई मार्नुहुने मयूरेश प्रभुको सबै तीर्थका मङ्गलमय जल अर्पण गरेर पूजा गर्ने अवसर पाएँ ।।१५।। यति निवेदन गरेपछि पापनाशक सबै तीर्थहरूका जल आफ्नो कमण्डलुमा भरेर मैले मयूरेश प्रभुको अभिषेक गरें । उहाँलाई दिव्य वस्त्र र चन्दन चढाई पूजा गरें।।१६।। उहाँको कण्ठमा माला पहिराई उहाँलाई सबै लोकमा विख्यात सर्वमङ्गलदायक वनमाली नामबाट सम्बोधन गरें ।।१७।। पूजाविधि पूरा गरेपछि मैले भगवान् श्रीगणेशको प्रदक्षिणा गरें । प्रदक्षिणा गर्दा एक्कासि मेरो खुट्टा लाग्नाले पूजास्थलमा राखिएको अनेक तीर्थका जलले युक्त कमण्डलु भुइँमा घोप्टियो । त्यसपछि मैले पोखिएको जल कमण्डलुमा भर्न प्रयास गरें । त्यस बेला अन्तर्यामी प्रभु श्रीगणेशले मलाई सम्बोधन गर्दै भन्नुभयो ।।१८-१९।।

**श्रीगणेशले भन्नुभयो** – 'हे ब्रह्माजी! तपाईंले बनाउनु भएको स्तोत्र पापनाशक छ । यसको पाठबाट मानिसका सबै कामना पूर्ण हुनेछन् र सबै प्रकारका उपद्रवहरूको पनि नाश हुनेछ । यसको पाठ गरेपछि कारागारमा बन्दी बनेका कैदीहरू सात दिनभित्र मुक्त हुन सक्नेछन् । यस स्तोत्रले मानिसहरूका मानसिक र शारीरिक रोगहरूको निवारण गर्दछ र भक्तहरूलाई भुक्ति एवं मुक्ति पनि प्रदान गर्दछ ।।२०-२१।। हे ब्रह्माजी! तपाईं यहीं स्थिर भएर रहनुहोस्। तपाईंको कमण्डलुबाट भुइँमा पोखिएको जल अहिले नदीका रूपमा परिणत भएको छ । यस नदीले सबैलाई पवित्र तुल्याउनेछ । लोकमा मानिसहरूले यसलाई कमण्डलुभवाका नामबाट चिन्नेछन्। यस कमण्डलुभवा नदीले वाणीबाट उत्पन्न हुने पापलाई दर्शनबाट नाश गर्नेछ, मानसिक पापलाई स्पर्शनबाट नाश गर्नेछ र शारीरिक पापलाई स्नानबाट नाश गर्नेछ ।।२२-२३।। जसले निरन्तर यहाँ आई स्नान गर्नेछन्, तिनलाई यस नदीले मोक्ष प्रदान गर्नेछ ।'

क उवाच

एवं दत्ते वरे तेन सस्नुस्तत्र मुनीश्वरा: ।।२४।।

सदारा: सपरीवारा: सप्तकोटिगणा अहम् ।
तपस्तेपुस्तदा तत्र मुनयस्ते मया सह ।।२५।।

ततोऽहं मायया तस्य मोहित: प्राब्रुवं बहून् ।
जगत्कर्ता जगद्वन्द्य: शक्रादिसुरपूजित: ।।२६।।

बालमेकादशाब्दं तं कथं प्रणतवानहम् ।
अर्भकै: क्रीडमानं तमाचाररहितं शिशुम् ।।२७।।

धिङ् मे ज्ञानं महत्त्वञ्च पैतामहपदञ्च धिक् ।
इमां सृष्टिं पिधायाऽहं स्थास्यामि गुप्तरूपधृक् ।।२८।।

अयं चेत् परमात्मा स्यादपरां निर्ममेत् पुन: ।
एवं निश्चित्य मनसा सृष्टिमात्मानमेव च ।
अन्तर्धाय स्थितो यावत् तावद् देवो गजानन: ।।२९।।

न ददर्श सखीन् बालाँस्ततस्तेषां गृहानगात् ।
शून्यान् दृष्ट्वा गृहान् सर्वान् खिन्नो वृक्षानलोकयत्।।३०।।

न ददर्श द्रुमान् जन्तून् पशुपक्षिगणान् यदा ।
तदा स्वर्गं गतो देवो नापश्यत् तत्र तान् सुरान् ।।३१।।

गन्धर्वान् किन्नरान् यक्षान् पितॄन् शशिरवी न च ।
अन्धकारे गाढतमे न प्राज्ञायत किञ्चन ।।३२।।

ततोऽसौ प्रणिधानेन ज्ञात्वा ब्रह्मकृतञ्च यत् ।
सामर्थ्यं निजमायाञ्च ह्याविश्चक्रेऽखिलात्मक: ।।३३।।

ब्रह्माण्डं निर्ममे देवो मयूरेश: स्वलीलया ।
विश्वं चराचरं तत्र मयूरेशपुरीमपि ।।३४।।

यथापूर्वं पश्यति स्म सर्वं त्रिभुवनं विभु: ।
स्वञ्च बालै: परिवृतं ब्रह्माणञ्च तथाविधम् ।।३५।।

शङ्करञ्च भवानीं तामनुष्ठानगतान् मुनीन् ।
तपनं शशिनं भानि स्वर्गान् देवगणानपि ।।३६।।

पृथिवीं सर्ववृक्षाँश्च समुद्रान् सरितोऽपि च ।
पातालानि मयूरेशो ददर्श पूर्ववद् विभु: ।।३७।।

**ब्रह्माजीले भन्नुभयो** - यसरी भगवान्ले वरदान दिनुभएपछि कमण्डलुभवा नदीमा सपरिवार र सबन्धु-बान्धव रहेका मुनीश्वरहरूले श्रद्धापूर्वक स्नान गरे ।।२४।। सात कोटि गणहरूका साथै मैले पनि स्नान गरें । त्यसपछि मुनिहरूले त्यहीं मेरा साथमा रहेर तपस्या गरे । मुनिहरूको तपोवृद्धि हुनथालेपछि म श्रीगणेशको मायाबाट मोहित भएँछु । त्यस बेला मेरा मुखबाट अपशब्दहरू निस्कन थालेछन् । मैले भनेंछु- म जगत्को रचयिता, जगत्को वन्दनीय, सबैको पितामह, इन्द्र आदिद्वारा पूजनीय ईश्वर हुँ । मैले एघार वर्षको उमेरका, बच्चा-बच्चीसँग खेल्न रुचाउने, आचार-विचार केही नभएका, बालक श्रीगणेशलाई किन नमस्कार गरें ? मेरो ज्ञान धिक्कार योग्य छ, मेरो ब्रह्मपदको गौरव धिक्कारयोग्य छ, मेरो ब्रह्मपद धिक्कार-योग्य छ । अब म यो सृष्टि लुकाएर गुप्तरूप लिएर बस्छु । यी श्रीगणेश साँच्चिकै परमात्मा रहेछन् भने अर्को सृष्टि गर्नेछन् । यस्तो मनले निश्चय गरी म सम्पूर्ण सृष्टि लुकाएर बसें । त्यस बेला भगवान् श्रीगणेश सृष्टिभित्र रहेका आफ्ना बालसखाहरूलाई नदेखेर तिनका घर-घर जानुभयो । ती घरहरू पनि शून्य देखेर खिन्न भई वृक्षतर्फ हेर्नुभयो ।।२५-३०।। तर उहाँले वृक्ष, जन्तु, पशुपक्षी केही पनि देख्नुभएन । त्यसपछि उहाँ स्वर्गतर्फ लाग्नु भयो। स्वर्ग पनि रित्तै थियो । गन्धर्व, यक्ष, किन्नर, पितृ, सूर्य, चन्द्र कसैको पनि दर्शन भएन । प्रगाढ अन्धकारमात्र थियो । कहाँ के छ भन्ने कुरा केही जान्न सक्नुभएन । अन्धकारको भुमरीमा परेपछि उहाँले ध्यानद्वारा अन्धकार उत्पन्न गराउने ब्रह्माजी नै हुन् भन्ने थाहा पाएर आफ्नो मायाको शक्ति आविष्कार गर्नुभयो। फलस्वरूप उहाँले त्यो मायाको शक्तिबाट विशाल ब्रह्माण्डको रचना गर्नुभयो । चर र अचरले भरिएको संसार, आफू विराजमान हुने मयूरेशपुरी, स्वर्ग, मर्त्य र पातालालाई जस्ताको तस्तै बनाएर दर्शन गर्नुभयो । त्यस अवस्थामा उहाँले आफूलाई आफ्ना बालसखाहरूले घेरिरहेको पाउनुभयो । आफ्नै वरिपरि ब्रह्मा, शङ्कर, पार्वती, तपस्यामा लागेका मुनिहरू, सूर्य, चन्द्रमा, नक्षत्र, स्वर्गका देवता, पृथिवी, वृक्ष, समुद्र, नदी र पाताललाई पनि पहिलेजस्तै देख्नुभयो ।।३१-३७।।

क उवाच

ततोऽहं स्मृतिमापन्नोऽपश्यं देवं चिदात्मकम् ।
कलाकाष्ठामुहूर्तादिदिनपक्षस्वरूपिणम् ।।३८।।

दृष्ट्वेत्थं तमहं नत्वा क्षमापयमुदारधीः ।
मासर्तुवर्षकल्पादिचराचरस्वरूपिणम् ।।३९।।

असङ्ख्यब्रह्माण्डयुतरोमाञ्चैरुपशोभितम् ।
देवर्षियक्षगन्धर्वसरित्सागररूपिणम् ।।४०।।

मनुष्यकिन्नरलतावृक्षपन्नगरूपिणम् ।
दृष्ट्वेत्थं तमहं नत्वाक्षमापयमुदारधीः ।।४१।।

पुनः पुनरपश्यं तं मयूरेशं किरीटिनम् ।
कुण्डलाभ्यां नूपुराभ्यामङ्गदाभ्यां विराजितम् ।।४२।।

शेषनाभिं सर्पकण्ठं दिव्यमालाम्बरावृतम् ।
दिव्यसिंहासनगतं सर्वदेवैरभिष्टुतम् ।।४३।।

सिद्धिबुद्धिसमायुक्तं विभूतिभिरुपासितम् ।
चराचरमयं सर्वनमस्यं तत्स्वरूपिणम् ।।४४।।

प्रत्येकं तत्र चात्मानं तद्रूपं स्वं व्यलोकयम् ।
ततस्तं स्तुतवान् नत्वाऽप्रार्थयञ्च पुनः पुनः ।।४५।।

क्षमापराधं मे देव ! त्वन्मायागर्वितस्य मे ।
प्रभावं द्रष्टुकामस्य दीनस्य शरणार्थिनः ।।४६।।

क्षणेनानन्तब्रह्माण्डकारिणे ते नमो नमः ।
एवं वदन्तं मां नासापवनात् स्वोदरेऽनयत् ।।४७।।

तत्रापश्यं सर्वलोकं यथा बहिः प्रदृष्टवान् ।
देवं तथाविधञ्चापि कोटिब्रह्माण्डरोमकम् ।।४८।।

सर्वं चराचरं विश्वं यथा भूमौ तथा दिवि ।
एकस्मादण्डतश्चान्यद् ब्रह्माण्डान्तरमाविशम् ।।४९।।

**ब्रह्माजीले भन्नुभयो** – त्यसपछि मैले गुमेको होश पाएँ। संज्ञना शक्ति आयो र चित्स्वरूप भगवान्को चारै दिशा एवं विदिशामा दर्शन गरें । कला, काष्ठा, मुहूर्त, दिन र रात आदि कालका अवयवका रूपमा भगवान् श्रीगणेशको दर्शन गरें । सर्वत्र भगवान्को दर्शन गरेर मेरो बुद्धि उदार भयो, भक्तिभाव जागेर आयो, प्रणाम गरें र क्षमायाचना पनि गरें । मास, ऋतु, कल्प आदि कालरूप, जड एवं चेतनस्वरूप; आफ्ना रोमाञ्चहरूबाट असङ्ख्य ब्रह्माण्ड प्रदर्शन गर्नुहुने; देवता-ऋषि, नक्षत्र, यक्ष, गन्धर्व, नदी र सागरका रूपमा आभासित; मनुष्य, किन्नर, लता र सर्पका रूपमा शोभायमान भगवान्लाई नमस्कार गरी फेरि पनि क्षमायाचना गरें ।।३८-४१।। त्यसपछि मैले किरीटधारण गर्नुहुने, कुण्डल, नूपुर र गदा आदि आयुधहरूद्वारा शोभायमान, नाभिमा शेषनागलाई धारण गर्नुहुने, घाँटीमा सर्पको माला लगाउनुभएका, दिव्यमाला र वस्त्रद्वारा अलङ्कृत, सबै देवताहरूद्वारा स्तुति गरिनुभएका, सिद्धि-बुद्धिसहित अणिमा, महिमा आदि विभूतिहरूबाट उपासना गरिनुभएका, चराचरमय र सर्ववन्दनीय, परमतत्त्वरूप भगवान् श्रीगणेशको दर्शन गरें ।।४२-४३।। दर्शन गर्दा मैले संसारमा देखिने प्रत्येक आत्मालाई श्रीगणेशकै रूपमा दर्शन गरिरहेको थिएँ । त्यसपछि मैले भावविह्वल भएर स्तुति र प्रार्थना गर्दै भने- 'हे दयालु देवता ! हजुरको मायाका कारण अहङ्कार धारण गर्ने र हजुरको शक्तिको परीक्षण गर्न चाहने म अपराधी हुँ । आज हजुरका समक्ष दीन, हीन र शरणार्थीका रूपमा आएको छु । मेरा अपराधलाई क्षमा गरिदिनुहोस् । एक छिनमा अनन्त ब्रह्माण्डको रचना गर्ने सामर्थ्यले सम्पन्न हजुरलाई मेरो बारबार नमस्कार छ।' मेरा यी प्रार्थना सुनेर श्रीगणेशले मलाई आफ्नो नासिकाको प्राणवायुबाट तानेर आफ्नो पेटभित्र पुऱ्याउनुभयो ।।४४-४७।। यहाँ मैले जे-जस्तो लोकदृश्य देखेको थिएँ त्यहाँ पनि त्यही लोकदृश्य देखें । श्रीगणेशको पेटभित्र रहँदा मैले देवगण र श्रीगणेशका रोम-रोममा आश्रित कोटि-कोटि ब्रह्माण्ड, सम्पूर्ण चराचर, विश्व, पृथिवीका दृश्य र स्वर्ग आदि दिव्य लोकका दृश्य पनि दर्शन गरें । म श्रीगणेशको पेटमा थिएँ, तर एउटा ब्रह्माण्डबाट अर्को ब्रह्माण्डमा प्रवेश गरिरहेको थिएँ । प्रत्येक ब्रह्माण्डमा मैले सम्पूर्ण संसार देखें । आफूलाई देखें र आफ्ना

तथैव दृष्टवान् सर्वानेव नानाण्डमध्यग: ।
अपश्यं विश्वमखिलं स्वात्मानं देवमेव च ।।५०।।

तत: खिन्नोऽब्रुवं देवं नान्तं पश्यामि ते क्वचित् ।
कृपां कुरु मम विभो ! मायामेतां निवारय ।।५१।।

तत: स करुणाविष्ट: सर्वमन्तर्दधे क्षणात् ।
पुनरेव मयूरेशमपश्यं बालकैर्वृतम् ।।५२।।

क्रीडन्तं पूर्ववन्नत्वाऽब्रुवं मायां न तेऽविदम् ।
अपराधसहस्रं मे मातृवत् त्वं क्षमस्व च ।।५३।।

मयूरेशोऽब्रवीन्मां हि मूर्ध्नि हस्तं निवेश्य ह ।

देव उवाच

न मे क्रोधो न भिन्ना धी: स्वीय: पर इति भ्रम: ।।५४।।

कस्मादपि भयं मे न मत्तो न भयमण्वपि ।
श्रुत्वेत्थं वचनं तस्य मयूरेशपुरं शिवम् ।।५५।।

भवानीमपि तत्सूनुमद्राक्षं मुनिबालकै: ।
गृहीत्वाज्ञां स्वकं स्थानमगमं हर्षनिर्भर: ।।५६।।

भवानीबालकेनायान्मन्दिरं स्वञ्च बालका: ।।५७।।

आराध्य भगवान् श्रीगणेशलाई पनि देखें । श्रीगणेश र दृश्यावलीको केही अन्तोपन्तो नपाएर म खिन्न भएँ । त्यसै अवस्थामा प्रभुको प्रार्थना गरें - 'हे श्रीगणेशदेव ! मैले हजुरको आदि-अन्त भेट्टाउन सकिनँ। हे अन्तर्यामी! ममाथि दया गर्नुहोस् र ममाथि प्रयोग गरिएको आफ्नो मायालाई हटाउनुहोस्।' यसरी मेरो प्रार्थना सुनेपछि दयालु मयूरेश प्रभुले आफ्नो मायाबाट सिर्जिएका समस्त दृश्यलाई अन्तर्धान गराउनुभयो । अन्तर्धानपछि मैले फेरि आफ्ना साना-साना बालक साथीहरूसँग क्रीडा गर्दै रमाउनुभएका भगवान् मयूरेशको दर्शन गरें ।।४८-५२।। बालक्रीडामा आनन्दित हुनुभएका प्रभुलाई प्रणाम गर्दै भनें- 'हे प्रभु ! मैले हजुरको मायालाई चिन्न सकिनँ । मेरा हजारौं अपराधलाई आमाले छोराका अपराध क्षमा गरेझैं क्षमा गरिदिनुहोस्' ।।५३।। मेरो प्रार्थना सुनेर मयूरेश प्रभुले मेरो शिरमा हात राख्दै आज्ञा गर्नुभयो।

**श्रीगणेशले भन्नुभयो** - 'हे ब्रह्माजी ! म तपाईंसँग रिसाएको छैन । तपाईंप्रति मेरो भावना र बुद्धि पनि बदलिएको छैन । आफ्नो र पराइ भन्ने कुरा भ्रान्तिमात्र हो । मलाई कसैसँग डर छैन र मबाट पनि कसैले रत्तिभर डराउनु पर्दैन ।' भगवान् श्रीगणेशका यी वचन सुनेपछि मैले त्यहीं नै मयूरेशको दिव्यनगर, सदाशिव शङ्कर, जगदम्बा पार्वती र बालमित्रका साथ रहनुभएका भगवान् श्रीगणेशको दर्शन गरें । त्यसपछि उहाँबाट आज्ञा पाएर आफ्नो धाममा फर्कें । भवानीका पुत्र मयूरेश भगवान् पनि आफ्नो धाममा जानुभयो र उहाँसँग खेलिरहेका उहाँका बालमित्रहरू पनि आ-आफ्ना घरतर्फ लागे ।।५४-५७।

ॐ

**इति श्रीगणेशपुराणे क्रीडाखण्डे विश्वरूपदर्शनं नाम चतुरधिकशततमोऽध्याय:**

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'श्रीमयूरेश्वरद्वारा ब्रह्माजीलाई विश्वरूप दर्शन' शीर्षकान्वित एक सय चारौं अध्याय पूर्ण भयो ।।१०४।।

ॐ

## पञ्चोत्तरशततमोऽध्यायः  { १०५ अध्याय }

क उवाच

ततो भाद्रचतुर्थ्यान्तु ते सर्वे मुनिबालकाः ।
मृदमाहर्तुमायाता विमलां तामथानयन् ।।१।।

स्वस्वबुद्ध्या विधायाशु मूर्तीर्नानाविधाः शुभाः ।
सिंहारूढा मयूरस्थाः काश्चिन्मूषकसंस्थिताः ।।२।।

नानायुधधरा नानादिव्यालङ्कारसंयुताः ।
चतुर्भुजा गणेशस्य दिव्यगन्धाम्बराः शुभाः ।।३।।

भक्त्या परमयाऽपूजन्नुपचारैः पृथक् पृथक् ।
मण्डपे ताः प्रतिष्ठाप्य पुष्पादर्शप्रभायुजि ।।४।।

पद्मपुष्पयुता माला ददुस्ताः सुमनोहराः ।
वाद्यत्सु तूर्यघोषेषु नगरी हर्षमाप सा ।।५।।

गौरी तस्यां जन्मतिथौ द्वादशाब्दिकमर्भकम् ।
स्नापयामास च ददौ वायनानि सुवासिनी ।।६।।

सम्पूज्य विधिवद् भक्त्या हरिद्राकुङ्कुमादिभिः।
एतस्मिन्नन्तरे दैत्यो विश्वदेव इति श्रुतः ।।७।।

भगवद्रूपमास्थाय श्रीमुद्राङ्कितमाययौ ।
शङ्खचक्रगदापद्मवनमालालसत्तनुः ।।८।।

तुलसीदामरुचिरो दिव्यवस्त्रानुलेपनः ।
कमण्डलुं वारिपूर्णं वेणुदण्डं दधौ करे ।।९।।

गौरी तमतिथिं द्वारि तिष्ठन्तं प्राह भक्तितः ।
कुत आगम्यते ब्रह्मँस्तुष्टाऽहं तव तेजसा ।।१०।।

इत्युक्तः प्राह तां विप्रः श्रुतवानस्मि यत् पुरा ।
तद् दृष्ट्वा नयनाभ्यान्ते परितुष्टं मनो मम ।।११।।

क्षुधया पीडितश्चाहं भवतीगृहमागतः ।

ब्रह्माजीले भन्नुभयो - त्यसपछि भाद्रशुक्ल चतुर्थी तिथिमा ती सबै मुनिबालकहरू माटो खन्न जङ्गलतर्फ गई निर्मल र शुद्ध माटो लिएर आए ।।१।। तिनले आ-आफ्नो बुद्धिअनुसार अनेक थरि मङ्गलमय श्रीगणेशका मूर्ति तयार गरे। तिनले बनाएका मूर्तिहरूमध्ये कुनै श्रीगणेशमूर्ति मयूरमा सवार थिए। कुनै मूसामा सवार श्रीगणेशका मूर्ति थिए। अनेक थरि आयुधले सुहाएका, वस्त्र एवं अलङ्कारले सजिएका ती मूर्तिमध्ये कुनै चार हातले सुहाएका थिए, कुनै मूर्ति दिव्यगन्धले सुवासित वस्त्रहरूले युक्त थिए ।।२-३।। ती बालकहरूले नानाथरि मूर्तिहरूको भक्तिपूर्वक अनेक उपचारहरूबाट अर्चना गरे । पुष्प र ऐनाहरूको कान्तिले शोभायमान मण्डपमा ती मूर्तिहरूको प्रतिष्ठा गरी तिनले कमल र पुष्पले सुन्दर माला पहिराएर शृङ्गार गरे । त्यस बेला बाजा-गाजा बज्न थाले । त्यो नगर नै अत्यन्त आनन्दित भयो ।।४-५।। भगवती पार्वतीले पनि भगवान् श्रीगणेशको जन्मदिन भाद्रशुक्ल चतुर्थीमा बाह्र वर्ष पूरा भएका आफ्ना प्यारा छोरा श्रीगणेशलाई नुहाइदिनुभयो र उपहार एवं वस्त्र टक्र्याउनुभयो । सौभाग्यवती नारीहरूको विधिवत् अबीर र कुङ्कुमले पूजा गर्नुभयो। पूजा चलिरहेकै समयमा एउटा विश्वदेव नामक दैत्य श्रीमुद्राङ्कित नारायणको रूप धारण गरी त्यहाँ आयो ।।६-७।। त्यसको शरीर शङ्ख, चक्र, गदा र पद्मद्वारा शोभायमान थियो । त्यसले घाँटीमा तुलसीको माला धारण गरेको थियो । त्यो दिव्य चन्दनको लेप र दिव्य वस्त्रले सुहाएको थियो । हातमा जलपूर्ण कमण्डलु र बाँसको दण्ड धारण गर्ने त्यस दानवलाई आफ्नो घरको ढोकामा उभिएको देखेर भक्तिपूर्वक जगदम्बा पार्वतीले भन्नुभयो- 'हे ब्राह्मण देवता ! तपाईं कहाँबाट आउँदै हुनुहुन्छ ? तपाईंको तेजोमय मुखमण्डल देखेर मेरो मन सन्तुष्ट छ ।।८-११।।' यसरी प्रश्न गरिँदा छद्मब्राह्मणका रूपमा आएको विश्वदेवनामक दानवले भन्यो - मैले तपाईंको जस्तो विशेषता सुनेको थिएँ, आँखाबाट त्यस्तै देखेर मेरो मन प्रसन्न भएको छ । म भोकले साह्रै व्याकुल भएर तपाईंको घरमा आएको छु ।

पार्वत्युवाच

आस्यतां भुज्यतां स्वस्थं स च तत्रासने स्थितः ।।१२।।

आसीनस्य मयूरेशो विष्टरेऽक्षालयत् तदा ।
चरणौ तत्तीर्थजलैः सिषेच सर्वतोऽमलैः ।।१३।।

सम्पूज्य भोजयामास पक्वान्नैः पायसैरपि ।
अपोशानकरस्तूष्णीमासीच्चिन्तातुरो द्विजः ।।१४।।

उमोवाच द्विजं पश्चाद् भुज्यतां भुज्यतामिति ।
यदि नान्नं मनोयोग्यं तदा दास्येऽतिवाञ्छितम् ।
वद तच्छीघ्रमानेष्ये शङ्करस्य प्रभावतः ।।१५।।

द्विज उवाच

क्षीरार्णवस्थितं देवं दृष्ट्वा नित्यं भुनज्म्यहम् ।
जलं पिबामि तच्चाद्य विस्मृतं मोहतो मया ।।१६।।

उमोवाच

पूर्वमेव कथं नोक्तो नियमस्ते द्विजोत्तम ।!
पात्रादुत्थाय गन्तासि कथं सत्त्वविलुम्पक ।।१७।।

शङ्करः क्षोभमापन्नो न जाने किं करिष्यति ।।१८।।

मयूरेशोऽब्रवीत् तत्र यदि भावो दृढो हृदि ।
तदात्रैव भवेत् पद्मनाभेर्दर्शनमाशु ते ।।१९।।

प्रायो भाग्यं महद् दृष्टं यत् पक्वान्नञ्च पायसम् ।
त्यक्त्वा व्रजसि कुत्र त्वं मूढभावेन वा द्विज ।।२०।।

वहुजन्मतपोभिर्यत्कटाक्षो भुवि लभ्यते ।
तया ते परिविष्टान्नं कथं त्यजसि सुव्रत ।।२१।।

**पार्वतीले भन्नुभयो** - हे ब्राह्मणदेव ! तपाइँ यो आसनमा बस्नुहोस् र आनन्दपूर्वक भोजन गर्नुहोस् । पार्वतीले त्यसो भन्नुभएपछि त्यो छद्मब्राह्मण उहाँले टक्र्याएको आसनमा बस्यो।।११-१२।। श्रीगणेशले आसनमा बसेका छद्मब्राह्मणका चरणहरूलाई निर्मल तीर्थको जलद्वारा प्रक्षालन गर्नुभयो । पूजा गरेपछि मीठा पकवान र खीरसमेत भोजन गराउन लाग्नुभयो। त्यो छद्मब्राह्मण हातमा आचमनको जल लिएर चिन्तित मुद्रामा बसिरह्यो ।।१३-१४।। त्यसलाई त्यसै बसिरहेको देखेर पार्वतीले भन्नुभयो- 'हे ब्राह्मण ! किन मौन हुनुहुन्छ ? भोजन गर्नुहोस्। यदि तपाइँलाई हामीले टक्र्याएको भोजन मन परेन भने तपाइँलाई कस्तो भोजन मन पर्छ त्यस्तै भोजन टक्र्याउँछु, भन्नुहोस् - कस्तो भोजन टक्र्याऊँ ? म तपाइँले चाहेजस्तो भोजन ल्याउनेछु। भगवान् कैलासपति शङ्करका प्रतापले यहाँ कुनै कुराको कमी छैन' ।।१५।।

**छद्मब्राह्मणले भन्यो** - 'हे पार्वती ! क्षीरसागरमा शेषशायी भएर रहनुभएका नारायण भगवान्को दर्शन गरेर नित्य भोजन र जल ग्रहण गर्ने गरेको छु । आज अज्ञानका कारण मैले त्यो कुरा बिर्सिएँ । त्यसो भएर म मौन बसिरहेको छु' ।।१६।।

**पार्वतीले भन्नुभयो** - हे ब्राह्मण ! तपाइँले पहिले नै आफ्नो नियम किन बताउनुभएन ? संस्कार त्याग गर्न चाहने हे ब्राह्मण ! टक्र्याइएका भोजनको थाल यसै छोडेर तपाइँ कसरी जान सक्नुहुन्छ ? तपाइँ त्यत्तिकै भोजन त्याग गरेर जानुभयो भने भगवान् शङ्कर क्रुद्ध हुनुहुनेछ । त्यस अवस्थामा उहाँले जे पनि गर्न सक्नु हुन्छ ।।१७-१८।। त्यसै बेला श्रीगणेशले पनि ब्राह्मणलाई लक्षित गर्दै भन्नुभयो - 'हे ब्राह्मण! यदि तपाइँको भगवान् नारायणमा दृढ भक्ति छ भने यहीं नै छिट्टै भगवान् नारायणको दर्शन पाउन सक्नु हुनेछ । पकवान र पायसको भोजन गर्न पाउनु पनि ठूलै भाग्यले जुरेको हुन्छ। हे ब्राह्मण ! यस्तो भोजनलाई मूर्खतापूर्वक छोडेर तपाइँ कहाँ जानुहुन्छ ? ।।१९-२०।। अनेक जन्मका तपबाट मात्र जसका कटाक्षका दर्शन पाउन सकिन्छ, त्यस्ती जगज्जननी पार्वतीले आफ्नै हातले पस्केर टक्र्याएको अन्न तपाइँले कसरी त्याग गर्न सक्नुहुन्छ ? ।।२१।। ब्रह्मा आदि देवताले पनि जसको

ब्रह्मादीनां न गम्या या दृष्टा साक्षात् त्वया शिवा ।
सर्वलोकस्य जननी सर्वयोषिद्वरा हि सा ।।२२।।
सर्वेषामेव देवानां शक्तिः सा परमाद्भुता ।
तद्दर्शनेन देवस्य विष्णोर्जातं हि दर्शनम् ।।२३।।
चकोरस्येवाग्निभुजो मिष्टान्नं नैव रोचते ।
तथा किन्ते न रोचेत देवान्नममृतोपमम् ।
मम वा सर्वरूपस्य दर्शने सा दृशिर्भवेत् ।।२४।।

द्विज उवाच

रमापतेरहं दासो न नमस्यामि किञ्चन ।
यदि त्वं सर्वरूपोऽसि यदि सामर्थ्यमस्ति ते ।।२५।।
तदा दर्शय विश्वेशं नारायणमनामयम् ।
एवं बुद्ध्वा दृढं तस्य निश्चयं स मयूरराट् ।।२६।।
अन्तर्धाय प्रादुरासीन्नारायणस्वरूपवान् ।
पीताम्बरः शङ्खचक्रगदापद्मधरो विभुः ।।२७।।
नानालङ्काररुचिरः सर्वालङ्कारसुन्दरः ।
कौस्तुभेन लसद्वक्षा वनमालाविभूषितः ।।२८।।
शेषशायी महालक्ष्म्या संवाहितपदाम्बुजः ।
विश्वदेवश्च तं दृष्ट्वा ननाम परिपूज्य च ।।२९।।
यातस्तन्मयतां भक्त्या विस्मृत्य च शरीरताम् ।
उवाच च चिदानन्दपरिपूर्णो द्विजोत्तमः ।।३०।।
अद्य धन्यं जनुर्मेऽद्य जीवितञ्च सुजीवितम् ।
अद्येयं नगरी धन्या धन्यौ तौ पितरौ मम ।।३१।।
मयूरेशोपदेशेन भवान्या दर्शनेन च ।
परात्परस्य विष्णोस्ते चराचरस्वरूपिणः ।।३२।।
लब्धं दर्शनमत्रैव सर्वान्तर्यामिणो विभोः ।
नारायणोऽपि तं भक्तं बाहुभिः परिषस्वजे ।।३३।।
उवाच च प्रसन्नात्मा बाष्पगद्गदया गिरा ।
मदर्थं त्यक्तवान् भुक्तिं क्षीराब्धेरहमागतः ।।३४।।
दृष्ट्वा ते निश्चयं भक्तिं दृढामव्यभिचारिणीम् ।
भक्तमार्गं प्रसिञ्चामि मारुतोद्धतकण्टकम् ।।३५।।

सजिलै दर्शन पाउनु हुन्न त्यस्ती पार्वती माताको दर्शन आज तपाईंले पाउनुभएको छ । पार्वती माता सम्पूर्ण संसारकी माता हुनुहुन्छ, सम्पूर्ण नारीहरूमा श्रेष्ठ नारी हुनुहुन्छ, सबै देवताहरूकी अद्भुत शक्तिरूपा हुनुहुन्छ, जगज्जननी पार्वतीको दर्शन गरेपछि भगवान् विष्णुको दर्शन भएन र ? आगो खाने चखेवालाई मिठाई मन पर्दैन, के त्यस्तै तपाईंलाई पनि अमृतमय यो अन्न मन पर्दैन ?' यति भनेपछि श्रीगणेशले मनमनै भन्नुभयो मेरा सर्वव्यापक स्वरूपको दर्शन गरेपछि त्यसले नारायणको दर्शन गर्नेछ ।।२२-२४।।

छद्मब्राह्मणले भन्यो - 'म लक्ष्मीपति नारायणको सेवक हुँ, मैले अरू कुनै देवतालाई नमस्कार गर्ने गरेको छैन। यदि तपाईं सर्वरूप हुनुहुन्छ र तपाईंको त्यस्तो शक्ति छ भने तपाईंले निरामय विश्वका स्वामी नारायणलाई यहाँ देखाउनुहोस्। त्यस छद्मब्राह्मणको त्यो कुरा सुनेर भगवान् मयूरेशले पनि अन्तर्धान भएर नारायणको स्वरूप लिई त्यसलाई दर्शन दिनुभयो। पीताम्बर, शङ्ख, चक्र, गदा, पद्म धारण गर्ने, शाश्वतस्वरूप, अनेक अलङ्कारद्वारा अलङ्कृत, कौस्तुभमणिलाई वक्षस्थलमा धारण गर्नुहुने, वनमालाद्वारा सुहाउनुभएका, शेषशायी र महालक्ष्मीद्वारा पाउ दबाएर सेवा गरिनुभएका भगवान् नारायण त्यहाँ अकस्मात् प्रकट हुनुभयो । विश्वदेव राक्षसले नारायणको स्वरूप देखेर पूजा गरी प्रणाम गर्‍यो ।।२५-२९।। त्यो छद्मब्राह्मण भक्तिले तन्मय भयो र त्यसले शरीरभाव पनि बिर्सिएर चिदानन्दपूर्ण हुँदै भन्यो - 'आज मेरो जन्म धन्य भयो, जीवन सफल भयो, यो नगरी धन्य भयो, मेरा माता-पिता धन्य हुनुभयो, श्रीगणेशको उपदेश र भगवती पार्वतीको आशीर्वादको फलस्वरूप चराचरमय, परात्पर नारायण प्रभुको यहाँ दर्शन गर्न पाएँ ।' त्यसपछि भगवान् नारायणले पनि आफ्ना चारैभुजा फैलाएर त्यसलाई अङ्कमाल गर्नुभयो । भगवान् विष्णुले प्रसन्न भएर हर्षाश्रु बगाउँदै भन्नुभयो - 'हे भक्त ! मेरा लागि तिमीले भोजन नै छोड्यौ भन्ने थाहा पाएँ । त्यसपछि म क्षीरसागरबाट दौडी दौडी यहाँ आएको छु ।।३०-३४।। तिम्रो दृढ निश्चय, दोषहीन र अक्षय्य भक्ति देखेर मैले भक्तको मार्गलाई हावाद्वारा निष्कण्टक तुल्याई कृपाले सिञ्चन गर्दछु।

भक्ततृषानिवृत्त्यर्थं जातोऽहं जलरूपधृक् ।
नानारूपधरो जातो भक्तानामार्तिनाशन: ।।३६।।
यथा भक्त: प्रियो नित्यमिति ते दर्शयाम्यहम् ।
अभूद् भाद्रचतुर्थ्यां हि मयूरेशमहोत्सव: ।।३७।।
मूर्तिं महीमयीं कृत्वा बर्ह्याखुसिंहगां पृथक् ।
नानालङ्कारशोभाढ्यां नानारङ्गैः सुशोभिताम् ।।३८।।
अनेकैः पूज्य तां सम्यग्बालकैर्मुनिसञ्चयैः ।
केचिदग्रे प्रगायन्ति केचिन्नृत्यन्ति भक्तित: ।।३९।।
वाचयन्ति पुराणानि प्रदक्षिणपरा: परे ।
एतस्मिन्नन्तरे पौत्रो वसिष्ठस्य महात्मन: ।।४०।।
पराशर इति ख्यात आययौ स्वेच्छया मुनि: ।
स चतुर्वार्षिको मूर्तिं विदधे भक्तितत्पर: ।।४१।।
शुष्कपर्णकृतां मालां कृत्वा तस्मै न्यवेदयत् ।
गन्धबुद्ध्या कर्दमेन तां व्यलेपयदादरात् ।।४२।।
मिष्टान्नानि च लड्डूकान् दक्षिणाञ्च फलानि च ।
न्यवेदयत् तदा पत्रैरनेकैः कर्दमैरपि ।।४३।।
सङ्कल्पं लीलया चक्रे जङ्घावाद्यं शनैः शनैः ।
मुहूर्तं नर्तनं कृत्वा रुरोद भक्षयेति च ।।४४।।
सम्प्रार्थ्य मूर्तिं बहुधा तत: सा चेतनां ययौ ।
यद् यत् तेन यदुद्देशात् स्थापितं पुरतोऽभवत् ।।४५।।
तत्तथैव च सञ्जातं तत: साऽभक्षयत् तदा ।
लड्डूकान् मोदकान् नाना पक्वान्नं पायसान्वितम्।।४६।।
विश्वदेवश्च तद् दृष्ट्वा मिथ्याभूतं यथार्थवत् ।
मृत्तिकान्नानि सत्यानि सर्वं पुष्पफलादिकम् ।।४७।।
सचेतनाञ्च तां मूर्तिं षड्भुजाञ्च पुन: पुन: ।
व्यलोकयद् विष्णुरूपां चतुर्बाहुविराजिताम् ।।४८।।
उवाच सततं देवं किमिदं मृत्तिकाशनम् ।

मूर्तिरुवाच

भक्त्या यदर्पितं मह्यं सुधारससमं भवेत् ।।४९।।
अभक्तार्पितममृतं विषमेव भवेन्मम ।

म भक्तको प्यास मेटाउन पानीको रूप धारण गर्दछु । मैले भक्तहरूको कष्टनिवृत्तिका लागि अनेक पटक अनेक रूप धारण गरेको छु । मलाई भक्त प्यारो हुन्छ भन्ने कुरा मैले तिमीलाई देखाउँछु ।' यसो भनेपछि भगवान्ले आफ्नो माया देखाउनुभयो । त्यसै बेला भाद्रशुक्ल चतुर्थीमा हुने मयूरेशको उत्सवको दृश्य देखियो ।।३५-३७।। अनेक बालक र मुनिहरूले मयूर, सिंह र मूसाको वाहनमा सवार, अनेक थरि अलङ्कारको शोभाले सम्पन्न र अनेक वर्णले शोभायमान माटाले बनेका मूर्तिहरूको आराधना गरिरहेका थिए । केहीले गीत गाएका थिए भने कुनै भक्तिले नाचिरहेका थिए । केही ब्राह्मणहरू पुराणवाचनमा व्यस्त थिए र कुनै श्रीगणेशमूर्तिको परिक्रमा गरिरहेका थिए । त्यसै बेला वसिष्ठका नाति र पराशरका नामबाट प्रसिद्ध मुनि त्यहाँ आइपुगे ।।३८-४०।। तिनले पनि आफू चार वर्षका बालक बनेर श्रीगणेशको मूर्ति निर्माण गरे। सुकेका पातले बनेको माला टक्र्याए । चन्दनको भावमा तिनले त्यस मूर्तिमा हिलो लेपन गरे। मिष्टान्न, लड्डू र दक्षिणाका रूपमा रूखका पात र हिलो चढाए । लीलापूर्वक सङ्कल्प गरेर बाजाको रूपमा आफ्ना जाँघहरू बजाए । एक मुहूर्त त्यहाँ नाचेपछि रोएर आफूले चढाएको नैवेद्य खान आग्रह गरे ।।४१-४४।। तिनले धेरै पटक प्रार्थना गरेपछि तिनले पूजा गरेको माटाका मूर्तिमा चेतना आएको देखियो । जुन भावना गरेर पराशरले जस्तो-जस्तो माटो आदि पदार्थ टक्र्याएका थिए, ती वस्तु त्यसैरूपमा देखिए । त्यसपछि त्यो श्रीगणेशमूर्तिले लड्डू, मनभोग र खीरसमेत अन्य भोज्यपदार्थ खाएको देखियो । विश्वदेवले मायाद्वारा बनाइएको दृश्यलाई यथार्थ ठान्यो । माटाका नैवेद्यहरू, सम्पूर्ण फलफूल र सचेतन एवं छ हातको त्यस मूर्तिलाई बारबार हेरिरह्यो। पटक-पटक हेर्दा त्यो श्रीगणेशको मूर्ति चतुर्बाहु विष्णुको रूपमा बदलिएको देख्यो ।।४५-४८।। त्यसपछि त्यसले भगवान् नारायणलाई भन्यो - हजुरले किन ऋषिले टक्र्याएका माटोले बनेका पदार्थ खानुभयो ?

**चतुर्बाहु विष्णुले भन्नुभयो** - हे विश्वदेव ! मलाई भक्तिपूर्वक चढाइएका पदार्थ जस्ता भए पनि अमृतरससमान लाग्दछन् । भक्तिहीन मानिसले टक्र्याएको अमृत पनि मलाई विषबराबर हुन्छ ।

क उवाच

एवं तद्वचनं श्रुत्वा विश्वदेवोऽब्रवीत् पुनः ।।५०।।

कस्ते भक्तो मम च तं दर्शयस्व सुरेश्वर !

ततस्तस्य करं धृत्वा बहिरायान्मयूरराट् ।।५१।।

गृहे गृहे पूज्यमानं देवं तस्मै व्यदर्शयत् ।

शिखिनं स समारूढं मयूरेशमलोकयत् ।।५२।।

तत्रापि पर्यपश्यत् स विश्वदेवयुतञ्च तम् ।

नायं मम भवेत् स्वामीत्येवं बुद्धिं विसृज्य ताम् ।।५३।।

गृहे गृहे विश्वदेवो नारायणमलोकयत् ।

सर्वत्र स ददर्शाऽथ पूज्यमानं गुणेश्वरम् ।।५४।।

क्वापि क्वापि मयूरेशं ददर्श विष्णुरूपिणम् ।

पुनरालोकयन् तत् तन्मयूरेशमलोकयत् ।।५५।।

भुजं स्वं परिगृह्यैव बहिर्यातं स्वलीलया ।

आक्षिप्य हस्तं स प्रायान्नायं स्वामी ममेति च ।।५६।।

अटन् गृहे गृहे सोऽथ पूज्यमानं ददर्श ह ।

मयूरेशं वाद्यघोषैर्नृत्यगीतैरनेकधा ।।५७।।

क्वापि दृष्ट्वा विष्णुरूपं नमस्कर्तुं ययावथ ।

पुनर्मयूरेशरूपं ददर्श स शिखिस्थितम् ।।५८।।

गरुडारूढमन्यत्र शेषारूढं तथा क्वचित् ।

नमस्कर्तुं यदा याति विश्वदेवो मुदा युतः ।।५९।।

तावत् सिंहसमारूढं पश्यति स्म पुनः पुनः ।

भुञ्जन्तञ्च रमन्तञ्च स्वपन्तञ्च ददर्श सः ।।६०।।

**ब्रह्माजीले भन्नुभयो**– चतुर्बाहु मूर्तिका यी कुरा सुनेर विश्वदेवले भन्यो– हजुरको भक्त कुन हो ? मलाई त्यस भक्तको दर्शन गराउनुहोस्। यो कुरा सुनेर विष्णुका रूपमा परिणत भगवान् मयूरेशले त्यसको हात समातेर त्यसलाई बाहिर लिएर आउनुभयो ।।४९-५१।। त्यहाँ बाहिर आई उहाँले विश्वदेवलाई घर-घरमा पूजा गरिएका मयूरमा सवार श्रीगणेशलाई देखाउनुभयो। त्यसले जहाँसुकै श्रीगणेशको पूजा भइरहेको देख्यो।(ती पूजिने मूर्तिहरूका साथ त्यो दानव विश्वदेवलाई पनि बसेको अवस्थामा देखाउनुभयो । यी श्रीगणेश मेरा स्वामी होइनन् भन्ने दुर्बुद्धि हटाएर विश्वदेवले फेरि ती मूर्तिहरूलाई हेऱ्यो । घर-घरमा पूजा भइरहेका नारायणका मूर्तिलाई र आफूद्वारा पूजा गरिएका श्रीगणेशमूर्तिलाई पनि हेऱ्यो । सबै मूर्तिहरू नारायणमय बनेका थिए । केही बेरपछि फेरि हेऱ्यो र ती सबै मूर्तिलाई त्यसले श्रीगणेशकै मूर्तिका रूपमा बदलिएको र त्यहाँ भक्तहरूले पूजा गरिरहेको दर्शन गऱ्यो । कहीं त्यसले मयूरेशलाई विष्णुका रूपमा र कहीं विष्णुलाई मयूरेशका रूपमा देख्यो ।।५२-५५।। आफ्नो लीला र माया देखाउँदै विश्वरूपको हात समातेर लौ हेर लौ हेर भनिरहनुभएका श्रीगणेशको हात फ्याँकिदिएर विश्वदेवले भन्यो– तपाईं जेसुकै भन्नुहोस्, यी श्रीगणेश मेरा ईश्वर होइनन्। त्यसपछि पूजाको दृश्य हेर्न त्यो विश्वरूप प्रत्येक गृहस्थका घरमा पुग्यो। त्यहाँ-त्यहाँ त्यसले वाद्यघोष, मन्त्रघोष, नृत्य र गीतका साथ श्रीगणेश भगवान्को पूजा चलिरहेको देख्यो। कुनै घरमा श्रीगणेशको मूर्तिलाई विष्णुको रूपमा देखी अब नमस्कार गर्छु भनेर नजिकै पुग्दा त्यसले त्यस मूर्तिलाई मयूरमा सवार हुनुभएका मयूरेश श्रीगणेशका रूपमा दर्शन पायो ।।५६-५८।। कहीं त्यस मूर्तिलाई गरुडमा सवार भएका नारायणका रूपमा देख्यो भने कहीं शेषनागको शय्यामा शयन गर्नुहुने नारायणका रूपमा पनि देख्यो। यसरी देखेर भक्तिपूर्वक प्रणाम गर्न जाँदा तुरुन्तै त्यस मूर्तिलाई सिंहमा सवार भगवान् श्रीगणेश बनेको देख्यो । विश्वरूपले कहीं भगवान् श्रीगणेशलाई भोजन गरिरहेको अवस्थामा देख्यो, कहीं शय्यामा शयन गर्नुभएको अवस्थामा देख्यो ।।५९-६०।। विश्वरूप विस्मित, भ्रान्त र

ततः खिन्नो विश्वदेवो वसिष्ठद्वारमागमत् ।
ततोऽब्रवीन्मयूरेशः पश्य मे भक्तमुत्तमम् ।।६१।।

ततः पराशरं सोऽथ ददर्श पुरतः स्थितम् ।
मृन्मयैरुपचारैस्तं पूजयन्तं गुणेश्वरम् ।।६२।।

भक्षयन्तञ्च लड्डूकान् मृन्मयान् देवमेव च ।
पश्यति स्म पुनर्व्योम्नि जले भूमौ तमेव सः ।।६३।।

क्षणं नारायणं देवं मयूरेशं क्षणादपि ।
ततः स्वभेदबुद्धिं स्वां तत्याज भ्रान्तिमेव च ।।६४।।

सर्वभावेन तं नत्वा स्तुत्वाऽभेदधिया पुनः ।
अनुज्ञातो मुदा प्रायाद् विश्वदेवः स्वमाश्रमम् ।।६५।।

खिन्न भयो। त्यसपछि विश्वदेव वसिष्ठ ऋषिको ढोकामा पुग्यो। त्यहाँ पुग्दा मयूरेश भगवान्ले 'हे विश्वरूप! यहाँ आइपुग्यौ ? ल मेरा परमभक्तको दर्शन गर' भन्नुभयो । त्यस बेला विश्वदेवले भक्तका रूपमा आफ्ना सामु ऋषि पराशरलाई देख्यो । ती पराशर माटाका लड्डू चढाएर भगवान् श्रीगणेशको पूजा गरिरहेका थिए । पराशरले चढाएका माटाका लड्डूलाई स्वादपूर्वक चाखिरहनुभएका श्रीगणेशको पनि दर्शन गर्‍यो । केही बेरपछि आफ्नो चारैतिर आकाश र धर्तीमा आँखा लगाउँदा त्यसले श्रीगणेशलाई आकाशमा, धर्तीमा र जलमा पनि दर्शन गर्‍यो। यस्ता दृश्यावलीहरूको दर्शनपछि नारायण र श्रीगणेशमा कुनै भेद छैन भन्ने भावना बलियो भयो । अनि त्यसले भेदबुद्धि र भ्रान्तिलाई त्याग गरेपछि भगवान् श्रीगणेशको मूर्तिमा प्रणाम गरी अभेद भावनाका साथ आफ्नो आश्रम जानका लागि प्रस्थान गर्‍यो ।।६१-६५।।

ॐ

**इति श्रीगणेशपुराणे क्रीडाखण्डे विश्वदेवभेदबुद्धिनिरासो नाम पञ्चाधिकशततमोऽध्यायः**

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'मयूरेश्वरद्वारा नारायणभक्त विश्वदेवब्राह्मणको देवताहरूप्रतिको भेदबुद्धि निराकरण' शीर्षकान्वित एक सय पाँचौं अध्याय पूर्ण भयो ।।१०५।।

ॐ

## षडुत्तरशततमोऽध्यायः　　{ १०६ अध्याय }

क उवाच

ततस्त्रयोदशे वर्षे नमस्कृत्य महेश्वरम् ।
भस्माङ्गरागरुचिरं पञ्चास्यं दिग्भुजं शुभम् ।।१।।

रुण्डमालाधरं सुप्तं चन्द्रशेखरमच्युतम् ।
मयूरेशोऽथ जग्राह शशिनं तच्छिरोगतम् ।।२।।

क्रीडन् बहिः समायातो बालकैः परिवारितः ।
सुहृद्भिः परिनृत्यद्भिर्वदद्भिश्च परस्परम् ।।३।।

एतस्मिन्नन्तरे तत्र दैत्यो मङ्गलसंज्ञकः ।
करालवदनः क्रोडी विजेता परमाद्भुतः ।।४।।

वराहरूपो बलवान् दन्तच्छिन्नमहीरुहः ।
वज्रसारसटाभिः स भिन्दन् व्योमपदैर्धराम् ।।५।।

अञ्जनाद्रिरिव श्यामो वह्निकुण्डनिभेक्षणः ।
दृष्ट्वा तं विद्रुता बाला वर्षाघननिभस्वनः ।।६।।

न दृष्टः सूकरः क्वापीदृश इत्यब्रुवँश्च ते ।
यावन्मारयते बालाँस्तावद् देवो मयूरराट् ।।७।।

दधार दन्तयोर्दुष्टं तदा सूकरदानवम् ।
अथापरेण हस्तेन दधाराधरपोत्रकम् ।।८।।

पाटयामास सहसा वंशखण्डमिवार्भकः ।
पूर्वदेहं समास्थाय दशयोजनविस्तृतम् ।।९।।

पतितश्चूर्णयन् वृक्षान् दारयन् धरणीतलम् ।
ततस्तमब्रुवन् बाला धन्योऽयं पार्वतीसुतः ।।१०।।

क्षणेन नाशितो दैत्यो लीलयाऽसौ महाबलः ।
अस्य दर्शनतस्त्रस्ता वयं याता दिशो दश ।।११।।

पतमानेन येनेह चूर्णितानि गृहाणि च ।

**ब्रह्माजीले भन्नुभयो** – भगवान् श्रीगणेशले तेह्रौं वर्षमा प्रवेश गर्नुभएको थियो । एक दिन उहाँले भस्मद्वारा अङ्गलेपन गरी फुर्ती देखिनुभएका, पाँच मुख र दुई हातले सुहाउनुभएका, मङ्गलस्वरूप, नरमुण्डधारी, अच्युतस्वरूप र निद्रालीन चन्द्रमौलि शिवजीलाई नमस्कार गरी शिवजीको शिरमा गहना बनेर सुहाएका चन्द्रमालाई शिवजीको शिरबाट झिकेर आफ्नो शिरमा धारण गर्नुभयो ।।१-२।। त्यसपछि नृत्य गरिरहेका आफ्ना साथी बालकहरूसँग क्रीडा गर्दै आश्रम बाहिर जानुभयो । त्यसै बेला त्यस ठाउँमा मङ्गलनामक दैत्यले प्रवेश गर्‍यो । त्यो दैत्य डरलाग्दो अनुहार भएको, ठूलो छातीले युक्त, अद्‌भुत पराक्रमी र युद्धविजेता थियो ।।३-४।। त्यो दैत्य आफ्ना दाँतहरूको प्रहारबाट रूखहरूलाई पनि ढाल्न सक्ने बलवान् थियो । वज्रजस्ता बलिया जटाधारण गर्ने, आफ्नो हिंडाइबाट पृथिवी र आकाशलाई भेदन गर्न सक्ने, गाजलको पर्वतजस्तै कालो वर्णको र अग्निकुण्डझैं ज्वालामय आँखा भएको, वर्षाको बादलझैं गर्जन गर्ने त्यो मङ्गलनामक दानव त्यहाँ बँदेलको रूप धारण गरेर आएको थियो । त्यसलाई देखेर भागिरहेका बालकहरूले भने – 'यस्तो बँदेल हामीले कहिले पनि देखेका थिएनौं ।' त्यो बँदेलले अचानक बालकहरूमाथि प्रहार गर्न थाल्यो । त्यो देखेर मयूरेश प्रभुले एउटा हातले बनेलको रूप लिएर आएको त्यस दुष्ट दानवलाई समाउनुभयो। त्यसपछि अर्को हातले त्यस दानवको तल्लो दाह्रो समाएर एउटा बच्चाले बाँसलाई दुई फ्याँक पारेझैं दुई फ्याँक पारिदिनुभयो । त्यो दानव दश योजनसम्म फैलिएको सक्कली राक्षसको रूप धारण गरी पृथिवीलाई भेदन गर्दै र रूख-बिरुवालाई धूलो-धूलो बनाउँदै भुइँमा लड्यो । यो घटना देखेपछि श्रीगणेशका बालमित्रहरूले भने – 'यी पार्वतीनन्दन मयूरेश अद्‌भुत पराक्रमी छन् र धन्य छन् ।।५-१०।। यी हाम्रा बालमित्रले कति सजिलै महाबली दैत्यलाई एकै छिनमा धूलो चटाइदिए । जुन दैत्यलाई देखेर हामी चारैतिर ज्यान जोगाउन भागेका थियौं र जुन दैत्यको शरीर भुइँमा पछारिंदा घरहरू धूलोपीठो भएका थिए । त्यस्तो शक्तिशाली दैत्यलाई पनि हाम्रा मित्रले सजिलै मारिदिए ।'

क उवाच

ततः शिवो ललाटे स्वे नापश्यच्छशिनं यदा ।।१२।।

क्रोधसंरक्तनयनो विष्टपं प्रदहन्निव ।
गणानूचे रुषाविष्टो रक्षणं क्रियते कथम् ।।१३।।

केन दैत्येन नीतो मे ललाटस्थोऽमलः शशी ।

क उवाच

ततो लीना गणाः सर्वे कम्पमाना भयातुराः ।।१४।।

अपरे धैर्यमालम्ब्य वदन्ति स्म शिवं प्रति ।
उमाकान्त ! भवत्पुत्रो मयूरेश्वरसंज्ञकः ।।१५।।

क्रीडितुं बहिरायातस्तस्य हस्ते विलोकितः ।
चन्द्रस्तेन कदा नीतो न जानीमो वयं विभो ।।१६।।

इति तद्वचनं श्रुत्वा प्रोचे रुष्टो महेश्वरः ।
कथं नु क्रियते रक्षा भवद्भिर्भक्ष्यतत्परैः ।।१७।।

चन्द्रो वा चन्द्रहर्ता वा यद्यानीतस्तदा शुभम् ।
नो चेद् भस्मीकरिष्यामि सर्वेषां नात्र संशयः ।।१८।।

ततस्ते क्षुब्धमनसो धावमानास्त्वरान्विताः ।
मयूरेशं समभ्येत्य प्राभणन् रुष्टचेतसः ।।१९।।

याहि दुष्ट ! शिवं देवं चन्द्रं वा यच्छ तस्कर ।!
गणवाक्यं परिश्रुत्य चुकोप गणनायकः ।।२०।।

न मेऽस्ति गणना कापि भवतां तस्य वा गणाः ।
जगत्त्रयजनन्या मे तनयस्य प्रभाविणः ।।२१।।

क उवाच

तस्य श्वासेन सर्वे ते वात्या पत्रमिवोद्धृताः ।
पेतुः शिवस्य पुरतो गणा दीनास्तदाऽखिलाः ।।२२।।

अतिरोषान्महादेवः प्रमथादीनथाऽब्रवीत् ।
आनीयतां स दुष्टात्मा बद्ध्वोमातनयो लघुः ।।२३।।

ते तु शीघ्रतरं याता यत्र क्रीडारतः शिशुः ।
ददृशुस्तं शिशुगतं क्रीडन्तमकुतोभयम् ।।२४।।

**ब्रह्माजीले भन्नुभयो** - त्यस बेला शिवजीले आफ्नो निधारमा चन्द्रमा नदेखेर रीसले राता आँखा गराउँदै संसारै डढाउन लागेझैं रोषको आवेशमा आई गणहरूलाई भन्नुभयो - 'हे गणहरू! तिमी सबै मेरो रक्षामा खटिएका थियौ ? रक्षाको परिणाम के यही हो ? मेरो निधारको निर्मल चन्द्रमालाई कुन दैत्यले झिकेर लग्यो?'

**ब्रह्माजीले भन्नुभयो** - शिवजीले यसरी रोषपूर्वक भन्नुभएपछि केही गण त भयले थर्थर काँप्दै कतै गएर लुके ।।११-१४।। कुनै गणले धैर्यपूर्वक हात जोडेर भने - 'प्रभो ! हाम्रो गल्ती छैन, हजुरको निधारको चन्द्रमालाई त हजुरकै छोरा मयूरेशले खेलाउँदै बाहिर लैजानुभएको छ । हामीले उहाँको हातमा चन्द्रमा देखेका छौं । हे प्रभु ! उहाँले हजुरको निधारबाट कतिबेला चन्द्रमा झिक्नुभयो ? त्यो कुरा भने हामीलाई थाहा भएन ।।१५-१६।।' ती गणका यस्ता कुरा सुनेर क्रुद्ध हुनुभएका शिवजीले फेरि भन्नुभयो - 'तिमीहरू मेरो र कैलासको कसरी रक्षा गर्दछौ ? चन्द्रमा र चन्द्रमाको चोरलाई यहाँ ल्याउन सक्छौ भने परिणाम राम्रो हुनेछ अन्यथा मैले तिमी सबैलाई खरानी बनाउनेछु ।।१७-१८।। यसमा कुनै सन्देह छैन ।' शिवजीका यी कुरा सुनेपछि दुःखी मन गराएका ती गणहरू वेगपूर्वक श्रीगणेशको खोजी गर्न दौडिए । तिनले श्रीगणेशको नजिकमा गएर भने - 'हे दुष्ट श्रीगणेश ! तिमी आफै शिवजीको छेउमा जाऊ र आफ्ना अपराध स्वीकार गर । जान डराउँछौ भने तिमी चोर हौ, तिमीले चन्द्रमा देऊ ।' शिवगणका कुरा सुनेर श्रीगणेशले पनि रिसाएर भन्नुभयो - 'हे शिवगण ! म स्वर्ग, मर्त्य र पातालकी आमा पार्वतीको प्रतापी पुत्र हुँ । तपाइँहरू उहाँका सेवक हुनुहुन्छ । के उहाँको र मेरो कुनै गणना छैन ? के शिवजी र तपाइँहरूको मात्र गणना छ ?' ।।१९-२१।।

**ब्रह्माजीले भन्नुभयो** - शिवगणसँग रिसाएका श्रीगणेशले हुङ्कार गर्दा उहाँको श्वास-प्रश्वासबाट ती सबै गणहरू हुरीले सुकेका पात उडाएझैं उडे र शिवजीका सामु गएर भुइँमा पछारिए। ती बिचरा दीन-हीन अवस्थामा थिए । तिनलाई त्यसरी हुरीद्वारा खसालिएको अवस्थामा देखी शिवजीले भन्नुभयो- 'तिमीहरू फेरि गएर त्यस दुष्ट पार्वतीपुत्रलाई डोरीले कसेर यहाँ ल्याउने काम गर' ।।२२-२३।। शिवजीको आदेश पाएपछि ती गणहरू बालकहरूका साथ खेलिरहनुभएका श्रीगणेशको समीपमा पुगे । तिनीहरूले बच्चाहरूको माझमा निर्भय भएर खेलिरहनुभएका श्रीगणेशलाई देखे । श्रीगणेश पनि आफूलाई

वेष्टितुं तान् समायातान् मोहयित्वा विनायकः ।
अन्तर्हितश्चतुर्दिक्षु गणास्ते तं व्यलोकयन् ।।२५।।

गृहे गृहे काननेषु नापश्यँस्ते विनायकम् ।
क्वचिद् दृष्ट्वा तु तं प्राहुरस्मदग्रे कथं भवान् ।।२६।।

गन्तुं शक्ता ब्रह्मलोके नेष्यामस्त्वं स्थितं शिवम् ।
एवमन्तर्हितो दृश्यो वारं वारं बभूव सः ।।२७।।

ततः खिन्नान् गणान् दृष्ट्वा परमात्मा कृपान्वितः ।
तस्थौ तत्पुरतः सम्यग्दृष्ट्वा तं हर्षनिर्भराः ।।२८।।

बबन्धुर्गिरिजासूनुं निन्युस्ते शङ्करं प्रति ।
पृथिवीभारसदृशमुपविष्टं तु ते गणाः ।।२९।।

न शेकुरुत्थापयितुं ततो विस्मितमानसाः ।
हतोद्यमा गणाः सर्वे शिवमेत्य समूचिरे ।।३०।।

सर्वे वयं समानेतुमेनं शक्ता न शङ्कर !
आज्ञापयामास शिवो नन्दिनं पुरतः स्थितम् ।।३१।।

झटित्यानय गच्छ त्वं मयूरेशं तु तस्करम् ।

नन्द्युवाच

शेषं सूर्यं शशाङ्कञ्च हनिष्येऽहं तवाज्ञया ।।३२।।
कनीयसो न मे काचिद् गणनाऽस्ति महेश्वर ।!

क उवाच

इत्युक्त्वाऽगाद् वायुवेगो भञ्जन् वृक्षाँश्च पर्वतान् ।।३३।।

क्रोधसंरक्तनयनस्तीक्ष्णशृङ्गो ग्रसन् दिवम् ।
उवाच तं मयूरेशं याहि रे ! त्वं शिवं प्रति ।।३४।।

डोरीले बाँध्न तम्सिएका शिवगणलाई मोहित बनाउँदै अन्तर्धान हुनुभयो । ती सबैले चारैतिर श्रीगणेशलाई हेरे ।।२४-२५।। तर तिनीहरूले कहीं पनि श्रीगणेशको दर्शन पाएनन्। घर-घरमा र जङ्गल-जङ्गलमा घुम्दा पनि तिनले श्रीगणेशको दर्शन पाउन सकेनन् । खोज्दै जाँदा एउटा कुनामा लुकिरहनुभएका श्रीगणेशलाई देखेर भने- हे श्रीगणेश! अब हाम्रा सामुबाट तिमी भाग्न सक्दैनौ । हामीले तिमीलाई ब्रह्मलोक पुगेर भए पनि ल्याउन सक्छौं र शिवजीलाई बुझाउन सक्छौं । गणहरूले यस्तो भनेको सुनेर श्रीगणेश पटक-पटक अन्तर्धान हुनुभयो र पटक-पटक प्रकट हुनुभयो । भगवान् श्रीगणेशको अन्तर्धान हुने र प्रकट हुने क्रम धेरै बेरसम्म चलिरह्यो ।।२६-२७।। यसरी श्रीगणेशको आविर्भाव र तिरोधान भइरहेको देखेर शिवगणहरू साह्रै खिन्न भए । तिनीहरूलाई अत्यन्त दुःखित र धर्मसङ्कटमा ग्रस्त देखेर श्रीगणेश तिनका सामु आउनुभयो। उहाँलाई सामुमा देखेर ती सबै अत्यन्त खुसी भए ।।२८।। तिनले श्रीगणेशलाई डोरीले बाँध्न शुरु गरे र श्रीगणेश पनि सजिलै बाँधिनुभयो । त्यसपछि तिनले श्रीगणेशलाई शिवजीको नजिकमा पुऱ्याउन भनी हिंडाए । बीच बाटामा गएर श्रीगणेश भुइँमा बस्नुभयो । तिनीहरूले श्रीगणेशलाई उठाउन खोजे तर उहाँ पृथिवीभन्दा पनि गह्रौं हुनुहुन्थ्यो)।(ती सबैले धेरै प्रयास गर्दा पनि उहाँलाई उठाउन सकेनन् र चकित भए । असफल भएपछि ती गणहरूले शिवजीसामु गएर बिन्ती गरे ।।२९-३०।। 'हे प्रभु! हामी सबैले मिलेर डोरीले बाँधी श्रीगणेशलाई लिएर आएका थियौं। बीच बाटामा उनी बसे । त्यसपछि हामी सबै मिलेर प्रयास गर्दा पनि तिनलाई उठाउन सकेनौं ।' गणहरूका यस्ता कुरा सुनेर शिवजीले आफ्ना वाहन नन्दीलाई आदेश दिंदै भन्नुभयो- 'हे नन्दी! छिट्टै गएर तिमीले त्यो चोर श्रीगणेशलाई लिएर यहाँ आऊ ।'

**नन्दीले भने** - 'हे शिवजी ! हजुरको आज्ञा भएमा मैले शेषनाग, सूर्य र चन्द्रमालाई पनि मार्न सक्छु ।।३१-३२।। यी साना बाबुलाई ल्याउने कुरामा त कुनै शङ्का नै गर्नुपर्दैन ।'

**ब्रह्माजीले भन्नुभयो**- यसरी बिन्ती गरेपछि नन्दी वायुवेगले वृक्षका हाँगा भाँच्दै, पर्वतका शिखर भत्काउँदै, रीसले राता-राता आँखा देखाउँदै र तीखा सिङले आकाशलाई चिर्दै श्रीगणेशका छेउमा पुगेर भने - 'हे श्रीगणेश ! तिमी छिटो आफ्ना पिता शिवजीका सामुमा जान हिंड, अन्यथा मैले समातेर लानेछु। म अरूजस्तो कातर होइन।' नन्दीले यसरी फूर्ति देखाएर

नो चेदद्यैव नेष्यामि न समो हि गणैरहम् ।
एवं वदति तस्मिँस्तु मयूरेशो रुषान्वितः ।।३५।।

श्वासचक्रेऽक्षिपत् तन्तु गमनागमसङ्कुले ।
तत्याज तं दृढं श्वासादतिखिन्नं शिवान्तिके ।।३६।।

वमन्तं रुधिरं वक्त्रात् पृथिव्यां पतितं तु तम् ।
ब्रुवन्तं पौरुषं नाना मूर्च्छितं द्विमुहूर्ततः ।।३७।।

अपश्यच्च मयूरेशं जानुभागे स्थितं शिवः ।
देदीप्यमानं वपुषा दिव्यभूषासमन्वितम् ।।३८।।

गणा ऊचुः शिवं दृष्ट्वा भालचन्द्रं यथा पुरा ।
ललाटे ते शशी देव ! वृथाज्ञप्ता वयं शिव ।।३९।।

मयूरेशं गणाँश्चाह शशिनं वीक्ष्य मस्तके ।

शिव उवाच

श्रान्तास्ते च गणास्त्वञ्च नन्दी चापि ममाज्ञया ।।४०।।
चन्द्रे स्थिते ललाटे मे वृथा युद्धमभूद्धि यत् ।

प्रमथा ऊचुः

अद्यप्रभृति देवेश स्वामी नोऽस्तु मयूरराट् ।।४१।।

क उवाच

तथेति शिव ऊचे तान् गणराजोऽभवत् तु सः ।
नत्वा शिवं गणेशञ्च गणेशजननीमपि ।।४२।।

प्रशंसयित्वा देवेशं मयूरेशं तथाविधम् ।
गर्जन्तोऽथ गणा जग्मुर्मुदा स्वं स्वं निवेशनम् ।।४३।।

बोलेपछि रिसाउनुभएका श्रीगणेशले आफ्नो श्वास-प्रश्वासको भुमरीमा नन्दीलाई अल्मल्याउनुभयो । दुई मुहूर्तपछि अति खिन्न भएका नन्दीलाई आफ्नो श्वासको हावाले उडाएर शिवजी र पार्वती बस्नुभएको ठाउँमा लगी पछार्नुभयो ।।३३-३६।। पछारिएका नन्दीले मुखबाट रगत बान्ता गरिरहेका थिए । जति पुरुषार्थको फूर्ति देखाए पनि उक्त घटनाका कारण मूर्च्छित र लज्जित भएका नन्दीलाई देख्नुभयो भने आफ्नै घुँडानिर बसेर, बुबा-आमाको अनुहारमा टुलु-टुलु हेरिरहेका, चारैतिर दिव्यकान्ति छरिरहेका र दिव्य वस्त्र धारण गर्ने आफ्ना पुत्र श्रीगणेशलाई पनि उहाँले देख्नुभयो । त्यस बेला शिवगणले शिवजीको निधारमा चन्द्रमालाई जस्ताको तस्तै देखेर शिवजीसँग बिन्ती गरे – 'हे भगवन् ! चन्द्रमा त हजुरकै निधारमा टल्किएका छन् । श्रीगणेशले चोरेको कुरा गलत रहेछ । हजुरले हामीलाई व्यर्थमा आज्ञा दिनुभयो ।' आफ्नो निधारमा टल्किएका चन्द्रमा देखेर शिवजीले श्रीगणेश र गणहरूलाई भन्नुभयो ।।३७-३९ ।।

**शिवजीले भन्नुभयो** - 'हे शिवगण ! मैले मयूरेश र मेरा गणलाई देखें र चन्द्रमालाई पनि मेरै निधारमा देखें । मेरो आज्ञाले गर्दा व्यर्थमा तिमीहरूले दुःख पायौ । श्रीगणेश थाके र बिचरा नन्दी पनि थाके। आखिर चन्द्रमा त मेरै निधारमा रहेछ। व्यर्थमा तिमीहरूको आपसमा युद्ध भयो ।'

**प्रमथ गणले भने** - 'हे भगवन् ! आजदेखि हाम्रा स्वामीका रूपमा श्रीगणेश रहनुहुनेछ । यो कुरा हजुरले स्वीकार गर्नुहोस्' ।।४०-४१।।

**ब्रह्माजीले भन्नुभयो** - शिवगणले यसरी बिन्ती गरेपछि शिवजीले पनि तथास्तु भन्नुभयो र त्यस दिनदेखि मयूरेश श्रीगणेश गणपति, गणनायक एवं गणराज हुनुभयो । ती शिवगण पनि अत्यन्त पुरुषार्थी मयूरेशको प्रशंसा र गर्जन गर्दै सहर्ष आ-आफ्ना स्थानतर्फ गए ।।४२-४३।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे शिवललाटगतचन्द्रहरणं नाम षडधिकशततमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'शिवजीको निधारको चन्द्रमालाई लुकाउने र देखाउनेजस्तो कौतुकमा रमाउनुहुने श्रीगणेशको लीलानिरूपण' शीर्षकान्वित एक सय छैठौं अध्याय पूर्ण भयो ।।१०६।।

ॐ

## सप्तोत्तरशततमोऽध्यायः　{ १०७ अध्याय }

क उवाच

ततश्चतुर्दशे वर्षे गौतमाद्याः सुरर्षयः ।
आययुर्गिरिजागेहं नानागणयुतं शिवम् ।।१।।

नमस्कृत्य च तानम्बा नानासनगतान् पुरः ।
पूजयित्वा विधानेन प्रोवाच हृद्गतं वचः ।।२।।

विघ्नभीत्या परित्यक्तं त्रिसन्ध्याक्षेत्रमुत्तमम् ।
अस्य बालस्य मे विघ्ना अत्रापि बहवोऽभवन् ।।३।।

दिशन्तु विघ्नरहितं कर्म वा स्थानमुत्तमम् ।

मुनय ऊचुः

इन्द्रयागे कृते देवि ! सर्वविघ्नं हरिष्यति ।।४।।

क उवाच

तदेव कारयामास मण्डपं बहुविस्तरम् ।
सम्भारान् कारयामास शक्रसन्तोषकारकान् ।।५।।

आज्ञां गृहीत्वा शम्भोः सा पार्वती हर्षनिर्भरा ।
कारयामास विधिवदिन्द्रयागं महर्षिभिः ।।६।।

ध्यानमावाहनं चक्रुरिन्द्रस्यैते महर्षयः ।
पुपूजुर्गिरिजादेशात् साङ्गमिन्द्रं गणानपि ।।७।।

कुण्डे वह्निं प्रतिष्ठाप्य मन्त्रैरेव द्विजर्षभाः ।
जपानां तद्दशांशेन जुहुवुस्तिलपायसम् ।।८।।

प्रणवाद्यैर्नमोऽन्तैश्च स्वाहान्तैर्मन्त्रसञ्चयैः ।
शान्तिपाठान् पठन्ति स्म चतुर्वेदभवान् द्विजाः ।।९।।

एतस्मिन्नन्तरे बालः क्रीडित्वा बालकैः सह ।
यज्ञवाटमुखो याति दैत्यौ तु कलविङ्कलौ ।।१०।।

तावत् सम्मुखतां यातौ माहिषं रूपमास्थितौ ।
महारवौ महाशृङ्गौ भीषयन्तौ जगत्त्रयम् ।।११।।

सटाभिन्नघनौ पुच्छाद् दारयन्तौ गिरीनथ ।
नासानिरोधपवनाच्चूर्णयन्तौ द्रुमानपि ।।१२।।

**ब्रह्माजीले भन्नुभयो** - भगवान् श्रीगणेशले चौध वर्षको उमेरमा पदार्पण गर्नुभएपछि गौतम आदि देवर्षिहरू नाना वैभवसम्पन्न र मङ्गलमय पार्वतीको निवासमा गए ।।१।। पार्वतीले पनि ती सबैलाई नमस्कार गरेर उत्तम आसनमा विराजमान गराई विधिपूर्वक पूजा गर्नुभयो । त्यसपछि आफ्ना मनका कुरा भन्नुभयो - 'हे देवर्षिगण ! मैले विघ्नभयले उत्तम त्रिसन्ध्याक्षेत्र छाडिदिएँ । त्यो ठाउँ छाडेपछि पनि मेरो सानो बालकले यहाँ आएर धेरै विघ्न व्यहोर्नुपर्‍यो ।।२-३।। मलाई हजुरहरूले निर्विघ्न ठाउँ कहाँ छ त्यो बताउनुहोस् र अनेक थरि विघ्न हटाउने उपायको विषयमा पनि उपदेश गर्नुहोस् ।'

**मुनिहरूले भने** - हे देवी पार्वती ! इन्द्रयाग गरेपछि इन्द्रले सबै विघ्नहरू निवारण गर्नुहुनेछ ।।४।।

**ब्रह्माजीले भन्नुभयो** - देवर्षिहरूका कुरा सुनेर पार्वतीले अत्यन्त चौडा मण्डप तयार गराउनुभयो र इन्द्रलाई प्रसन्नता र सन्तोष दिलाउने सामग्री तयार गराउनुभयो ।।५।। त्यसपछि भगवान् शङ्करसँग आज्ञा लिएर पार्वतीले हर्षपूर्वक महर्षिहरूद्वारा इन्द्रयाग आरम्भ गराउनुभयो ।।६।। महर्षिहरूले इन्द्रको ध्यान र आवाहन गरेपछि पार्वतीको आदेशअनुसार अङ्गसहित इन्द्रगणको पनि पूजा गरे ।।७।। यज्ञकुण्डमा अग्निको प्रतिष्ठा गरी ती महर्षिहरूले मन्त्रद्वारा हवन गरे । मन्त्रजपको दशांश तिल र खीर हवन गरे। आदिमा प्रणव र अन्तमा नम अथवा स्वाहा पद भएका मन्त्रहरूद्वारा हवन गरियो । ब्राह्मणहरूले चारै वेदमा निहित शान्तिपाठअन्तर्गतका मन्त्रहरू पढे ।।८-९।। क्रीडा गरिरहेका बालकहरूका साथ भगवान् श्रीगणेश पनि यज्ञभूमिको दर्शन गर्न जानुभयो । त्यस बेला कल र विकलनामक दुई दैत्य राँगाको रूप लिएर तिनका सम्मुखमा आए । ठूला-ठूला सिङ भएका ती दैत्य ठूलो स्वरले गर्जन गरिरहेका थिए । त्यस गर्जनबाट त्रिलोकी नै डरले काँपिरहेको थियो ।।१०-११।। ती दैत्यहरूले आफ्ना शरीरका रौंबाट बादललाई चिर्दै र आफ्ना पुच्छरले पर्वत भत्काउँदै नाकको प्वालमा प्राण रोकेर हुँकार गरी वृक्षहरूलाई धूलो-पीठो तुल्याइरहेका थिए ।।१२।। श्रीगणेशलाई मार्न

उमासुतं हन्तुकामौ यातौ शीघ्रं तदन्तिकम् ।
प्रायुध्यतां तदा द्वौ तौ मत्ताविव महागजौ ।।१३।।

तयो: शब्देन गगनं गर्जति स्म यथा घनै: ।
जयं भङ्गं क्रमेणोभौ प्रापतू रुधिरोक्षितौ ।।१४।।

विद्रुता मुनिबालास्ते ताभ्यां भीता वृकादिव ।
दूराद् ददर्श गिरिजासुतस्तौ दैत्यपुङ्गवौ ।।१५।।

कथमेतौ महादुष्टौ हनिष्यामीति चिन्तयन् ।
पश्यत्सु तेषु बालेषु चिक्षेप गगने च तौ ।।१६।।

पुच्छे गृहीत्वाऽतिबलौ भ्रामयित्वा पुन: पुन: ।
मुहूर्तात् पतितौ पृथ्व्यां तान् विदार्य द्रुमानपि ।।१७।।

शतधा देहखण्डानि तयोरादन् वृकादय: ।
ततस्ते मुनिबालास्तं ययुर्भक्त्या प्रतुष्टुवु: ।।१८।।

यस्य तत्त्वं न जानन्ति ब्रह्माद्या मुनयोऽपि च ।
सर्वान्तर्यामिणस्ते तु कथं विद्यामहे वयम् ।।१९।।

बाल्यात् प्रभृति दैत्यास्ते नाशिता: कोटिशस्त्वया।
एतौ महिषरूपेण हन्तुं त्वां समुपागतौ ।।२०।।

मूषकाविव संत्यक्तौ पुच्छे धृत्वा स्वलीलया ।
ययो: श्वासेन चलिता: पर्वताश्च द्रुमा धरा: ।।२१।।

**क उवाच**

मयूरेशस्तत: प्रायाद् यज्ञवाटं रमन् रमन् ।
ददर्शेन्द्रमखं रुष्टो ध्वंसयामास तत्क्षणात् ।।२२।।

दूरे क्षिप्त्वा शक्रमूर्तिं प्रोचे सर्वान् मुनीश्वरान् ।
वृतैर्मुनिसुतै: सर्वै: किं कर्म क्रियतेऽमला: ।।२३।।

किं तुष्टेन प्रदातव्यं वासवेनाखिलार्थिना ।
अजाप्रार्थनया किं नु कामधेनुफलं लभेत् ।।२४।।

चाहने ती दानव बालकहरूको सामुमा आएर आफू-आफूमा नै उन्मत्त हात्तीझैं युद्ध गर्न लागे ।।१३।। युद्धको सिंहनादबाट आकाश पनि बादलझैं गर्जिरहेको थियो । आपसी युद्धबाट रगताम्य भएका राँगाको रूपमा देखिने ती दैत्यहरूले आफ्नो लडाईंमा कहिले विजय र कहिले पराजय प्राप्त गरे ।।१४।। खेलिरहेका बालकहरू ती बलवान् दैत्यहरूसँग डराएर ब्वाँसोसँग डराएका मृगहरू भागेझैं टाढा-टाढा भागे । श्रीगणेशले पनि टाढैबाट ती भयङ्कर दैत्यलाई देख्नुभयो । श्रीगणेशले तिनलाई कसरी मार्ने भनेर चिन्तन गरेपछि आफ्ना बालसखाहरूले हेर्दाहेर्दै ती दुबै दैत्यलाई आकाशमा रिँगाएर भुइँमा फ्याँक्नुभयो । एक मुहूर्तपछि ती दैत्य रूखहरू भाँच्दै पृथिवीमा खसे। तिनका शरीरहरू सयौं टुक्राहरूमा छितरिए । तिनीहरूको शरीरका छितरिएका मासु, रगत र बोसोलाई त्यहाँ रहेका मांसभक्षी चराचुरुङ्गी र ब्वाँसो आदि जनावरहरूले खाए। त्यसपछि मुनिका बालकहरूले श्रीगणेशका नजिकै गएर भक्तिपूर्वक स्तुति गरे ।।१५-१८।।

**मुनिबालकहरूले भने** - 'जुन परम तत्त्वलाई ब्रह्मा आदि देवता र मुनिहरू पनि जान्दैनन् त्यस्ता सर्वान्तर्यामी श्रीगणेश प्रभुलाई हामी साना बालकले कसरी चिनौं ? बालककालदेखि नै हजुरले करोडौं दैत्यहरूको नाश गरिसक्नुभयो । यी दुई दैत्य पनि राँगाको रूप लिएर हजुरलाई मार्न आएका थिए । जुन दैत्यहरूको श्वास-प्रश्वासबाट पृथिवी, पर्वत र वृक्ष पनि कम्पायमान थिए ती तिनका पुच्छर समातेर हजुरले आफ्नो शक्तिसम्पन्न लीलाबाट मूसा हुत्याएझैं आकाशमा हुत्याएर धर्तीमा पछार्नुभयो ।।१९-२१।।'

**ब्रह्माजीले भन्नुभयो** - त्यसपछि मयूरेश भगवान् श्रीगणेश रमाउँदै खेल्दै यज्ञ भएको ठाउँमा जानुभयो । त्यहाँ इन्द्रयाग भइरहेको देखेर तत्कालै त्यसको विध्वंस गर्नुभयो ।।२२।। यज्ञस्थल नजिकै मुनिपुत्रहरूका साथ उभिनुभएका श्रीगणेशले त्यहाँ प्रतिष्ठा गरिएको इन्द्रको प्रतिमालाई टाढा हुत्याएर ती सबै मुनिहरूलाई भन्नुभयो - 'हे निर्मल हृदयका मुनिहरू ! तपाईंहरू यस्तो के कर्म गर्दै हुनुहुन्छ ? मैलेमात्र सबै कुरा पाउनुपर्छ र भोग्नुपर्छ भन्ने स्वार्थी इन्द्रले खुसी भएर के दिन सक्छ ? के बाख्रीसँग मागेर कामधेनुको दूध पाउन सकिन्छ ?'।।२३-२४।। /

स आदच्छेषसामग्रीं कृत्वा शान्तं हुताशनम् ।
मुनयो विस्मितहृदो वीक्ष्य चापल्यमस्य तत् ।।२५।।
उमानिविष्टहृदया नाशकन् तं गुणेश्वरम् ।
उपालब्धुं शिक्षितुं वा वक्तुं क्रोधेन किञ्चन ।।२६।।
उमायै सर्वमाख्याय जग्मुः स्वं स्वं निवेशनम् ।
श्रुत्वेन्द्रे क्षुब्धहृदये यत् स्यात् तच्च भवत्विति ।।२७।।
स्वापमाने परिज्ञाते शक्रश्चुक्रोध वै भृशम् ।
क्रोधसंरक्तनयनो दहन्निव जगत्त्रयम् ।।२८।।
आकार्य देवनिचयानुवाच वाक्यमुत्तमम् ।

इन्द्र उवाच

मम यागो मुनिगणैरारब्धः परमादरात् ।।२९।।
स विध्वस्तो गुणेशेन तस्य द्रक्ष्येऽद्य पौरुषम् ।
रुष्टे मयि भवेन्नष्टं त्रैलोक्यं सचराचरम् ।।३०।।

देवा ऊचुः

तवाज्ञा चेन्मयूरेशं बद्ध्वानीमः क्षणेन ह ।

शक्र उवाच

मयूरेशपुरे वह्ने ! स्थानं माऽस्तु क्वचित् तव ।।३१।।
सर्वेषां जाठरोऽपि त्वं लीनो भव ममाज्ञया ।

क उवाच

इति श्रुत्वा वचस्तस्य शक्रस्य रुषितात्मनः ।।३२।।
वह्निरन्तर्हितस्तत्र पुरेऽपि जठरेऽपि च ।
नापश्यन्मुनयो वह्निं ममन्थुर्होमहेतवे ।।३३।।
नायातीति परिज्ञाय तेऽपक्वं जक्षुरादरात् ।
न च तत् पच्यते तेन व्यथा भवति दुर्धरा ।।३४।।
ततस्ते मुनयो जग्मुर्मयूरेशं कृपाकरम् ।
नमस्कृत्याऽब्रुवन् सर्वे शक्राहूतो गतोऽनलः ।।३५।।
जाठरोऽपि गतो वह्निरिन्द्रयागे हते त्वया ।
इत्याकर्ण्य वचस्तेषां प्रत्येकं जठरेऽनलः ।।३६।।
सोऽभवत् क्षुधयाऽऽविष्टाः सर्वे जातास्तु तत्क्षणात् ।
महानसेषु कुण्डेषु तथैव ज्वलितोऽभवत् ।।३७।।
ततो वायुं निनायाशु शक्रः क्रुद्धो महाबलः ।
प्रेतभूता पुरी सर्वा पञ्चप्राणे गतेऽभवत् ।।३८।।

यति भन्नुभएपछि श्रीगणेशले यज्ञको अग्नि निभाई त्यहाँ बाँकी रहेका सबै सामग्री आफै खाइदिनुभयो । पार्वतीमा परमभक्ति गर्ने ती मुनिहरू बालक श्रीगणेशको चपलता देखेर चकित भए । तर उहाँलाई केही भन्न, उपदेश दिन र क्रोध देखाउन सकेनन् । घटेको घटनाको विषयमा पार्वतीलाई बताएर ती सबै ऋषिहरू इन्द्र रिसाउने छन्, जे हुने हो त्यही होस् भन्दै आ-आफ्ना आश्रमतर्फ गए ।।२५-२७।। उता इन्द्रले आफ्नो अपमान भएको थाहा पाएर ठूलो क्रोध देखाए र राता आँखा देखाई त्रिलोकीलाई नै डढाउन खोज्दै देवताहरूसँग कुरा गरे ।।२८।।

**इन्द्रले भन्नुभयो**– 'हे देवगण ! ऋषिहरूले श्रद्धापूर्वक मेरो याग आरम्भ गरेका थिए । त्यो यज्ञलाई गुणेश अथवा श्रीगणेशले ध्वस्त गरे । तिनको पराक्रम आज हेर्छु । म रिसाएपछि चराचर-सहित तीनै लोक नष्ट हुनेछन्' ।।२९-३०।।

**देवताहरूले भने** - 'हजुरको आज्ञा हुन्छ भने हामीहरू एकै क्षणमा श्रीगणेशलाई बाँधेर यहाँ ल्याउन सक्छौं ।'

**इन्द्रले भन्नुभयो** - 'हे अग्निदेवता ! मयूरेशको नगरमा कहीं पनि तिम्रो स्थान नरहोस् । तिमी सबैका लागि आवश्यक छौ । तसर्थ तिमी त्यहाँबाट गायब हुनुपर्दछ' ।।३१।।

**ब्रह्माजीले भन्नुभयो** - क्रुद्ध भएका इन्द्रका कुरा सुनेर अग्नि मयूरेशपुर र प्राणीहरूका पेटसमेत छाडेर गायब भए । मुनिहरूले अग्निलाई कहीं देखेनन् र यज्ञका निमित्त अग्नि जगाउन अरणिमन्थन गर्न लागे ।।३२-३३।। अग्नि प्रकट नभएपछि ती सबैले काँचै अन्न खाए । काँचो अन्न खाँदा पाचनक्रिया राम्रो भएन । ती सबैलाई भारी कष्ट भयो ।।३४।। त्यसपछि ऋषिहरू दयालु श्रीगणेशका शरणमा गए । उहाँलाई प्रणाम गरेर तिनले भने - 'हे श्रीगणेश ! अग्निलाई इन्द्रले बोलाए, तसर्थ ती लुकेका छन्, तपाईंले इन्द्रयागको विध्वंस गर्नुभएको हुँदा पेटको अग्नि पनि गायब भएको छ ।' त्यो कुरा सुनेर भगवान् श्रीगणेशले प्रत्येक ऋषिको पेटमा आफैले जठराग्निको रूप धारण गर्नुभयो ।।३५-३६।। त्यसपछि मात्र मुनिहरूलाई भोक लाग्न थाल्यो । श्रीगणेश आफै अग्नि बनेर यज्ञकुण्ड र भान्सामा पनि प्रकट हुनुभयो ।।३७।। श्रीगणेश अग्निको रूपमा जहाँसुकै व्याप्त भएको देखेर महाबली इन्द्रले वायुदेवतालाई पठाए । पाँचै वायुले आएर नग्ननृत्य गरेपछि श्रीगणेशपुरी लाशै लाशले भरियो ।।३८।। त्यस बेला पनि

पञ्चप्राणमयो देवस्ततस्तान् समजीवयत् ।
तत इन्द्रोऽब्रवीत् सूर्यं तापयैनां पुरीं बहु ।।३९।।
ततः सूर्योऽतपत् सर्वं द्वादशादित्यरूपवान् ।
वापीकूपतडागेषु नद्यां जलमशोषयत् ।।४०।।
जज्वाल पृथिवी सर्वा पुरग्रामवनाकरा ।
ततः शीघ्रं मयूरेशो मेघो भूत्वा ववर्ष ह ।।४१।।
शमयामास तं वह्निं मृतांश्च समजीवयत् ।
ततो हर्षयुता लोकाः साधु साध्वित्यपूजयन् ।।४२।।

क उवाच

प्रतिकूलं कृतं यद् यत् तत् तत् सर्वं निराकृतम् ।
ज्ञात्वा शक्रो ययौ देवं मयूरेशं ननाम च ।।४३।।
बद्धाञ्जलिपुटो भूत्वा स्तोतुं सर्वेश्वरं विभुम् ।

शक्र उवाच

न वेदा नर्षयो जग्मुर्ब्रह्माद्यास्ते गतिं विभो ।।४४।।
सर्वान्तर्यामिणः सर्वरूपस्य ब्रह्मरूपिणः ।
ब्रह्मादीनां विश्वसृजां कारणानाञ्च कारणम् ।।४५।।
अपराधान् क्षमस्वाद्य त्वामहं शरणं गतः ।
मस्तकं पादयोर्न्यस्य प्रार्थयामास सादरम् ।।४६।।

क उवाच

निर्विकल्पं मनस्तस्य ज्ञात्वा प्राह गुणेश्वरः ।
उत्तिष्ठोत्तिष्ठ भद्रन्ते पदे तिष्ठ सुखं स्वके ।।४७।।
ततः सम्पूज्य तं देवं नमस्कृत्य शचीपतिः ।
प्रदक्षिणीकृत्य ययौ हृष्टः सन्नमरावतीम् ।।४८।।

श्रीगणेशले पञ्चप्राणको रूप धारण गरी मरेका प्राणीहरूलाई बचाउनुभयो । त्यो देखेर इन्द्रले सूर्यलाई भने - 'गणेशपुरलाई सन्तापै सन्तापले समाप्त पारिदिनुहोस् ।' इन्द्रबाट आज्ञा पाएका सूर्यले द्वादशादित्यको रूप लिएर पोखरी, कुवा, सरोवर र नदीका जल सुकाइदिए ।।३९-४०।। नगर, गाउँ र वनसमेत सम्पूर्ण पृथिवी डढ्न थाल्यो । त्यो देखेर छिट्टै भगवान् श्रीगणेश बादल बनेर बर्सनुभयो।।४१।। उहाँले पृथिवीमा लागेको आगो शान्त गराई मरेका प्राणीहरूलाई जीवन दिनुभयो । जीवन प्राप्त गरी प्रसन्न भएका प्राणीहरूले साधुवाद गरे ।।४२।।

**ब्रह्माजीले भन्नुभयो** - श्रीगणेशले प्रतिकूललाई पनि अनुकूल बनाउनु भएको थाहा पाएर इन्द्रले आई लज्जित भएर श्रीगणेशलाई प्रणाम गरे ।।४३।। इन्द्रले दुई हात जोडेर सर्वेश्वर एवं अन्तर्यामी श्रीगणेश प्रभुको स्तुति गरे ।

**इन्द्रले भन्नुभयो** - 'हे सर्वान्तर्यामी श्रीगणेश ! सर्वरूप र ब्रह्मरूप तपाईंको वेद, ऋषि-महर्षि, ब्रह्मा आदि देवताले पनि स्वरूप र लीला जान्न सक्दैनन् ।।४४।। हजुर विश्वका सृष्टिकर्ता, पालक, संहारक, ब्रह्मा आदि देवताका पनि कारण हुनुहुन्छ । मेरा सबै अपराध क्षमा गर्नुहोस् । म हजुरको शरणमा आएको छु ।' इन्द्रले यसरी श्रीगणेशका पाउमा शिर राखेर आदरपूर्वक प्रार्थना गरे ।।४५-४६।।

**ब्रह्माजीले भन्नुभयो** - इन्द्रको मन निर्विकल्प जानेर श्रीगणेशले पनि भन्नुभयो - हे इन्द्र ! उठ अब तिम्रो कल्याण हुनेछ । तिमी आफ्नो इन्द्र भवनमा गई आनन्दपूर्वक बस । श्रीगणेशको आज्ञा पाएपछि इन्द्रले उहाँको पूजा गरेर परिक्रमासमेत गरी प्रसन्नतापूर्वक अमरावतीका लागि प्रस्थान गरे ।।४७-४८।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे इन्द्रमखभङ्गो नाम सप्ताधिकशततमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'श्रीगणेशद्वारा इन्द्रयाग भङ्ग' शीर्षकान्वित एक सय सातौं अध्याय पूर्ण भयो ।।१०७।।

ॐ

## अष्टोत्तरशततमोऽध्यायः　　{ १०८ अध्याय }

क उवाच

ततः पञ्चदशे वर्षे मयूरेशोऽर्भकैः सह ।
गतः स्नातुं नदीं पुण्यां नाम्ना ब्रह्मकमण्डलुम् ।।१।।

स्नात्वा नित्यं समाप्याशु मानसैः षोडशैः पृथक् ।
उपचारैः पुपूजुस्ते हृदिस्थं गणनायकम् ।।२।।

केचित् पद्मासनगतं केचिद् बर्हिगतञ्च तम् ।
दिव्यगन्धैर्दिव्यवस्त्रैर्दिव्यैः पुष्पैरपूजयन् ।।३।।

गार्ग्यो मुनिर्मन्दिरे तं ध्यात्वा रत्नान्वितेऽर्चयत् ।
एतस्मिन्नन्तरेऽकस्मात् पिदधे द्वारमस्य तत् ।।४।।

यावदुद्घाटयत्येव तावत् तद् दृढतामगात् ।
आक्रन्दनं तत्र चक्रे स च ते बालका अपि ।।५।।

बालका ऊचुः

त्वमेव जननी तातः कथमभ्यन्तरे स्थितः ।
दत्त्वा कपाटं देवेश ! नोऽपराधान् क्षमस्व च ।।६।।

क उवाच

एतस्मिन्नन्तरे दैत्यो महाबलपराक्रमः ।
यस्य शब्देन महता कम्पते भुवनत्रयम् ।।७।।

सटाभिन्नघनो दुष्टो व्याघ्ररूपी समभ्यगात् ।
व्यादाय वदनं घोरं ग्रसन्निव जगत्त्रयम् ।।८।।

दृष्ट्वा तं दुद्रुवुर्बालाः क्रन्दन्तस्ते दिशो दश ।
स तु द्वारं विनिर्भिद्य मयूरेशं तमाययौ ।।९।।

शार्दूलसदृशं रूपं कृत्वाऽऽयात् सोऽपि तं क्षणात् ।
पपाल सहसा व्याघ्रः पृष्ठे लग्नो ययौ च सः ।।१०।।

भ्रमन् स तु वनं यातो निकुञ्जे लीय तस्थिवान् ।
देवो वृक्षं समारुह्य कुञ्जमध्ये पपात ह ।।११।।

**ब्रह्माजीले भन्नुभयो** - भगवान् श्रीगणेश पन्ध्र वर्षको उमेरमा लाग्नुभएपछि बालकहरूका साथ ब्रह्मकमण्डलु नामक पुण्यनदीमा नुहाउन जानुभयो ।।१।। स्नान गरी छिट्टै नित्यकर्म सकेर ती सबै बालकहरूले मानस उपचारद्वारा हृदयमा विराजमान भगवान् श्रीगणेशको पूजा गरे ।।२।। कुनै बालकले आफ्नो मनभित्र पद्मासनमा बस्नुभएका श्रीगणेशको दिव्य गन्ध, दिव्य वस्त्र एवं दिव्य पुष्पद्वारा पूजन र ध्यान गरे । कुनै बालकले मयूरमा सवार हुनुभएका भगवान् श्रीगणेशको त्यसरी नै मानस पूजन गरे ।।३।। त्यस बेला गार्ग्यमुनिले रत्नमय मन्दिरमा स्थापना गरिएका श्रीगणेशको त्यसरी नै पूजा गरे । त्यसपछि भगवान् श्रीगणेशले त्यस मन्दिरको ढोका बन्द गर्नुभयो ।।४।। त्यो ढोका खोल्न खोजियो तर त्यो झन बलियो महसुस भयो। भित्रबाट भगवान् श्रीगणेश चिच्याइरहनुभएको थियो भने बाहिर बालकहरू रोइरहेका थिए ।।५।।

**बालकहरूले भने** - 'हे श्रीगणेश ! तपाइँ नै आमा र बाबु हुनुहुन्छ, किन हामीलाई छोडी लुक्नुभएको छ ? हे देवताका पनि देवता ! चाँडै ढोका खोल्नुहोस् र हाम्रा अपराधलाई क्षमा दिनुहोस् ।।६।।'

**ब्रह्माजीले भन्नुभयो** - यसै बीचमा एउटा अत्यन्त पराक्रमी दैत्य त्यहाँ आइपुग्यो । त्यसको डरलाग्दो आवाज सुनेर तीन लोक नै काँपिरहेका थिए ।।७।। बाघको रूपमा देखिएको र आफ्नो रोमराशिबाट बादललाई चिर्न सक्ने त्यो खतरनाक दैत्य आफ्नो डरलाग्दो मुख बाएर तीन जगत्लाई निल्न खोज्दै आएको थियो ।।८।। त्यसलाई देखेर ती बालकहरू चिच्याउँदै चारै दिशातर्फ भाग्न लागे। त्यो दानव भने मन्दिरको ढोका फोरेर श्रीगणेशका सामु पुग्यो ।।९।। भगवान्‌ले पनि सिंहरूप बनाएर त्यसको प्रतिकार गर्नुभयो । त्यो देखेर दैत्य तत्काल भाग्यो । भगवान् पनि भागिरहेका दैत्यको पछि लाग्नुभयो ।।१०।। भाग्दै गएको त्यो दैत्य वनको एउटा झाडीमा लुकेर बस्यो । श्रीगणेशले पनि रूखमा चढेर त्यहाँबाट त्यो झाडीमा हाम्फाल्नुभयो ।।११।। दुई हातले

उभाभ्यां वदनं तस्य कराभ्यां जगृहे दृढम् ।
अन्याभ्यां बहिरानीय तत: परशुनाऽच्छिनत् ।।१२।।

नासिकां श्रवणे पादौ पुच्छमग्रभवावुभौ ।
न मुखं दर्शयेत्युक्त्वा विससर्ज गुणेश्वर: ।।१३।।

निजं रूपं समास्थाय तथैव विकृतोऽभवत् ।
एवमेव करिष्यामि त्वद्देहमित्युवाच तम् ।।१४।।

ययौ निजालयं दैत्यो देव: स्वं धाम चाययौ ।
ततो मुनिसुता भ्रेमु: क्रदन्त: क्व मयूरराट् ।।१५।।

अतिश्रान्ता द्रुमतले सुच्छाये प्रास्वपंस्तदा ।
अनेन यास्यति पथा द्रक्ष्यामस्तत्पदाम्बुजम् ।।१६।।

पादौ दक्षिणतस्तेषां दृष्ट्वा चुक्रोध भानुज: ।
अत्यारक्तदृशौ रोषाद् ब्रह्माण्डग्राससाहस: ।।१७।।

बद्ध्वा तान् स्वस्थलं यातो मयूरेशस्ततोऽगमत् ।
नापश्यत् तत्तटे बालान् विस्मयं परमं ययौ ।।१८।।

चिन्तां परमिकां प्राप्तो विना तै: स मयूरराट् ।
न सुखं क्वापि सम्प्रायात् ततो मुनिगणा ययु: ।।१९।।

मुनय ऊचु:

क्वास्माकं बालका देव ! प्रातर्नीतास्त्वयाऽखिला: ।
विना तैर्नो गमिष्यन्ति प्राणास्त्वय्यागतेऽधुना ।।२०।।

क उवाच

न किञ्चिदूचे तान् देवो मुञ्चन्नश्रु मुहुर्मुहु: ।
विचार्य भास्करीं यात: पुरीं दूतैर्निवेदित: ।।२१।।

दूता ऊचु:

कोऽपि यातो योद्धुकामो लोकत्रयविनाशकृत् ।
उग्रारावो महाबाहुर्वार्यमाणो बलाद् यम ! ।।२२।।

त्यसलाई राम्ररी समाउनुभयो । अर्का दुई हातले त्यसलाई समाती बाहिर ल्याएर बञ्चरोद्वारा नाक, कान, दुबै खुट्टा र पुच्छरसमेत काटिदिनुभयो । अङ्गभङ्ग गराएपछि श्रीगणेशले भन्नुभयो – हे दैत्य ! अब तैंले कहिले पनि मुख नदेखाउनू । अहिलेलाई मैले छाडिदिएँ, तँ जा भनी त्यहाँबाट पठाउनुभयो ।।१२-१३।। त्यो दैत्य बाघको रूप छाडी आफ्नै रूपमा परिणत हुँदा पनि नाक, कान र खुट्टा नभएको देखियो । त्यस बेला रीसको झोंकमा त्यसले श्रीगणेशलाई भन्यो – हे श्रीगणेश ! तँलाई पनि मजस्तै बनाउनेछु। त्यसपछि त्यो आफ्नो घर गयो, भगवान् पनि आफ्नो धामतर्फ लाग्नुभयो । भगवान् घरमा जानुहुँदा मुनिका बालकहरू बाटोमा हाम्रा देवता मयूरेश कहाँ हुनुहुन्छ भनी क्रन्दन गर्दै उहाँको खोजी गरिरहेका थिए ।।१४-१५।। अत्यन्त थाकेर छायादार रूखको फेंदमा पुगी श्रीगणेश यही बाटो हिंड्नुभयो भने उहाँका पाउको दर्शन गर्नेछौं भनी ती सबै बालक रूखको फेंदमा निदाए ।।१६।। ती बालकहरूले दक्षिणतिर खुट्टा तेर्स्याएर सुतेको देखी यमराज रीसले कालीचूर भए । ती एउटै गासमा ब्रह्माण्ड निल्न तयार भएजस्ता देखिए ।।१७।। त्यसपछि ती सुतेका बालकहरूलाई बाँधेर आफ्नो साथमा लिई यमराज यमलोकमा पुगे । त्यस बेला श्रीगणेश त्यही रूख भएको बाटो त्यहाँ आइपुग्नुभयो । रूखका वरिपरि बालकहरूलाई नदेखेर आश्चर्य र चिन्तामा पनि पर्नुभयो ।।१८।। यताउता हेर्दा पनि बालकहरूलाई नदेखेर अत्यन्त दु:खी हुनुभयो । श्रीगणेश चिन्तित हुनुभएको समयमा मुनिहरू त्यहाँ आइपुगे ।।१९।। मुनिहरूले सोधे – 'हे श्रीगणेश ! हाम्रा छोरा-छोरी कता गए? तपाईँले बिहान तिनीहरूलाई लिएर आउनुभएको हो, तर अहिले तपाईँ एक्लै हुनुहुन्छ । ती बालक कहाँ छन् ? ती आएनन् भने हाम्रो त प्राणै जानेछ' ।।२०।।

**ब्रह्माजीले भन्नुभयो** – मुनिहरूका यस्ता कुरा सुनेर भगवान् केही पनि बोल्नुभएन । भगवान्का आँखाबाट भने आँसु बगिरहेका थिए । केहीबेर विचार गरी श्रीगणेश भगवान् यमपुरीमा पुग्नुभयो । यमका दूतहरूले यमराजसँग श्रीगणेश आएको कुरा निवेदन गरे।।२१।।

**दूतहरू भने** – 'हे महाराज ! हाम्रो पुरीमा कुनै मानिस युद्ध गर्ने मुद्राले आएको छ, त्यो साह्रै डरलाग्दो छ । तीनै लोकलाई निल्ला जस्तो छ र भयङ्कर गर्जन गरिरहेको छ, त्यसका हात ठूला छन्, हामीले धेरै पटक रोक्दा पनि त्यसलाई छेक्न सकिएन र त्यो ढोकाबाट भित्र आइपुगेको छ' ।।२२।।